نيبالي



# कुरआन करीमका अन्तिम तीन भागको व्याख्या

मुसलमानहरूका लागि महत्वपूर्ण समस्याहरू

www.tafseer.info

ISBN : 978-603-90056-7-4



# प्रवेशिका

मेरा इस्लामी दाजु-भाई र दिदी बहिनीहरू! अल्लाह तपाईहरू माथि दया गरुन्! स्मरण रहोस्!हामी माथि चार वटा कुराहरूको जानकारी प्राप्त गर्नु एक्दमै अनिवार्य छ :

❶ **पहिलो कुरोः ज्ञानः** अर्थात अल्लाहको बारेमा उनका दूत (रसुल) मोहम्मद सल्लल्लाहो अलैहे वसल्लम (अर्थात उहाँ माथि अल्लाहको दया र सलाम होस्) को बारेमा तथा इस्लाम धर्मको बारेमा ज्ञान प्राप्त गर्नु । किनकि बिना ज्ञान र जानकारीको अल्लाहको इबादत (पूजा) गर्नु अवैध छ । किन भने जुन व्यक्ति बिना ज्ञान प्राप्त गरेर अल्लाहको इबादत गर्छ त्यो पथ भ्रष्टतामा डुब्छ । र उसले ईसाई (क्रिश्चियन) जस्तो कार्य गर्छ ।

❷ **दोस्रो : व्यवहारः** अर्थात जुन व्यक्तिले जानकारी प्राप्त गरे पछि त्यही अनुसार व्यवहार गर्दैन भने त्यो यहूदी जस्तो कार्य गऱ्यो । किनभने तिनीहरूले ज्ञान प्राप्त गरी त्यस ज्ञान अनुसार व्यवहार गरेका थिएनन् । र शैतानका बहानाहरू मध्ये एउटा बहाना यो पनि छ कि उ मनुष्यको दिमागमा यो कुरा हाल्छ कि त्यो आफ्नो अज्ञानताको कारणले आल्लाह समक्ष क्षाम्य हुने छ यसैले गर्दा त्यो मनुष्यलाई ज्ञान प्राप्त गर्नबाट घृणा दिलाउँछ । र उल्ले यो थाहा पाएन कि जुन मान्छेको लागि ज्ञान प्राप्त गर्नु सम्भव थियो तर उल्ले प्राप्त गरेन त उस माथि प्रमाण (हुज्जत) कायम भयो । र यसै खालको निहुँ आदरणीय नूह अलैहिस्सलामको समुदायको थियो **" उनीहरूले आफना कानमा औंलाहरू हाली लिए र शरीरलाई लुगाले छोपी लिए "** ताकि उनीहरूमाथि प्रमाण (हुज्जत) कायम न होस् ।

❸ **तेस्रो : निम्तो दिनु :** (जति धर्म ज्ञान प्राप्त गरेको हो त्यस तर्फ अर्कोलाई निम्तो दिनु) किनकि ओलमा (धर्मगुरू) र इस्लाम तर्फ निम्तो दिनेहरू नबीहरूका उत्तराधिकारी छन् । र अल्लाह तआलाले बनी इस्राईल (यहूदी) लाई धिक्कार गर्नु भएको छ किनकि **" उनीहरू एक अर्कोलाई गरीरहेको बुरो कार्यबाट मनाही गर्दैन थिए, उनीहरूले गरेका कार्य वास्तवमा खराब थियो "।** निम्तो र शिक्षा दुबै फर्ज किफाया छन् अर्थात यदि पर्याप्त संख्यामा केही व्यक्ति यस कार्यलाई गर्छन भने कसैलाई पाप लाग्दैन, र यदि सबैले छाडेका छन् भने सम्पूर्ण व्यक्तिहरू पापमा बराबर हुनेछन ।

❹ **चौथो : कष्टमाथि धैर्य गर्नुः** अर्थात ज्ञान प्राप्त गर्नुमा, त्यस अनुसार व्यवहार गर्नुमा र त्यस तर्फ निम्तो दिनुमा जति पनि कष्ट तथा कठिनाई आओस् त्यसमाथि धैर्य र संतोष गर्नु ।

अज्ञानताको अनुमोदन गर्नको लागि र अनिवार्य शिक्षा-दिक्षालाई सजिलो पार्नको निमित्त यस सानो पुस्तकमा इस्लामी शिक्षाको सम्बन्धमा खास खास समस्याहरू वर्णन गरेको छ । साथै महान ग्रन्थ कुरआनका अन्तिम तीन भागको विश्लेषण पनि गरिएको छ किनकि यी तीनै भागलाई धेरै मात्रामा पढिन्छ । र जुन कुरालाई पूर्ण रूपमा पाउनु गाह्रो होस् त्यसको अत्याधिकलाई पनि छाड्नु राम्रो होइन ।

यसमा प्रत्येक कुरालाई छोट्करीमा बयान गरेको छ, र मात्र नबी सल्लल्लाहो अलैहे वसल्लमबाट शुद्ध रूपले प्रमाणित कुराहरूलाई नै उल्लेख गरेको छु । परिपूर्णताको दाबी त छैन, किनकि परिपूर्णता मात्र अल्लाह तआलाको लागि खास हो, बरु यो निम्न योग्यता तथा तल्लो भागको जानिफकारको तर्फबाट एउटा प्रयास हो, यसमा जुन कुरा शुद्ध र सत्य छ भने त्यो अल्लाहको तर्फबाट हो, र जुन गलत एवं मिथ्या छ भने त्यो मेरो र शैतानको तर्फबाट हो र अल्लाह तथा उनका दूत त्यसबाट टाढा छन् । अल्लाह त्यस्तो मान्छेमाथि दया गरुन् जुन हाम्रो दोष र गल्ती हामीलाई देखाउँछ ।

अल्लाहसँग दुआ छ कि जुन व्यक्तिले पनि यस पुस्तकको संकलन गर्नमा, यसलाई प्रकाशित तथा वितरण गर्नमा सहयोग पुऱ्याएको छ भने उसमाथि दया गरुन् र जुन मान्छे यसलाई पढ्छ तथा अर्कोलाई सिकाउँछ भने त्यसमाथि पनि दया होस्, हे अल्लाह! उनीहरूबाट यसलाई स्वीकार गर्नुस् र उनलाई राम्रो प्रतिफल बाट सम्मानित गर्नुहोस् ।

र अल्लाह तआला नै सर्वाधिकार ज्ञानी हुनुहुन्छ, तथा उहाँको दया र शान्ति होस् नबी मोहम्मद माथि, र उनका सन्तान तथा साथीहरूमाथि ।

**इस्लामी दुनियाका विद्वान र छात्रहरू मध्ये एक समूहले यस किताबको प्रशंसा गरेको छ ।**

अधिक जानकारी,वा किताब माग्नको लागि वा कुनै सल्लाह दिने हेतुः साइट / www.tafseer.info **ईमेल/** np@tafseer.info

प्रथम संस्करणः १४३२ हि.

# सूची



| | |
|---|---|
| कुरआनको प्रधानता | 2 |
| कुरआन करीमका अन्तिम तीन भागको व्याख्या | 4 |
| मुसलमानहरूको जीवनका लागि महत्वपूर्ण प्रश्नहरू | 68 |
| हृदयका कर्महरू | 83 |
| एउटा गंभीर कुराकानी | 92 |
| लाइलाह इल्लल्लाहको गवाही | 107 |
| मुहम्मदुर्रसूलुल्लाहको गवाही | 108 |
| पवित्रता | 110 |
| महिलाका समस्याहरू महिलाका प्राकृतिक रगतहरूका समस्याहरू | 114 |
| महिला इस्लामको नजरमा : | 115 |
| नमाज | 119 |
| दान (जकात) | 125 |
| रोजा | 128 |
| हज्ज र उम्रा | 131 |
| छोट्करीमा हज्जका कार्यहरूः | 135 |
| विभिन्न लाभदायक कुराहरू | 136 |
| इस्लामी झार-फुक (जन्तर-मन्तर) | 141 |
| दुआ | 147 |
| केही महत्वपूर्ण दुआहरू जसलाई कण्ठस्य गर्नु र ती सित दुआ गर्नु राम्रो छः | 149 |
| लाभदायक व्यापार | 154 |
| बिहान तथा बेलुकाका दुआहरू | 155 |
| ठूलो पूण्य हुने वचन र कर्महरू | 158 |
| मनाही कार्यहरू | 163 |
| सदासर्वदा रहने तिर सवारी | 166 |
| वजूको विधि | |
| नामज पढ्ने विधि | |
| ज्ञान अनुसार कर्मको अनिवार्यता | |




# कुरआनको प्रधानता

❁ कुरआन अल्लाहको वाणी हो, र सम्पूर्ण कथन तथा वाणीहरूमा यस्तो महान र उत्तम हो जस्तो अल्लाह तआला आफ्नो सृष्टिमाथि सर्वउत्तम र महान हुनुहुन्छ । मुख बाट जति कुराहरू निस्कन्छन् ती मध्ये सब भन्दा महान र श्रेष्ट कुरआनको शुभ पाठ गर्नु हो ।

**पवित्र कुरआनलाई सिक्नु सिकाउनु र पाठ गर्नुको प्रधानता र लाभः**

<table>
<tr><td>कुरआन सिकाउनुको पूण्य</td><td>नबी सल्लल्लाहो अलैहे वसल्लमले भन्नुभो :" तिमी मध्ये सब भन्दा राम्रो मान्छे त्यो हो जो कुरआन आफैं सिक्छ र अर्कोलाई सिकाउँछ "। (बुखारी)</td></tr>
<tr><td>कुरआन पाठ गर्नुको पूण्य</td><td>नबी सल्लल्लाहो अलैहे वसल्लमले भन्नुभोः " जसले अल्लाहको किताब (कुरआन) को एक अक्षर पढ्छ भने उसको लागि एक नेकी (पूण्य) हो, र एक नेकी दश गुणा नेकीको बराबर हुन्छ "। (तिर्मिजी)</td></tr>
<tr><td colspan="2">* धर्मगुरू इब्ने रजबले भन्नु भयो कि एक नेकी दश गुणा नेकीको बराबर हुनु प्रत्येक सुकर्ममा हुन्छ, यसमाथि अल्लाहको यो भनाई प्रमाण छः ﴿مَن جَآءَ بِٱلۡحَسَنَةِ فَلَهُۥ عَشۡرُ أَمۡثَالِهَا﴾ " जसले सत्कर्म गर्दछ उसले त्यसको दश गुणा प्रतिफल पाउने छ "। तर जसलाई अल्लाहले चाहनुहुन्छ उसलाई दश गुणा भन्दा बढी पनि दिनुहुन्छ,र कहिले सात सय गुणा सम्म पनि पुग्छ बरू त्यस भन्दा पनि बढी, र यस्को कारण अल्लाहको दया पश्चात् हृदयको शुद्धता र चिन्तन् मनन् एवं सम्झना हो ।</td></tr>
<tr><td>कुरआन सिक्नु, कण्ठस्थ गर्नु, र पाठ गर्नुमा पूर्णता प्राप्त गर्नुको महानता</td><td>नबी सल्लल्लाहो अलैहे वसल्लमले भन्नुभो :" जुन व्यक्ति कुरआन पढ्छ र त्यसलाई याद पनि गरेको छ त्यो नेकी (पूण्य) लेखने वाला महान सम्मानित फरिश्ताहरूसँग हुने छ,र जुन व्यक्ति कुरआनलाई बारम्बार पाठ गर्छ र त्यसको पाठ गर्नमा अप्ठ्यारो पनि आउँछ भने त्यसको लागि दुगुना पूण्य छ "। (बुखारी र मुस्लिम)<br>एक अर्को हदीसमा नबी सल्लल्लाहो अलैहे वसल्लमले भन्नुभो :" कुरआन पाठ गर्ने व्यक्तिसँग (प्रलय हुने दिन) भनिनेछ कि कुरआनलाई पाठ गर्दै गर र माथि (स्वर्गमा) चढ्दै गर, र विस्तारै विस्तारै यसलाई पाठ गर जसरी तिमी संसारमा पाठ गर्दै थियौ, किनकि तिमी बाट पढेको अन्तिम आयतको नजीक (स्वर्गमा) तिम्रो दर्जा हुनेछ "। (तिर्मिजी)</td></tr>
<tr><td colspan="2">* धर्मगुरू खत्ताबीले भन्नु भयो कि माथिको हदीसमा यो वर्णन गरीएको छ कि कुरआनका आयतहरूको संख्या स्वर्गमा हुने सीढीको बराबर छ, अतः पाठक सित भनिनेछ कि कुरआनका आयतको संख्याको बराबर जुन तिमी पढदै थियौ स्वर्गको सीढीमाथि चढ्ने गर, त जसले पूरै कुरआन पढ्नेछ उसको ठेगाना स्वर्गको सीढीको सब भन्दा माथिल्लो भागमा हुने छ, र जुन व्यक्ति जति पढ्ने छ उसैको बराबर स्वर्गमा दर्जा पाउनेछ ।</td></tr>
<tr><td>उस व्यक्तिको पूण्य जसको सन्तानले कुरआन सिक्यो</td><td>नबी सल्लल्लाहो अलैहे वसल्लमले भन्नुभयो :" जुन व्यक्तिले कुरआन पढ्यो, त्यसलाई सिक्यो र त्यसको अनुसार व्यवहार गऱ्यो भने उस्का माता-पितालाई प्रलय हुन दिन प्रकाशको मुकुट पहिराइनेछ जस्को ज्योति सूर्यको ज्योति जस्तो हुन्छ, र ती दुबैलाई यस्तो राम्रो खालको पोशाक पहिराइनेछ जसको मूल्यको बराबरी पूरै संसार गर्न सक्दैन, माता-पिता सोध्नेछनः यो आदर सम्मान किन ? उत्तर आउँछ, तिम्रो सन्तानले कुरआन सिक्नको कारणले "।</td></tr>
<tr><td>कुरआन पढ्नेलाई परलोकमा कुरआन सिफारिश गर्नेछ ।</td><td>नबी सल्लल्लाहो अलैहे वसल्लमले फर्माउनुभोः "कुरआनलाई पढ्ने गर, किनभने प्रलय हुने दिन त्यो आफ्नो पाठक वर्गलाई सिफारिश गर्नेछ "।<br>एक अर्को हदीसमा नबी सल्लल्लाहो अलैहे वसल्लमले फर्माउनुभो :" रोजा (ब्रत) र कुरआन कियामतको दिनमा मान्छेको लागि सिफारिश गर्नेछन् "।</td></tr>
<tr><td>कुरआन पाठ गर्न र सिक्न सिकाउनको लागि एकत्रित हुनको पूण्य</td><td>नबी सल्लल्लाहो अलैहे वसल्लमले फर्माउनुभोः<br>" अल्लाहका घरहरू मध्ये कुनै घर (मस्जिद) मा केही मानिसहरू एकत्रित भएर कुरआन पढ्ने गर्छन र एक अर्कालाई पाठ गराउँछन भने उनीहरूमाथि (अल्लाहको तर्फ बाट) शान्ति अवत्रित हुन्छ, अल्लाहको दया तथा कृपा उनीलाई छोप्छ, उनीलाई फरिश्ताहरू रक्षा गर्छन् र उनीको चर्चा अल्लाह तआला फरिश्ताहरूमा गर्छन् "। (अबुदाऊद)</td></tr>
</table>

# कुरआन पाठ गर्नका केही समस्याहरू :

| | |
|---|---|
| कुरआन पाठ गर्नका केही आदाबहरू | **धर्मगुरू इमाम इब्ने कसीरले** केही आदाबको वर्णन गर्नुभएको हो, ती मध्ये केही आदाबहरूको चर्चा यहाँ गरीरहेको छः पवित्रता प्राप्त गरे पछि नै कुरआको पाठ गर्नु र त्यसलाई छुनु । पाठ गर्नु भन्दा अघि दतिवन गर्नु । राम्रो पोशाक पहिरीनु। किब्ला तिर मुख गर्नु । हाई आउने बेला पाठ नगर्नु । बिना जरूरत पाठ गर्ने बेला कुराकानी नगर्नु । दिमाग र बुद्धिले पढ्नु । वाचा र अनुकम्पा वर्णन गर्ने आयतमाथि ठहरेर दुआ गर्नु र यातनाको आयतमाथि ठहरेर अल्लाहको शरण माग्नु । कुरआनलाई खुल्ला नछाडनु र न त उसमाथि केही अर्को वस्तु राख्नु । पाठ गर्दा खेरि पाठक वर्ग एक-अर्कामाथि ठूलो स्वरमा पाठ नगर्नु । बजार र कोलाहलको ठाउँमा पाठ नगर्नु । |
| कुरआन पाठ गर्ने विधि | • कुरआन पाठ गर्न चाहे त्यो नमाजमा होस् वा नमाज बाहेक आफ्नो जीवलाई सुनाउने गरी स्वरमा पढनु पर्छ । मनमनैमा बिना जिभ्रो हल्लाएर कुरआन पढ्नु उचित हुँदैन । र अर्कोलाई कष्ट दिने स्वरमा पनि पढ्न मिल्दैन ।<br>• विस्तारै विस्तारै कुरआनलाई पाठ गर्नुपर्छ, आदरणीय अनस रजियल्लाहो अन्हो सँग कसैले नबी सल्लल्लाहो अलैहे वसल्लमको किरात (कुरआन पाठ गर्न) को बारेमा प्रश्न गर्‍यो, उहाँले जवाफ दिनु भयोः " नबी सल्लल्लाहो अलैहे वसल्लमले पाठ गर्दा खेरि प्रत्येक अक्षरलाई तानेर पढ्नु हुन्थ्यो, बिस्मिल्ला हिर्रहमानिर्रहीम पढ्दा बिस्मिल्लाह लाई तान्नु हुन्थ्यो, यसै गरी अर्रहमान र अर्रहीमलाई पनि तान्नु हुन्थ्यो " । (बुखारी) |
| दिन र रातिमा कुरआन पाठ गर्ने मात्रा | नबी सल्लल्लाहो अलैहे वसल्लमका साथीहरू प्रत्येक दिनमा कुरआनलाई एउटा मात्रामा पढदथे, र सात दिन भन्दा कम समयमा कुरआन समाप्त गर्ने उनीहरुमा बानी थिएन, बरु ३ दिन भन्दा कम्तीमा कुरआनलाई समाप्त गर्नु मनाही छ । |
| कण्ठस्थ भएको कुरआनलाई पाठ गर्नु | कण्ठस्थ गरीएको सुरहहरूलाई बिना कुरआनलाई हेरेर पढनु अधिक चिन्तन-मनन, मुटु र आँखालाई उपस्थित गर्नमा लाभदायक हुन्छ भने नहेरेर पढनु राम्रो छ नत्र कुरआनमा हेरेर पढनु राम्रो र बेस छ । |

उत्तरदानः- मेरा दाजु-भाईहरू ! कुरआन पढ्नमा आफ्नो समयलाई व्यस्त गर्नुस् र प्रत्येक दिनको लागि एउटा मात्रा नियुक्त गरी लिनुस् जसलाई कुनै अवस्थामा न छाडनुहोस्, र यो याद राख्नुहोस कि निरन्तर गर्ने भलाईको सानो काम कहिले-काँही गर्ने भलाईको ज्यादा काम भन्दा राम्रो छ । र यदि तपाईंले त्यो नियुक्त मात्रालाई बिर्सनु भयो वा त्यसलाई नपढेर सुत्नु भयो भने भोलि पल्ट त्यसलाई पूरा गरी लिनुस्, किनकि नबी सल्लल्लाहो अलैहे वसल्लमले फर्माउनु भयो : " *जुन व्यक्ति आफ्नो नियुक्त गरेको मात्रालाई बिर्सेर सुत्यो, फेरि त्यसलाई फजर तथा जोहर नमाजको बीचमा पढ्यो भने उसले रात्रीमा पढ्ने जस्तो पुण्य पाउने छ* " ।

उनीहरू मध्ये न भइहाल् जसले कुरआनलाई छाड्यो वा बिर्सियो, जस्तो कि पाठ गर्नुलाई छाड्नु, विस्तारै विस्तारै पढ्नलाई छाडनु, उसका शिक्षा-दिक्षालाई व्यवहारमा न ल्याउनु, उसमा चिन्तन् मनन् नगर्नु, उ सँग स्वास्थ्य प्राप्त गर्नको कामना नगर्नु ।




## सूरह अल्-फातिहा - 1




(1) यस सूरहलाई फातिहा यस कारणले भनिन्छ कि यसैबाट महान कुरआन आरम्भ हुन्छ । र यसको अर्को नाम मसानी पनि छ किनकि यसलाई नमाजका प्रत्येक रकातमा पढिन्छ । र यस सूरहका अरू पनि नामहरू छन् । म कुरआन पाठ गर्न आरम्भ गर्दछु अल्लाहको नामबाट र उनै सित सहयोग माग्दैछु । **(अल्लाह)** महान र बुद्धिवाला प्रभ ुको नाम हो, जो सत्य पूजनीय छन् र उनी बाहेक कोही पूज्य छैन् । र यो अल्लाहका नामहरूमा सब भन्दा महत्वपूर्ण नाम हो, र यो नाम उनी बाहेक अरू कसैको हुँदैन । **(अर्रहमान)** व्यापक कृपालु र दयालु र उनको कृपा सम्पूर्ण प्राणीहरूलाई सम्मिलित छ । **(अर्रहीम)** यो कृपा र दया मोमिनहरू सँग खास छ । र यी दुबै अल्लाहका नामहरू मध्ये छन् जसबाट अल्लाहका लागि कृपा गुण सिद्ध हुन्छ जसरी उनको महानता र श्रेष्ठताको योग्य छ ।

(2) सम्पूर्ण प्रकारका प्रशंसा मात्र अल्लाहकै लागि छन् उनका परिपूर्ण गुणहरूसँग र उनका प्रत्यक्ष र अप्रत्यक्ष, धार्मिक र सांसारिक अनुकम्पाहरूसँग । यस आयतमा दासहरूका लागि यो आदेश छ कि तिनीहरू अल्लाहकै प्रशंसा गरुन् किनभने ऊ नै यसको मात्र योग्य छन् । ऊ एक्लै सृष्टिको जन्मदाता र तिनको समस्या र कार्यहरूलाई सुधार्नेवाला र आफ्नो धन तथा अनुकम्पाले सबै प्राणीहरूलाई भ रण-पोषण गर्नेवाला छन् र आफ्ना मित्रहरूलाई ईमान र सत्कार्यसँग लालन-पालन गर्नेवाला।

(3) **(अर्रहमान)** उनको करुणा तथा कृपा सम्पूर्ण प्राणीहरूलाई सम्मिलित छ । **(अर्रहीम)** यो मोमिनहरूका साथ खास छ । र यी दुबै नाम अल्लाहका नामहरू मध्ये छन् ।

(4) अल्लाह सुब्हानहू व तआला एक्लै कियामतको दिन (महाप्रलय हुने दिन) को मालिक र स्वामी हुनुहुन्छ, र त्यस दिन कर्महरूमाथि बदला लिइनेछन्, एउटा मुस्लिमले यस आयतलाई नमाजको प्रत्येक रकातमा पढनाले महाप्रलयलाई स्मरण हुन्छ, र त्यसको लागि सुकर्म गरी पाप एवं अपराधबाट बचेर तयारी गर्छ ।

(5) हामी एक्लै तपाईंलाई खास गरी पूजा गर्दैछौं र आफ्ना तमाम कार्य र मामिलाहरूमा तपाईंसित नै मद्दत माग्दैछौं किनभने सम्पूर्ण कार्यहरूको बाग-डोर तपाईंको हातमा नै छ । कसैले कुनै समस्यामा कण बराबरको पनि केही सामर्थ्य राख्दैन । यस आयतमा यस कुरामाथि प्रमाण छ कि भक्त (मनुष्य) को लागि यो जायज छैन कि पूजाका किसिमहरू मध्ये केही किसिम अल्लाह बाहेक अरूका लागि गरोस् जस्तो दुआ गर्नु, गुहार्नु, हलाल गर्नु, परिक्रमा गर्नु आदि । यसै गरी यस आयतमा अल्लाहको अलावा अरूसँग सम्बन्ध स्थापित गर्ने जस्तो रोगबाट स्वास्थ्य छ, र देखावा, आफुलाई राम्रो ठान्नु तथा घमण्ड जस्तो रोगहरूबाट पनि आरोग्य र मुक्ति छ ।

(6) हामीलाई सोझो मार्ग तिर लगाइदिनुहोस,र त्यसमा हिंडने तौफीक (साहस) पनि दिनुहोस र तपाईंसँग भेट गर्ने सम्म त्यही माथि कायम राख्नुहोस । र त्यो सुमार्ग इस्लाम नै हो जुन स्पष्ट र अल्लाहको प्रसन्नता तथा उनको स्वर्गसम्म पुगाउने बाटो हो । यसै तिर अन्तिम दूत र रसूल मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमले मानिसहरूलाई बोलाउनुभो । यसलाई स्वीकार गर्नु र त्यही माथि दृढ रहनु बिना कुनै भक्तका लागि मुक्ति र सौभ ग्यता हुनेछैन ।

(7) नबी,सत्यवादी,शहीद र सुकर्मीहरूको मार्ग जुनमाथि तपाईंले कृपा र अनुकम्पा गर्नुभएको छ, किनकि यिनीहरू नै असल सुमार्गमा हिंड्नेवाला र दृढतावाला छन् । र जुन माथि तपाईंले क्रोध र धिक्कार गर्नुभो तिनीहरूको मार्गमा हामीलाई न लगाउनुस किनकि तिनीहरूले सत्यलाई चिने पनि त्यसलाई व्यवहारमा ल्याएनन् र तिनीहरू यहूद हुन र जो तिनको समानता तथा बाटो अपनाउछन । र पथभ्रष्टहरू, जुन कि सुमार्गमा न हिंडि पथभ्रष्ट भ एका छन् र ती क्रिश्चियनहरू छन र जुन तिनको बाटोमा लागेकाछन । यस दुआमा मुस्लिमको लागि इन्कार, अज्ञानता र पथभ्रष्टता जस्तो रोगहरूबाट स्वास्थ्य पाइन्छ । र यसमाथि पनि प्रमाण छ कि व्यापक रूपमा सब भन्दा ठूलो धन र अनुकम्पा इस्लाम धर्म नै हो । अतः जो जति राम्ररी सत्यलाई चिन्छ र त्यसको पालना पनि गर्छ त्यो त्यती नै सोझोमार्ग (सिरातल् मुस्तकीम) मा हिंड्नेवाला हुन्छ । र यसमा केही शंका छैन कि नबी सल्लल्लाहो अलैहे वसल्लमका साथीहरू नबीहरू पश्चात मानिसहरूमा सब भन्दा अधिक सुमार्गमा हिंड्दथे । र यस आयतमा सहाबाहरूको श्रेष्ठता र प्रधानतामाथि र उनीहरूको दर्जा उच्च छ भन्ने कुरामाथि पनि प्रमाण पाइन्छ, अल्लाह उनीहरू सित प्रसन्न हुन् । यस सूरहलाई नमाजमा पढ्नेको लागि मुस्तहब (उत्तम) छ कि अन्तमा आमीन भनोस्, र यसको अर्थ हुन्छ हे अल्लाह यसलाई स्वीकार्य गरिलिनुहोस् । र सम्पूर्ण ओलमाहरूको सहमति अनुसार यो (आमीन) सूरह फातिहाका आयतहरू मध्ये छैन । यसैले गर्दा यसलाई कुरआनमा लेखिएको होइन र यस कुरामाथि पनि ओलमाहरू एकमत छन् ।

# सूरह अल्-मुजादलह - 58

سُورَةُ المُجَادلَة — ترتيبها ٥٨ — آياتها ٢٢

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَٰنِ ٱلرَّحِيمِ

قَدْ سَمِعَ ٱللَّهُ قَوْلَ ٱلَّتِى تُجَٰدِلُكَ فِى زَوْجِهَا وَتَشْتَكِىٓ إِلَى ٱللَّهِ وَٱللَّهُ يَسْمَعُ تَحَاوُرَكُمَآ ۚ إِنَّ ٱللَّهَ سَمِيعٌۢ بَصِيرٌ ﴿١﴾ ٱلَّذِينَ يُظَٰهِرُونَ مِنكُم مِّن نِّسَآئِهِم مَّا هُنَّ أُمَّهَٰتِهِمْ ۖ إِنْ أُمَّهَٰتُهُمْ إِلَّا ٱلَّٰٓـِٔى وَلَدْنَهُمْ ۚ وَإِنَّهُمْ لَيَقُولُونَ مُنكَرًا مِّنَ ٱلْقَوْلِ وَزُورًا ۚ وَإِنَّ ٱللَّهَ لَعَفُوٌّ غَفُورٌ ﴿٢﴾ وَٱلَّذِينَ يُظَٰهِرُونَ مِن نِّسَآئِهِمْ ثُمَّ يَعُودُونَ لِمَا قَالُوا۟ فَتَحْرِيرُ رَقَبَةٍ مِّن قَبْلِ أَن يَتَمَآسَّا ۚ ذَٰلِكُمْ تُوعَظُونَ بِهِۦ ۚ وَٱللَّهُ بِمَا تَعْمَلُونَ خَبِيرٌ ﴿٣﴾ فَمَن لَّمْ يَجِدْ فَصِيَامُ شَهْرَيْنِ مُتَتَابِعَيْنِ مِن قَبْلِ أَن يَتَمَآسَّا ۖ فَمَن لَّمْ يَسْتَطِعْ فَإِطْعَامُ سِتِّينَ مِسْكِينًا ۚ ذَٰلِكَ لِتُؤْمِنُوا۟ بِٱللَّهِ وَرَسُولِهِۦ ۚ وَتِلْكَ حُدُودُ ٱللَّهِ ۗ وَلِلْكَٰفِرِينَ عَذَابٌ أَلِيمٌ ﴿٤﴾ إِنَّ ٱلَّذِينَ يُحَآدُّونَ ٱللَّهَ وَرَسُولَهُۥ كُبِتُوا۟ كَمَا كُبِتَ ٱلَّذِينَ مِن قَبْلِهِمْ ۚ وَقَدْ أَنزَلْنَآ ءَايَٰتٍۭ بَيِّنَٰتٍ ۚ وَلِلْكَٰفِرِينَ عَذَابٌ مُّهِينٌ ﴿٥﴾ يَوْمَ يَبْعَثُهُمُ ٱللَّهُ جَمِيعًا فَيُنَبِّئُهُم بِمَا عَمِلُوٓا۟ ۚ أَحْصَىٰهُ ٱللَّهُ وَنَسُوهُ ۚ وَٱللَّهُ عَلَىٰ كُلِّ شَىْءٍ شَهِيدٌ ﴿٦﴾

(1) अल्लाहले खौला बिन्ते सालबाको तर्क-वितर्क सुन्नुभो जसलाई उहाँले आफ्नो पति औस बिन सामितको बारेमा गुनासो गर्नुभएको थियो, किनकि उनको पतिले उनी सँग जिहार गर्नुभएको थियो। जिहार भनिन्छः पत्नीलाई भन्नु कि तिम्रो पिठ्यूँ मेरी आमाको पिठ्यूँ सरह हो। अर्थात बिहे बर्जित हुनमा। र आफ्नो समस्याको समाधानको लागि अल्लाह सित गुनासो गर्दै छिन्। र अल्लाह तिमी दुबैको कुराकानी र तर्क-वितर्क सुनिरहेछन्। निस्सन्देह अल्लाह प्रत्येक कुरालाई सुन्नेवाला र हरेक वस्तुलाई हेर्नेवाला हुनुहुन्छ उनीबाट कुनै रहस्य लुक्न सक्दैन।

(2) तिमीहरू मध्ये जुन व्यक्तिहरू आफ्ना पत्नीहरू सित जिहार गर्दैछन र आफ्नी पत्नी सँग भन्छ कि तिम्रो पिठ्यूँ मेरी आमाको पिठ्यूँ जस्तो हो विवाह र सहवास बर्जित हुनमा त तिनीहरूले अल्लाहको अवज्ञा गरे र इस्लामी शरियतको बिरुद्ध कार्य गरे। तिनीहरूकी पत्नी वास्तविकमा तिनकी आमा छैनन् बरु तिनकी पत्नी छिन्। आमा त त्यो हुन्छे जसले आफ्नो गर्भबाट जन्मदिएकी हुन्छे। र यी जिहार गर्नेहरू आफ्नो मुखबाट झूठो र फोहोर कुरा गरेका छन जसको सत्यता सँग केही सम्बन्ध छैन। र अल्लाह तआला पापहरूलाई क्षमा गर्नेवाला हुनुहुन्छ अनि यसलाई सत्य तौबा (प्रायश्चित) गरेर क्षमा लिउन्।

(3) जुन व्यक्तिहरू आफ्नी पत्नीलाई आफुमाथि जिहार गरेर हराम गरिलिएका छन् फेरि यस वचनबाट फिर्ता हुन चाहन्छन र आफ्नी पत्नी सँग समभोग गर्न चाहन्छन् भने जिहार गर्ने पति माथि यस अवस्थामा हराम गर्नको कफ्फारा (जरीमाना) तिर्नु पर्नेछ। र त्यो हो जिहार गरेएकी पत्नी सँग समभोग गर्नु भन्दा अगि एक मोमिन दास वा दासनीलाई स्वतन्त्र गर्नु पर्नेछ। जिहारको समस्या समाधानको लागि यही अल्लाहको आदेश हो र यसै सँग तिमीहरूलाई उपदेश दिन्छन ताकि हे मोमिनहरू तिमी पनि यस जिहार र झूठो कुरामा न फस। र फसे पछि यसको जरीमाना पनि देऊ ताकि यता तिर फेरि न फर्किहाल। तिम्रा कर्महरू मध्ये केही पनि कुरा अल्लाहसँग लुक्न सक्दैन र यही कर्महरूमाथि तिमीलाई अल्लाहले प्रतिफल दिनेछन।

(4) र जसलाई दास स्वतन्त्र गर्ने सामर्थ्य छैन उसले पत्नी सँग सहवास गर्नु अघि दुई महीना सम्म लगातार रोजा राख्नु पर्नेछ। र कुनै खास कारणले यसको पनि शक्ति छैन भने ६० मिस्कीन (गरीब गरुबा) लाई पेट भरी खाना खुवाउनु पर्नेछ। यही जिहारको आदेश हो जसलाई हामीले वर्णन गरिदिएकाछौं। ताकि तिमी अल्लाहलाई सत्य मान र उनका रसूलको आज्ञा पालन गर र अल्लाहले बनाएका नियम कानून बमोजिम व्यवहार गर। र तिमीले जुन कार्य अज्ञानतावश गरिराखेका थियौ त्यसलाई त्यागी देउ। र यी वर्णन भएका ऐन-नियम तथा कानूनहरू अल्लाहका आदेश र सीमा छन् त्यसलाई उल्लंघन न गर। र इन्कारी तथा अवज्ञाकारीलाई दुखदायक यातना छ।

(5) निस्सन्देह ती व्यक्तिहरू जो अल्लाह एवं उनका रसूलको विरोध गरेर उनका आदेशापालन गर्दैनन् तिनीहरू त्यसरी नै अपमानित गरिनेछन् जसरी तिनीहरू भन्दा पहिलाका अनुयायीहरू मध्ये अल्लाह र उनका रसूलका विरोधीहरूलाई अपमानित गरिए। र वास्तवमा हामीले स्पष्ट आयतहरू अवतरित गरेकाछौं जो यस माथि प्रमाण छन् कि अल्लाहले निर्धारित गर्नुभएका ऐन-नियम र सीमा एक्दमै सत्य छन्। र ती आयतहरूलाई इन्कार गर्नेहरूको लागि अपमानजनक नराम्रो यातना रहेको छ।

(6) हे रसूल ! कियामतको दिनलाई याद गर्नुस्, जस दिन अल्लाह सम्पूर्ण मृतकहरूलाई जीवित गर्नेछन् र एकै मैदान (चौर) मा पहिला र अन्तिम लगायत सबै प्राणीहरूलाई एकत्रित गर्नेछन् र तिनीहरूले गरेको भलो अथवा खराब कार्यबारे तिनलाई खबर गर्नेछन् जसलाई अल्लाहले संखित गरेर लौहेमहफूज (महान पुस्तक) मा लेखेर राख्नुभएको छ र जसलाई तिनको कर्मपत्रहरूमा सुरक्षित

أَلَمْ تَرَ أَنَّ ٱللَّهَ يَعْلَمُ مَا فِى ٱلسَّمَٰوَٰتِ وَمَا فِى ٱلْأَرْضِ ۖ مَا يَكُونُ
مِن نَّجْوَىٰ ثَلَٰثَةٍ إِلَّا هُوَ رَابِعُهُمْ وَلَا خَمْسَةٍ إِلَّا هُوَ سَادِسُهُمْ
وَلَآ أَدْنَىٰ مِن ذَٰلِكَ وَلَآ أَكْثَرَ إِلَّا هُوَ مَعَهُمْ أَيْنَ مَا كَانُوا۟ ۖ ثُمَّ يُنَبِّئُهُم
بِمَا عَمِلُوا۟ يَوْمَ ٱلْقِيَٰمَةِ ۚ إِنَّ ٱللَّهَ بِكُلِّ شَىْءٍ عَلِيمٌ ﴿٧﴾ أَلَمْ تَرَ إِلَى ٱلَّذِينَ
نُهُوا۟ عَنِ ٱلنَّجْوَىٰ ثُمَّ يَعُودُونَ لِمَا نُهُوا۟ عَنْهُ وَيَتَنَٰجَوْنَ بِٱلْإِثْمِ
وَٱلْعُدْوَٰنِ وَمَعْصِيَتِ ٱلرَّسُولِ وَإِذَا جَآءُوكَ حَيَّوْكَ بِمَا لَمْ يُحَيِّكَ
بِهِ ٱللَّهُ وَيَقُولُونَ فِىٓ أَنفُسِهِمْ لَوْلَا يُعَذِّبُنَا ٱللَّهُ بِمَا نَقُولُ ۚ حَسْبُهُمْ
جَهَنَّمُ يَصْلَوْنَهَا ۖ فَبِئْسَ ٱلْمَصِيرُ ﴿٨﴾ يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓا۟ إِذَا
تَنَٰجَيْتُمْ فَلَا تَتَنَٰجَوْا۟ بِٱلْإِثْمِ وَٱلْعُدْوَٰنِ وَمَعْصِيَتِ ٱلرَّسُولِ وَتَنَٰجَوْا۟
بِٱلْبِرِّ وَٱلتَّقْوَىٰ ۖ وَٱتَّقُوا۟ ٱللَّهَ ٱلَّذِىٓ إِلَيْهِ تُحْشَرُونَ ﴿٩﴾ إِنَّمَا ٱلنَّجْوَىٰ
مِنَ ٱلشَّيْطَٰنِ لِيَحْزُنَ ٱلَّذِينَ ءَامَنُوا۟ وَلَيْسَ بِضَآرِّهِمْ شَيْـًٔا
إِلَّا بِإِذْنِ ٱللَّهِ ۚ وَعَلَى ٱللَّهِ فَلْيَتَوَكَّلِ ٱلْمُؤْمِنُونَ ﴿١٠﴾ يَٰٓأَيُّهَا ٱلَّذِينَ
ءَامَنُوٓا۟ إِذَا قِيلَ لَكُمْ تَفَسَّحُوا۟ فِى ٱلْمَجَٰلِسِ فَٱفْسَحُوا۟ يَفْسَحِ
ٱللَّهُ لَكُمْ ۖ وَإِذَا قِيلَ ٱنشُزُوا۟ فَٱنشُزُوا۟ يَرْفَعِ ٱللَّهُ ٱلَّذِينَ ءَامَنُوا۟
مِنكُمْ وَٱلَّذِينَ أُوتُوا۟ ٱلْعِلْمَ دَرَجَٰتٍ ۚ وَٱللَّهُ بِمَا تَعْمَلُونَ خَبِيرٌ ﴿١١﴾

राखनुभएको हो । हालाँकि मानिसहरूले त्यसलाई बिर्सिसकेका हुन्छन् । र अल्लाह प्रत्येक कुरालाई हेर्नेवाला छन् र उनीमाथि कुनै वस्तु लुक्न सक्दैन।

(7) के तिमी जान्दैनौ कि अल्लाह आकाशहरू तथा पृथ्वीका हरेक कुरा जान्दछन् ? उनका सृष्टि मध्ये तीनजना व्यक्ति बीच कुनै स्थानमा यस्तो गोप्य कानेखुसी हुँदैन जहाँ चौथोको रूपमा आफ्नो ज्ञान र व्यापक शक्तिले उनी हुँदैनन्, न कहीं पाँचजनाको बीचमा उनी छठौंको रूपमा हुन्न । न त्यो भन्दा कम वा त्यो भन्दा बढी संख्यामा हुन्छन् तर उनी तिनीहरूका साथ आफ्नो ज्ञानले रहन्छन् चाहे तिनीहरू जहाँसुकै रहन् । तिनीहरूका मामिलाहरू उनीमाथि लुप्त छैनन्, फेरि उनले महाप्रलयको दिन तिनीहरूले गर्ने गरेका कर्महरूबारे अवगत गराउनेछन् र त्यसमाथि बदला लिनेछन्। निस्सन्देह अल्लाह प्रत्येक कुराबाट अवगत छन्।

(8) के तपाईंले (हे रसूल!) यहूद तिर हेर्नुभएको होइन जसलाई यस्तो कानेखुसी गर्नुबाट मनाही गरिएको थियो जसले मोमिनहरूको मुटुमा शंका-उपशंका उत्पन्न गर्दछ । तैपनि तिनीहरू मनाही गरिएका कार्य दोहोऱ्याउँछन् र परस्पर पाप,अत्याचार एवं रसूलको अवज्ञाबारे गोप्य सल्लाह गर्छन् ? र जब तपाईं कहाँ यी यहूदहरू कुनै कार्यका लागि आउँछन् भने तपाईंलाई यस्तो तरीकाले सलाम गर्छन् जुन तरीका तपाईंको लागि अल्लाहले बनाएका छैनन् । तिनीहरू सलामको सट्टामा (अस्सामो अलैक) " तिम्रो लागि मृत्यु होस् " भन्दथे । र परस्पर भन्दछन् : अल्लाह हामीलाई हामीले मुहम्मद सित भनेको कुराले गर्दा किन सजाय दिँदैनन् यदि ऊ सत्य रसूल हुन्थ्यो । तिनीहरूका लागि नरक नै पर्याप्त छ जसमा तिनीहरू होमिनेछन् र त्यसको तातोपनको अभयास गर्नेछन् र त्यो कति नराम्रो फर्किने ठाउँ हो ।

(9) हे अल्लाह र उनका रसूललाई सत्य मान्नेहरू र उनको शरियतलाई व्यवहारमा ल्याउनेहरू हो! परस्पर गोप्य कुराकानी र सल्लाह गर्दा जसमा पाप हुन्छ वा अरूमाथि अत्याचार हुन्छ वा रसूलको अवज्ञा हुन्छ त्यसतो सल्लाह र कानेखुसी नगर, बरु जसमा भलाई,पुण्य र ईश्भयको कुरा होस् त्यसतो सल्लाह गर । अल्लाहका आदेशापालन गर्दै र उनले मनाही गर्नुभएका कुराहरूबाट आफुलाई जोगाउँदै उनी सित भय गर्दै गर, किनकि उनी एक अल्लाह तिर तिमी सबै आ-आफना कर्म र वचन जसलाई अल्लाहले गणना गरेर राख्नु भएको हो फर्केर जानु पर्छ र फेरि त्यस अनुसार तिमीलाई बदला दिनेछन् ।

(10) पाप र अत्याचारबारे कानेखुसी शैतानको तर्फबाट हुन्छ, किनकि शैतानले नै त्यसलाई सुन्दर बनाएर त्यसमाथि प्रेरित गर्छ ताकि आस्थावानहरू (मोमिनहरू) का हृदयमा चिन्ता हालियोस् । तर अल्लाहको मर्जी र इच्छा बिना उनीहरूलाई यसले कत्ति पनि हानि पुऱ्याउन सक्दैन, र मोमिनलाई चाहियो कि उनी मात्र एक अल्लाहमाथि भरोसा गरोस् ।

(11) हे अल्लाह र उनका रसूललाई सत्य मान्नेहरू र उनको शरियतलाई व्यवहारमा ल्याउनेहरू हो! जब तिमीहरूलाई सभाहरूमा एक अर्काको लागि स्थान फराकिलो पार्न भनिन्छ तब तिमीहरू उनीहरूका लागि स्थान फराकिलो पार, अल्लाह तिमीहरूको लागि लोक परलोक दुबैमा फराकिलो पार्नेछन् । र हे आस्थावानहरू! जब तिमीहरूलाई सभाहरूबाट कुनै कार्यको लागि जसमा तिम्रो लागि भलाई होस् उभिन भनिन्छ त तिमीहरू उभि हाल । तिमीहरू मध्ये शुद्ध मोमिनहरूको दर्जा उच्च पार्नेछन्, यसै गरी ज्ञान प्रदान गरिएका व्यक्तिहरूका दर्जाहरू पुण्य र प्रसन्नताका श्रेणिहरूमा धेरै उच्च पार्नेछन् । र अल्लाह तिमीहरूका हरेक कार्यसँग अवगत छन् उनीसँग केही कुरा लुक्न सक्दैन र त्यस कार्यमाथि उनी प्रतिफल दिनेछन । यस आयतमा ओलमाहरूको प्रधनाता र श्रेष्ठता एवं उत्तम तथा उच्च दर्जा तिर संकेत गर्दछ ।

(12) हे अल्लाह र उनका रसूललाई सत्य मान्नेहरू र उनको शरियतलाई व्यवहारमा ल्याउनेहरू हो! जब तिमीहरू रसूलुल्लाह सल्लल्लाहो अलेवसल्लम सँग गोप्य सर-सल्लाह गर्न चाहन्छौ त यसो गर्नुभन्दा अघि गरीब-गरुबाको लागि सदका (पूण्य-दान) दिने गर । यो तिमीहरूको लागि यसमा पाइने पूण्यको कारणले उत्तम हो र तिम्रा दिलका लागि पापहरूबाट बचनको निम्ति अति पवित्र तरीका हो । र यदि सदका दिनको लागि तिमी केही पाउँदैनौ त यसमा केही अपत्ति छैन । किनकि अल्लाह आफ्ना मोमिन भक्तहरूको लागि क्षमाशील र परम दयालु छन् ।

(13) के तिमीहरू रसूलुल्लाह सँग आफ्नो गोप्य सरसल्लाह शुरु हुन अघि गरीब हुनको डरले दान दिनबाट डरायौ ? यदि तिमीहरूले यस आदेशलाई पालन गर्न सकेनौ र अल्लाहले तिमीहरूलाई क्षमा पनि गरिदिए र तिमीलाई छुट पनि दिए कि यसो न गर भने दृढ भएर नमाज कायम गर र जकात देऊ र अल्लाह तथा उनका रसूलले दिएको आदेशको पालन गर । र तिम्रा सम्पूर्ण कार्यहरूबाट अल्लाह अवगत छन् र त्यही अनुसार तिमीलाई प्रतिफल पनि दिनेछन् ।

(14) के तिमीले ती मोनाफिकहरूलाई देखेनौ जसले यहूदलाई मित्र र भाई-बन्धु बनाए ? र मोनाफिकहरू वास्तवमा न त मुसलमानहरू मध्ये छन् र न त यहूदहरू मध्ये, र झूठो कसम खाइरहेछन कि यिनीहरू मुसलमान हुन र तपाईं अल्लाहका रसूल हुनुहुन्छ । जबकि यिनीहरू जान्छन कि यिनीहरू आफ्नो यस कसममा कति झूठा छन् ।

(15) अल्लाहले यी मोनाफिकहरूका लागि कठोर यातना र दुखदायक सजाय तयार पारेका छन् । तिनीहरू जे छलकपट र झूठमाथि कसम लिनु आदि जे गर्दैछन् वास्तवमा नराम्रो गर्दैछन् ।

(16) यी मोनाफिकहरूले आफ्नो झूठ कसमहरूलाई आफ्नो कुफ्रको कारण कत्तल हुनबाट बच्ने हेतु ढाल बनाएका छन्, यसैगरी ती कसमहरूलाई मुसलमानहरूले तिन सँग युद्ध गर्नु र तिनका धनमाल लिनुबाट जोगाउने हेतु ढाल बनाएका छन् । यसैले गर्दा तिनीहरू आफुलाई र अरू मानिसहरूलाई अल्लाहको बाटो इस्लामबाट रोक्दछन् । अतः यिनीहरूका लागि नरकमा अपमानजनक यातना छ, अल्लाह र उनका रसूलमाथि ईमान न ल्याएको कारणले र अल्लाहको मार्गबाट रोक्नको कारणले ।

(17) तिनीहरूलाई तिनीहरूका धन-माल र सन्तानहरूले अल्लाहको सजायबाट कत्ति जोगाउन सक्दैनन् । तिनीहरू नरकबासी हुन् जसमा सदाको लागि तिनीहरू रहनेछन् र कहिल्यै त्यसबाट निस्कन सक्दैनन् । यो सजाय प्रत्येक उस व्यक्तिका लागि छ जसले आफ्नो वचन र कर्मले मानिसलाई अल्लाहको मार्गबाट रोक्दछ।

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓاْ إِذَا نَٰجَيۡتُمُ ٱلرَّسُولَ فَقَدِّمُواْ بَيۡنَ يَدَيۡ نَجۡوَىٰكُمۡ صَدَقَةٗۚ ذَٰلِكَ خَيۡرٞ لَّكُمۡ وَأَطۡهَرُۚ فَإِن لَّمۡ تَجِدُواْ فَإِنَّ ٱللَّهَ غَفُورٞ رَّحِيمٌ ﴿١٢﴾ ءَأَشۡفَقۡتُمۡ أَن تُقَدِّمُواْ بَيۡنَ يَدَيۡ نَجۡوَىٰكُمۡ صَدَقَٰتٖۚ فَإِذۡ لَمۡ تَفۡعَلُواْ وَتَابَ ٱللَّهُ عَلَيۡكُمۡ فَأَقِيمُواْ ٱلصَّلَوٰةَ وَءَاتُواْ ٱلزَّكَوٰةَ وَأَطِيعُواْ ٱللَّهَ وَرَسُولَهُۥۚ وَٱللَّهُ خَبِيرُۢ بِمَا تَعۡمَلُونَ ﴿١٣﴾ ۞ أَلَمۡ تَرَ إِلَى ٱلَّذِينَ تَوَلَّوۡاْ قَوۡمًا غَضِبَ ٱللَّهُ عَلَيۡهِم مَّا هُم مِّنكُمۡ وَلَا مِنۡهُمۡ وَيَحۡلِفُونَ عَلَى ٱلۡكَذِبِ وَهُمۡ يَعۡلَمُونَ ﴿١٤﴾ أَعَدَّ ٱللَّهُ لَهُمۡ عَذَابٗا شَدِيدًاۖ إِنَّهُمۡ سَآءَ مَا كَانُواْ يَعۡمَلُونَ ﴿١٥﴾ ٱتَّخَذُوٓاْ أَيۡمَٰنَهُمۡ جُنَّةٗ فَصَدُّواْ عَن سَبِيلِ ٱللَّهِ فَلَهُمۡ عَذَابٞ مُّهِينٞ ﴿١٦﴾ لَّن تُغۡنِيَ عَنۡهُمۡ أَمۡوَٰلُهُمۡ وَلَآ أَوۡلَٰدُهُم مِّنَ ٱللَّهِ شَيۡـًٔاۚ أُوْلَٰٓئِكَ أَصۡحَٰبُ ٱلنَّارِۖ هُمۡ فِيهَا خَٰلِدُونَ ﴿١٧﴾ يَوۡمَ يَبۡعَثُهُمُ ٱللَّهُ جَمِيعٗا فَيَحۡلِفُونَ لَهُۥ كَمَا يَحۡلِفُونَ لَكُمۡۖ وَيَحۡسَبُونَ أَنَّهُمۡ عَلَىٰ شَيۡءٍۚ أَلَآ إِنَّهُمۡ هُمُ ٱلۡكَٰذِبُونَ ﴿١٨﴾ ٱسۡتَحۡوَذَ عَلَيۡهِمُ ٱلشَّيۡطَٰنُ فَأَنسَىٰهُمۡ ذِكۡرَ ٱللَّهِۚ أُوْلَٰٓئِكَ حِزۡبُ ٱلشَّيۡطَٰنِۚ أَلَآ إِنَّ حِزۡبَ ٱلشَّيۡطَٰنِ هُمُ ٱلۡخَٰسِرُونَ ﴿١٩﴾ إِنَّ ٱلَّذِينَ يُحَآدُّونَ ٱللَّهَ وَرَسُولَهُۥٓ أُوْلَٰٓئِكَ فِي ٱلۡأَذَلِّينَ ﴿٢٠﴾ كَتَبَ ٱللَّهُ لَأَغۡلِبَنَّ أَنَا۠ وَرُسُلِيٓۚ إِنَّ ٱللَّهَ قَوِيٌّ عَزِيزٞ ﴿٢١﴾

(18) महाप्रलय दिन अल्लाह मोनाफिकहरूलाई चिहानहरूबाट जीवित पारी उठाउनेछन् अनि तिनीहरू जसरी तिमी समक्ष कसम खाएर यो ठान्दैछन् कि तिनीहरू संसारमा मोमिन थिए त्यसरी नै अल्लाह समक्ष पनि कसम खाएर यो ठान्नेछन् कि तिनीहरू पनि मोमिन हुन् । यो आस्था राख्दै कि यो तिनलाई अल्लाह समक्ष लाभ पुऱ्याउनेछ जसरी संसारमा मुसलमानहरू समक्ष लाभ पुऱ्याउँदैथियो । निश्चित रूपमा जानीराख कि तिनीहरू झूठको अन्तिम सीमालाई पनि नाघेका छन् जहाँ सम्म कसैले पुगेको छैन ।

(19) शैतानले यिनीहरूमाथि प्रभुत्व र हैकम जमाएको छ यहाँ सम्म कि अल्लाहको आदेशलाई छाडेर उनको आज्ञापालनबाट टाढा रहेकाछन्, यिनीहरू नै शैतानका समूह र उसका चेला (शिश्य) छन्, जानीराख कि शैतानको समूह नै लोक परलोक दुबैमा घाटाग्रस्त रहेकाछन् ।

(20) वास्तवमा जुन व्यक्तिहरू अल्लाह एवं उनका रसूलको आदेशको विरोध गर्छन् तिनीहरू नै लोक परलोकमा अपमानित र परास्त छन् ।

(21) अल्लाहले लोहे महफूजमा लेखिराखेका र निधो गरिराखेका छन् कि मद्दत र सहयोग अल्लाहकै

لَّا تَجِدُ قَوْمًا يُؤْمِنُونَ بِاللَّهِ وَالْيَوْمِ الْآخِرِ يُوَادُّونَ مَنْ
حَادَّ اللَّهَ وَرَسُولَهُ وَلَوْ كَانُوا آبَاءَهُمْ أَوْ أَبْنَاءَهُمْ
أَوْ إِخْوَانَهُمْ أَوْ عَشِيرَتَهُمْ ۚ أُولَٰئِكَ كَتَبَ فِي قُلُوبِهِمُ
الْإِيمَانَ وَأَيَّدَهُم بِرُوحٍ مِّنْهُ ۖ وَيُدْخِلُهُمْ جَنَّاتٍ تَجْرِي
مِن تَحْتِهَا الْأَنْهَارُ خَالِدِينَ فِيهَا ۚ رَضِيَ اللَّهُ عَنْهُمْ وَرَضُوا
عَنْهُ ۚ أُولَٰئِكَ حِزْبُ اللَّهِ ۚ أَلَا إِنَّ حِزْبَ اللَّهِ هُمُ الْمُفْلِحُونَ ﴿٢٢﴾

ترتيبها ٥٩ — سُورَةُ الحَشْرِ — آياتها ٢٤

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

سَبَّحَ لِلَّهِ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ ۖ وَهُوَ الْعَزِيزُ الْحَكِيمُ
﴿١﴾ هُوَ الَّذِي أَخْرَجَ الَّذِينَ كَفَرُوا مِنْ أَهْلِ الْكِتَابِ مِن دِيَارِهِمْ
لِأَوَّلِ الْحَشْرِ ۚ مَا ظَنَنتُمْ أَن يَخْرُجُوا ۖ وَظَنُّوا أَنَّهُم مَّانِعَتُهُمْ
حُصُونُهُم مِّنَ اللَّهِ فَأَتَاهُمُ اللَّهُ مِنْ حَيْثُ لَمْ يَحْتَسِبُوا ۖ وَقَذَفَ
فِي قُلُوبِهِمُ الرُّعْبَ ۚ يُخْرِبُونَ بُيُوتَهُم بِأَيْدِيهِمْ وَأَيْدِي الْمُؤْمِنِينَ
فَاعْتَبِرُوا يَا أُولِي الْأَبْصَارِ ﴿٢﴾ وَلَوْلَا أَن كَتَبَ اللَّهُ عَلَيْهِمُ
الْجَلَاءَ لَعَذَّبَهُمْ فِي الدُّنْيَا ۖ وَلَهُمْ فِي الْآخِرَةِ عَذَابُ النَّارِ ﴿٣﴾

लागि उनका किताब, उनका रसूल र उनका मोमिन दासहरूको लागि छ । निस्सन्देह अल्लाह शक्तिशाली हुनुहुन्छ उनलाई कसैले बेबस गर्न सक्दैन, र आफ्ना प्राणीहरूमाथि प्रभुत्वशाली छन ।

(22) हे रसूल! अल्लाह र अन्तिम दिनलाई सत्य ठान्ने र अल्लाहले निर्धारित गर्नु भएको ऐन-नियम बमोजिम हिंडने कुनै समुदायलाई तपाईंले अल्लाह एवं उनका रसूलका विरोधीहरूलाई प्रेम गरेको कदापि पाउनेछैनौ चाहे ती विरोधी उनका पिता वा छोरा वा उनका भाई वा उनका नातेदार नै किन नहोऊन् । यिनीहरू नै अल्लाहकै लागि प्रेम गर्छन् र अल्लाहकै लागि नै शत्रुता गर्छन् । यिनीहरूको हृदयमा अल्लाहले ईमान साबित र कायम राखिरहेका छन् । र सांसारिक जीवनमा यिनका शत्रुहरू विरुद्ध सहयोग पुऱ्याएर यिनीहरूलाई बलियो बानाउनुभो । र परलोकमा यस्तो स्वर्गमा प्रवेश गराइनेछन् जसका रूखहरू तल नहरहरू बगिरहने छन् जसमा यिनीहरू सदासर्वदा रहनेछन् र त्यो जीवन कहिल्यै समाप्त हुनेछैन । अल्लाह यिनीहरू सित प्रसन्न भई कहिले पनि यिनीहरूमाथि क्रोधित हुनेछैनन् । र यिनीहरू पनि अल्लाह सित अल्लाहले दिएको इज्जत, पतिष्ठा र उच्च दर्जाको कारणले प्रसन्न हुनेछन् । यिनीहरू नै अल्लाहको समूह हुन् र यिनीहरूका लागि नै सांसारिक र पारलोकिक सौभाग्यता प्राप्त हुनेछन् ।

## सूरह अल्-हश्र - 59

(1) आकाशहरू र धरतीमा जे-जति कुरहरू छन् सबै नराम्रा जिचहरूबाट अल्लाहको पवित्रताको वर्णन तथा महिमागान गर्छन, उनी यस्ता प्रभ त्वशाली छन् कि उनलाई कसैले पराजित गर्न सक्तैन । र उनी अनुमान गर्नुमा, योजना बनाउनुमा, आफ्नो कारिगिरीमा र नियम विधान बनाउनुमा तत्त्वदर्शी छन् यसैले गर्दा सबै चिजहरूलाई त्यसको उचित ठाउँमा राख्दछन ।

(2) उनै पवित्र अल्लाह छन् जसले ग्रन्थवाहकहरू मध्ये जसले मुहम्मद सल्लल्लाहो अलेहे वसल्लमको दूतत्वलाई इन्कार गरे तिनलाई तिनीहरूको घरबाट निस्कासित गरिदिए, यिनीहरू बनु नजीर कुलका यहूदीहरू थिए जो मदीना नगरको वरिपरि मुस्लिमहरूको छरछेमिकी बनेर बस्दथे । र यो निस्कासित पहिलो पटक अरब टापुबाट सिरिया तिर भएको थियो । तिनीहरू यस्तो अपमान र हेला सँग आ-आफना घरबाट निस्कनेछन भने तिमीहरूले -हे मुसलमानहरू!- ठानेका थिएनौ । किनकि तिनीहरूको आफ्नो बल र शक्तिमाथि विश्वास थियो । र यहूदीहरूले यो ठानी राखेका थिए कि तिनीहरूका किल्लाहरूले तिनीहरूलाई अल्लाहको यातना बाट सुरक्षित राख्नेछन र तिनीहरूमाथि कसैले शक्ति राख्दैनन् । तर अल्लाह तिनीहरू समक्ष त्यस दिशाबाट आए जसबारे तिनीहरूले सोचेका पनि थिएनन् । र अल्लाहले तिनीहरूका हृदयमा भय र अत्यन्त त्रास उत्पन्न गरिदिए । फल स्वरूप तिनीहरू आफ्नै हातले र मोमिनहरूका हातले आफ्नो घरबार ध्वस्त पार्दै थिए । अतः हे सही नेत्रवान र राम्रो बुद्धिमान मानिसहरू यी कथनहरूबाट शिक्षा ग्रहण गर ।

(3) र यदि अल्लाहले तिनीहरूमाथि तिनीहरूको निमित्त निर्वासन र आफ्नो घरबाट निस्कासित नलेखिएका भए वास्तवमा अल्लाहले तिनीहरूलाई संसारमै हत्या र गुलामीको रूपमा यातना दिने थिए, र तिनीहरूको लागि आखिरत (परलोक) मा नरकको यातना छदैं छ ।

(4) र यो -यहूदले यस संसारमा पाएको यातना र परलोकमा पाइने सजाय- यस कारणले कि तिनीहरूले अल्लाह तथा उनका रसूलका सख्त विरोध गरे,र दुबै सित युद्ध गरे र दुबैको अवज्ञामा धेरै प्रयास गरे । र जसले अल्लाह तथा उनका रसूलका विरोध गर्छ त्यसले थाहा पाउनु पर्छ कि अल्लाह कठोर दण्डदाता हुन् ।

ذَٰلِكَ بِأَنَّهُمْ شَآقُّوا۟ ٱللَّهَ وَرَسُولَهُۥ ۖ وَمَن يُشَآقِّ ٱللَّهَ فَإِنَّ ٱللَّهَ شَدِيدُ
ٱلْعِقَابِ ﴿٤﴾ مَا قَطَعْتُم مِّن لِّينَةٍ أَوْ تَرَكْتُمُوهَا قَآئِمَةً
عَلَىٰٓ أُصُولِهَا فَبِإِذْنِ ٱللَّهِ وَلِيُخْزِىَ ٱلْفَٰسِقِينَ ﴿٥﴾ وَمَآ أَفَآءَ ٱللَّهُ
عَلَىٰ رَسُولِهِۦ مِنْهُمْ فَمَآ أَوْجَفْتُمْ عَلَيْهِ مِنْ خَيْلٍ وَلَا رِكَابٍ
وَلَٰكِنَّ ٱللَّهَ يُسَلِّطُ رُسُلَهُۥ عَلَىٰ مَن يَشَآءُ ۚ وَٱللَّهُ عَلَىٰ كُلِّ شَىْءٍ
قَدِيرٌ ﴿٦﴾ مَّآ أَفَآءَ ٱللَّهُ عَلَىٰ رَسُولِهِۦ مِنْ أَهْلِ ٱلْقُرَىٰ فَلِلَّهِ وَلِلرَّسُولِ
وَلِذِى ٱلْقُرْبَىٰ وَٱلْيَتَٰمَىٰ وَٱلْمَسَٰكِينِ وَٱبْنِ ٱلسَّبِيلِ كَىْ لَا يَكُونَ
دُولَةًۢ بَيْنَ ٱلْأَغْنِيَآءِ مِنكُمْ ۚ وَمَآ ءَاتَىٰكُمُ ٱلرَّسُولُ فَخُذُوهُ وَمَا
نَهَىٰكُمْ عَنْهُ فَٱنتَهُوا۟ ۚ وَٱتَّقُوا۟ ٱللَّهَ ۖ إِنَّ ٱللَّهَ شَدِيدُ ٱلْعِقَابِ ﴿٧﴾
لِلْفُقَرَآءِ ٱلْمُهَٰجِرِينَ ٱلَّذِينَ أُخْرِجُوا۟ مِن دِيَٰرِهِمْ وَأَمْوَٰلِهِمْ
يَبْتَغُونَ فَضْلًا مِّنَ ٱللَّهِ وَرِضْوَٰنًا وَيَنصُرُونَ ٱللَّهَ وَرَسُولَهُۥٓ ۚ أُو۟لَٰٓئِكَ
هُمُ ٱلصَّٰدِقُونَ ﴿٨﴾ وَٱلَّذِينَ تَبَوَّءُو ٱلدَّارَ وَٱلْإِيمَٰنَ مِن قَبْلِهِمْ
يُحِبُّونَ مَنْ هَاجَرَ إِلَيْهِمْ وَلَا يَجِدُونَ فِى صُدُورِهِمْ حَاجَةً
مِّمَّآ أُوتُوا۟ وَيُؤْثِرُونَ عَلَىٰٓ أَنفُسِهِمْ وَلَوْ كَانَ بِهِمْ خَصَاصَةٌ ۚ
وَمَن يُوقَ شُحَّ نَفْسِهِۦ فَأُو۟لَٰٓئِكَ هُمُ ٱلْمُفْلِحُونَ ﴿٩﴾

(5) हे मोमिनहरू! खजूरका जुन रूखहरूलाई तिमीहरूले काट्यौ वा जुन वृक्षहरूलाई नछोई तिनकै मूलमा खडा रहन दियौ ती सबै अल्लाहकै आज्ञाले भएका थिए । र यस कारणले कि अल्लाह अवज्ञाकारीहरू र उनका आदेशको विरोध गर्नेहरूलाई अपमानित गरुन् यस रूपले कि तिमीहरूलाई उनका खजूरका रूखहरूलाई काट्न र पोल्न माथि शक्ति प्रदान गरे ।

(6) अल्लाहले बनु नजीर कूलको धनमालबाट जे-जति आफ्ना रसूललाई प्रदान गर्नुभयो जसको प्राप्तिको लागि तिमीहरूले न घोडा दौडायौ र नत्र ऊँटहरूलाई । बरु अल्लाह आफ्ना शत्रुहरू मध्ये जसमाथि चाहन्छन् आफ्ना रसूललाई विजय प्रदान गर्छन् । त तिनीहरू बिना युद्ध गरि उनीहरू समक्ष आत्मसमर्पण गरिदिन्छन् । र अल-फै यसतो माललाई भनिन्छ जो काफिरहरूबाट बिना युद्ध गरेर उचित रूपमा लिइन्छ । र अल्लाह प्रत्येक चिजमाथि सामर्थ्यवान छन् उनलाई केही कुरा असामर्थ्य गर्न सक्तैन ।

(7) नगरबासीहरू मध्ये मुशिरकहरूका जुन सम्पत्ति बिना युद्ध गरि अल्लाहले आफ्ना रसूललाई प्रदान गरे ती अल्लाहका र रसूलका हुन् र मुस्लिमहरूको आम कार्यहरूमा त्यसलाई खर्च गरिनेछन् । यसै गरी ती माल रसूलका आफन्तहरूका लागि छन् । र गरीब अनाथहरूको लागि जसका बुबाहरू बितिसकेका छन् । यसै गरी ती माल गरीब गुरुबा तथा निर्धनहरूको लागि छन । र यस्तो बटुवाको लागि पनि छ जसको बाटो खर्च समाप्त भइसकेको हो । ताकि यी सम्पत्ति मात्र धनीहरूकै हातमा नघुमिरहुन । र यस बाट गरीब गुरुबा तथा निर्धनहरू बंचित रहुन् । र रसूल तिमीहरूलाई जे-जति धनमाल र धार्मिक नियम विधान प्रदान गर्छन् त्यसलाई ग्रहण गर, र जुन कार्यबाट उनी तिमीहरूलाई रोक्छन् त्यसबाट रोकिने गर । अल्लाहको आज्ञा पालन गर्दै र उनीले मनाही गरेको कुराबाट टाढा बस्दै अल्लाह सित डराउँदै गर । निस्सन्देह अल्लाह अवज्ञाकारी र आदेशको विरोध गर्नेहरूका लागि कठोर दण्डदाता हुन् । यो आयत नबी सल्लल्लाहो अलेहे वसल्लमको हदीसलाई अनिवार्य रूपमा व्यवहारमा ल्याउनुमाथि ठोस प्रमाण छ चाहे त्यो हदीस वचन होस् वा कर्म वा तक्रीर (अर्थात नबी समक्ष कुनै कार्य भइरहेछ र हेरे पछि वा जानकारी भए पछि पनि मनाही गर्नु भएन) ।

(8) यसै गरी यस फैको धनबाट ती निर्धन प्रवासीहरूलाई दिनु पर्छ जसलाई मक्काका काफिरहरूले उनको घरबार र धनमालबाट बेदखल गरी निकालिदिएको छ । उनीहरू यस संसारमा अल्लाहको वरदान र परलोकमा अल्लाहको प्रसन्नता प्राप्त गर्ने चेष्टा गर्छन् । र उनीहरू अल्लाह र उनका रसूलको धर्मलाई अल्लाहको बाटोमा धर्मयुद्ध गर्दै मद्दत गर्न चाहन्छन् । यिनीहरू नै सच्चा व्यक्तिहरू छन जसले आफ्नो कर्मले आफ्नो वचनलाई सिद्ध गरिदिए ।

(9) र जसले मोहाजेरीन (प्रवासीहरू) को प्रवास गर्नु भन्दा मदीना नगरमा घर र ईमानमा आफ्नो ठाउँ बनाइसकेका थिए (यिनीहरूलाई अन्सार भनिन्छ) आफुतर्फ पलायन (हिज्रत) गरी आउनेहरूलाई माया गर्छन र आफ्नो धनमाल बाट यिनीहरूलाई सहयोग पुऱ्याउँछन् र जे-जति उनीहरूलाई फै आदि सम्पत्तिबाट प्रदान गरियो त्यस प्रति आफ्नो हृदयमा ईर्ष्या महसुस गर्दैनन्, बरु स्वयंमाथि ती पलायन गर्नेहरू र आवश्यकता रहेका मानिसहरूलाई प्राथममिकता दिन्छन् चाहे स्वयंमलाई त्यसको आवश्यकता किन नहोस् । वासतविकता के छ भने जुन व्यक्तिहरू आफ्नो हृदयको कृपणताबाट मुक्त भई अरूलाई माल दिनु रोक्दैनन् तिनीहरू नै आफ्नो उद्देश्यमा सफल हुनेछन् ।

وَٱلَّذِينَ جَآءُو مِنۢ بَعۡدِهِمۡ يَقُولُونَ رَبَّنَا ٱغۡفِرۡ لَنَا وَلِإِخۡوَٰنِنَا ٱلَّذِينَ سَبَقُونَا بِٱلۡإِيمَٰنِ وَلَا تَجۡعَلۡ فِي قُلُوبِنَا غِلّٗا لِّلَّذِينَ ءَامَنُواْ رَبَّنَآ إِنَّكَ رَءُوفٞ رَّحِيمٌ ﴿١٠﴾ ۞ أَلَمۡ تَرَ إِلَى ٱلَّذِينَ نَافَقُواْ يَقُولُونَ لِإِخۡوَٰنِهِمُ ٱلَّذِينَ كَفَرُواْ مِنۡ أَهۡلِ ٱلۡكِتَٰبِ لَئِنۡ أُخۡرِجۡتُمۡ لَنَخۡرُجَنَّ مَعَكُمۡ وَلَا نُطِيعُ فِيكُمۡ أَحَدًا أَبَدٗا وَإِن قُوتِلۡتُمۡ لَنَنصُرَنَّكُمۡ وَٱللَّهُ يَشۡهَدُ إِنَّهُمۡ لَكَٰذِبُونَ ﴿١١﴾ لَئِنۡ أُخۡرِجُواْ لَا يَخۡرُجُونَ مَعَهُمۡ وَلَئِن قُوتِلُواْ لَا يَنصُرُونَهُمۡ وَلَئِن نَّصَرُوهُمۡ لَيُوَلُّنَّ ٱلۡأَدۡبَٰرَ ثُمَّ لَا يُنصَرُونَ ﴿١٢﴾ لَأَنتُمۡ أَشَدُّ رَهۡبَةٗ فِي صُدُورِهِم مِّنَ ٱللَّهِۚ ذَٰلِكَ بِأَنَّهُمۡ قَوۡمٞ لَّا يَفۡقَهُونَ ﴿١٣﴾ لَا يُقَٰتِلُونَكُمۡ جَمِيعًا إِلَّا فِي قُرٗى مُّحَصَّنَةٍ أَوۡ مِن وَرَآءِ جُدُرِۭۚ بَأۡسُهُم بَيۡنَهُمۡ شَدِيدٞۚ تَحۡسَبُهُمۡ جَمِيعٗا وَقُلُوبُهُمۡ شَتَّىٰۚ ذَٰلِكَ بِأَنَّهُمۡ قَوۡمٞ لَّا يَعۡقِلُونَ ﴿١٤﴾ كَمَثَلِ ٱلَّذِينَ مِن قَبۡلِهِمۡ قَرِيبٗاۖ ذَاقُواْ وَبَالَ أَمۡرِهِمۡ وَلَهُمۡ عَذَابٌ أَلِيمٞ ﴿١٥﴾ كَمَثَلِ ٱلشَّيۡطَٰنِ إِذۡ قَالَ لِلۡإِنسَٰنِ ٱكۡفُرۡ فَلَمَّا كَفَرَ قَالَ إِنِّي بَرِيٓءٞ مِّنكَ إِنِّيٓ أَخَافُ ٱللَّهَ رَبَّ ٱلۡعَٰلَمِينَ ﴿١٦﴾

(10) र मोमिनहरू मध्ये जुन व्यक्तिहरू पहिलाका अन्सार र मोहाजेरीन भन्दा पछि आए तिनीहरू प्रार्थना गर्छन : हे हाम्रा पालनकर्ता ! हाम्रा पापलाई माफ गरिदिनुहोस् र ती दाजुहरूलाई पनि माफ गरिदिनुहोस् जो ईमानमा हामी भन्दा अघि बढेका छन्, र ईमानवालाहरू मध्ये कसैको प्रति हाम्रो हृदयमा कुनै किसिमको ईर्ष्या र द्वेष उत्पन्न न गर्नुहोस । हे हाम्रा पालनकर्ता निस्सन्देह तपाई आफ्ना दासहरू सँग अत्यन्त कोमल हृदयी एवं परम दयालु हुनुहुन्छ । यो आयत यस कुरामाथि प्रमाण छ कि मुस्लिमको लागि उचित छ कि आफ्नो सदाचारी पुर्खाको राम्रो चर्चा गरुन र उनीहरूका लागि अल्लाह सित दुआ गरुन् । यस कुरामाथि पनि प्रमाण छ कि नबी सल्लल्लाहो अलैहे वसल्लमका साथीहरू सँग प्रेम गरुन र उनीहरूको पनि राम्रो चर्चा गरुन र अल्लाह उनीहरू सित प्रसन्न हुन भन्ने प्रार्थना गरुन् ।

(11) के तिमीले मुनाफिक (कपटी) हरूलाई देखेनौ जो कुफ्रमा आफ्ना भाई बन्धुहरू सित भन्छन् जुन कि बनु नजीरका यहूदीहरू हुन् । यदि तिमीहरूलाई मुहम्मद तिम्रा घरबार बाट निष्कासित गर्नेछन् भने हामीहरू पनि तिम्रै साथ निस्केर जानेछौं । र तिमीहरू बारे हामी तिम्रो अपमान गर्ने वा तिमी सँग बाहिर न निस्कने बारे कदापि कसैको कुरा मान्ने छैनौं । र यदि तिमीहरू सँग युद्ध गरिएमा हामी अवश्य तिमीहरूलाई सहयोग गर्नेछौं ।र अल्लाह साक्षी छन कि ती मुनाफिकहरू बनु नजीरका यहूदीहरूसँग गरेको यस वाचामा झूठा छन्।

(12) यदि मदीनाबाट यहूदीहरू निष्कासित गरिए भने मुनाफिकहरू कदापि तिनीहरू सँग निस्कने छैनन्, र यदि तिनीहरू सँग युद्ध गरिएमा उनीहरूले कदापि गरिएको वाचा अनुसार तिनीहरूको सहयोग गर्ने छैनन् । र यदि उनीहरू सँग युद्ध गरिएमा तिनीहरू पराजित भई पिठ्युँ फर्काएर भाग्नेछन् । अनि अल्लाह तआला उनीहरूलाई सहयोग पुऱ्याउने छैनन् बरु उनीहरूलाई अपमान र हेला गर्नेछन् ।

(13) हे मोमिनहरू हो! मुनाफिकहरूका हृदयमा अल्लाह भन्दा बढी तिमीहरूको डर र त्रास बसेको छ,यो यस कारणले कि तिनीहरू अल्लाहको महानता र उनी माथि ईमान ल्याउनको महत्वको बारेमा अबुझ छन् र अल्लाहको यातनाबाट डराउँदैनन् ।

(14) यी यहूदीहरू परस्पर मिलेर पनि तिमीहरू सँग युद्ध गर्न सक्तैनन्, अँ, किल्ला बन्द वा प्रतिकूप (खाल्टोहरू) बाट सुरक्षित स्थानहरू भित्र रही वा प्रखालको पछाडि रहेर युद्ध गरुन् । तिनीहरूको पारस्पारिक शत्रुता अत्यन्त भयङ्कर छ, तिमी तिनीहरूलाई एकै कुरामाथि एकजुट ठान्छौ जबकि तिनीहरूका हृदय विभाजित छन् किनकि तिनीहरू अल्लाहको आदेश बुझ्दै बुझ्दैनन् र न त अल्लाहका चिन्हहरूमा चिन्तन मनन गर्दैछन् ।

(15) यी यहूदीहरूमाथि आएको अल्लाहको प्रकोपझैं यिनी भन्दा केही अघि कुरैश कूलका काफिरहरूले पनि बद्र युद्धमा भोगेका थिए र साथै बनु कैनोकाअ् कूलका यहूदीहरू पनि, यी सबैले आफ्नो कुफ्र र नबी सल्लल्लाहो अलैहे बसल्लमसँग शत्रुताको प्रकोपको मज्जा यसै संसारमा चाखि सकेका छन्, र यिनीहरूका लागि पीडादायी यातना परलोकमा तयार छ ।

(16) यी मुनाफिकहरूको उदाहरण जसले यहूदीहरूलाई युद्ध गर्नमाथि उत्साहित गरी नबी सल्लल्लाहो अलेहे वसल्लम विरुद्ध सहयोग पुऱ्याउने वाचा गरी धोका दिएका थिए उही शैतानझैं हो जसले मानिस समक्ष कुफ्रलाई सुन्दर बनाई त्यसलाई गर्ने तिर निम्तो दिन्छ र जब मानिस कुफ्र गरी हाल्छ तब शैतान भन्छः तिमी सित मेरो कुनै सरोकार छैन म त सम्पूर्ण जगतका पालनकर्ता अल्लाह सँग भय राख्छु ।

(17) शैतान र जुन मानिसले त्यसको आज्ञा पालन गरी कुफ्र गऱ्यो दुबैको परिणाम यो छ कि दुबै

فَكَانَ عَٰقِبَتَهُمَآ أَنَّهُمَا فِي ٱلنَّارِ خَٰلِدَيْنِ فِيهَاۚ وَذَٰلِكَ جَزَٰٓؤُاْ ٱلظَّٰلِمِينَ ﴿١٧﴾ يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُواْ ٱتَّقُواْ ٱللَّهَ وَلۡتَنظُرۡ نَفۡسٞ مَّا قَدَّمَتۡ لِغَدٖۖ وَٱتَّقُواْ ٱللَّهَۚ إِنَّ ٱللَّهَ خَبِيرُۢ بِمَا تَعۡمَلُونَ ﴿١٨﴾ وَلَا تَكُونُواْ كَٱلَّذِينَ نَسُواْ ٱللَّهَ فَأَنسَىٰهُمۡ أَنفُسَهُمۡۚ أُوْلَٰٓئِكَ هُمُ ٱلۡفَٰسِقُونَ ﴿١٩﴾ لَا يَسۡتَوِيٓ أَصۡحَٰبُ ٱلنَّارِ وَأَصۡحَٰبُ ٱلۡجَنَّةِۚ أَصۡحَٰبُ ٱلۡجَنَّةِ هُمُ ٱلۡفَآئِزُونَ ﴿٢٠﴾ لَوۡ أَنزَلۡنَا هَٰذَا ٱلۡقُرۡءَانَ عَلَىٰ جَبَلٖ لَّرَأَيۡتَهُۥ خَٰشِعٗا مُّتَصَدِّعٗا مِّنۡ خَشۡيَةِ ٱللَّهِۚ وَتِلۡكَ ٱلۡأَمۡثَٰلُ نَضۡرِبُهَا لِلنَّاسِ لَعَلَّهُمۡ يَتَفَكَّرُونَ ﴿٢١﴾ هُوَ ٱللَّهُ ٱلَّذِي لَآ إِلَٰهَ إِلَّا هُوَۖ عَٰلِمُ ٱلۡغَيۡبِ وَٱلشَّهَٰدَةِۖ هُوَ ٱلرَّحۡمَٰنُ ٱلرَّحِيمُ ﴿٢٢﴾ هُوَ ٱللَّهُ ٱلَّذِي لَآ إِلَٰهَ إِلَّا هُوَ ٱلۡمَلِكُ ٱلۡقُدُّوسُ ٱلسَّلَٰمُ ٱلۡمُؤۡمِنُ ٱلۡمُهَيۡمِنُ ٱلۡعَزِيزُ ٱلۡجَبَّارُ ٱلۡمُتَكَبِّرُۚ سُبۡحَٰنَ ٱللَّهِ عَمَّا يُشۡرِكُونَ ﴿٢٣﴾ هُوَ ٱللَّهُ ٱلۡخَٰلِقُ ٱلۡبَارِئُ ٱلۡمُصَوِّرُۖ لَهُ ٱلۡأَسۡمَآءُ ٱلۡحُسۡنَىٰۚ يُسَبِّحُ لَهُۥ مَا فِي ٱلسَّمَٰوَٰتِ وَٱلۡأَرۡضِۖ وَهُوَ ٱلۡعَزِيزُ ٱلۡحَكِيمُ ﴿٢٤﴾

## سُورَةُ الْمُمْتَحَنَةِ

آياتها ١٣ — ترتيبها ٦٠

नरकमा जानेछन् र सदाको लागि त्यहाँ बस्नेछन् । र अल्लाहको सीमा तथा नियमहरूको उल्लङ्घन गर्नेहरूको यही सजाय रहेको छ ।

(18) हे अल्लाह र उनका रसूललाई सत्य मान्नेहरू र शरियतलाई व्यवहारमा ल्याउनेहरू! अल्लाह सित डराउ, र उनको आदेश पालन गरी उनले मनाही गरेका कुराहरूबाट बंचित रही उनको यातनाबाट डराउने गर । र प्रत्येक व्यक्तिले प्रलयको दिनको लागि अगाडि के कर्म पठाएको छ भन्ने कुरामा विचार गरोस् । र अल्लाह सित आफ्नो गर्ने र नगर्ने कार्यहरूमा डराउने गर र यो जानि राख कि अल्लाह तिमीहरूले गरेका सम्पूर्ण कार्यहरू सित अवगत छन्,उनीमाथि तिम्रो कार्यहरू मध्ये केही लुक्न सक्दैन अनि त्यस माथि तिमीलाई प्रतिफल दिनेछन् ।

(19) र हे मोमिनहरू! तिमीहरू ती व्यक्तिहरूझैं न बन जसले अल्लाहले अनिवार्य गरेका कार्यहरूलाई छाडे, तसर्थ अल्लाहले पनि तिनीहरूलाई ती सुकर्महरू गर्नलाई बिर्सिदिनुभो जसको कारणले तिनीहरू परलोकको यातना बाट बाँचुन । तिनीहरू नै अवज्ञाकारी र अल्लाह तथा उनका रसूलको आज्ञापालन गर्नुबाट बाहिर निस्केका छन् ।

(20) नरकका यातनामा रहेका बासिन्दा र स्वर्गका अनुकम्पा तथा धनमालमा रहेका बासिन्दा समान हुने छैनन्, स्वर्गका बासिन्दाहरू नै प्रत्येक चाहिने कुरामा सफल र प्रत्येक नराम्रो कुराबाट मुक्त हुनेछन् ।

(21) यदि हामीले यस कुरआनलाई पर्वतहरू मध्ये कुनै पर्वतमाथि अवतरित गरेको भए र कुरआनमा रहेको वाचा तथा यातनालाई बुझ्ने गरेको भए तिमीले त्यस पर्वतलाई शक्तिशाली र महाठूलो भ एमा पनि अल्लाहको भयले झुक्दै र टुक्रा-टक्रा हुँदै गरेको देख्नेथ्यौ । हामी यी उदाहरणहरू मनुष्यका लागि वर्णन गर्दछौं ताकि तिनीहरूले अल्लाहको शक्ति र उनको महानतामा चिन्तन मनन गरुन् । यो आयत मनुष्यलाई कुरआनमा चिन्तन मनन गर्न, यसका अर्थहरू सम्झन र त्यसलाई व्यवहारमा ल्याउनमाथि प्रेरित गर्दछ ।

(22) उनै पवित्र र महान् अल्लाह हुन् जस बाहेक अन्य कोही सत्य उपास्य छैन,उनी अदृश्य,रहस्य र दृश्य एवं प्रष्ट, उपस्थित र अनुपस्थित सबै कुराहरूका ज्ञाता हुन् । उनी अत्यन्त करूणामय छन जसको कृपा प्रत्येक वस्तुका लागि पर्याप्त छ, र मोमिनहरूका लागि परम दयालु छन् ।

(23) उनै अल्लाह हुन जसबाहेक अन्य कोही सत्य पूज्य छैन,सम्पूर्ण वस्तुहरूका स्वामी,जसले बिना कसै सित सहयोग लिई हेरफेर गर्नेवाला,प्रत्येक प्रकारको कमी कमजोरीबाट पवित्र,र प्रत्येक किसिमको दोष र अवगुण बाट चोखो,आफ्ना रसूल र दूतहरूलाई र जे चिन्हहरू तिनीहरू सँगै पठाउनुभो सबैलाई सत्य मान्नेवाला, आफ्नो सम्पूर्ण सृष्टि र तिनका कार्यहरूको संरक्षक, यस्तो प्रभ त्वशाली जसलाई कोही पराजित गर्न सक्तैन, यस्तो प्रभावशाली कि उनैको अधीनमा सबै सृष्टिहरू छन् र सबै सृष्टि उनैको अगाडि झुक्ने गर्छन् । यस्तो महान कि सबै प्रकारको महानता र ठूलोपन उनैकै लागि छन् । पवित्र छन अल्लाह त्यस शिर्कबाट जुन यी मानिसहरू उनको उपासनामा गर्दैछन् ।

(24) उनै अल्लाह हुन् जुन सृष्टिकर्ता र सृष्टिको योजना बनाउनेवाला,र आफ्नो ज्ञान तथा बुद्धि अनुसार अस्तित्व प्रदान गर्नेवाला, र जसरी चाहन्छन् आफ्नो सृष्टिको रूप बनाउनेवाला, उनैका लागि उत्तम नामहरू र श्रेष्ठ गुणहरू छन्, आकाशहरू तथा पृथ्वीका सारा चिजहरू उनको महिमागान गर्छन् । उनै प्रभुत्वशाली जो आफ्नो शत्रुबाट कठोर रूपमा बदला लिनेवाला, र यस्तो तत्त्वदर्शी जो आफ्नो सृष्टिमा राम्ररी योजना गर्नेवाला हुन् ।

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُواْ لَا تَتَّخِذُواْ عَدُوِّي وَعَدُوَّكُمۡ أَوۡلِيَآءَ تُلۡقُونَ إِلَيۡهِم بِٱلۡمَوَدَّةِ وَقَدۡ كَفَرُواْ بِمَا جَآءَكُم مِّنَ ٱلۡحَقِّ يُخۡرِجُونَ ٱلرَّسُولَ وَإِيَّاكُمۡ أَن تُؤۡمِنُواْ بِٱللَّهِ رَبِّكُمۡ إِن كُنتُمۡ خَرَجۡتُمۡ جِهَٰدٗا فِي سَبِيلِي وَٱبۡتِغَآءَ مَرۡضَاتِيۚ تُسِرُّونَ إِلَيۡهِم بِٱلۡمَوَدَّةِ وَأَنَا۠ أَعۡلَمُ بِمَآ أَخۡفَيۡتُمۡ وَمَآ أَعۡلَنتُمۡۚ وَمَن يَفۡعَلۡهُ مِنكُمۡ فَقَدۡ ضَلَّ سَوَآءَ ٱلسَّبِيلِ ﴿١﴾ إِن يَثۡقَفُوكُمۡ يَكُونُواْ لَكُمۡ أَعۡدَآءٗ وَيَبۡسُطُوٓاْ إِلَيۡكُمۡ أَيۡدِيَهُمۡ وَأَلۡسِنَتَهُم بِٱلسُّوٓءِ وَوَدُّواْ لَوۡ تَكۡفُرُونَ ﴿٢﴾ لَن تَنفَعَكُمۡ أَرۡحَامُكُمۡ وَلَآ أَوۡلَٰدُكُمۡۚ يَوۡمَ ٱلۡقِيَٰمَةِ يَفۡصِلُ بَيۡنَكُمۡۚ وَٱللَّهُ بِمَا تَعۡمَلُونَ بَصِيرٞ ﴿٣﴾ قَدۡ كَانَتۡ لَكُمۡ أُسۡوَةٌ حَسَنَةٞ فِيٓ إِبۡرَٰهِيمَ وَٱلَّذِينَ مَعَهُۥٓ إِذۡ قَالُواْ لِقَوۡمِهِمۡ إِنَّا بُرَءَٰٓؤُاْ مِنكُمۡ وَمِمَّا تَعۡبُدُونَ مِن دُونِ ٱللَّهِ كَفَرۡنَا بِكُمۡ وَبَدَا بَيۡنَنَا وَبَيۡنَكُمُ ٱلۡعَدَٰوَةُ وَٱلۡبَغۡضَآءُ أَبَدًا حَتَّىٰ تُؤۡمِنُواْ بِٱللَّهِ وَحۡدَهُۥٓ إِلَّا قَوۡلَ إِبۡرَٰهِيمَ لِأَبِيهِ لَأَسۡتَغۡفِرَنَّ لَكَ وَمَآ أَمۡلِكُ لَكَ مِنَ ٱللَّهِ مِن شَيۡءٖۖ رَّبَّنَا عَلَيۡكَ تَوَكَّلۡنَا وَإِلَيۡكَ أَنَبۡنَا وَإِلَيۡكَ ٱلۡمَصِيرُ ﴿٤﴾ رَبَّنَا لَا تَجۡعَلۡنَا فِتۡنَةٗ لِّلَّذِينَ كَفَرُواْ وَٱغۡفِرۡ لَنَا رَبَّنَآۖ إِنَّكَ أَنتَ ٱلۡعَزِيزُ ٱلۡحَكِيمُ ﴿٥﴾

## सूरह अल्-मुम्तहिना - 60

(1) हे अल्लाह र उनका रसूललाई सत्य मान्नेहरू र शरियतलाई व्यवहारमा ल्याउनेहरू! मेरो र तिम्रो शत्रुलाई मित्र बन्धु न बनाऊ । तिमीहरू तिनीहरू तर्फ मित्रताको हात बढाउँछौ र तिनीहरूलाई अल्लाहका रसूल सल्लल्लाहो अलैहे वसल्लम र मुसलमानहरूको खबर गर्छौं जबकि तिनीहरूले तिमी समक्ष आएको सत्यलाई र अल्लाह तथा उनका रसूलमाथि ईमान ल्याउनुलाई र रसूलमाथि अवतरित कुरआनलाई इन्कार गरिसकेका छन् । र हे मोमिनहरू! तिनीहरू रसूललाई र तिमीहरूलाई केवल यस दोषमा मक्का नगरबाट निकालि रहेकाछन कि तिमीहरूले आफ्नो पालनकर्ता अल्लाहलाई सत्य र एक ठानेका छौ । हे मोमिनहरू! यदि तिमीहरू मेरो बाटोमा धर्मयुद्ध गर्न हेतु र मेरो प्रसन्नता खोजने हेतु पलायन भएका छौ भने मेरा र तिम्रा शत्रुहरू सँग मित्रता न गर । तिमीहरू गोप्य रूपमा तिनीहरूलाई मित्रताको सन्देश पठाउँछौ जबकि जुन कार्य तिमीहरू गोप्य रूपमा गर्दछौ र जुन कार्य खुल्लम खुल्ला रूपमा गर्दछौ ती सबैलाई म राम्ररी जान्दछु । तिमीहरू मध्ये जसले पनि यस्तो गऱ्यो ऊ वास्तवमा नै सत्यमार्गबाट विचलित भयो ।

(2) जता तिर तिमीहरू मित्रताको गोप्य सन्देश पठाउँछौ यदि तिनीहरू तिमीहरूमाथि प्रभावी हुन्छन् भने तिमीहरू सँग खुल्ला युद्ध गर्नेछन्, र तिमीहरूलाई दुःख दिनका लागि आफ्ना हातले हत्या र गुलाम बनाउनुको लागि र आफ्ना जिब्राले गाली र तिताा-मीठा भन्नको लागि प्रहार गर्नेछन् । र तिनीहरू चाहन्छन् कि तिमीहरू तिनीझैं कुफ्र गर ।

(3) तिमीहरूलाई न त तिमीहरूका नातेदार काम लाग्नेछन र न त तिमीहरूका सन्तान नै । अल्लाहले प्रलय हुने दिन तिमीहरूलाई छुट्याउनेछन् । सुकर्मीहरूलाई स्वर्गमा प्रवेश गर्नको अनुमति दिनेछन् र पापीहरूलाई नरकमा प्रवेश गराउनेछन् । र जे-जति तिमीहरू गर्दछौ ती अल्लाह देखिरहेका छन् तिम्रा वचन र कर्म मध्ये कुनै कुरा उनीसँग लुक्न सक्दैन ।

(4) हे मोमिनहरू हो! तिमीहरूका लागि इब्राहीम तथा उनका साथीहरूमा उत्तम नमूना रहेको छ, जब उनले आफ्ना काफिर जातिबन्धुलाई स्पष्ट रूपमा भनिदिएः तिमीहरू सित र अल्लाह बाहेकका तिमीहरूका मूर्ति तथा देवी-देवता पूज्यहरूसित हाम्रो कुनै सरोकार छैन । हामी तिमीहरूको र तिमीहरूले गरेको कुफ्रको इन्कार गर्दछौं । तिमीहरूले एक अल्लाहमाथि ईमान नल्याउन्जेल र जब सम्म कुफ्रमाथि बस्छौ हामी र तिमीहरूको बीचमा शत्रुता र घृणा उत्पन्न भएको छ । तर इब्राहीमले आफ्नो बुबाको लागि गरेको क्षमायाचनाको कुरा बेग्लै हो, र उनको पिता अल्लाहको शत्रु छ भन्ने कुरा इब्राहीमसामु स्पष्ट हुनु भन्दा अघिको कुरा हो । र जब यो कुरा स्पष्ट भयो कि उनको पिता अल्लाहको शत्रु हो त उ सँग मेरो केही सरोकार छैन भन्ने कुरा इब्राहीमले प्रष्ट पार्नुभयो । हे पालनकर्ता तपाईंमाथि हामीले पूर्ण भरोसा गऱ्यौं र तपाईं तर्फ प्रायश्चित गरेर फर्किनेछौं र प्रलयको दिन तपाईं तर्फ फर्केर जानेछौं ।

(5) हे हाम्रा पालनकर्ता! हामीलाई काफिरहरूको लागि परीक्षाको साधन नबानउनु होस् न त आफ्नो यातना हामीमाथि अवतरण गरेर न त काफिरहरूलाई हामीमाथि आधिपत्य प्राप्त गराएर,किनकि यसो भएमा तिनीहरू हामीलाई आफ्नो दीन धर्मबाट विचलित गरिदिन्छन् वा हामीमाथि प्रभुत्व प्राप्त गरेर हामीलाई परीक्षा अर्थात फित्नामा पनि हाल्न सक्छन् अनि भन्छन् यदि यिनीहरू (मुस्लिमहरू) सत्यमाथि हुन्थे भने यिनलाई यो यातना र परीक्षा मिल्दैनथ्यो,र यो हेरेर तिनीहरूको कुफ्रमा अरू बढोतरी भइहाल्छ । र हे

لَقَدْ كَانَ لَكُمْ فِيهِمْ أُسْوَةٌ حَسَنَةٌ لِّمَن كَانَ يَرْجُوا اللَّهَ وَالْيَوْمَ الْآخِرَ
وَمَن يَتَوَلَّ فَإِنَّ اللَّهَ هُوَ الْغَنِيُّ الْحَمِيدُ ﴿٦﴾ ۞ عَسَى اللَّهُ أَن يَجْعَلَ
بَيْنَكُمْ وَبَيْنَ الَّذِينَ عَادَيْتُم مِّنْهُم مَّوَدَّةً وَاللَّهُ قَدِيرٌ وَاللَّهُ غَفُورٌ رَّحِيمٌ
﴿٧﴾ لَّا يَنْهَاكُمُ اللَّهُ عَنِ الَّذِينَ لَمْ يُقَاتِلُوكُمْ فِي الدِّينِ وَلَمْ يُخْرِجُوكُم
مِّن دِيَارِكُمْ أَن تَبَرُّوهُمْ وَتُقْسِطُوا إِلَيْهِمْ إِنَّ اللَّهَ يُحِبُّ الْمُقْسِطِينَ
﴿٨﴾ إِنَّمَا يَنْهَاكُمُ اللَّهُ عَنِ الَّذِينَ قَاتَلُوكُمْ فِي الدِّينِ وَأَخْرَجُوكُم
مِّن دِيَارِكُمْ وَظَاهَرُوا عَلَىٰ إِخْرَاجِكُمْ أَن تَوَلَّوْهُمْ وَمَن يَتَوَلَّهُمْ فَأُولَٰئِكَ
هُمُ الظَّالِمُونَ ﴿٩﴾ يَا أَيُّهَا الَّذِينَ آمَنُوا إِذَا جَاءَكُمُ الْمُؤْمِنَاتُ
مُهَاجِرَاتٍ فَامْتَحِنُوهُنَّ اللَّهُ أَعْلَمُ بِإِيمَانِهِنَّ فَإِنْ عَلِمْتُمُوهُنَّ مُؤْمِنَاتٍ
فَلَا تَرْجِعُوهُنَّ إِلَى الْكُفَّارِ لَا هُنَّ حِلٌّ لَّهُمْ وَلَا هُمْ يَحِلُّونَ لَهُنَّ وَآتُوهُم
مَّا أَنفَقُوا وَلَا جُنَاحَ عَلَيْكُمْ أَن تَنكِحُوهُنَّ إِذَا آتَيْتُمُوهُنَّ أُجُورَهُنَّ
وَلَا تُمْسِكُوا بِعِصَمِ الْكَوَافِرِ وَاسْأَلُوا مَا أَنفَقْتُمْ وَلْيَسْأَلُوا مَا أَنفَقُوا
ذَٰلِكُمْ حُكْمُ اللَّهِ يَحْكُمُ بَيْنَكُمْ وَاللَّهُ عَلِيمٌ حَكِيمٌ ﴿١٠﴾ وَإِن فَاتَكُمْ
شَيْءٌ مِّنْ أَزْوَاجِكُمْ إِلَى الْكُفَّارِ فَعَاقَبْتُمْ فَآتُوا الَّذِينَ ذَهَبَتْ
أَزْوَاجُهُم مِّثْلَ مَا أَنفَقُوا وَاتَّقُوا اللَّهَ الَّذِي أَنتُم بِهِ مُؤْمِنُونَ ﴿١١﴾

पालनकर्ता आफ्नो क्षमा र माफीले हाम्रा पापहरूमाथि पर्दा हालिदिनुहोस्, निस्सन्देह तपाईं प्रभुत्वशाली हुनुहुन्छ जसलाई कसैले पराजित गर्न सक्तैन र आफ्नो वचन तथा कर्ममा तत्त्वदर्शी हुनुहुन्छ ।

(6) हे मोमिनहरू हो ! तिमीहरूको लागि इब्राहीम र उनका साथीहरूको जीवनमा राम्रो नमूना छ ती व्यक्तिहरूको लागि जो अल्लाहसित लोक परलोक दुबैमा भलाई चाहन्छ । जुन व्यक्ति अल्लाहका नबीहरूलाई नमूना न मानी र त्यसलाई व्यवहारमा न ल्याई बिमुखता गर्छ र अल्लाहका शत्रुहरूलाई मित्र बनाउँछ त अल्लाह आफ्ना दासहरूबाट निस्पृह र बेपर्वाह हुनुहुन्छ र आफ्नो अस्तित्व तथा गुणहरूमा र प्रत्येक अवस्थामा प्रशंसनीय हुनुहुन्छ ।

(7) हे मोमिनहरू! सम्भव छ कि अल्लाहले तिमीहरू र मुश्रिकहरू मध्ये तिम्रा आफन्त शत्रुहरूका बीच घृणा पश्चात प्रेम-भाव र ईर्ष्या तथा डाह पछि माया र सनेह तिनीहरूका मुटु इस्लाम प्रति खुल्ला गरी उत्पन्न गरिदिनऊन् । अल्लाह प्रत्येक कुरामाथि सामर्थ्यवान हुन्, र आफ्ना दासका लागि क्षमाशील र परम दयालु हुन् ।

(8) हे मोमिनहरू हो! जसले तिमीहरूसित धर्मको मामलामा युद्ध गरेनन् र तिमीहरूलाई तिमीहरूका घरबाट निष्कासित गरेनन् त्यसता व्यक्तिहरू सित राम्रो व्यवहार र भलाई, उपकार तथा न्याय गर्नबाट अल्लाह रोक्दैनन् । वास्तवमा अल्लाह ती व्यक्तिहरूसित प्रेम गर्छन् जो आफ्नो वचन र कर्ममा न्याय गर्दछन् ।

(9) अल्लाहले त तिमीहरूलाई यस्ता व्यक्तिहरूसित सहयोग र प्रेम सँगै मित्रता गर्न रोक्छन् जसले तिमीहरूसित धर्मको विषयमा युद्ध गरी तिमीहरूलाई तिमीहरूका घरबाट निष्कासित गरेर तिमीहरूको निष्कासितमा काफिरहरूलाई सहयोग गरे । र जसले तिनीहरूलाई मोमिनहरू विरुद्ध सहयोगी र मित्र बनाए त्यसले आफ्नो जीवमाथि अत्याचारी भए र अल्लाहको सीमाबाट बाहिर निस्किए ।

(10) हे अल्लाह र उनका रसूललाई सत्य मान्नेहरू र शरियतलाई व्यवहारमा ल्याउनेहरू! जब तिमी समक्ष मोमिन महिलाहरू काफिरको देशबाट पलायन गरेर इस्लामको देशमा आउँछिन तब तिमीहरू तिनीहरूलाई जाँच-बुझ गर ताकि तिनीहरूको ईमानको सत्यता जानौस, र वास्तवमा तिनीहरूको ईमानको बढी जानकारी अल्लाहलाई छ । तिमीहरूले तिनीहरूलाई प्रत्यक्ष चिन्ह र प्रमाणबाट मोमिन हुन भने जानकारी प्राप्त गर्‍यौ भने तिनीहरूलाई तिनका काफिर पतिहरू तर्फ नफर्काऊ । किनकि मोमिन महिलाहरूका लागि जायज छैन कि काफिर पुरुषहरू सँग बिहे गरुन्, यसै गरी काफिर पुरुषहरूको लागि अनुमति छैन कि मोमिन महिलाहरू सित बिवाह गरुन् । र इस्लाम ल्याएकी पत्नीहरूमाथि जे-जति महर (बिहे हुने बेला पत्नीलाई निर्धारित धनमाल) उनका पतिहरूले खर्च गरेका छन् ती सबैलाई फिर्ता गरिदेऊ । र महरलाई दिएर तिमीहरू पनि ती महिलाहरू सँग बिहे गर्न सक्छौ । र तिमीहरू पनि काफिर महिलाहरूलाई वैवाहिक बन्धनमा रोकेर नराख । र तिमीहरूले आफ्ना ती पत्नीहरूमाथि खर्च गरेको महरलाई मुश्रिकहरू सित फिर्ता माग जसले इस्लामबाट फिर्ता भएर मुश्रिकहरूसँग मिलेकी छिन् । यसै गरी काफिरहरूले पनि इस्लाम ल्याएकी र मुस्लिम तिर लागेकी आफ्ना पत्नीहरूमाथि खर्च गरेको महरलाई माग गर्नु बिल्कुलै वैध छ । यो वर्णन भएको आदेश अल्लाहको आदेश हो र अल्लाह नै तिमीहरू बीच निर्णय गर्छन् यस निर्णयको विरोध न गर । अल्लाह सर्वज्ञाता हुनुहुन्छ उनीमाथि केही कुरा लुप्त हुँदैन, र आफ्नो वचन तथा कर्ममा तत्त्वदर्शी हुन्।

(11) र यदि तिमीहरूका पत्नीहरू मध्ये कोही काफिरहरू कहाँ गइहाले र तिमीहरूले खर्च गरेको

يَٰٓأَيُّهَا ٱلنَّبِيُّ إِذَا جَآءَكَ ٱلۡمُؤۡمِنَٰتُ يُبَايِعۡنَكَ عَلَىٰٓ أَن لَّا يُشۡرِكۡنَ بِٱللَّهِ شَيۡـٔٗا وَلَا يَسۡرِقۡنَ وَلَا يَزۡنِينَ وَلَا يَقۡتُلۡنَ أَوۡلَٰدَهُنَّ وَلَا يَأۡتِينَ بِبُهۡتَٰنٖ يَفۡتَرِينَهُۥ بَيۡنَ أَيۡدِيهِنَّ وَأَرۡجُلِهِنَّ وَلَا يَعۡصِينَكَ فِي مَعۡرُوفٖ فَبَايِعۡهُنَّ وَٱسۡتَغۡفِرۡ لَهُنَّ ٱللَّهَۚ إِنَّ ٱللَّهَ غَفُورٞ رَّحِيمٞ ١٢ يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُواْ لَا تَتَوَلَّوۡاْ قَوۡمًا غَضِبَ ٱللَّهُ عَلَيۡهِمۡ قَدۡ يَئِسُواْ مِنَ ٱلۡأٓخِرَةِ كَمَا يَئِسَ ٱلۡكُفَّارُ مِنۡ أَصۡحَٰبِ ٱلۡقُبُورِ ١٣

سُورَةُ الصَّفِّ — ترتيبها ٦١ — آياتها ١٤

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

سَبَّحَ لِلَّهِ مَا فِي ٱلسَّمَٰوَٰتِ وَمَا فِي ٱلۡأَرۡضِۖ وَهُوَ ٱلۡعَزِيزُ ٱلۡحَكِيمُ ١ يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُواْ لِمَ تَقُولُونَ مَا لَا تَفۡعَلُونَ ٢ كَبُرَ مَقۡتًا عِندَ ٱللَّهِ أَن تَقُولُواْ مَا لَا تَفۡعَلُونَ ٣ إِنَّ ٱللَّهَ يُحِبُّ ٱلَّذِينَ يُقَٰتِلُونَ فِي سَبِيلِهِۦ صَفّٗا كَأَنَّهُم بُنۡيَٰنٞ مَّرۡصُوصٞ ٤ وَإِذۡ قَالَ مُوسَىٰ لِقَوۡمِهِۦ يَٰقَوۡمِ لِمَ تُؤۡذُونَنِي وَقَد تَّعۡلَمُونَ أَنِّي رَسُولُ ٱللَّهِ إِلَيۡكُمۡۖ فَلَمَّا زَاغُوٓاْ أَزَاغَ ٱللَّهُ قُلُوبَهُمۡۚ وَٱللَّهُ لَا يَهۡدِي ٱلۡقَوۡمَ ٱلۡفَٰسِقِينَ ٥

महर तिमीहरूलाई फिर्ता गरेनन् अनि तिमीहरू काफिरहरूमाथि अधिपत्य र विजय प्राप्त गऱ्यौ त ती मुस्लिमहरूलाई युद्धमा प्राप्त भएको धन-मालबाट जसले काफिरहरू तर्फ गएकी पत्नीहरूमाथि यस भन्दा अघि खर्च गरेको महर बराबर देऊ । र त्यस अल्लाहको भय राख्ने गर जसमाथि तिमीहरूले ईमान ल्याएका छौ ।

(12) हे दूत ! जब मोमिन महिलाहरू तिमीसमक्ष यो बैअत (शपथ) लिन आउँछन कि उनीहरूले कुनै वस्तुलाई अल्लाहको उपासनामा साझेदार बनाउने छैनन्, र कुनै वस्तुलाई चोरी गर्ने छैनन्, व्यभिचार गर्ने छैनन्, र जन्म पछि वा अघि आफ्नो सन्तानलाई हत्या गर्ने छैनन्, र आफ्नो पति सित अरूबाट जन्मेको सन्तानलाई सम्बन्ध स्थापित गर्ने छैनन्, र तपाईंले दिएको राम्रो कार्यको आदेशको अवज्ञा गर्ने छैनन्, तब तिनीहरू सँग यस कुरामाथि शपथ लिइहाल । र उनीहरूको लागि अल्लाह सित क्षमा माग, निस्सन्देह अल्लाह आफ्ना भक्तहरूका लागि अत्यन्त क्षमाशील एवं परम दयालु छन् ।

(13) हे अल्लाह र उनका रसूलमाथि ईमान राख्नेवालाहरू हो ! यस्ता व्यक्तिहरूलाई मित्र र प्रेमी नबनाऊ जसमाथि अल्लाहले उसको कुफ्रको कारणले रिस र क्रोध गर्नु भएको हो । तिनीहरू परलोकमा राम्रो प्रतिफल बाट त्यसरी नै निराश भएका छन् जसरी चिहानमा परेका काफिरहरू परलोकमा अल्लाहको दया र कृपा बाट निराश भएका छन् किनकि उनीहरूले वास्तविकता हेरि सकेकाछन् र जानिराखेका छन् कि उनीहरूका लागि अखिरतमा केही भाग छैन । वा जसरी काफिर आफ्ना चिहानमा परेका मृतहरूबाट निराश भएका छन् किनकि उनको आस्था अनुसार ती मृतकहरू दोबारा जिउँदो उठने छैनन् ।

## सूरह अस्-सफ्फ - 61

(1) आकाशहरू र धरतीमा जे-जति वस्तुहरू छन् सबै अल्लाहको पवित्रता र महिमागान गर्दछन्, र उनी प्रभुत्वशाली छन् जसलाई कोही पराजित गर्न सक्तैन, र आफ्नो वचन तथा कर्ममा तत्त्वदर्शी छन् ।

(2) हे अल्लाह र उनका रसूललाई सत्य मान्नेहरू र शरियतलाई व्यवहारमा ल्याउनेहरू! किन यस्तो वाचा गर्छौ वा यस्तो कुरा किन गर्छौ जसलाई तिमी पूरा गर्दैनौ ? जसको कर्म भनाईको विरुद्ध हुन्छ त्यसतो माथि यो इन्कार र खण्डन हो ।

(3) जुन कार्य तिमीहरू गर्दैनौ त्यो कुरा आफ्नो जिब्रोले भन्नु अल्लाहको दृष्टिमा अत्यन्त अप्रिय हो ।

(4) वास्तवमा अल्लाह ती व्यक्तिहरूलाई मनपराउँछन जो उनको मार्गमा यसरी पंक्तिबद्ध भई युद्ध गर्छन् मानौ उनीहरू सीसाद्वारा निर्मित प्रर्खाल हुन् जसबाट शत्रुले छिर्नु असम्भव छ। यस आयतमा जिहाद (धर्मयुद्ध) र मुजाहेदीन (धर्मयोद्धा) को प्रधानताको वर्णन गरिएको हो, र अल्लाहको प्रेम ती मोमिन भक्तहरूसँग सिद्ध हुन्छ जो अल्लाहका शत्रुहरूको आमने सामने गरी पंक्तिबद्ध भई उनको बाटोमा युद्ध गर्छन ।

(5) हे दूत! आफ्नो समुदाय समक्ष आदरणीय मूसाको कुराको चर्चा गरिदिनुहोस् जब उहाँले आफ्नो समुदाय सित भन्नुभयोः किन तिमीहरू मलाई आफ्नो कर्म र कथनबाट दुःख दिन्छौ जबकि तिमीहरूलाई राम्ररी थाहा छ कि म तिमीहरू तर्फ अल्लाहको रसूल हुँ । त जब तिमीहरूले जानाजान सत्यबाट विचलित भई त्यहीमाथि अडिग भइहालौ त अल्लाहले पनि तिमीहरूको हृदयलाई सुबाटो स्वीकार गर्नुबाट फेरिदिए ।

(6) हे दूत! मर्यम पुत्र ईसाले आफ्नो समुदायसँग भनेको कुरालाई आफ्नो समुदायसँग तपाईं पनि चर्चा गरिदिनुहोस् जब उहाँले भन्नुभयोः हे इस्राएलका सन्तानहरू हो! म तिमीहरू तर्फ अल्लाहले पठाएको रसूल हुँ, र त्यस तौरातको पुष्टि गर्नेवाला छु जो म

وَإِذْ قَالَ عِيسَى ٱبْنُ مَرْيَمَ يَٰبَنِىٓ إِسْرَٰٓءِيلَ إِنِّى رَسُولُ ٱللَّهِ إِلَيْكُم مُّصَدِّقًا لِّمَا بَيْنَ يَدَىَّ مِنَ ٱلتَّوْرَىٰةِ وَمُبَشِّرًۢا بِرَسُولٍ يَأْتِى مِنۢ بَعْدِى ٱسْمُهُۥٓ أَحْمَدُ ۖ فَلَمَّا جَآءَهُم بِٱلْبَيِّنَٰتِ قَالُوا۟ هَٰذَا سِحْرٌ مُّبِينٌ ﴿٦﴾ وَمَنْ أَظْلَمُ مِمَّنِ ٱفْتَرَىٰ عَلَى ٱللَّهِ ٱلْكَذِبَ وَهُوَ يُدْعَىٰٓ إِلَى ٱلْإِسْلَٰمِ ۚ وَٱللَّهُ لَا يَهْدِى ٱلْقَوْمَ ٱلظَّٰلِمِينَ ﴿٧﴾ يُرِيدُونَ لِيُطْفِـُٔوا۟ نُورَ ٱللَّهِ بِأَفْوَٰهِهِمْ وَٱللَّهُ مُتِمُّ نُورِهِۦ وَلَوْ كَرِهَ ٱلْكَٰفِرُونَ ﴿٨﴾ هُوَ ٱلَّذِىٓ أَرْسَلَ رَسُولَهُۥ بِٱلْهُدَىٰ وَدِينِ ٱلْحَقِّ لِيُظْهِرَهُۥ عَلَى ٱلدِّينِ كُلِّهِۦ وَلَوْ كَرِهَ ٱلْمُشْرِكُونَ ﴿٩﴾ يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ هَلْ أَدُلُّكُمْ عَلَىٰ تِجَٰرَةٍ تُنجِيكُم مِّنْ عَذَابٍ أَلِيمٍ ﴿١٠﴾ تُؤْمِنُونَ بِٱللَّهِ وَرَسُولِهِۦ وَتُجَٰهِدُونَ فِى سَبِيلِ ٱللَّهِ بِأَمْوَٰلِكُمْ وَأَنفُسِكُمْ ۚ ذَٰلِكُمْ خَيْرٌ لَّكُمْ إِن كُنتُمْ تَعْلَمُونَ ﴿١١﴾ يَغْفِرْ لَكُمْ ذُنُوبَكُمْ وَيُدْخِلْكُمْ جَنَّٰتٍ تَجْرِى مِن تَحْتِهَا ٱلْأَنْهَٰرُ وَمَسَٰكِنَ طَيِّبَةً فِى جَنَّٰتِ عَدْنٍ ۚ ذَٰلِكَ ٱلْفَوْزُ ٱلْعَظِيمُ ﴿١٢﴾ وَأُخْرَىٰ تُحِبُّونَهَا ۖ نَصْرٌ مِّنَ ٱللَّهِ وَفَتْحٌ قَرِيبٌ ۗ وَبَشِّرِ ٱلْمُؤْمِنِينَ ﴿١٣﴾ يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ كُونُوٓا۟ أَنصَارَ ٱللَّهِ كَمَا قَالَ عِيسَى ٱبْنُ مَرْيَمَ لِلْحَوَارِيِّۦنَ مَنْ أَنصَارِىٓ إِلَى ٱللَّهِ ۖ قَالَ ٱلْحَوَارِيُّونَ نَحْنُ أَنصَارُ ٱللَّهِ ۖ فَـَٔامَنَت طَّآئِفَةٌ مِّنۢ بَنِىٓ إِسْرَٰٓءِيلَ وَكَفَرَت طَّآئِفَةٌ ۖ فَأَيَّدْنَا ٱلَّذِينَ ءَامَنُوا۟ عَلَىٰ عَدُوِّهِمْ فَأَصْبَحُوا۟ ظَٰهِرِينَ ﴿١٤﴾

भन्दा पूर्व आएको थियो अनि शुभसूचना र सत्यताको गवाही दिनेवाला हुँ त्यस रसूलको जो म पछि आउनेछन् जसको नाम अहमद हुनेछ । र उही नै मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम हुनुहुन्छ । र उनलाई सत्य मान्ने तिर निम्तो दिनेवाला छु । तर जब उनी मुहम्म (अहमद) तिनीहरू कहाँ खुल्ला निशानीहरू लिएर आए तब तिनीहरूले भनेः तिमीले जे कुरा ल्याकाछौ त्यो त स्पष्ट जादू हो ।

(7) र त्यस व्यक्ति भन्दा बढी अत्याचारी र अन्यायकारी अरू को हुन सक्छ जसले अल्लाहमाथि मिथ्यारोपण गर्छ र उनको उपासनामा अर्को साझेदार ठान्छ । जबकि त्यसलाई इस्लाममा प्रवेश गर्ने र मात्र एक अल्लाहको पूजा अर्चना गर्ने हेतु आह्वान पनि गरिन्छ । यस्ता व्यक्तिहरू जसले आफ्नो जीवमाथि शिर्क र कुफ्र गरेर अत्याचार गर्छ उसलाई कहिले पनि अल्लाह सुमार्ग र सफलताको बाटो तिर लाग्नलाई साहस दिनेछैनन् ।

(8) यी अत्याचारीहरू त्यो सत्यलाई आफ्ना मिथ्या वचन र भनाई द्वारा व्यर्थ गर्न चाहन्छन् जस सँग मुहम्मदलाई पठाइएको हो र त्यो कुरआन हो । तर अल्लाह आफ्नो दीन धर्मलाई पूरा गरी सत्यलाई प्रकट गर्नेवाला छन् चाहे काफिरहरूलाई यो जतिसुकै अप्रिय किन नहोस् ।

(9) उनै अल्लाह हुन् जसले आफ्नो रसूल मुहम्मदलाई कुरआन र इस्लाम धर्मसँग पठाउनुभयो, ताकि त्यसलाई सम्पूर्ण धर्महरूमाथि प्रभुत्व प्रदान गरुन्, चाहे बहुदेववादीहरूलाई यो जतिसुकै अप्रिय किन नहोस् ।

(10) हे अल्लाह र उनका रसूललाई सत्य मान्नेहरू र शरियतलाई व्यवहारमा ल्याउनेहरू! के म तिमीहरूलाई यस्तो महान व्यापार बताऊँ जसले तिमीहरूलाई पीडादायक यातनाबाट बचाउनेछ ?

(11) अल्लाह र उनका रसूलमाथि सधैं ईमान राख्ने गर, र अल्लाहको धर्मलाई सहयोग पुऱ्याउनको लागि आफ्नो धनमाल र ज्यानबाट अल्लाहको बाटोमा जिहाद गर, त्यो सांसारिक व्यापार भन्दा धेरै उत्तम हो, यदि तिमीहरूलाई लाभ र हानिको बारेमा केही ज्ञान छ भने उक्त कुरालाई पालन गर ।

(12) (13) हे मोमिनहरू हो! यदि तिमीहरूले अल्लाहले दिएको आदेशानुसार कार्य गऱ्यौ त अल्लाह पनि तिम्रा पापहरूमाथि पर्दा हाल्नेछन् र यस्ता बगैंचाहरूमा तिमीहरूलाई प्रवेश गराउनेछन् जसका रूखहरू तल नहरहरू बगिरहेका छन् र सदा रहने बगैंचाहरूमा तिमीहरूलाई उत्तम, पवित्र र साफा सुग्धर घरहरू दिनेछन्, यही वास्तवमा यस्तो सफलता हो जस बाहेक अरू केही सफलता छैन । र अर्को धन हे मोमिनहरू जसलाई तिमीहरू मनपराउँछौ त्यो अल्लाहको तर्फबाट सहयोग र मद्दत छ जो तिमी समक्ष आउनेछ । यसै गरी तिम्रो हातमाथि अल्लाहले तरुन्तै विजय प्राप्त गराउनेछन् । र हे दूत ! मोमिनहरूलाई यस संसारमा सहयोग र विजय प्राप्त हुनको र आखिरतमा स्वर्गको शुभ सूचना सुनाइदिनुहोस् ।

(14) हे अल्लाह र उनका रसूललाई सत्य मान्नेहरू र शरियतलाई व्यवहारमा ल्याउनेहरू! अल्लाहको धर्मको सहयोगी बन जसरी कि मर्यम पुत्र ईसाका साथीहरू अल्लाहको धर्मको सहयोगी थिए जुन समय उहाँले साथीहरूसित भनेः तिमीहरू मध्ये कसले मलाई सहयोग र मद्दत पुऱ्याउने छ ताकि यस द्वारा तिमी अल्लाहको नजीक भइहाल ? साथीहरूले भनेः हामीहरू अल्लाहको दीन धर्मलाई सहयोग पुऱ्याउनेछौं । त इस्राएलका सन्तानहरू मध्ये एक टोलीले सुमार्गमा लाग्यो र अर्को टोली सुमार्गबाट विचलित भइहाले । त हामीले अल्लाह र उनका रसूलमाथि ईमान ल्याउनेहरूलाई सहयोग पुऱ्यायौं र इसाईका टोलीहरू

ترتيبها ٦٢ — سُورَةُ الجُمُعَةِ — آياتها ١١

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

يُسَبِّحُ لِلَّهِ مَا فِي السَّمَاوَاتِ وَمَا فِي الْأَرْضِ الْمَلِكِ الْقُدُّوسِ الْعَزِيزِ
الْحَكِيمِ ﴿١﴾ هُوَ الَّذِي بَعَثَ فِي الْأُمِّيِّينَ رَسُولًا مِّنْهُمْ يَتْلُو
عَلَيْهِمْ آيَاتِهِ وَيُزَكِّيهِمْ وَيُعَلِّمُهُمُ الْكِتَابَ وَالْحِكْمَةَ وَإِن كَانُوا
مِن قَبْلُ لَفِي ضَلَالٍ مُّبِينٍ ﴿٢﴾ وَآخَرِينَ مِنْهُمْ لَمَّا يَلْحَقُوا بِهِمْ
وَهُوَ الْعَزِيزُ الْحَكِيمُ ﴿٣﴾ ذَٰلِكَ فَضْلُ اللَّهِ يُؤْتِيهِ مَن يَشَاءُ وَاللَّهُ
ذُو الْفَضْلِ الْعَظِيمِ ﴿٤﴾ مَثَلُ الَّذِينَ حُمِّلُوا التَّوْرَاةَ ثُمَّ لَمْ
يَحْمِلُوهَا كَمَثَلِ الْحِمَارِ يَحْمِلُ أَسْفَارًا بِئْسَ مَثَلُ الْقَوْمِ
الَّذِينَ كَذَّبُوا بِآيَاتِ اللَّهِ وَاللَّهُ لَا يَهْدِي الْقَوْمَ الظَّالِمِينَ ﴿٥﴾
قُلْ يَا أَيُّهَا الَّذِينَ هَادُوا إِن زَعَمْتُمْ أَنَّكُمْ أَوْلِيَاءُ لِلَّهِ مِن
دُونِ النَّاسِ فَتَمَنَّوُا الْمَوْتَ إِن كُنتُمْ صَادِقِينَ ﴿٦﴾ وَلَا يَتَمَنَّوْنَهُ
أَبَدًا بِمَا قَدَّمَتْ أَيْدِيهِمْ وَاللَّهُ عَلِيمٌ بِالظَّالِمِينَ ﴿٧﴾ قُلْ إِنَّ
الْمَوْتَ الَّذِي تَفِرُّونَ مِنْهُ فَإِنَّهُ مُلَاقِيكُمْ ثُمَّ تُرَدُّونَ
إِلَىٰ عَالِمِ الْغَيْبِ وَالشَّهَادَةِ فَيُنَبِّئُكُم بِمَا كُنتُمْ تَعْمَلُونَ ﴿٨﴾

मध्ये उनका शत्रुहरूमाथि मद्दत गर्‍यौं, जसले गर्दा यिनीहरूले उनीहरूमाथि विजयी भइहाले नबी मुहम्मदले आउनु पश्चात ।

## सूरह अल्-जुमुअह - 62

(1) आकाशहरू र धरतीमा जे-जति वस्तुहरू छन् सबै अल्लाहको हरेक प्रकारको अयोग्यताबाट पवित्रताको वर्णन गर्दछन । ऊ एक्लै सम्पूर्ण वस्तुहरूका स्वामी र त्यसमा हेरफेर गर्नेवाला हुन्, प्रत्येक प्रकारको अवगुण र दोषबाट चोखो हुन् । र यस्ता प्रभुत्वशाली जसमाथि कोही विजय प्राप्त गर्न सक्दैन, र आफ्नो योजना तथा कारिगिरीमा तत्त्वदर्शी हुन् ।

(2) (3) उनै अल्लाह हुन् जसले अनपढ अरबवासीमा स्वयं उनीहरू मध्ये रसूल पठाउनुभयो, जहाँ (अरबमा) न त कुनै किताब थियो न त कुनै दूतत्त्वको निशानी । यस्ता रसूल जो सम्पूर्ण मानवजातिको लागि छन्, जो उनीहरूलाई कुरआन पढदै सुनाउँनेछन् र उनीहरूलाई मिथ्या आस्थाहरू र कुव्यवहारबाट चोखो पार्नेछन, साथै उनीहरूलाई कुरआन र सुन्नत (रसूलवाणी) सिकाउँनेछन् । उनीहरू नबी आउनु भन्दा अघि सत्यताबाट खुल्ला पथभ्रष्टतामा थिए । यसै गरी ती व्यक्तिहरूको लागि पनि रसूल बनाएर पठाउनुभयो जो अहिले सम्म आएको छैनन् पछि अरबवासी मध्ये वा अरू देशहरूबाट आउनेछन् । अल्लाह एक्लै प्रभुत्त्वशाली हुन जसलाई कसैले पराजित गर्न सक्दैन, र जो आफ्नो भनाई र कर्महरूमा तत्त्वदर्शी हुन् ।

(4) अरब द्वीप र सम्पूर्ण मानवजातिको लागि रसूल बनाएर पठाउनु अल्लाहको तर्फबाट एउटा वरदान हो, उनी आफ्ना दासहरू मध्ये जसलाई चाहन्छन् प्रदान गर्छन् र उनी एक्लै महान अनुग्रही र उपकार गर्नेवाला र धेरै मात्रामा दिनेवाला छन् ।

(5) यस आयतमा ती यहूदहरूको उदाहरणको वर्णन आएको छ जसलाई तौरात किताब दिइयो तर उनीहरूले त्यस अनुसार व्यवहार गरेनन् भने तिनीहरूको उदाहण त्यस गधा जस्तो छ जसमाथि किताबहरू लादिएको हुन्छ र त्यसलाई थाहा पनि हुँदैन कि त्यसमा कुन प्रकारको किताब हो । कति निकृष्ट उदाहरण ती व्यक्तिहरूको छ जसले हाम्रा आयतहरूलाई मिथ्या ठहर गरी त्यसबाट लाभ प्राप्त गरेनन् । अत्याचारी समुदायलाई जसले सीमा नाघी राखेका छन् र अल्लाहको आज्ञापालनबाट विमुख भएका छन् अल्लाह सुमार्गदर्शनको साहस दिँदैनन् ।

(6) हे दूत! भनिदेऊः कि हे हेरफेर भएको यहूदी धर्मलाई मान्नेहरू हो ! यदि तिमीहरू यो झूठो दाबी गर्छौ कि अन्य मानिसहरू बाहेक तिमीहरू नै अल्लाहका परम प्रिय हौ भने मृत्युको कामना गर यदि तिमीहरू सत्य छौ यस दावीमा कि तिमीहरू नै वास्तवमा अल्लाहका प्रिय छौ ।

(7) तर यी यहूदहरूले कदापि मृत्युको कामना गर्ने छैनन् किनकि यिनीहरूले आखिरतमाथि संसारलाई नै महत्व दिइराखेकाछन् र अल्लाहको यातनाबाट डराउँदैछन् र यस कारणले पनि तिनीहरूले कुफ्र र धेरै कुकर्महरू गरिराख ेका छन् । र अल्लाह अत्याचारीलाई राम्ररी जान्दछन् उनीमथि तिनीहरूको अन्याय मध्ये केही कुरा लुक्न सक्दैन ।

(8) हे दूत ! भनिदेऊः कि जस मृत्युबाट तिमीहरू भाग्दछौ समय आए पछि त्यसबाट भागेर कहीं जान मिल्दैन बरु त्यसले तिमीहरूलाई अँठ्याएरै छोड्नेछ । फेरि तिमीहरूलाई अदृश्य एवं दृश्यका ज्ञाता (अल्लाह) समक्ष पेश गरिनेछ । अनि उनले

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓا۟ إِذَا نُودِىَ لِلصَّلَوٰةِ مِن يَوْمِ ٱلْجُمُعَةِ
فَٱسْعَوْا۟ إِلَىٰ ذِكْرِ ٱللَّهِ وَذَرُوا۟ ٱلْبَيْعَ ۚ ذَٰلِكُمْ خَيْرٌ لَّكُمْ إِن كُنتُمْ
تَعْلَمُونَ ﴿٩﴾ فَإِذَا قُضِيَتِ ٱلصَّلَوٰةُ فَٱنتَشِرُوا۟ فِى ٱلْأَرْضِ
وَٱبْتَغُوا۟ مِن فَضْلِ ٱللَّهِ وَٱذْكُرُوا۟ ٱللَّهَ كَثِيرًا لَّعَلَّكُمْ تُفْلِحُونَ
﴿١٠﴾ وَإِذَا رَأَوْا۟ تِجَٰرَةً أَوْ لَهْوًا ٱنفَضُّوٓا۟ إِلَيْهَا وَتَرَكُوكَ قَآئِمًا ۚ قُلْ
مَا عِندَ ٱللَّهِ خَيْرٌ مِّنَ ٱللَّهْوِ وَمِنَ ٱلتِّجَٰرَةِ ۚ وَٱللَّهُ خَيْرُ ٱلرَّٰزِقِينَ ﴿١١﴾

آياتها ١١ — سُورَةُ المُنَافِقُونَ — ترتيبها ٦٣

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَٰنِ ٱلرَّحِيمِ

إِذَا جَآءَكَ ٱلْمُنَٰفِقُونَ قَالُوا۟ نَشْهَدُ إِنَّكَ لَرَسُولُ ٱللَّهِ ۗ وَٱللَّهُ يَعْلَمُ
إِنَّكَ لَرَسُولُهُۥ وَٱللَّهُ يَشْهَدُ إِنَّ ٱلْمُنَٰفِقِينَ لَكَٰذِبُونَ ﴿١﴾
ٱتَّخَذُوٓا۟ أَيْمَٰنَهُمْ جُنَّةً فَصَدُّوا۟ عَن سَبِيلِ ٱللَّهِ ۚ إِنَّهُمْ سَآءَ مَا كَانُوا۟
يَعْمَلُونَ ﴿٢﴾ ذَٰلِكَ بِأَنَّهُمْ ءَامَنُوا۟ ثُمَّ كَفَرُوا۟ فَطُبِعَ عَلَىٰ قُلُوبِهِمْ
فَهُمْ لَا يَفْقَهُونَ ﴿٣﴾ ۞ وَإِذَا رَأَيْتَهُمْ تُعْجِبُكَ أَجْسَامُهُمْ ۖ
وَإِن يَقُولُوا۟ تَسْمَعْ لِقَوْلِهِمْ ۖ كَأَنَّهُمْ خُشُبٌ مُّسَنَّدَةٌ ۖ يَحْسَبُونَ كُلَّ
صَيْحَةٍ عَلَيْهِمْ ۚ هُمُ ٱلْعَدُوُّ فَٱحْذَرْهُمْ ۚ قَٰتَلَهُمُ ٱللَّهُ ۖ أَنَّىٰ يُؤْفَكُونَ ﴿٤﴾

तिमीहरूलाई बताउनेछन कि तिमीहरू के गरिरहेका थियौ र त्यसमाथि तिमीहरूलाई बदला लिइनेछन् ।

(9) हे अल्लाह र उनका रसूललाई सत्य मान्नेहरू र शरियतलाई व्यवहारमा ल्याउनेहरू! जब शुक्रवारको दिन आजान दिने व्यक्ति नमाजको लागि पुकार्छ भने खुत्बा (प्रवचन) सुन्न र नमाज पढनको लागि दौडीहाल, र यस अवस्थामा किनबेच,व्यापार र व्यस्त रहने कुराहरूलाई छाडीदेऊ । यही आदेश तिम्रो लागि उत्तम हो किनकि यसैमा तिम्रो पाप क्षमा छ र अल्लाहको नजीकता प्राप्त गर्ने साधन हो । यदि तिमीहरू आफ्नो जीउको लाभ चाहन्छौ भने यो आदेशको पालना गर । यस आयतमा जुमा (शुक्रवार) को दिन जुमाको नमाज पढने हेतु उपस्थित हुनु र खुत्बा सुन्नु अनिवार्य छ भन्ने प्रमाण छ ।

(10) खुत्बा सुने पछि र नमाज पूरा गरे पछि अल्लाहले दिएको रोजीलाई धरती भरि फैलिएर आफ्नो प्रयासले खोजी गर, र सबै अवस्थामा अल्लाहलाई खुबै स्मरण गर ताकि तिमीहरू लोक परलोकको लाभबाट सफलता प्राप्त गर्न सकोस् ।

(11) जब मुसलमानहरू मध्ये केही व्यक्तिहरूले कुनै व्यापार र सांसारिक खेल तमासा भइरहेको देख्छन् तब तपाईंलाई मिम्बर (मस्जिदमा खुत्बा दिने अग्लो ठाउँ) माथि खुत्बा दिँदै छोडेर त्यस तर्फ दौडीहल्छन् । हे दूत! अल्लाहकहाँ रहेको पूण्य र अनुकम्पा यो खेल तमासा र व्यापार भन्दा उत्तम रहेको छ । एक्लै अल्लाह रोजीदाता र समस्त वुस्तुहरू दिनेवाला हुन् तसर्थ तिमीहरू उनै सित माग्ने गर, र अल्लाहकहाँ रहेको लोकिक तथा परलोकिक भलाई प्राप्त गर्ने हेतु अल्लाहको आज्ञापालन गरेर सहयोग प्राप्त गर ।

## सूरह अल्-मुनाफिकून् - 63

(1) हे रसूल! यी मुनाफिकहरू तपाईंको बैठकमा आएर आफ्ना जिभ्राले भन्छन्ः हामी साक्षी बस्छौं कि तपाईं अल्लाहका रसूल हुनुहन्छ । अँ अल्लाह जान्दछन् कि तपाईं अवश्य नै उनका रसूल हुनुहुन्छ । र अल्लाह साक्षी दिन्छन् कि यी मुनाफिकहरू प्रकट गरेको आफ्नो यस गवाही र साक्षीमा बिल्कुल झूठा छन् । यिनीहरू मुखले कसम खान्छन र भित्र कुफ्र लुकाउँछन् ।

(2)(3) यी मुनाफिकहरू आफ्ना कसमहरूलाई यातना र समातनुबाट बच्नको लागि ढाल बनाएका छन् । र आफु तथा मानिसहरूलाई अल्लाहको बाटोबाट रोक्छन्,यिनीहरू कति निस्कृष्ट कार्यहरू गर्नेछन् । यो यस कारणले भएको छ कि यिनीहरूले प्रत्यक्षमा ईमान ल्याए अनि अप्रत्यक्षमा कुफ्र गरे तसर्थ अल्लाहले तिनीहरूको हृदयमाथि तिनको कुफ्रको कारणले मोहर लगाइदिनुभएको छ । तसर्थ तिनीहरू लाभ पुऱ्याउने कुरालाई बुझ्दै बुझ्दैनन् ।

(4) तिमीले तिनीहरूलाई हेर्दा तिनका जिउडाल र रूपले तिमीलाई आश्चर्यचकित तुल्याउँछ र तिनीहरूले बोल्दा मीठो जिभ्रो र भाषाको कारणले तिमी सुन्छौ । तर तिनको हृदय ईमानबाट खाली हुनाले र तिनको विवेक समझदारी र लाभदायक ज्ञानबाट खाली हुनको कारणले काठका फल्याक जस्ता हुन् जसलाई पर्खालमा टाँसेर राखिएका छन् जसमा केही ज्यान हुँदैन । प्रत्येक ठूलो स्वरलाई आफ्नै विरुद्ध र आफ्नोलागि हानिकारक ठान्छन् किभने तिनीहरू आफ्नो वास्तविक्ता बुझ्छन् र के कति कुकर्म गरेर सीमा उल्लंघन गर्छन्, र डर तथा भय पनि तिनको हृदयमा बसेको छ । हे दूत

وَإِذَا قِيلَ لَهُمْ تَعَالَوْا۟ يَسْتَغْفِرْ لَكُمْ رَسُولُ ٱللَّهِ لَوَّوْا۟ رُءُوسَهُمْ
وَرَأَيْتَهُمْ يَصُدُّونَ وَهُم مُّسْتَكْبِرُونَ ﴿٥﴾ سَوَآءٌ عَلَيْهِمْ
أَسْتَغْفَرْتَ لَهُمْ أَمْ لَمْ تَسْتَغْفِرْ لَهُمْ لَن يَغْفِرَ ٱللَّهُ لَهُمْ إِنَّ
ٱللَّهَ لَا يَهْدِى ٱلْقَوْمَ ٱلْفَٰسِقِينَ ﴿٦﴾ هُمُ ٱلَّذِينَ يَقُولُونَ
لَا تُنفِقُوا۟ عَلَىٰ مَنْ عِندَ رَسُولِ ٱللَّهِ حَتَّىٰ يَنفَضُّوا۟ وَلِلَّهِ
خَزَآئِنُ ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضِ وَلَٰكِنَّ ٱلْمُنَٰفِقِينَ لَا يَفْقَهُونَ
﴿٧﴾ يَقُولُونَ لَئِن رَّجَعْنَآ إِلَى ٱلْمَدِينَةِ لَيُخْرِجَنَّ ٱلْأَعَزُّ
مِنْهَا ٱلْأَذَلَّ وَلِلَّهِ ٱلْعِزَّةُ وَلِرَسُولِهِۦ وَلِلْمُؤْمِنِينَ وَلَٰكِنَّ
ٱلْمُنَٰفِقِينَ لَا يَعْلَمُونَ ﴿٨﴾ يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ لَا تُلْهِكُمْ
أَمْوَٰلُكُمْ وَلَآ أَوْلَٰدُكُمْ عَن ذِكْرِ ٱللَّهِ وَمَن يَفْعَلْ
ذَٰلِكَ فَأُو۟لَٰٓئِكَ هُمُ ٱلْخَٰسِرُونَ ﴿٩﴾ وَأَنفِقُوا۟ مِن مَّا رَزَقْنَٰكُم
مِّن قَبْلِ أَن يَأْتِىَ أَحَدَكُمُ ٱلْمَوْتُ فَيَقُولَ رَبِّ لَوْلَآ أَخَّرْتَنِىٓ
إِلَىٰٓ أَجَلٍ قَرِيبٍ فَأَصَّدَّقَ وَأَكُن مِّنَ ٱلصَّٰلِحِينَ ﴿١٠﴾ وَلَن
يُؤَخِّرَ ٱللَّهُ نَفْسًا إِذَا جَآءَ أَجَلُهَا ۚ وَٱللَّهُ خَبِيرٌۢ بِمَا تَعْمَلُونَ ﴿١١﴾

## سُورَةُ التَّغَابُنِ

ترتيبها ٦٤ — آياتها ١٨

तपाईंका र मोमिनहरूका तिनीहरू पक्का कठोर शत्रु हुन् । अतः तिनीहरू सित सावधान रहने गर, अल्लाह यिनीहरूलाई स्र्वनाश र आफ्नो दयादृष्टिबाट टाढा गरून् । कसरी यिनीहरू सत्यबाट बहकेर छलकपट तथा पथभ्रष्टा तिर लागेकाछन् ।

(5) र जब यी मुनाफिकहरूलाई भनिन्छ जो कुवचन र नराम्रो कुरा तिम्रो मुखबाट निस्केको छ त्यसबाट प्रायश्चित गरेर आफुलाई गलत ठानेर आऊ रसूलुल्लाह तिम्रो लागि क्षमा याचना गर्नेछन् र अल्लाह सित तिम्रो लागि माफी र पापबाट पवित्रता माग्नेछन् तब तिनीहरू घमण्ड र अपमानले आफ्नो टाउको एकातर्फ घुमाउँछन् । र हे रसूल! तपाईं देख्नुहुन्छ कि तिनीहरू तपाईंलाई बेवास्ता गरी र घमण्ड गरेर आदेशापालन गर्दैनन् ।

(6) हे रसूल! मुनाफिकहरूकालागि बराबर छ कि तपाईं तिनीहरूको लागि क्षमायाचना गर्नुस् वा नगर्नुस् अल्लाह कहिल्यै तिनका पापलाई क्षमा गर्नेवाला छैनन् किनकि तिनीहरूले अल्लाहको अवज्ञामाथि र कुफ्रका कार्यहरूमा अडिग भई धेरै अगाडि बढेका छन् । निस्सन्देह अल्लाह कहिल्यै अवज्ञाकरी र काफिर व्यक्तिहरूलाई ईमान ल्याउनको साहस दिँदैनन् ।

(7) यी नै ती मुनाफिकहरू हुन् जो मदीनावासी सित भन्छन् कि रसूलुल्लाहका साथीहरूमाथि खर्च न गर यहाँ सम्म कि उहाँबाट अलग भइहालुन् । जबकि अकाशहरू र धरतीमा रहेको खाजानाहरू र जे जति त्यसमा छन् ती सबैका मालिक एक्लै अल्लाह हुनुहुन्छ,जसलाई चाहनुहुन्छ दिनुहुन्छ र जसबाट चाहनुहुन्छ रोक्नुहुन्छ। तर मुनाफिकहरू यो कुरा बुझ्दैनन् र न त तिनलाई लाभ दिन सक्छ ।

(8) यी मुनाफिकहरू भन्छनः यदि हामी मदीना पुग्यौं भने हामी प्रतिष्ठित व्यक्तिहरूले अप्रतिष्ठित मोमिन व्यक्तिहरूलाई मदीनाबाट निष्कासित गर्नेछौं,जबकि प्रतिष्ठा अल्लाह,उनका रसूल र अल्लाह तथा उनका रसूलमाथि ईमान ल्याएका मानिसहरूका लागि छन्, उनीहरू बाहेक अरूको लागि आदर सत्कार छैन । तर मुनाफिकहरू अत्यन्त अज्ञानताको कारण यो कुरा जान्दैनन् ।

(9) हे अल्लाह र उनका रसूललाई सत्य मान्नेहरू र शरियतलाई व्यवहारमा ल्याउनेहरू! तिमीहरूको सम्पत्ति र सन्तानहरूले तिमीहरूलाई अल्लाहको स्मरण र पूजा तथा आज्ञापालन गर्नुबाट विस्मृत न तुल्याऊन्, र जसको सम्पत्ति र सन्तानहरू यसबाट रोक्छन् तिनीहरू नै अल्लाहको दया र आदर सत्कारबाट घाटा बेहोर्नेहरू हुन् ।

(10) हे अल्लाह र उनका रसूलमाथि ईमान ल्याउनेहरू हो! हामीले तिमीहरूलाई प्रदान गरेका जीविका मध्ये केही भलाईका बाटोहरूमा खर्च गर । यस अघि कि तिमीहरूमध्ये कसैको मृत्यु आओस् वा त्यसको चिन्ह र पहिचान देखियोस् र उसले लज्जा मान्दै भनोस् : हे मेरा रब! किन मलाई अलि थप अवसर नदिनुभएको ? र मेरो मृत्युलाई केही समयको लागि किन टाल्नु भएको होइन ताकि म आफ्नो मालबाट दान दिने थिएँ र सत्कर्मीहरूमा सामेल हुने थिएँ ।

(11) जब कसैको मृत्युको समय आइपुग्छ र उमेर समाप्त भइहाल्छ तब अल्लाह उसलाई अलिकति पनि अवसर दिँदैनन्, र जे जति तितो मीठो तिमीहरू गर्छौ त्यो अल्लाहलाई थाहा छ र त्यही अनुसार बदला दिइनेछन ।

# सूरह-अत्-तगाबुन - 64

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

يُسَبِّحُ لِلَّهِ مَا فِي ٱلسَّمَٰوَٰتِ وَمَا فِي ٱلۡأَرۡضِۖ لَهُ ٱلۡمُلۡكُ وَلَهُ ٱلۡحَمۡدُۖ وَهُوَ عَلَىٰ كُلِّ شَيۡءٖ قَدِيرٌ ﴿١﴾ هُوَ ٱلَّذِي خَلَقَكُمۡ فَمِنكُمۡ كَافِرٞ وَمِنكُم مُّؤۡمِنٞۚ وَٱللَّهُ بِمَا تَعۡمَلُونَ بَصِيرٌ ﴿٢﴾ خَلَقَ ٱلسَّمَٰوَٰتِ وَٱلۡأَرۡضَ بِٱلۡحَقِّ وَصَوَّرَكُمۡ فَأَحۡسَنَ صُوَرَكُمۡۖ وَإِلَيۡهِ ٱلۡمَصِيرُ ﴿٣﴾ يَعۡلَمُ مَا فِي ٱلسَّمَٰوَٰتِ وَٱلۡأَرۡضِ وَيَعۡلَمُ مَا تُسِرُّونَ وَمَا تُعۡلِنُونَۚ وَٱللَّهُ عَلِيمُۢ بِذَاتِ ٱلصُّدُورِ ﴿٤﴾ أَلَمۡ يَأۡتِكُمۡ نَبَؤُاْ ٱلَّذِينَ كَفَرُواْ مِن قَبۡلُ فَذَاقُواْ وَبَالَ أَمۡرِهِمۡ وَلَهُمۡ عَذَابٌ أَلِيمٞ ﴿٥﴾ ذَٰلِكَ بِأَنَّهُۥ كَانَت تَّأۡتِيهِمۡ رُسُلُهُم بِٱلۡبَيِّنَٰتِ فَقَالُوٓاْ أَبَشَرٞ يَهۡدُونَنَا فَكَفَرُواْ وَتَوَلَّواْۚ وَّٱسۡتَغۡنَى ٱللَّهُۚ وَٱللَّهُ غَنِيٌّ حَمِيدٞ ﴿٦﴾ زَعَمَ ٱلَّذِينَ كَفَرُوٓاْ أَن لَّن يُبۡعَثُواْۚ قُلۡ بَلَىٰ وَرَبِّي لَتُبۡعَثُنَّ ثُمَّ لَتُنَبَّؤُنَّ بِمَا عَمِلۡتُمۡۚ وَذَٰلِكَ عَلَى ٱللَّهِ يَسِيرٞ ﴿٧﴾ فَـَٔامِنُواْ بِٱللَّهِ وَرَسُولِهِۦ وَٱلنُّورِ ٱلَّذِيٓ أَنزَلۡنَاۚ وَٱللَّهُ بِمَا تَعۡمَلُونَ خَبِيرٞ ﴿٨﴾ يَوۡمَ يَجۡمَعُكُمۡ لِيَوۡمِ ٱلۡجَمۡعِۖ ذَٰلِكَ يَوۡمُ ٱلتَّغَابُنِۗ وَمَن يُؤۡمِنۢ بِٱللَّهِ وَيَعۡمَلۡ صَٰلِحٗا يُكَفِّرۡ عَنۡهُ سَيِّـَٔاتِهِۦ وَيُدۡخِلۡهُ جَنَّٰتٖ تَجۡرِي مِن تَحۡتِهَا ٱلۡأَنۡهَٰرُ خَٰلِدِينَ فِيهَآ أَبَدٗاۚ ذَٰلِكَ ٱلۡفَوۡزُ ٱلۡعَظِيمُ ﴿٩﴾

(1) आकाशहरू र धरतीमा जेजति वस्तुहरू छन् सबै अल्लाहको हरेक प्रकारको अयोग्यता बाट पवित्रताको वर्णन गर्दछन्,उनै पवित्र अल्लाहकोलागि व्यापक बादशाहियत र त्यसमा हेरफेर गर्ने शक्ति छ,र उनैको लागि सम्पूर्ण प्रकारले राम्ररी प्रशंसा गरिएकोछ र उनै सबै कुराहरूमाथि सामर्थ्यवान हुन् ।

(2) उनै हुन जसले तिमीहरूलाई नहुने पछि सृष्टि गरे, त तिमीहरू मध्ये कोही जन्मदाताको उपास्य हुनलाई इन्कार गर्नेवाला छ, र कोही उनैमाथि ईमान ल्याउनेवाला र उनको नियम विधानलाई व्यवहारमा ल्याउनेवाला छ । र अल्लाहले तिमीहरूले गर्ने गरेका कार्यहरू देखिरहेका छन उनीमाथि केही कुरा लुक्न सक्दैन अनि प्रत्येकलाई उसले गरेको कर्म अनुसार बदला पनि लिइनेछन् ।

(3) उनले आकाशहरू र पृथ्वीलाई सत्यका साथ ठूलो तत्त्वदर्शीताले सृष्टि गरे,र तिमीहरूलाई राम्रो रूपमा जन्म दिए । प्रलय हुने दिन उनै तर्फ तिमीहरू फर्केर जानु पर्छ र प्रत्येक व्यक्तिलाई उसको कार्य अनुसार बदला लिइनेछन ।

(4) आकाशहरू तथा पृथ्वीमा जेजति चिजहरू छन् उनलाई सबैको बारेमा राम्ररी ज्ञान छ, र हे मानव! जे कुराहरू तिमीहरू लुकाउँछौ र जसलाई प्रकट गर्छौ सबैलाई उनी जान्दछन्, र अल्लाहले हृदयमा लुकेको रहस्यलाई र जीवहरूले लुकाएका कुराहरू सबैलाई जान्दछन् ।

(5) हे मुश्रिकहरू हो! तिमीहरू भन्दा अघि बितिसकेका काफिर समुदायहरूको खबर तिमीहरू समक्ष आएन र उनीहरूको कुफ्र एवं कुकर्मको कारण संसारमा उनीहरूमाथि कति यातना र प्रकोप आयो,र आखिरतमा त उनीहरूका लागि पीडादयक यातना त छँदैछ ।

(6) संसारमा उनीहरूमाथि आएको प्रकोप र आखिरतमा आइने यातनाको कारण के थियो भने जहिले पनि तिनीहरू समक्ष अल्लाहका रसूल र दूतहरू खुल्ला र प्रष्ट निशानी, चिन्हहरू तथा चमत्कारहरू लिएर आए त तिनीहरूले इन्कार गर्दै भनेः के हामी जस्तो एउटा मनुष्य हामीलाई मार्गदर्शन गर्न सक्छ ? यसरी तिनीहरूले अल्लाहलाई इन्कार गरे र उनका रसूलहरूलाई नकारे र सत्यलाई स्वीकार गर्नुबाट बिमुख भए । अल्लाहले पनि तिनीहरूलाई वास्ता गरेनन्, अल्लाह निस्पृह छन्, उनी यस गुणमा परिपूर्ण छन् । र उनी आफ्नो वचन, कर्म र गुणहरूमा प्रशंसनीय छन्, तिनीहरूलाई परवाहमा ल्याउँदैनन्, र तिनीहरूको पथभ्रष्टता उनलाई केही हानि पुर्‍याउन सक्दैन ।

(7) काफिरहरूले मृत्यु पश्चात चिहानबाट कदापि उठाइने छैन भनी मिथ्या रूपले दाबी गरिराखेका छन । हे दूत ! तपाईं तिनीहरू सित भनिदिनुहोस्ः किन न उठाइनु, मेरा पालनकर्ताको कसम! तिमीहरू अवश्य चिहानबाट जिउँदो उठाइनेछौ अनि तिमीहरूलाई संसारमा गरेका कार्यहरूबारे बताइनेछन् र यो अल्लाहको लागि सरल र सजिलो छ ।

(8) अनि हे मुश्रिकहरू हो ! अल्लाह र उनका रसूलमाथि ईमान ल्याऊ र त्यो कुरआनबाट सुमार्ग प्राप्त गर जसलाई उनले आफ्नो रसूलमाथि अवतरण गर्नुभएको हो, र तिमीहरूले गरिराखेका सम्पूर्ण कार्यहरूको बारे अल्लाह राम्ररी जान्दछन्, तिमीहरूका कार्य र वचन मध्ये केही कुरा उनी माथि लुप्त छैन र त्यहीमाथि अल्लाह प्रतिफल पनि दिनेछन् प्रलयको दिन ।

(9) भेला हुने दिन (हश्रको दिन) लाई याद गर जुन दिन अल्लाह अघि र पछिका सबै मानिसहरू जम्मा गर्नेछन यही त्यो दिन हो जसमा प्राणीहरू बीच हारजीत र भिन्नता हुनेछ, त मोमिनहरू काफिर र फासिक (कुकर्मी) हरूलाई पराजित गर्नेछन् । अनि अल्लाहको दया र कृपाले मोमिनहरू स्वर्गमा प्रवेश गर्नेछन्, र उनैको निसाफ तथा न्यायले काफिरहरूलाई नरकमा प्रवेश गराउनेछन् । र जो व्यक्ति अल्लाहमाथि ईमान ल्याउँछ र उनको आज्ञापालन गर्छ त अल्लाहले त्यसको

وَٱلَّذِينَ كَفَرُواْ وَكَذَّبُواْ بِـَٔايَٰتِنَآ أُوْلَٰٓئِكَ أَصۡحَٰبُ
ٱلنَّارِ خَٰلِدِينَ فِيهَاۖ وَبِئۡسَ ٱلۡمَصِيرُ ﴿١٠﴾ مَآ أَصَابَ مِن
مُّصِيبَةٍ إِلَّا بِإِذۡنِ ٱللَّهِۗ وَمَن يُؤۡمِنۢ بِٱللَّهِ يَهۡدِ قَلۡبَهُۥۚ وَٱللَّهُ بِكُلِّ
شَيۡءٍ عَلِيمٞ ﴿١١﴾ وَأَطِيعُواْ ٱللَّهَ وَأَطِيعُواْ ٱلرَّسُولَۚ فَإِن
تَوَلَّيۡتُمۡ فَإِنَّمَا عَلَىٰ رَسُولِنَا ٱلۡبَلَٰغُ ٱلۡمُبِينُ ﴿١٢﴾ ٱللَّهُ لَآ إِلَٰهَ
إِلَّا هُوَۚ وَعَلَى ٱللَّهِ فَلۡيَتَوَكَّلِ ٱلۡمُؤۡمِنُونَ ﴿١٣﴾ يَٰٓأَيُّهَا
ٱلَّذِينَ ءَامَنُوٓاْ إِنَّ مِنۡ أَزۡوَٰجِكُمۡ وَأَوۡلَٰدِكُمۡ عَدُوّٗا
لَّكُمۡ فَٱحۡذَرُوهُمۡۚ وَإِن تَعۡفُواْ وَتَصۡفَحُواْ وَتَغۡفِرُواْ
فَإِنَّ ٱللَّهَ غَفُورٞ رَّحِيمٌ ﴿١٤﴾ إِنَّمَآ أَمۡوَٰلُكُمۡ وَأَوۡلَٰدُكُمۡ
فِتۡنَةٞۚ وَٱللَّهُ عِندَهُۥٓ أَجۡرٌ عَظِيمٞ ﴿١٥﴾ فَٱتَّقُواْ ٱللَّهَ مَا ٱسۡتَطَعۡتُمۡ
وَٱسۡمَعُواْ وَأَطِيعُواْ وَأَنفِقُواْ خَيۡرٗا لِّأَنفُسِكُمۡۗ وَمَن
يُوقَ شُحَّ نَفۡسِهِۦ فَأُوْلَٰٓئِكَ هُمُ ٱلۡمُفۡلِحُونَ ﴿١٦﴾ إِن تُقۡرِضُواْ
ٱللَّهَ قَرۡضًا حَسَنٗا يُضَٰعِفۡهُ لَكُمۡ وَيَغۡفِرۡ لَكُمۡۚ وَٱللَّهُ شَكُورٌ
حَلِيمٌ ﴿١٧﴾ عَٰلِمُ ٱلۡغَيۡبِ وَٱلشَّهَٰدَةِ ٱلۡعَزِيزُ ٱلۡحَكِيمُ ﴿١٨﴾

## سُورَةُ الطَّلَاقِ

ترتيبها ٦٥ — آياتها ١٢

निकृष्टताहरूलाई समाप्त गरी त्यसलाई यस्ता बगैंचाहरूमा प्रवेश गराउनेछन् जसका महलहरूको तलतिरबाट नहरहरू बगिरहेका हुनेछन् जसमा उनीहरू सदासर्वदा रहनेछन्, र स्वर्गमा सदासर्वदाकोलागि बस्नु नै महान सफलता हो जस बाहेक अरू केहि सफलता छैन ।

(10) र जसले अल्लाहलाई सत्य पूज्य हुनको लागि इन्कार गरे र अल्लाहलाई पालनकर्ता र पूज्य हुनका रसूलहरू सँग पठाएका प्रष्ट प्रमाणहरूलाई झुठा ठहर गरे तिनीहरू नै हुन नरक बासी जसमा तिनीहरू सदा रहनेछन्, र नरक अति नै खराब र निकृष्ठ फर्किने स्थान हो ।

(11) अल्लाहको अनुमति र उनले निर्धारित गरेको भाग्य बिना कुनै पनि संकट कसैमाथि आउन सक्दैन । र जसले अल्लाहमाथि ईमान ल्याउँछ, अल्लाह उसको हृदयलाई आफ्नो आज्ञापालन गर्नमा र उनले निर्धारित गरेको भाग्यबाट प्रसन्न हुनमा डोऱ्याउँछन् । यसै गरि त्यसलाई राम्रा वचन, राम्रा कर्म र राम्रा अवस्था तिर लगाउँछन् । किनभने वास्तविक सुधार हृदयमा हुन्छ र अंगहरू त्यस पछि आउँछन । र अल्लाह प्रत्येक कुराहरूका ज्ञाता छन् उनी सँग केही कुरा लुक्न सक्दैन ।

(12) र हे मानिसहरू हो ! अल्लाहको आज्ञापालन गर र उनले दिएको आदेशलाई पालन गर र जुन कुराबाट मनाही गरेको हो त्यसलाई रोकी हाल । यसै गरि रसूल सल्लल्लाहो अलेहे वसल्लमले आफ्नो पालनकर्ताको तर्फबाट जे कुरा तिमीहरूलाई बताउन् त्यसमा उहाँको आज्ञापालन गर । यदि अल्लाह र उनका रसूलको आज्ञापालनबाट बिमुख हुन्छौ भने तिम्रो यस बिमुखतामा हाम्रो रसूलमाथि केही हानि छैन । उहाँको दायित्व मात्र तिमीहरू सम्म अल्लाहले पठाएको कुरालाई राम्रो सँग पुगाउनु हो ।

(13) मात्र एक अल्लाह बाहेक कोही सत्य पूज्य छैन, र अल्लाहलाई एक मान्नेहरू आफ्नो सम्पूर्ण कार्यहरूमा केवल अल्लाह माथि नै भरोसा गर्छन् ।

(14) हे अल्लाह र उनका रसूलमाथि ईमान ल्याउनेहरू हो! तिमीहरूका केही पत्नीहरू र केही सन्तानहरू तिम्रा शत्रु हुन्,जो तिमीहरूलाई अल्लाहको बाटोबाट रोक्छन र अल्लाहको आज्ञापालन गर्नुमा अल्सी बनाउँछन । त तिनीहरूसँग सावधानीपूर्वक बस,र उनको आज्ञापालन न गर । र यदि तिमीहरू तिनीहरूका पापलाई क्षमा गर्छौ, तिनीहरूलाई छोडिदिन्छौ र तिनीहरूमाथि पर्दा हाल्छौ भने अल्लाह अत्यन्त क्षमाशील र परम दयालु छन्,जो तिम्रा पापहरूलाई क्षमा गरिदिन्छन् किनकि उनी ठूलो क्षमाशील र व्यपाक दयावान हुन्।

(15) तिमीहरूका सम्पत्ति र सन्तानहरू परीक्षा र जाँचको सामग्री हुन् । जसले मात्र एक अल्लाहको आज्ञापालन गरी कसैको आदेशलाई परवाह गरेन र आफ्नो धनमालबाट अल्लाहको हक (दान आदि) दियो उसको लागि अल्लाहकहाँ ठूलो पूण्य छ ।

(16) हे आस्थावानहरू हो! सके जति अल्लाहसँग डर र भय राख्ने गर,र रसूलुल्लाह सल्लल्लाहो अलेहे वसल्लमले गरेको कुराहरूलाई राम्ररी चिन्तन मनन गरेर सुन,र उहाँले दिएको आदेशलाई पालन गर र मनाही गरेको कुराहरूबाट टाढा बस । अल्लाहले दिएको रोजीबाट खर्च गर यो तिम्रो लागि राम्रो हुन्छ, र जो मालमा कन्जूसी गर्नुबाट बच्यो तिनीहरू नै प्रत्येक भलाई सँग सफल हुनेछन र आफ्नो प्रत्येक मनकामनालाई प्राप्त गर्नेछन् ।

(17) यदि तिमीहरू आफ्नो धनमाललाई शुद्धता र खुशी हृदयले अल्लाहको बाटोमा खर्च गर्छौ भने अल्लाह त्यसको बदलामा तिमीहरूको लागि कयौं गुणा पूण्य दिनेछन्,र तिम्रा पापहरूलाई क्षमा गरिदिन्छन्, अल्लाह खर्च गर्नेलाई राम्रो बदला दिँदै कदर गर्नेवाला हुन्, र पापीलाई यातना दिनमा आतुर न गरी सहनशील हुन ।

(18) उनी अदृश्य र दृश्यका ज्ञाता हुन्,र यस्ता प्रभत्वशाली जसलाई कोही पराजित गर्न सक्दैन र आफ्नो वचन तथा कर्महरूमा तत्त्वदर्शी हुन् ।

# सूरह अत्तलाक् - 65

(1) हे नबी ! जब तपाईं र मोमिनहरू आफ्ना पत्नीहरूलाई तलाक (पारपाचुके) दिन्छौ तब तिनीहरूलाई तिनको इद्दत (निर्धारित समय) मा तलाक देऊ, अर्थात महिनावारी पश्चात पवित्रतामा जसमा सम्भोग गरेको होइन, वा गर्भ स्पष्ट भएमा । र इद्दतको गन्तीलाई सुरक्षित राख ताकि यदि त्यसलाई फिर्ता गर्न चाहन्छौ भने फिर्ता गर्नको समय थाहा होस् । र आफ्ना पालनकर्ता अल्लाह सित डर्ने गर, र तलाक पश्चात तिनीहरूलाई बसेको घरबाट बाहिर निष्कासित न गर यहाँ सम्म कि इद्दत पूरा भइहालोस्,र तलाकको इद्दत तीन पटक हैज (महिनावारी) आउनु हो,र यो इद्दत बालिका, बुढी (उमेर बढी हुनको कारणले हैज बन्द भएकी महिला) र गर्भवती बाहेकको लागि छ । यसै गरी तलाक भएकी महिलाको लागि पनि स्वयं घरबाट निस्कनु जायज छैन । अँ, यदि तिनीहरू खुल्ला कुनै पापको कार्य गरून् जस्तो व्यभिचार । यी अल्लाहले आफ्ना दासहरूलाई दिएका आदेशहरू हुन्, र जसले अल्लाहका आदेशहरूलाई उल्लंघन गर्छ उसले वास्तवमा आफैंमाथि अत्याचार गर्छ,र आफुलाई बरबादीको खाल्टोमा धकेल्छ । हे तलाक दिनेवाला! तिमीलाई थाहा छैन कि यस तलाक पछि शायद अल्लाहले कुनै निकास निकाल्लान् जसलाई तिमीले सम्भव पनि ठानेका थिएनौ अनि तिमी पत्नीलाई फिर्ता गरिलेऊ ।

(2) (3) फेरि जब तलाक भएका महिलाहरू आफ्नो इद्दत (निश्चित अवधि) को अन्तमा पुग्छन् तब कि त उनीहरूलाई राम्रो तरीकाले दाम्पत्यमै रोकी राख र उनीहरूमाथि खर्च गर कि त उनीहरूलाई पूरा अधिकार दिई र हानि न पुऱ्याउने गरी राम्रो तरीकाले अलग गरिदेऊ । र आफ्ना दुई जना न्यायी व्यक्तिलाई रोकी राख्नुमाथि वा अलग गर्नु बेला साक्षी बनाऊ । र हे साक्षीहरू हो! तिमीहरू शुद्ध अल्लाहकै लागि न कि कुनै स्वार्थको लागि सही सही साक्षी देऊ । यी कुराहरूको उपदेश दिइन्छ प्रत्येक त्यस व्यक्तिको लागि जो अल्लाह र आखिरतको दिनमाथि ईमान राख्दछ । र जुन व्यक्ति यी आदेशहरूलाई व्यवहारमा ल्याउँछ र मनाही गरेको कुराबाट बंचित रहन्छ भने अल्लाह उसको लागि प्रत्येक अप्ठ्यारोबाट निकास निकालि दिन्छन् र यस्ता कारण र बाटोहरू बाट उसलाई रोजी दिन्छन् कि उसले सोचेको पनि हुने छैन र उसलाई अनुभव पनि हुँदैन, र जसले अल्लाहमाथि भरोसा गर्नेछ उनी त्यसको लागि प्रत्येक कार्यहरूमा पर्याप्त हुनेछन् । अल्लाह आफ्नो कार्य पूरा गरेरै छाडछन् । उनीबाट

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

يَٰٓأَيُّهَا ٱلنَّبِيُّ إِذَا طَلَّقۡتُمُ ٱلنِّسَآءَ فَطَلِّقُوهُنَّ لِعِدَّتِهِنَّ وَأَحۡصُواْ
ٱلۡعِدَّةَۖ وَٱتَّقُواْ ٱللَّهَ رَبَّكُمۡۖ لَا تُخۡرِجُوهُنَّ مِنۢ بُيُوتِهِنَّ
وَلَا يَخۡرُجۡنَ إِلَّآ أَن يَأۡتِينَ بِفَٰحِشَةٖ مُّبَيِّنَةٖۚ وَتِلۡكَ حُدُودُ
ٱللَّهِۚ وَمَن يَتَعَدَّ حُدُودَ ٱللَّهِ فَقَدۡ ظَلَمَ نَفۡسَهُۥۚ لَا تَدۡرِي لَعَلَّ
ٱللَّهَ يُحۡدِثُ بَعۡدَ ذَٰلِكَ أَمۡرٗا ١ فَإِذَا بَلَغۡنَ أَجَلَهُنَّ فَأَمۡسِكُوهُنَّ
بِمَعۡرُوفٍ أَوۡ فَارِقُوهُنَّ بِمَعۡرُوفٖ وَأَشۡهِدُواْ ذَوَيۡ عَدۡلٖ مِّنكُمۡ
وَأَقِيمُواْ ٱلشَّهَٰدَةَ لِلَّهِۚ ذَٰلِكُمۡ يُوعَظُ بِهِۦ مَن كَانَ يُؤۡمِنُ
بِٱللَّهِ وَٱلۡيَوۡمِ ٱلۡأٓخِرِۚ وَمَن يَتَّقِ ٱللَّهَ يَجۡعَل لَّهُۥ مَخۡرَجٗا ٢ وَيَرۡزُقۡهُ
مِنۡ حَيۡثُ لَا يَحۡتَسِبُۚ وَمَن يَتَوَكَّلۡ عَلَى ٱللَّهِ فَهُوَ حَسۡبُهُۥٓۚ إِنَّ ٱللَّهَ
بَٰلِغُ أَمۡرِهِۦۚ قَدۡ جَعَلَ ٱللَّهُ لِكُلِّ شَيۡءٖ قَدۡرٗا ٣ وَٱلَّٰٓـِٔي يَئِسۡنَ
مِنَ ٱلۡمَحِيضِ مِن نِّسَآئِكُمۡ إِنِ ٱرۡتَبۡتُمۡ فَعِدَّتُهُنَّ ثَلَٰثَةُ أَشۡهُرٖ
وَٱلَّٰٓـِٔي لَمۡ يَحِضۡنَۚ وَأُوْلَٰتُ ٱلۡأَحۡمَالِ أَجَلُهُنَّ أَن يَضَعۡنَ حَمۡلَهُنَّۚ
وَمَن يَتَّقِ ٱللَّهَ يَجۡعَل لَّهُۥ مِنۡ أَمۡرِهِۦ يُسۡرٗا ٤ ذَٰلِكَ أَمۡرُ ٱللَّهِ أَنزَلَهُۥٓ
إِلَيۡكُمۡۚ وَمَن يَتَّقِ ٱللَّهَ يُكَفِّرۡ عَنۡهُ سَيِّـَٔاتِهِۦ وَيُعۡظِمۡ لَهُۥٓ أَجۡرًا ٥

कोही छुट्न सक्दैन र कुनै ईच्छा उनलाई बेबस गर्न सक्दैन । अल्लाहले प्रत्येक वस्तुको लागि एक समय निर्धारित गर्नुभएको हो जहाँ सम्म सबैले पुग्नु जरूरी छ र त्यस निर्धारित समयलाई कसैले पार गर्न सक्तैन ।

(4) र तिमीहरूका तलाक भएका स्त्रीहरू मध्ये जो रजस्वलाबाट धेरै उमेर भएको करण निराश भएका छन् तिनीहरूको सम्बन्धमा यदि तिमीहरूलाई सन्देह छ र तिनीहरूको आदेश के छ तिमीहरू जान्दैनौ ? भने जानी राख कि तिनीहरूको इद्दत तीन महीना हो । र यही तीन महीना इद्दत रजस्वला शुरू नभएका बालिकाहरूको लागि पनि छ । र गर्भवती महिलाहरूको इद्दतको सीमा तिनीहरूको शिशु जन्मेसम्म रहेको छ, र जसले अल्लाहको भय राखेर उनको आदेश पालन गर्छ अल्लाहले त्यसको मामला लोक परलोक दुबैमा सहज पारिदिन्छन् ।

(5) हे मानव हो! यो तलाक र इद्दतको बारेमा जस आदेशको वर्णन भएको छ यही अल्लाहको आदेश हो जसलाई उहाँले तिमीमाथि तिम्रो जानकारीको लागि अवतरण गर्नुभएको हो । र जो अल्लाह सित भय गरेर पापहरूबाट बच्छ र सुकर्महरू गर्छ भने

أَسۡكِنُوهُنَّ مِنۡ حَيۡثُ سَكَنتُم مِّن وُجۡدِكُمۡ وَلَا تُضَآرُّوهُنَّ لِتُضَيِّقُواْ
عَلَيۡهِنَّۚ وَإِن كُنَّ أُوْلَٰتِ حَمۡلٖ فَأَنفِقُواْ عَلَيۡهِنَّ حَتَّىٰ يَضَعۡنَ حَمۡلَهُنَّۚ
فَإِنۡ أَرۡضَعۡنَ لَكُمۡ فَـَٔاتُوهُنَّ أُجُورَهُنَّ وَأۡتَمِرُواْ بَيۡنَكُم بِمَعۡرُوفٖۖ وَإِن
تَعَاسَرۡتُمۡ فَسَتُرۡضِعُ لَهُۥٓ أُخۡرَىٰ ﴿٦﴾ لِيُنفِقۡ ذُو سَعَةٖ مِّن سَعَتِهِۦۖ
وَمَن قُدِرَ عَلَيۡهِ رِزۡقُهُۥ فَلۡيُنفِقۡ مِمَّآ ءَاتَىٰهُ ٱللَّهُۚ لَا يُكَلِّفُ ٱللَّهُ نَفۡسًا
إِلَّا مَآ ءَاتَىٰهَاۚ سَيَجۡعَلُ ٱللَّهُ بَعۡدَ عُسۡرٖ يُسۡرٗا ﴿٧﴾ وَكَأَيِّن مِّن قَرۡيَةٍ
عَتَتۡ عَنۡ أَمۡرِ رَبِّهَا وَرُسُلِهِۦ فَحَاسَبۡنَٰهَا حِسَابٗا شَدِيدٗا وَعَذَّبۡنَٰهَا
عَذَابٗا نُّكۡرٗا ﴿٨﴾ فَذَاقَتۡ وَبَالَ أَمۡرِهَا وَكَانَ عَٰقِبَةُ أَمۡرِهَا خُسۡرًا ﴿٩﴾
أَعَدَّ ٱللَّهُ لَهُمۡ عَذَابٗا شَدِيدٗاۖ فَٱتَّقُواْ ٱللَّهَ يَٰٓأُوْلِي ٱلۡأَلۡبَٰبِ ٱلَّذِينَ ءَامَنُواْۚ
قَدۡ أَنزَلَ ٱللَّهُ إِلَيۡكُمۡ ذِكۡرٗا ﴿١٠﴾ رَّسُولٗا يَتۡلُواْ عَلَيۡكُمۡ ءَايَٰتِ ٱللَّهِ مُبَيِّنَٰتٖ
لِّيُخۡرِجَ ٱلَّذِينَ ءَامَنُواْ وَعَمِلُواْ ٱلصَّٰلِحَٰتِ مِنَ ٱلظُّلُمَٰتِ إِلَى ٱلنُّورِۚ
وَمَن يُؤۡمِنۢ بِٱللَّهِ وَيَعۡمَلۡ صَٰلِحٗا يُدۡخِلۡهُ جَنَّٰتٖ تَجۡرِي مِن تَحۡتِهَا
ٱلۡأَنۡهَٰرُ خَٰلِدِينَ فِيهَآ أَبَدٗاۖ قَدۡ أَحۡسَنَ ٱللَّهُ لَهُۥ رِزۡقًا ﴿١١﴾ ٱللَّهُ ٱلَّذِي خَلَقَ
سَبۡعَ سَمَٰوَٰتٖ وَمِنَ ٱلۡأَرۡضِ مِثۡلَهُنَّۖ يَتَنَزَّلُ ٱلۡأَمۡرُ بَيۡنَهُنَّ لِتَعۡلَمُوٓاْ أَنَّ
ٱللَّهَ عَلَىٰ كُلِّ شَيۡءٖ قَدِيرٞ وَأَنَّ ٱللَّهَ قَدۡ أَحَاطَ بِكُلِّ شَيۡءٍ عِلۡمَۢا ﴿١٢﴾

अल्लाहले उसको पापहरूलाई समाप्त गरी उसलाई आखिरतमा पूरा पूरा पुण्य दिनेछन् अनि स्वर्गमा प्रवेश गराउनेछन् ।

(6) तिमीहरूका तलाक भएका स्त्रीहरूलाई इद्दतको अवधिमा आफ्नो हैसियत र शक्ति अनुसार तिमीहरू स्वयं जहाँ बस्छौ त्यहीं राख, र उनीहरूलाई बस्ने ठाउँमा दिक्क पार्नको लागि नसताऊ । र यदि तलाक भएका तिम्रा स्त्रीहरू गर्भवती हुन भने शिशु जन्मेसम्म इद्दतको समयमा उनीहरूमाथि खर्च गर । फेरि यदि उनीहरू तिम्रो शिशुलाई भाडामा स्तनपान गराउँछन भने उनीहरूलाई त्यसको भाडा पूरा पूरा देऊ । र परस्पर राम्रो तथा चित्तलाई बुझाउने कुराको सर-सलाह गर्ने गर । र यदि आमाले दुध चुसाउनुमाथि तिमीहरू खर्च गर्दैनौ त तलाक भएकी आमा बाहेक अन्य महिलाले शिशुलाई दुध खुवाउनेछिन् ।

(7) र यदि पति सुखी सम्पन्न होस् भने उसलाई चाहियो कि ऊ आफ्नी तलाक भएकी स्त्रीमाथि र शिशुमाथि हैसितय अनुसार खर्च गरोस् । र जसलाई कम जीविका दिइएको छ र त्यो निर्धन पनि छ भने त्यसले त्यसै धनबाट खर्च गरोस् जुन अल्लाहले उसलाई प्रदान गरेका छन् । धनीमाथि जति जेम्मेवारीको बोझ छ त्यती निर्धनमाथि छैन । र अल्लाह चाहैं नै कठिनाइ तथा निर्धनता पछि सहजता र धनवान बनाउनेछन् ।

(8) (9) कतिपय नगरहरू छन् जसले आफ्ना पालनकर्ता एवं उनका रसूलको आदेशको अवहेलना गरे, र कुफ्र तथा बदमाशीमा सीमा उल्लंघन गरे, अनि हामीले तिनीहरूलाई तिनीहरूका कार्यहरूमाथि यस संसारमा कडा हिसाब लियौं, र तिनीहरूलाई पीडादायक कठोर यातना दियौं । र तिनीहरूले आफ्नो कुफ्र र अहंकारको यातनाको मज्जा खुबै चाखे, र तिनीहरूको कुफ्रको नतीजा र परिणाम सर्वनाश र बरबादीको अलावा अन्य केही भएन र यस्तो सर्वनाश जसको पछि केही सर्वनाश छैन ।

(10) (11) अल्लाहले यी अहंकारी र काफिर समुदायकालागि कडा र कठोर सजाय तयार पारेर राख्नुभएको हो जसले अल्लाह र उनका रसूलको आदेशको विरोध गरे । अतः हे अल्लाह र उनका रसूललाई सत्य मानेका र उनले अवतरित गरेको शरिअतलाई सत्य मानेका बुद्धिमान व्यक्तिहरू अल्लाह सित डराउँदै गर । र हे मोमिनहरू हो ! तिमीहरू तिर एउटा यस्तो उपदेश अल्लाहले अवतरण गरेका छन् जसले तिमीलाई उपदेश गर्छ र तिमीहरूलाई ईमान र सुकर्महरूमाथि प्रेरित गर्छ । त्यो उपदेश अल्लाहका रसूल हुन् जो तिमीहरूमाथि सत्यलाई मिथ्याबाट स्पष्ट पार्दै अल्लाहका आयतहरूको पाठ गर्छन् ताकि अल्लाह र उनका रसूललाई सत्य ठान्नेहरू तथा अल्लाहको आदेशको पालन गर्नेहरूलाई अन्धकारबाट निकालेर ईमानको प्रकाश तिर डोऱ्याउन् । अनि जसले अल्लाहमाथि ईमान ल्याउँनेछ र सत्कर्म गर्नेछ अल्लाहले उसलाई यस्ता बगैंचाहरूमा प्रवेश गराउनेछन् जसका रूखहरूको तलतिर नहरहरू बगिरहेका हुनेछन्, जसमा उनीहरू सदासर्वदा रहनेछन्, अल्लाहले मोमिन व्यक्तिको लागि स्वर्गमा उत्तम जीविका तयार राखेका छन् ।

(12) उनी अल्लाह नै हुन् जसले एक्लै सातवटा आकाशहरू र त्यती नै पृथ्वी पनि सृष्टि गरे । र आकाशहरू तथा धरतीहरू बीच आफ्ना रसूलहरूमाथि अवतरण गरेका कुराहरू मध्ये केही आदेश अवतरण गरियो ताकि तिमीहरू हे मानव! जानी राख कि अल्लाह प्रत्येक कुरामाथि सामर्थ्यवान छन् उनलाई कुनै कुराले बेबस गर्न सक्तैन । अल्लाहले प्रत्येक चिजलाई आफ्नो ज्ञानको परिधिमा लिएका छन्, उनको ज्ञान र शक्तिबाट कुनै वस्तु बाहिर निस्कन सक्दैन ।

# सूरह अत्-तहरीम् - 66

سُورَةُ التَّحْرِيمِ

ترتيبها ٦٦ — آياتها ١٢

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَٰنِ ٱلرَّحِيمِ

يَٰٓأَيُّهَا ٱلنَّبِيُّ لِمَ تُحَرِّمُ مَآ أَحَلَّ ٱللَّهُ لَكَ ۖ تَبْتَغِى مَرْضَاتَ أَزْوَٰجِكَ ۚ وَٱللَّهُ غَفُورٌ رَّحِيمٌ ﴿١﴾ قَدْ فَرَضَ ٱللَّهُ لَكُمْ تَحِلَّةَ أَيْمَٰنِكُمْ ۚ وَٱللَّهُ مَوْلَىٰكُمْ ۖ وَهُوَ ٱلْعَلِيمُ ٱلْحَكِيمُ ﴿٢﴾ وَإِذْ أَسَرَّ ٱلنَّبِيُّ إِلَىٰ بَعْضِ أَزْوَٰجِهِۦ حَدِيثًا فَلَمَّا نَبَّأَتْ بِهِۦ وَأَظْهَرَهُ ٱللَّهُ عَلَيْهِ عَرَّفَ بَعْضَهُۥ وَأَعْرَضَ عَنۢ بَعْضٍ ۖ فَلَمَّا نَبَّأَهَا بِهِۦ قَالَتْ مَنْ أَنۢبَأَكَ هَٰذَا ۖ قَالَ نَبَّأَنِىَ ٱلْعَلِيمُ ٱلْخَبِيرُ ﴿٣﴾ إِن تَتُوبَآ إِلَى ٱللَّهِ فَقَدْ صَغَتْ قُلُوبُكُمَا ۖ وَإِن تَظَٰهَرَا عَلَيْهِ فَإِنَّ ٱللَّهَ هُوَ مَوْلَىٰهُ وَجِبْرِيلُ وَصَٰلِحُ ٱلْمُؤْمِنِينَ ۖ وَٱلْمَلَٰٓئِكَةُ بَعْدَ ذَٰلِكَ ظَهِيرٌ ﴿٤﴾ عَسَىٰ رَبُّهُۥٓ إِن طَلَّقَكُنَّ أَن يُبْدِلَهُۥٓ أَزْوَٰجًا خَيْرًا مِّنكُنَّ مُسْلِمَٰتٍ مُّؤْمِنَٰتٍ قَٰنِتَٰتٍ تَٰٓئِبَٰتٍ عَٰبِدَٰتٍ سَٰٓئِحَٰتٍ ثَيِّبَٰتٍ وَأَبْكَارًا ﴿٥﴾ يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ قُوٓا۟ أَنفُسَكُمْ وَأَهْلِيكُمْ نَارًا وَقُودُهَا ٱلنَّاسُ وَٱلْحِجَارَةُ عَلَيْهَا مَلَٰٓئِكَةٌ غِلَاظٌ شِدَادٌ لَّا يَعْصُونَ ٱللَّهَ مَآ أَمَرَهُمْ وَيَفْعَلُونَ مَا يُؤْمَرُونَ ﴿٦﴾ يَٰٓأَيُّهَا ٱلَّذِينَ كَفَرُوا۟ لَا تَعْتَذِرُوا۟ ٱلْيَوْمَ ۖ إِنَّمَا تُجْزَوْنَ مَا كُنتُمْ تَعْمَلُونَ ﴿٧﴾

(1) हे नबी ! त्यो वैध चिजबाट आफ्नो जीउलाई किन रोक्छौ जसलाई अल्लाहले तिम्रो लागि वैध गर्नुभएको छ, यसबाट तिमी आफ्ना पत्नीहरूको प्रसन्नता चाहन्छौ ? अल्लाह तिमीलाई क्षमा गर्नेवाला र तिमीमाथि दया गर्नेवाला हुन् ।

(2) हे मोमिनहरू हो! अल्लाहले तिमीहरूको लागि तिम्रो कसमलाई उन्मुक्त गर्ने हेतु केही कफ्फार (जरीमाना) निश्चित गर्नुभएको हो त्यो होः दश गरीब गुरुबालाई खाना खुवाउनु वा तिनीहरूलाई लुगा पहिराउनु वा एक दासलाई स्वतन्त्र गर्नु । यदि यसको शक्ति छैन भने तीन दिन रोजा बस्नु पर्छ । अल्लाह तिमीहरूका संरक्षक र सहयोगी रहेका छन् । तिम्रो हित्तका लागि कुन कुरा उपयुक्त हुन्छ त्यसलाई ज्ञानमा राखी नियम बनाउनुभो र उनी आफ्ना वचन तथा कार्यहरूमा तत्त्वदर्शी हुनुहुन्छ ।

(3) स्मरण गर जब नबीले एउटा कुरा आफ्नी पत्नी हफ्सा रजियल्लाहो अन्हालाई गोप्यरूपमा भने, फेरि हफ्साले त्यो कुरा आइशा रजियल्लाहो अन्हालाई भनिन् । र अल्लाहले यसको सूचना सन्देष्टालाई दिए कि हफ्साले यस रहस्यलाई खोलिसकेकीछिन् । सन्देष्टाले हफ्सालाई उहाँले बताएका केही रहस्यको बारेमा खबर गर्नुभो र केहीलाई आदर गर्दै लुकाउनुभो । अनि जब नबीले उहाँलाई खोलिएका केही रहस्यको सम्बन्धमा बताए तब उहाँले सोध्नुभोः तपाईंलाई कसले यो सूचना दिएको हो ? नबीले भने : मलाई सर्वज्ञ एवं सुसूचित अल्लाहले बताएका छन् जसमाथि केही कुरा लुप्त हुँदैन ।

(4) यदि तिमी दुबै (हे हफ्सा र आइशा) अल्लाह तिर फर्किछौ, किनकि तिमीले यस्तो कार्य गऱ्यौ जसबाट प्रायश्चित गर्नु अनिवार्य भएको छ किनभने तिम्रा हृदय अल्लाहका रसूलले नचाहिने कुरा तिर झुकिसकेकाछन र त्यो हो रहस्यलाई खोल्नु । र सन्देष्टाले नरोचाएको कुरामाथि यदि तिमीले एक अर्कालाई सहयोग गर्छौ भने जानीराख कि अल्लाह उनका संरक्षक र सहयोगी हुन् र उनी पश्चात जिब्रईल र सत्कर्मी मोमिनहरू र त्यस पछि सम्पूर्ण फरिश्ताहरू उनका सहायक छन् उनीहरू विरुद्ध जो उसलाई कष्ट र पीडा दिन्छन् ।

(5) हे नबीका पत्नीहरू हो! नबीले तिमीहरूलाई तलाक (विवाह विच्छेद) दिएमा उनका रबले उनलाई तिमीहरूको सट्टामा यस्ता पत्नीहरू सँग बिहे गरिदिन्छन् जो अल्लाहको आदेशको अगाडि झुकिरहनेछिन् र अल्लाह एवं उनका रसूल माथि ईमान ल्याउँने हुन्छिन । अल्लाहको आज्ञापालन गर्नेवाली, अल्लाहले मनपराएका सुकर्महरू तिर फर्किनेवाली, र अल्लाहको लागि धेरै पूजा गर्नेवाली, रोजा बस्नेवाली हुन्छिन् जस मध्ये कोही विवाहिता र कोही कुमारी हुन्छिन् ।

(6) हे अल्लाह र उनका रसूललाई सत्य ठान्नेहरू र अल्लाहको नियम अनुसार व्यवहार गर्नेहरू! अल्लाहको आदेशपालन गर्दै र उनले मनाही गरेका कार्यहरूबाट टाढा बस्दै आफ्नो जीउ र जहान परिवारलाई नरक बाट जोगऊ जसको ईन्धन मानव एवं ढुंगा हुनेछन् । नरकबासीलाई यातना दिनको लागि उनीहरूमाथि समस्यामा कठोर र प्रबल फरिश्ताहरू नियुक्त छन् जो कहिल्यै अल्लाहको आदेशको अवहेलना गर्दैनन् र जे आदेश उनीहरूलाई दिइन्छ त्यसको पालन गर्छन् ।

(7) जसले एक अल्लाहलाई सत्य पूज्य हुनलाई इन्कार गरे र उनीसँग कुफ्र गरे यस्ता काफिरहरू सँग नरकमा प्रवेश हुँदा भनिनेछन्ः आजको दिन केही बहाना नबनाऊ,तिमीहरूलाई त्यसैको बदला लिइनेछ जुन कर्म तिमीहरूले संसारमा गर्थ्यौ ।

(8) हे अल्लाह र उनका रसूललाई सत्य ठान्नेहरू र अल्लाहको नियम अनुसार व्यवहार गर्नेहरू! आफ्ना पापहरूबाट प्रायश्चित गरेर अल्लाहको आज्ञापालन

يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ تُوبُوٓا۟ إِلَى ٱللَّهِ تَوْبَةً نَّصُوحًا عَسَىٰ رَبُّكُمْ
أَن يُكَفِّرَ عَنكُمْ سَيِّـَٔاتِكُمْ وَيُدْخِلَكُمْ جَنَّٰتٍ تَجْرِى
مِن تَحْتِهَا ٱلْأَنْهَٰرُ يَوْمَ لَا يُخْزِى ٱللَّهُ ٱلنَّبِىَّ وَٱلَّذِينَ ءَامَنُوا۟
مَعَهُۥ ۖ نُورُهُمْ يَسْعَىٰ بَيْنَ أَيْدِيهِمْ وَبِأَيْمَٰنِهِمْ يَقُولُونَ رَبَّنَآ
أَتْمِمْ لَنَا نُورَنَا وَٱغْفِرْ لَنَآ ۖ إِنَّكَ عَلَىٰ كُلِّ شَىْءٍ قَدِيرٌ ﴿٨﴾
يَٰٓأَيُّهَا ٱلنَّبِىُّ جَٰهِدِ ٱلْكُفَّارَ وَٱلْمُنَٰفِقِينَ وَٱغْلُظْ عَلَيْهِمْ ۚ
وَمَأْوَىٰهُمْ جَهَنَّمُ ۖ وَبِئْسَ ٱلْمَصِيرُ ﴿٩﴾ ضَرَبَ ٱللَّهُ مَثَلًا
لِّلَّذِينَ كَفَرُوا۟ ٱمْرَأَتَ نُوحٍ وَٱمْرَأَتَ لُوطٍ ۖ كَانَتَا تَحْتَ
عَبْدَيْنِ مِنْ عِبَادِنَا صَٰلِحَيْنِ فَخَانَتَاهُمَا فَلَمْ يُغْنِيَا عَنْهُمَا
مِنَ ٱللَّهِ شَيْـًٔا وَقِيلَ ٱدْخُلَا ٱلنَّارَ مَعَ ٱلدَّٰخِلِينَ ﴿١٠﴾
وَضَرَبَ ٱللَّهُ مَثَلًا لِّلَّذِينَ ءَامَنُوا۟ ٱمْرَأَتَ فِرْعَوْنَ إِذْ
قَالَتْ رَبِّ ٱبْنِ لِى عِندَكَ بَيْتًا فِى ٱلْجَنَّةِ وَنَجِّنِى مِن فِرْعَوْنَ
وَعَمَلِهِۦ وَنَجِّنِى مِنَ ٱلْقَوْمِ ٱلظَّٰلِمِينَ ﴿١١﴾ وَمَرْيَمَ ٱبْنَتَ
عِمْرَٰنَ ٱلَّتِىٓ أَحْصَنَتْ فَرْجَهَا فَنَفَخْنَا فِيهِ مِن رُّوحِنَا
وَصَدَّقَتْ بِكَلِمَٰتِ رَبِّهَا وَكُتُبِهِۦ وَكَانَتْ مِنَ ٱلْقَٰنِتِينَ ﴿١٢﴾

तिर लाग र फेरि पाप तिर फर्कनुको प्रयास न गर । आशा छ कि अल्लाह तिमीहरूका निकृष्टताहरू समाप्त पारिदिन्छन् र तिमीहरूलाई यस्ता बगैंचाहरूमा प्रवेश गराउँनेछन जसका महलहरूको तलतिर बाट नहरहरू बगिरहेका हुनेछन् । त्यस दिन अल्लाहले नबी र उनका आस्थावान साथीहरूलाई अपमान गर्नै छैनन् र तिनलाई यातना दिनेछैनन् । बरु तिनीहरूको शान र दर्जालाई उच्च गर्नेछन् । उनीहरूको प्रकाश उनको अगाडि अगाडि उनको दाहिनेतर्फ दगुरिरहेको हुनेछ र भन्नेछनः हे हाम्रा पालनकार्ता! हाम्रो प्रकाशलाई हाम्रोलागि पूर्ण गरिदिनुहोस् ताकि हामी पुल सिरात (झुलुँगो पुल) लाई पार गरिसकौं अनि स्वर्ग तिर लागौं । र हामीलाई क्षमा प्रदान गर्नुहोस र हाम्रा पापलाई समाप्त गरिदिनुहोस् र त्यसमाथि पर्दा हालिदिनुहोस् किनकि तपाईं प्रत्येक कुरामाथि सामर्थ्य राख्नुहुन्छ ।

(9) हे नबी! जसले कुफ्रलाई प्रकट गरी प्रचार प्रसार गर्छन् तिनीहरूसँग तरवारले जिहाद (धर्मयुद्ध) गर, र जसले कुफ्रलाई लुकेर गर्छन् (अर्थात मुनाफिकहरू) त तिनीहरू सँग प्रमाण, अल्लाहले नियुक्त गरेको सजाय र धर्मका स्पष्ट कुराहरूबाट जिहाद गर्नुस् । र यी दुबै टोलीसित जिहाद गर्नुमा कडा र कठोरता अख्तियार गर्नुस् । र आखिरतमा उनीहरूको बास स्थान नरक नै हुनेछ । र त्यो अति नै खराब बास स्थान हो ।

(10) अल्लाह ती काफिरहरूको लागि अल्लाहका नबी नूहकी पत्नी र लूतकी पत्नीको उदाहरण पेश गर्दछन्, जो मुस्लिमहरूसँगै बसोबास गर्दथे र साथै एकै ठाउँमा जीवन व्यतीत गर्दथे भने यसरी सँग-सँगै बस्नु तिनीहरूलाई केही लाभ दिएन जसरी कि यी दुबै पत्नीलाई पनि लाभ दिएन किनभने यी दुबै हाम्रा दुई सत्कर्म भक्तहरूको दाम्पत्यमा थिए । यी दुबै पत्नीले दीनमा पतिलाई विश्वासघात गरेर दुबै काफिर भए, त यी दुबै नबीले पनि आफ्ना पत्नीलाई अल्लाहको यातना बाट अलिकति पनि जोगाउन सकेनन् । र ती दुबै सित भनियोः जाऊ,आगोमा जानेहरूगँग तिमीहरू दुबै जना पनि जाऊ । यस उदाहरणमा यस कुरामाथि प्रमाण छ कि नबी र सत्कर्मीहरूको नजीकता केही लाभ दिंदैन यदि खराब कार्य गर्छ भने ।

(11) र मोमिनहरूको लागि जसले अल्लाहलाई सत्य मानेर मात्र उनैको पूजा गर्छन् र उनको नियम विधानलाई व्यवहारमा ल्याउँछन् र यिनलाई काफिरहरू सँग बसोबासले केही हानि पुऱ्याएको छैन । फिऔंनकी पत्नीको अवस्थाको उदाहरण पेश गर्छन् जो फिऔन अल्लाहसँग कठोर कुफ्र गर्नेवाला थियो र पत्नी मोमिना थिईन्, जब उनले प्रार्थना गरिन्ः हे मेरा पालनकर्ता! मेरो लागि आफूकहाँ स्वर्गमा एउटा घर बानइदिनुस र मलाई फिऔंनको अधीनता र उसको उपद्रवबाट र उसका नराम्रा कार्यहरूबाट जोगाइदिनुस्, र मलाई फिऔंनको अनुसरण गर्ने अत्याचारी तथा पथभ्रष्ट समुदायको कष्ट एवं प्रकोप बाट मुक्ति प्रदान गर्नुहोस् ।

(12) र मोमिनहरूको लागि इमरानकी पुत्री मर्यमको उदाहरण अल्लाह पेश गर्छन जसले आफ्नो सतीत्वको रक्षा गरेकी थिइन् र व्यभिचारबाट सुरक्षित रहिन् । अनि अल्लाहले जिब्रईल फरिश्तालाई उनको कुर्ताको खल्तीमा फूँक हान्नको आदेश दिनुभयो र त्यो फूँक उनको गर्भ सम्म पुग्यो । जसको कारणले आदरणीय ईसा अलैहिस्सलाम उनीकै गर्भमा हुनुभयो । र उनले आफ्नो रबका वाणीहरूलाई सत्य ठानिन् र अल्लाहले आफ्ना दासहरूको लागि जो नियम विधान नियुक्त गरेका छन् त्यसलाई व्यवहारमा ल्याइन् । र रसूलहरूमाथि अवतरित ग्रन्थहरूलाई पुष्टि गरिन् र उनी आज्ञाकारी व्यक्तिहरू मध्येकी थिइन् ।

# सूरह अल-मुल्क - 67

سُورَةُ المُلْكِ
ترتيبها ٦٧ — آياتها ٣٠

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَٰنِ ٱلرَّحِيمِ
تَبَٰرَكَ ٱلَّذِى بِيَدِهِ ٱلْمُلْكُ وَهُوَ عَلَىٰ كُلِّ شَىْءٍ قَدِيرٌ ﴿١﴾ ٱلَّذِى خَلَقَ
ٱلْمَوْتَ وَٱلْحَيَوٰةَ لِيَبْلُوَكُمْ أَيُّكُمْ أَحْسَنُ عَمَلًا ۚ وَهُوَ ٱلْعَزِيزُ ٱلْغَفُورُ ﴿٢﴾
ٱلَّذِى خَلَقَ سَبْعَ سَمَٰوَٰتٍ طِبَاقًا ۖ مَّا تَرَىٰ فِى خَلْقِ ٱلرَّحْمَٰنِ مِن
تَفَٰوُتٍ ۖ فَٱرْجِعِ ٱلْبَصَرَ هَلْ تَرَىٰ مِن فُطُورٍ ﴿٣﴾ ثُمَّ ٱرْجِعِ ٱلْبَصَرَ كَرَّتَيْنِ
يَنقَلِبْ إِلَيْكَ ٱلْبَصَرُ خَاسِئًا وَهُوَ حَسِيرٌ ﴿٤﴾ وَلَقَدْ زَيَّنَّا ٱلسَّمَآءَ
ٱلدُّنْيَا بِمَصَٰبِيحَ وَجَعَلْنَٰهَا رُجُومًا لِّلشَّيَٰطِينِ ۖ وَأَعْتَدْنَا لَهُمْ عَذَابَ
ٱلسَّعِيرِ ﴿٥﴾ وَلِلَّذِينَ كَفَرُوا۟ بِرَبِّهِمْ عَذَابُ جَهَنَّمَ ۖ وَبِئْسَ ٱلْمَصِيرُ
﴿٦﴾ إِذَآ أُلْقُوا۟ فِيهَا سَمِعُوا۟ لَهَا شَهِيقًا وَهِىَ تَفُورُ ﴿٧﴾ تَكَادُ تَمَيَّزُ
مِنَ ٱلْغَيْظِ ۖ كُلَّمَآ أُلْقِىَ فِيهَا فَوْجٌ سَأَلَهُمْ خَزَنَتُهَآ أَلَمْ يَأْتِكُمْ نَذِيرٌ ﴿٨﴾
قَالُوا۟ بَلَىٰ قَدْ جَآءَنَا نَذِيرٌ فَكَذَّبْنَا وَقُلْنَا مَا نَزَّلَ ٱللَّهُ مِن شَىْءٍ إِنْ أَنتُمْ
إِلَّا فِى ضَلَٰلٍ كَبِيرٍ ﴿٩﴾ وَقَالُوا۟ لَوْ كُنَّا نَسْمَعُ أَوْ نَعْقِلُ مَا كُنَّا فِىٓ أَصْحَٰبِ
ٱلسَّعِيرِ ﴿١٠﴾ فَٱعْتَرَفُوا۟ بِذَنۢبِهِمْ فَسُحْقًا لِّأَصْحَٰبِ ٱلسَّعِيرِ ﴿١١﴾
إِنَّ ٱلَّذِينَ يَخْشَوْنَ رَبَّهُم بِٱلْغَيْبِ لَهُم مَّغْفِرَةٌ وَأَجْرٌ كَبِيرٌ ﴿١٢﴾

(1) अल्लाहको भलाई र उपकार उनका प्राणीहरूमाथि धेरै भयो, जसको हातमा लोक परलोकको बादशाहियत छ, दुबै लोकमा मात्र उनैको आदेश र निर्धो चल्छ र उनी प्रत्येक कुरामाथि सामर्थ्यवान हुन् । यस आयतमा अल्लाहको लागि हात सिद्ध हुन्छ र अल्लाहको लागि हात छ जसरी उनको महानता र अग्लोपनको योग्य हुन्छ ।

(2) जसले मृत्यु र जीवनको सृष्टि गरे ताकि -हे मानव- तिमीहरूको परीक्षा लिएर हेरून् कि कसले राम्रो र विशुद्ध काम गर्छ ? र उनी प्रभुत्त्वशाली छन् जसलाई कोही बेबस गर्न सक्दैन, र त्यस दासको लागि क्षमाशील छन् जसले तौबा गऱ्यो । यस आयतमा सुकर्म गर्नुमाथि प्रेरणा हो र पापहरूबाट टाढा रहनुको निम्ती हो ।

(3) जसले तह-तह एक माथि अर्को गरी सावटा आकाश सृष्टि गरे, र हे हेर्ने व्यक्ति! तिमी परम दयालु (अल्लाह) को सृष्टिमा कुनै किसिमको बेमेल र हेरफेर तथा मतभेद पाउँने छैनौ । अनि आकाश तिर हेर त, के तिमी कहीं आकाशमा प्वाल देख्छौ ?

(4) अनि एक पछि अर्को अर्थात दोहोऱ्याई दोहोऱ्याई हेर तिम्रो दृष्टि आकाशमा बिना कुनै कमी हेरेर थकित र अपमानित भई असफल फर्कनेछ ।

(5) तिमीहरूको नजीकको आकाशलाई जसलाई आँखाले हेर्छन् ठूला प्रकाशित तारागनबाट सुसज्जित पारेका छौं । र शैतानहरू मध्ये जसले आकाशिय कुराकानी चोरी गरेर सुन्छ त्यसको लागि यी तारागनलाई धपाउने र डढाउने साधन बनाएका छौं । र ती शैतानहरूका लागि अन्त्यमा दन्किदो आगोको यातना तयार पारेका छौं जसको तातोपनको अनुमान लगाउँछन् ।

(6) र आफ्नो जन्मदाता सित कुफ्र गर्नेहरूको लागि नरकको यातना रहेको छ, र नरक अति नै नराम्रो बासस्थान हो ।

(7) तिनीहरू नरकमा होमिए पछि त्यसको भब्ह कठोर आवाज सुन्नेछन् र त्यो अत्यन्त छिटो गतिमा उम्लिरहेको छ ।

(8) काफिरहरूमाथि अत्यन्त क्रोधले गर्दा नरक फुट्न लागेको हुनेछ, जब जब त्यसमा मानिस मध्ये कुनै समूहलाई होमिनेछ तब तब त्यसका सुरक्षाकर्मीहरूले डाँट र धिक्कारको स्वरूप सोध्नेछन्: के तिमीहरू समक्ष संसारमा यस यातनाबाट जसमा तिमीहरू छौ सचेत गर्नेवाला रसूल आएका थिएन ?

(9) तिनीहरूले जवाफ दिनेछन्: हो, हामी समक्ष अल्लाहको तर्फबाट रसूल आएका थिए र हामीलाई सचेत गराएका थिए तर हामीले उनीहरूलाई झूठा ठहऱ्याएका थियौं र उनीहरूले ल्याएका आयतहरूको बारेमा हामीले भन्यौं: अल्लाहले कुनै मानवमाथि केही अवतिरत गरेका छैनन् र हे रसूलहरू! तिमीहरू सत्यताबाट धेरै टाढा छौ ।

(10) र आफ्नो कमीलाई स्वीकार गर्दै भन्नेछन्: सत्य खोज्ने व्यक्तिको सुन्नु जस्तै यदि हामीले सुनेको भए वा जस तिर हामीलाई निम्तो दिइन्थ्यो त्यसमा चिन्तन गरेका भए आज आगोमा होमिनेहरूका गन्तीमा हुने थिएनौं ।

(11) यसरी तिनीहरूले आफुले झूठा ठान्नु र कुफ्र गर्नुलाई जसको कारणले नरकको यातनाको योग्य भए स्वीकार्नेछन् । तसर्थ नरकबासीको लागि अल्लाहको दयाबाट टाढा नै टाढा छ ।

(12) निस्सन्देह जुन व्यक्तिहरू मानिसहरूले नदेखिकन आफ्ना पालनकर्तासित डराउँछन अनि उनैको पूजा अर्चना गर्छन् र उनको अवज्ञा गर्दैनन्, र आखिरतको यातनालाई न हेरिकन त्यसबाट भयभित हुन्छन् भने तिनीहरूको लागि तिनीहरूका पापहरूबाट अल्लाहको तर्फबाट क्षमादान र स्वर्गको रूपमा ठूलो पुण्य छ ।

(13) हे मनाव ! तिमीहरू आफ्ना कुनै मामलाको बारेमा मसिनो स्वरमा कुरा गर वा ठूलो स्वरमा यी दुबै अल्लाह समक्ष बराबर छन्, निस्सन्देह उनी हृदयहरूमा लुकेका रहस्यलाई पनि जान्नेवाला छन् भने कसरी उनी माथि तिम्रा वचन र कर्महरू लुकिरहनेछन् ।

(14) के लोक परलोकका पालनकर्ता आफ्नो सृष्टि र तिनीहरूका मामलाहरूलाई जान्दैनन् जबकि उनैले नै तिनीहरूलाई सृष्टि गरेका छन् र तिनलाई राम्रो रूपमा जन्म दिएका छन् ? उनी आफ्ना दासहरूसँग सुक्ष्मदर्शी र तिनीहरू तथा तिनीहरूका कार्यहरूको बारेमा सुसूचित छन् ।

وَأَسِرُّواْ قَوۡلَكُمۡ أَوِ ٱجۡهَرُواْ بِهِۦٓۖ إِنَّهُۥ عَلِيمُۢ بِذَاتِ ٱلصُّدُورِ ﴿١٣﴾ أَلَا يَعۡلَمُ مَنۡ خَلَقَ وَهُوَ ٱللَّطِيفُ ٱلۡخَبِيرُ ﴿١٤﴾ هُوَ ٱلَّذِي جَعَلَ لَكُمُ ٱلۡأَرۡضَ ذَلُولٗا فَٱمۡشُواْ فِي مَنَاكِبِهَا وَكُلُواْ مِن رِّزۡقِهِۦۖ وَإِلَيۡهِ ٱلنُّشُورُ ﴿١٥﴾ ءَأَمِنتُم مَّن فِي ٱلسَّمَآءِ أَن يَخۡسِفَ بِكُمُ ٱلۡأَرۡضَ فَإِذَا هِيَ تَمُورُ ﴿١٦﴾ أَمۡ أَمِنتُم مَّن فِي ٱلسَّمَآءِ أَن يُرۡسِلَ عَلَيۡكُمۡ حَاصِبٗاۖ فَسَتَعۡلَمُونَ كَيۡفَ نَذِيرِ ﴿١٧﴾ وَلَقَدۡ كَذَّبَ ٱلَّذِينَ مِن قَبۡلِهِمۡ فَكَيۡفَ كَانَ نَكِيرِ ﴿١٨﴾ أَوَلَمۡ يَرَوۡاْ إِلَى ٱلطَّيۡرِ فَوۡقَهُمۡ صَٰٓفَّٰتٖ وَيَقۡبِضۡنَۚ مَا يُمۡسِكُهُنَّ إِلَّا ٱلرَّحۡمَٰنُۚ إِنَّهُۥ بِكُلِّ شَيۡءِۭ بَصِيرٌ ﴿١٩﴾ أَمَّنۡ هَٰذَا ٱلَّذِي هُوَ جُندٞ لَّكُمۡ يَنصُرُكُم مِّن دُونِ ٱلرَّحۡمَٰنِۚ إِنِ ٱلۡكَٰفِرُونَ إِلَّا فِي غُرُورٍ ﴿٢٠﴾ أَمَّنۡ هَٰذَا ٱلَّذِي يَرۡزُقُكُمۡ إِنۡ أَمۡسَكَ رِزۡقَهُۥۚ بَل لَّجُّواْ فِي عُتُوّٖ وَنُفُورٍ ﴿٢١﴾ أَفَمَن يَمۡشِي مُكِبًّا عَلَىٰ وَجۡهِهِۦٓ أَهۡدَىٰٓ أَمَّن يَمۡشِي سَوِيًّا عَلَىٰ صِرَٰطٖ مُّسۡتَقِيمٖ ﴿٢٢﴾ قُلۡ هُوَ ٱلَّذِيٓ أَنشَأَكُمۡ وَجَعَلَ لَكُمُ ٱلسَّمۡعَ وَٱلۡأَبۡصَٰرَ وَٱلۡأَفۡـِٔدَةَۖ قَلِيلٗا مَّا تَشۡكُرُونَ ﴿٢٣﴾ قُلۡ هُوَ ٱلَّذِي ذَرَأَكُمۡ فِي ٱلۡأَرۡضِ وَإِلَيۡهِ تُحۡشَرُونَ ﴿٢٤﴾ وَيَقُولُونَ مَتَىٰ هَٰذَا ٱلۡوَعۡدُ إِن كُنتُمۡ صَٰدِقِينَ ﴿٢٥﴾ قُلۡ إِنَّمَا ٱلۡعِلۡمُ عِندَ ٱللَّهِ وَإِنَّمَآ أَنَا۠ نَذِيرٞ مُّبِينٞ ﴿٢٦﴾

(15) उनै हुन् जसले धरतीलाई तिम्रो बसोबासको लागि वशीभूत र बेराबर गरिदिएका छन्,अतः तिमी त्यसको बीचमा र किनारामा हिंडने गर, र अल्लाहले दिएका आजीविकाबाट खाऊ, र हिसाब किताब तथा प्रतिफलको लागि उनै एक्लै तिर आ-आफ्ना चिहानहरूबाट उभेर जानु पर्छ । यस आयतमा जीविका र ज्याला कमाउनु तिर संकेत छ । र यस कुरामाथि पनि प्रमाण छ कि अल्लाह एक्लै सत्य पूज्य छन् र उनको पूजामा केही साझेदार छैन, यसै गरी यस आयतमा अल्लाह शक्तिशाली हुनुमाथि पनि प्रमाण छ । र यो आयत स्मरण गराउँछ कि अल्लाहको अनुकम्पालाई चर्चा गर्नु पर्यो, र सांसारिक लोभमा फस्नुबाट डराउने कुरा पनि छ यस आयतमा ।

(16) (17) हे मक्काका काफिरहरू हो! के तिमीहरू अल्लाहबाट निश्चिन्त छौ जो आकाशमाथि छन कि तिमीलाई धरतीमा धंसाइदिउन र तिमी सर्वनाश हुन सम्म धरती बेस्सरी हल्लिनेछन् । के तिमीहरू उन अल्लाहबाट निश्चिन्त छौ जो आकाशमा छन् कि उनले तिमीहरूमाथि आँधी पठाउनेछन् जेसले तिमीलाई सा-साना ढुंगाहरूले हान्नेछन्, तब तिमीहरूलाई थाहा हुनेछ हे काफिरहरू! जब तिमी यातनालाई हेर्छौ कि कसरी मेरो चेतावनी हुन्छ ? र त्यस बेला तिमीलाई कुनै पनि ज्ञान केही लाभ दिन सक्दैन । यस आयतमा यस कुरा माथि प्रमाण छ कि अल्लाह सब भन्दा माथि छन् जसरी उनको महानता र प्रभुत्वको योग्य छ ।

(18) मक्काका काफिरहरू भन्दा अगि पनि नूह, आद र समूदका समुदायहरूले आ-आफ्ना रसूलहरूलाई झूठा ठानेका थिए, तब उनीहरूमाथि मेरो इन्कार कसरी भयो र कसरी हामीले उनीहरूमाथि यातना र प्रकोप पठाएर उनको धनमाललाई परिवर्तन गरिदियौं अनि उनीलाई सर्वनाश गरिदियौं ?

(19)-(21) के यी काफिरहरू लापरवाही भएका छन् र आफुमाथि पंक्षीहरूलाई देख्दैनन् कि कसरी हावामा उड्दा खेरि आफ्ना पखेटाहरूलाई फैलाउँदैछन् र कहिले समेटदछन् ? रहमान (अल्लाह) को अलावा कोही अरू छैन जसले त्यसलाई खस्नबाट थामेको होओस्, निस्सन्देह उनी हरेक चिजलाई देखिरहेका छन् उनको सृष्टिमा कुनै प्रकारको कमी र हेरफेर पाउँदैन । हे काफिरहरू ! तिम्रो ख्यालमा कुन यस्तो सैन्यदल हो जसले करूणामय (रहमान) को तुलनामा तिमीहरूको सहयोग गर्न सक्छ यदि तिमीहरूसँग रहमानले खराब गर्न चाहुन् । काफिरहरू त आफ्नो यसै ख्यालको कारणले शैतानको तर्फबाट खुल्ला धोका र पथभ्रष्टतामा छन् । बरु यो काल्पनिक अन्नदाता को हो, यदि अल्लाहे तिमीहरूको ज्याला रोकछन् भने त्यसले तिमीहरूलाई जीविका दिन सक्छ ? बरु काफिरहरू आफ्नो उद्दण्डता,पथभ्रष्टता,अहंकार र घमण्ड तथा सत्यताबाट घृणामा अडिग भई सत्यतालाई सुन्दैनन् र त्यसको पालना गर्दैनन् ।

(22) के जुन व्यक्ति अनुहार झुकाएर हिंड्छ र यो पनि थाहा छैन कि कहाँ जान्छ र कसरी जान्छ बढी मार्गदर्शन पाएको छ र बढी सुबाटोमा लागेको छ वा जुन व्यक्ति सोझो र स्पष्ट मार्गमा जसमा केही बाङ्गो छैन हिंड्छ ? यो काफिर र मोमिनको उदाहरण हो जसलाई अल्लाहले वर्णन गर्नुभएको हो ।

(23) (24) हे रसूल! भनिदिनुसः हे मानिसहरू उनी अल्लाह नै हुन् जसले तिमीहरूलाई अनस्तित्वबाट सृष्टि गरे, र तिमीहरूको सुन्नकोलागि कान, हेर्नकोलागि आँखा र सोच विचार गर्ने हेतु हृदय बनाए । तर हे काफिरहरू! तिमी आफ्ना पालनकर्ताका यी अनुकम्पाहरूमाथि जो तिमीमाथि उनले गरेका छन् धेरै कम आभार व्यक्त गर्दछौ । हे रसूल! यिनीहरूसँग भनिदिनुस् कि उनी अल्लाह नै हुन् जसले तिमीलाई धरतीमा जन्म दिएर फैलाए । र फेरि हिसाब किताब र प्रतिफलको लागि उनै मात्र एक अल्लाह तर्फ यस फैलाउ पश्चात भेला गरिनेछौ ।

(25) (26) र काफिरहरू भन्छनः हे मुहम्मद ! यो प्रलयको चौरमा एकत्रित हुनको वाचा कहिले सिद्ध हुन्छ ? हे मोमिनहरू! यस घटनाको जमानाको बारेमा हामीलाई खबर गर यदि यस वाचामा तिमीहरू सच्चा छौ भने. हे रसूल ! तपाईं यिनीहरूसित भनिदिनुस : प्रलयको घटना घटित हुने समयको बारेमा मात्र एक अल्लाहलाई थाहा छ र यस्को ज्ञान मात्र उनैमा निहित छ । म त मात्र तिमीहरूलाई सचेत गर्नेवाला र तिमीहरूले गरेको कुफ्रको सजायबाट डराउनेवाला हुँ र अल्लाहले जस

فَلَمَّا رَأَوْهُ زُلْفَةً سِيٓـَٔتْ وُجُوهُ ٱلَّذِينَ كَفَرُوا۟ وَقِيلَ هَٰذَا ٱلَّذِى
كُنتُم بِهِۦ تَدَّعُونَ ﴿٢٧﴾ قُلْ أَرَءَيْتُمْ إِنْ أَهْلَكَنِىَ ٱللَّهُ وَمَن مَّعِىَ
أَوْ رَحِمَنَا فَمَن يُجِيرُ ٱلْكَٰفِرِينَ مِنْ عَذَابٍ أَلِيمٍ ﴿٢٨﴾ قُلْ هُوَ
ٱلرَّحْمَٰنُ ءَامَنَّا بِهِۦ وَعَلَيْهِ تَوَكَّلْنَا ۖ فَسَتَعْلَمُونَ مَنْ هُوَ فِى ضَلَٰلٍ مُّبِينٍ
﴿٢٩﴾ قُلْ أَرَءَيْتُمْ إِنْ أَصْبَحَ مَآؤُكُمْ غَوْرًا فَمَن يَأْتِيكُم بِمَآءٍ مَّعِينٍۭ ﴿٣٠﴾

ترتيبها ٦٨ — سُورَةُ القَلَمِ — آياتها ٥٢

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَٰنِ ٱلرَّحِيمِ

نٓ ۚ وَٱلْقَلَمِ وَمَا يَسْطُرُونَ ﴿١﴾ مَآ أَنتَ بِنِعْمَةِ رَبِّكَ بِمَجْنُونٍ ﴿٢﴾
وَإِنَّ لَكَ لَأَجْرًا غَيْرَ مَمْنُونٍ ﴿٣﴾ وَإِنَّكَ لَعَلَىٰ خُلُقٍ عَظِيمٍ ﴿٤﴾
فَسَتُبْصِرُ وَيُبْصِرُونَ ﴿٥﴾ بِأَييِّكُمُ ٱلْمَفْتُونُ ﴿٦﴾ إِنَّ رَبَّكَ هُوَ
أَعْلَمُ بِمَن ضَلَّ عَن سَبِيلِهِۦ وَهُوَ أَعْلَمُ بِٱلْمُهْتَدِينَ ﴿٧﴾ فَلَا تُطِعِ
ٱلْمُكَذِّبِينَ ﴿٨﴾ وَدُّوا۟ لَوْ تُدْهِنُ فَيُدْهِنُونَ ﴿٩﴾ وَلَا تُطِعْ كُلَّ
حَلَّافٍ مَّهِينٍ ﴿١٠﴾ هَمَّازٍ مَّشَّآءٍۭ بِنَمِيمٍ ﴿١١﴾ مَّنَّاعٍ لِّلْخَيْرِ مُعْتَدٍ
أَثِيمٍ ﴿١٢﴾ عُتُلٍّۭ بَعْدَ ذَٰلِكَ زَنِيمٍ ﴿١٣﴾ أَن كَانَ ذَا مَالٍ وَبَنِينَ
﴿١٤﴾ إِذَا تُتْلَىٰ عَلَيْهِ ءَايَٰتُنَا قَالَ أَسَٰطِيرُ ٱلْأَوَّلِينَ ﴿١٥﴾

कुरालाई तिमीहरू समक्ष वर्णन गर्न आदेश दिएको छ त्यसलाई म राम्ररी र सकभर वर्णन गर्दैछु ।

(27) फेरि जब काफिरहरू अल्लाहको यातना (अजाब) नजीकैबाट हेर्नेछन त यिनीहरूको अनुहारमा अपमान र थकावट प्रष्ट हुनेछ र तिनीहरूलाई डांट्दै भनिनेछः यही त्यो यातना हो जसको तिमीहरू संसारमा नै चाँडै माग गर्दै थियौ ।

(28) हे दूत! यी काफिरहरूसित भनिदिनुहोसः तिमीहरूले मलाई खबर गर यदि अल्लाहले मलाई र मेरा मोमिन साथीहरूलाई तिमीले कामना गरे अनुसार मारिदिएमा वा हामीमाथि दया गर्दै हाम्रो मृत्यु समयलाई ढीलो गर्दै आफ्नो यातनाबाट हामीलाई जोगाएमा त तिमीहरूलाई कसले पीडादायी यातनाबाट बचाउन सक्छ?

(29) भनिदिनुसः उनी रहमान् (करूणामय) हुन्, जसलाई हामीले सत्य ठान्यौं र उनैले निर्धारित गरेको विधानलाई व्यवहारमा ल्यायौं, उनको आज्ञापालन गर्‍यौं र आफ्ना सबै मामलाहरूमा उनै माथि भरोसा गर्‍यौं । त हे काफिरहरू तिमी चाँडै जान्नेछौ यी दुबै गुट मध्ये अल्लाहको स्पष्ट र सोझो बाटो बाट टाढा कुन गुट हो ?

(30) हे दूत! यी मुश्रिकहरूसँग भनिदिनुहोसः तिमी मलाई खबर गर कि तिमीहरूले खाइरहेका पानी यदि धरती भीत्र गएर सुक्छ जहाँ सम्म कुनै पनि साधनले तिमी पुग्न सक्दैनौ, त अल्लाह बाहेक को हो जो तिम्रो लागि धरतीमाथि पानीका श्रोतहरू निकाले र पानी जारी गर्न सक्छ ?

## सूरह अल्-कलम - 68

(1)-(3) नून, अल्लाह यहाँ कलमको कसम खाइरहेछन् जसबाट फरिश्ताहरू र मानिसहरू लेख्छन्, र जस बाट भलाई, लाभदायक कुराहरू र ज्ञानका कुराहरू लेखिन्छ । हे रसूल! अल्लाहले तपाईंलाई दूतत्व प्रदान गरी रसूल बनाएर जो कृपा तपाईंमाथि गर्नुभएको हो त्यस कारणले तपाईं निर्बल बुद्धिवाला र कमजोर विचारवाला हुनुहुन्न । र दूतत्वका कुराहरूको प्रचार-प्रसारमा जो कठोर र सख्त कष्ट तपाईंलाई पुगिरहेछ त्यसमाथि तपाईंकालागि कहिल्यै समाप्त नहुने ठूलो पुण्य र प्रतिदान रहेको छ । हे रसूल! निस्सन्देह तपाईं महान नैतिक्ता र उच्च व्यवहारमा रहेको हुनुहुन्छ जस उच्च व्यवहारको शिक्षा कुरआनले दिएको हो । कुरआनमा वर्णन भएको व्यवहारलाई अपनाउनु र कुरआनले दिएको आदेशलाई पालन गर्नु तथा उसले मनाही गरेको कुराबाट बंचित रहनु रसूलको बानी थियो ।

(4)(5) हे रसूल! चाँडै नै तपाईं पनि देख्नुहुन्छ र काफिरहरूले पनि देख्नेछन् कि तिमीहरू मध्ये कुन फसादी र र उन्मादी रहेछ ?

(6) तपाईंका पालनकर्ता आफ्नो मार्गबाट र सुपथबाट भ्रष्ट भएकाहरूलाई राम्ररी जान्दछन र सीधा मार्गमा रहेका संयमी व्यक्तिहरूलाई पनि जान्दछन ।

(7) अतः हे रसूल! झूठाहरूको विरोध गर्नुमाथि स्थिर रही तपाईं तिनीहरूको आज्ञापालन नगर्नुस ।

(8) यिनीहरूले चाहन्छन् र मनपराउँछन् : यदि तपाईंले तिनीहरूसित लचकता देखाउनुहुन्छ भने यिनीहरूले पनि तपाईंसँग लचकता देखाउनेछन ।

(9)-(15) हे रसूल ! तपाईंले यस्ता हरेक व्यक्तिको कुरा नमान्नुस जसले धेरै किरिया खान्छ र जो झूठापनि छ र अपमानितपनि छ । जसले मानिस बीच चुक्ली गर्छ र छुल्याहा बनी हिंडछ । र मानिसहरू बीच झगडा एवं फसाद फैलाउनको लागि एक अर्को तर्फ साउती गर्छ । मालमा दान दिनबाट कन्जुसी गर्छ, सत्यताबाट त्यसको माध्यमले रोक्नेवाला तथा भलाईबाट सख्त रूपले मनाही गर्नेवाला, मानिसमाथि अन्याय गर्नमा र निषेधित कुराहरूलाई व्यवहारमा ल्याउनुमा सीमा उल्लघंन गर्नेवाला अति दुष्कर्मी छ । आफ्नो अवज्ञामा अति नै कट्टर, बदमाश र हरामी छ जो आफ्नो पिता बाहेक अरूसित सम्बन्धित छ । धेरै धनमाल र सन्तानवाला हुनुको कारणले अहंकार गर्‍यो र सत्यताबाट घमण्ड गरी टाढो बस्यो । जब त्यसमाथि कोही कुरआनका आयतहरू पाठ गर्छ भने त्यसलाई झूठा ठान्दै भन्छ : यी अतीतका कथाहरू र मिथ्याकथनहरू छन । यी आयतहरू यद्यपि केही मुश्रिकहरू जस्तो वलीद बिन मुगिराहको बारेमा अवतरण भएको छ, तर यी आयतहरूमा मुस्लिमलाई पनि त्यस्ता अवगुणहरूबाट टाढा रहनको लागि सचेत पनि गरिएको हो ।

(16) चाँडै नै हामी उसको नाकमाथि सजायको रूपमा यस्तो चिन्ह बनाई दिन्छौं जो सधैं त्यहाँ रहने

سَنَسِمُهُۥ عَلَى ٱلۡخُرۡطُومِ ﴿١٦﴾ إِنَّا بَلَوۡنَٰهُمۡ كَمَا بَلَوۡنَآ أَصۡحَٰبَ ٱلۡجَنَّةِ إِذۡ أَقۡسَمُواْ
لَيَصۡرِمُنَّهَا مُصۡبِحِينَ ﴿١٧﴾ وَلَا يَسۡتَثۡنُونَ ﴿١٨﴾ فَطَافَ عَلَيۡهَا طَآئِفٞ مِّن رَّبِّكَ
وَهُمۡ نَآئِمُونَ ﴿١٩﴾ فَأَصۡبَحَتۡ كَٱلصَّرِيمِ ﴿٢٠﴾ فَتَنَادَوۡاْ مُصۡبِحِينَ ﴿٢١﴾ أَنِ
ٱغۡدُواْ عَلَىٰ حَرۡثِكُمۡ إِن كُنتُمۡ صَٰرِمِينَ ﴿٢٢﴾ فَٱنطَلَقُواْ وَهُمۡ يَتَخَٰفَتُونَ ﴿٢٣﴾
أَن لَّا يَدۡخُلَنَّهَا ٱلۡيَوۡمَ عَلَيۡكُم مِّسۡكِينٞ ﴿٢٤﴾ وَغَدَوۡاْ عَلَىٰ حَرۡدٖ قَٰدِرِينَ ﴿٢٥﴾ فَلَمَّا
رَأَوۡهَا قَالُوٓاْ إِنَّا لَضَآلُّونَ ﴿٢٦﴾ بَلۡ نَحۡنُ مَحۡرُومُونَ ﴿٢٧﴾ قَالَ أَوۡسَطُهُمۡ أَلَمۡ أَقُل
لَّكُمۡ لَوۡلَا تُسَبِّحُونَ ﴿٢٨﴾ قَالُواْ سُبۡحَٰنَ رَبِّنَآ إِنَّا كُنَّا ظَٰلِمِينَ ﴿٢٩﴾ فَأَقۡبَلَ
بَعۡضُهُمۡ عَلَىٰ بَعۡضٖ يَتَلَٰوَمُونَ ﴿٣٠﴾ قَالُواْ يَٰوَيۡلَنَآ إِنَّا كُنَّا طَٰغِينَ ﴿٣١﴾ عَسَىٰ
رَبُّنَآ أَن يُبۡدِلَنَا خَيۡرٗا مِّنۡهَآ إِنَّآ إِلَىٰ رَبِّنَا رَٰغِبُونَ ﴿٣٢﴾ كَذَٰلِكَ ٱلۡعَذَابُۖ وَلَعَذَابُ
ٱلۡأٓخِرَةِ أَكۡبَرُۚ لَوۡ كَانُواْ يَعۡلَمُونَ ﴿٣٣﴾ إِنَّ لِلۡمُتَّقِينَ عِندَ رَبِّهِمۡ جَنَّٰتِ ٱلنَّعِيمِ
﴿٣٤﴾ أَفَنَجۡعَلُ ٱلۡمُسۡلِمِينَ كَٱلۡمُجۡرِمِينَ ﴿٣٥﴾ مَا لَكُمۡ كَيۡفَ تَحۡكُمُونَ ﴿٣٦﴾ أَمۡ
لَكُمۡ كِتَٰبٞ فِيهِ تَدۡرُسُونَ ﴿٣٧﴾ إِنَّ لَكُمۡ فِيهِ لَمَا تَخَيَّرُونَ ﴿٣٨﴾ أَمۡ لَكُمۡ أَيۡمَٰنٌ
عَلَيۡنَا بَٰلِغَةٌ إِلَىٰ يَوۡمِ ٱلۡقِيَٰمَةِ إِنَّ لَكُمۡ لَمَا تَحۡكُمُونَ ﴿٣٩﴾ سَلۡهُمۡ أَيُّهُم
بِذَٰلِكَ زَعِيمٌ ﴿٤٠﴾ أَمۡ لَهُمۡ شُرَكَآءُ فَلۡيَأۡتُواْ بِشُرَكَآئِهِمۡ إِن كَانُواْ صَٰدِقِينَ ﴿٤١﴾
يَوۡمَ يُكۡشَفُ عَن سَاقٖ وَيُدۡعَوۡنَ إِلَى ٱلسُّجُودِ فَلَا يَسۡتَطِيعُونَ ﴿٤٢﴾

छ र कहिल्यै अलग हुँदैन ताकि मानिसहरू बीच त्यसको कारणले अपमानित होस् ।

(17) (18) हामीले मक्कावासीलाई भोक र अकालमा हालेर परीक्षा लियौं जसरी कि बगैंचावालाहरूको परीक्षा लिएका थियौं जब तिनीहरूले कसम खाएका थिए कि हामी अवश्य नै बिहानै आफ्नो बगैंचाको फल टिपेर ल्याउनेछौं, र दीन-दुखीहरू मध्ये कसैलाई त्यसबाट खुवाउने छैनौं र तिनीहरूले इन्शाअल्लाह भनेनन् (अर्थात यदि अल्लाहले चाहनुभयो) ।

(19) (20) राती तिनीहरू सुतिरहेको अवस्थामा तिम्रा रबको तर्फबाट आगो आएर त्यस बगैंचालाई डढाईदियो, र त्यो बगैंचा अन्ध्यारो राती जस्तो डढेर कालो भइसक्यो ।

(21) (22) बिहानै तिनीहरूले एक अर्कालाई बोलाए, कि आफ्नो खेत तिर बिहानै हिंड, यदि तिमी फल टिप्न चाहन्छौ भने ।

(23) (24) तिनीहरू परस्पर कानेखुसी गर्दै चाँडै हिंडे कि आजको दिन कुनै गरीब मान्छे तिम्रो बगैंचामा प्रवेश गर्न नपाओस् ।

(25) उनीहरू दिनको पहिलो पहरमा आफ्नो बगैंचा तिर हिंडे यस खराब इरादाले कि कुनै गरीबलाई बगैंचा भित्र आउन दिंदैनन्, र तिनीहरू आफ्नो विचारमा फल टिप्नमाथि अत्यन्त सामर्थ्य राख्थे ।

(26)-(33) जब तिनीहरूले डढेको बगैंचालाई हेरे अनि त्यसलाई नकार्दै भनेः हामीले बगैंचा सम्म पुग्ने बाटो बिराएछौं क्यारे । तर जब तिनीहरूले आफ्नो बगैंचा चिने अनि भने : होइन! बरु हामी चाहिं त्यसको धनबाट बञ्चित भएकाछौं कन्जुसी र गरीबहरूलाई रोक्नको कारणले । तिनीहरू मध्येका एक असल व्यक्तिले भन्योः के मैले तिमीहरूलाई भनेको थिइन कि इन्शाअल्लाह भन ? तिनीहरूले कुरा बुझे पछि र होश तथा सुमार्गमा आए पछि भनेः हाम्रा रब पवित्र छन हरेक किसिमका अन्यायबाट जो हामीले गरेका थियौं, बरु वास्तवमा हामीहरू नै इन्शाअल्लाह न भनेर आफ्नो मिथ्या इच्छाको कारणले अत्याचारी रहेछौं । अनि तिनीहरू मध्ये हरेकले एक अर्कालाई इन्शाअल्लाह भन्न छोडे र मिथ्या इच्छामाथि दोषी ठहऱ्याउन थाले । अन्ततः तिनीहरूले भनेः हाय, हाम्रो बर्बादी! वास्तवमा हामी नै गरीब फकीरलाई रोक्दा र अल्लाहको आदेशको अवज्ञा गर्दा सीमा उल्लंघन गरेका थियौं । आशा छ हाम्रा रबले हामीलाई यसको सट्टामा यो भन्दा राम्रो बगैंचा हामीले प्रायश्चित गर्नाले र आफ्नो पापलाई स्वीकार गर्नाले प्रदान गर्नेछन् । हामी मात्र एक आफ्ना रब तर्फ फर्केर जानेछौं र उनैको क्षमाको आशा लगाएका छौं र भलाईको कामना गर्दैछौं । यस प्रकोप जस्तो जुन हामीले बगैंचावालाहरूमाथि गरेका थियौं त्यो यस संसारमा प्रत्येक यस्तो व्यक्तिको लागि हुन्छ जो अल्लाहको आदेशको विरुद्ध कार्य गर्छ र अल्लाहले प्रदान गरेको धनमालमा कन्जुसी गर्दै त्यसबाट अल्लाहको हक दिंदैन । र संसारिक प्रकोप एवं यातना भन्दा कति ठूलो र महान अन्त्यको प्रकोप र यातना हुनेछ । यदि तिनीहरूलाई यसको ज्ञान हुन्थ्यो भने प्रकोप ल्याइने कारणहरूबाट बञ्चित रहन्थे ।

(34) जुन व्यक्तिहरू अल्लाहको आदेशापालन गर्दै र उनले मनाही गरेका कुराहरूबाट बञ्चित बस्दै अल्लाहको यातनाबाट भयभित छन भने यस्ता व्यक्तिहरूका लागि उनीहरूका रबकहाँ अन्त्यमा यस्ता बगैंचाहरू हुनेछन् जसमा सधैं रहने धनमाल र अनुकम्पा हुनेछन् ।

(35) (36) के हामी आज्ञाकारी र अल्लाहको पूजामा लीन रहने व्यक्तिहरूलाई काफिरहरू जस्ता बनाउँछौं ? आखिर तिमीहरूलाई के भएको छ ? कि यस्तो अन्यायपूर्ण निर्णय गर्दै रहेका छौ र दुबै थरीलाई पुण्यमा बराबर गरेका छौ ?

(37) (38) के तिमीहरूसँग आकाशबाट अवतरित कुनै यस्तो किताब छ जसमा तिमी पाउँदैछौ कि आज्ञाकारी अवज्ञाकारी जस्तो हो ? के तिम्रो यो भनाई तिमीले त्यही किताबमा पढिराखेका छौ ? तब त वास्तवमा त्यसमा तिमीहरूको लागि तिमीहरूले चाहेकै कुराहरू हुनुपर्छ । यस्तो त तिम्रो लागि कहिल्यै पनि हुन सक्दैन।

(39) वा के तिमीहरूको लागि हामीमाथि वाचा र कौल छ कि तिमीहरूले चाहेका कुराहरू तिमीलाई प्राप्त हुनेछन ?

(40) (41) हे रसूल ! मुश्रिकहरूसँग सोधः कि तिनीहरू मध्ये कुन यस निर्णयको जिम्मा लिन्छ ? के तिनीहरूकहाँ यस्ता पूज्यहरू छन जो तिनीहरूले भनेको कुराको जिम्मा लिन्छन र तिनीहरूले कामना गरेको

कुरालाई पाउने माथि सहयोग गर्छन । यदि तिनीहरू सच्चा छन भने ती पूज्यहरूलाई लिएर आऊन ।

(42) प्रलय हुने दिन मामला एक्दमै गंभिर र वातावरण भयभित हुनेछ, र अल्लाह प्राणीहरू बीच निर्णय गर्नको लागि आउनेछन र आफ्नो प्रतिष्ठित पिडौंला जस्को समान केही कुरा छैन खोल्नेछन् । नबी सल्लल्लाहो अलैहे वसल्लमले भन्नुभोः " हाम्रा रब आफ्नो पिडौंला खोल्नेछन्, त त्यसको लागि प्रत्येक मोमिन पुरुष र महिला सज्दा (ढोग) मा खस्नेछन, र जो व्यक्ति संसारमा देखावा र नामको लागि सज्दा गर्दथ्यो त्यो बाँकी रहने छ, त्यो व्यक्ति सज्दा गर्न जान्छ तर उसको पिठ्युँ झुक्न सक्दैन " (बुखारी र मुस्लिम) ।

(43) यिनीहरूका आँखा तल झुकेका हुनेछन्, र अल्लाहको यातनाको कारण यिनीहरू अपमानले ढाकिनेछ, यिनीहरू त संसारमा अल्लाहको लागि नमाज पढन तिर र अल्लाहको इबादत तिर बोलाइन्थे । जब यिनीहरू स्वास्थ्य र नमाज पढनमाथि सामर्थ्य थिए तापनि यिनीहरूले आफुलाई ठूलो मानि र घमण्ड गरी सज्दा गरेका थिएनन् ।

(44) (45) त हे रसूल ! यस कुरआनलाई झुठा ठहर गर्नेहरूको मामला ममाथि छोडिदिनुहोस् । ममाथि तिनीहरूलाई बदला दिनु र तिनीहरूसित प्रतिकार लिनु नै हो । तिनीहरूको धनमाल र सन्तान तथा अनुकम्पामा बढोतरी गर्नेछु जो वास्तवमा तिनीहरूको बरबादीको कारण बन्छ र यी सबै तिनीहरूलाई छुट दिएर गर्नेछु । र तिनीहरूलाई मोहिलत दिन्छु, तिनको उमेरमा बढोतरी गर्नेछु ताकि अधिक भन्दा अधिक पाप गरून् । काफिरहरूको लागि मेरो चाल धेरै कठोर छ ।

(46) (47) हे रसूल ! के तपाईं यी मुशिरकहरूसँग दूतत्वलाई पुऱ्याउनुमाथि सांसारिक ज्याला माग्नुहुन्छ जस्को भारी बोझमुनि यिनीहरू दबिदैछन् ? वा के यिनीहरूलाई परोक्षको केही ज्ञान प्राप्त छ जसमा यिनीहरू आफ्नो जीउकोलागि निर्णय गरेको कुरा लेख्छन कि यिनीहरू अल्लाह समक्ष आस्थावानहरू भन्दा उत्तम हुन ।

(48)-(50) त हे रसूल ! तपाईंका रबले जे निर्णय र फैसला गरेका छन् त्यसमा सन्तुष्ट हुनुहोस अर्थात तिनीहरूलाई जो मोहिलत दिएका छन् र तपाईंको लागि अल्लाहको तर्फबाट सहयोग आउनुमा ढीलो हुनु । र तपाईं माछावाला सन्देष्टा युनुस अलैहिस्सलाम जस्तो रिस गर्नुमा र आफ्नो समुदायमाथि सन्तुष्ट नहुनुमा जब उनले आफ्ना रबलाई पुकारे यस हालमा कि उनी गम र चिन्ताबाट परिपूर्ण र आफ्नो समुदायको लागि चाँडै यातना ल्याउनुको लागि व्याकुल थिए । यदि उनको रबको कृपा उनीमाथि उनलाई तौबाको साहस दिएर त्यसलाई स्वीकार गर्दै नभएको भए उनी निन्दित भएर माछाको पेटबाट बाँझो र डरलाग्दो मैदानमा फ्याँक्नेथिए । र जसमाथि उनलाई निन्दा गरिएको हो त्यो त आउँदैछ । अनि उनका रबले उनलाई दूतत्वको लागि चयन गरे अनि उनलाई यस्ता सुकर्मीहरूमध्ये बनाए जसको नियत र कार्यहरू एवं वचनहरू शुद्ध हुनेछन् ।

(51) हे रसूल! जब यी काफिरहरू कुरआनलाई

خَٰشِعَةً أَبْصَٰرُهُمْ تَرْهَقُهُمْ ذِلَّةٌ ۖ وَقَدْ كَانُوا۟ يُدْعَوْنَ إِلَى ٱلسُّجُودِ وَهُمْ سَٰلِمُونَ ﴿٤٣﴾ فَذَرْنِى وَمَن يُكَذِّبُ بِهَٰذَا ٱلْحَدِيثِ ۖ سَنَسْتَدْرِجُهُم مِّنْ حَيْثُ لَا يَعْلَمُونَ ﴿٤٤﴾ وَأُمْلِى لَهُمْ ۚ إِنَّ كَيْدِى مَتِينٌ ﴿٤٥﴾ أَمْ تَسْـَٔلُهُمْ أَجْرًا فَهُم مِّن مَّغْرَمٍ مُّثْقَلُونَ ﴿٤٦﴾ أَمْ عِندَهُمُ ٱلْغَيْبُ فَهُمْ يَكْتُبُونَ ﴿٤٧﴾ فَٱصْبِرْ لِحُكْمِ رَبِّكَ وَلَا تَكُن كَصَاحِبِ ٱلْحُوتِ إِذْ نَادَىٰ وَهُوَ مَكْظُومٌ ﴿٤٨﴾ لَّوْلَآ أَن تَدَٰرَكَهُۥ نِعْمَةٌ مِّن رَّبِّهِۦ لَنُبِذَ بِٱلْعَرَآءِ وَهُوَ مَذْمُومٌ ﴿٤٩﴾ فَٱجْتَبَٰهُ رَبُّهُۥ فَجَعَلَهُۥ مِنَ ٱلصَّٰلِحِينَ ﴿٥٠﴾ وَإِن يَكَادُ ٱلَّذِينَ كَفَرُوا۟ لَيُزْلِقُونَكَ بِأَبْصَٰرِهِمْ لَمَّا سَمِعُوا۟ ٱلذِّكْرَ وَيَقُولُونَ إِنَّهُۥ لَمَجْنُونٌ ﴿٥١﴾ وَمَا هُوَ إِلَّا ذِكْرٌ لِّلْعَٰلَمِينَ ﴿٥٢﴾

آياتها ٥٢ — سُورَةُ الحَاقَّةِ — ترتيبها ٦٩

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَٰنِ ٱلرَّحِيمِ

ٱلْحَآقَّةُ ﴿١﴾ مَا ٱلْحَآقَّةُ ﴿٢﴾ وَمَآ أَدْرَىٰكَ مَا ٱلْحَآقَّةُ ﴿٣﴾ كَذَّبَتْ ثَمُودُ وَعَادٌۢ بِٱلْقَارِعَةِ ﴿٤﴾ فَأَمَّا ثَمُودُ فَأُهْلِكُوا۟ بِٱلطَّاغِيَةِ ﴿٥﴾ وَأَمَّا عَادٌ فَأُهْلِكُوا۟ بِرِيحٍ صَرْصَرٍ عَاتِيَةٍ ﴿٦﴾ سَخَّرَهَا عَلَيْهِمْ سَبْعَ لَيَالٍ وَثَمَٰنِيَةَ أَيَّامٍ حُسُومًا فَتَرَى ٱلْقَوْمَ فِيهَا صَرْعَىٰ كَأَنَّهُمْ أَعْجَازُ نَخْلٍ خَاوِيَةٍ ﴿٧﴾ فَهَلْ تَرَىٰ لَهُم مِّنۢ بَاقِيَةٍ ﴿٨﴾

सुन्छन भने तपाईं सित घृणा गर्दै तपाईंलाई आँखाले यस्तो हेर्छन मानौ तपाईंको पाउ उखेल्नेछन् यदि तपाईंको लागि अल्लाहको तर्फबाट सहयोग र बचाउ नभएको भए, र भन्छन आफ्नो ख्याल र अभिलाषा अनुसार यो अवश्य नै उन्मादी रहेछ ।

(52) यो कुरआन त सम्पूर्ण संसारवासीहरूको लागि चाहे त्यो मानव होस् वा दानव एउटा मात्र उपदेश हो ।

## सूरह अल्-हाक्कह - 69

(1)-(3) प्रलयको दिन घटित हुनु अत्यन्त सत्य हो जसमा वाचा र सजाय सिद्ध हुनेछ । र त्यो घटित हुने प्रलयको दिन आफ्नो गुण र अवस्थाको हिसाबले के हो ? हे रसूल! तपाईंलाई कुन चिजले प्रलयको दिनको बारेमा जानकारी दिएको छ र प्रलयको वास्तविकता बताएको छ र त्यसको भय र त्रासको चित्र तपाईंको अगाडि वर्णन गरेको हो ?

(4) दूत सालेह अलैहिस्सलामको समुदाय समूदले र दूत हूदको समुदाय आदले कियामत (प्रलय हुने दिन) लाई झुठा ठाने जसको भयले हृदयहरू थरथर काँपी रहनेछन् ।

(5)-(8) अतः समूद एउटा प्रचण्ड ध्वनि द्वारा नष्ट पारिए,जो ध्वनि आफ्नो कठोरता र शक्तिमा प्रत्येक सीमालाई नाघेको थियो । र आदलाई अति ठूलो चिसो हावाको आँधीबेहरी द्वारा विनाश गरियो

وَجَآءَ فِرۡعَوۡنُ وَمَن قَبۡلَهُۥ وَٱلۡمُؤۡتَفِكَٰتُ بِٱلۡخَاطِئَةِ ﴿٩﴾ فَعَصَوۡاْ رَسُولَ
رَبِّهِمۡ فَأَخَذَهُمۡ أَخۡذَةٗ رَّابِيَةً ﴿١٠﴾ إِنَّا لَمَّا طَغَا ٱلۡمَآءُ حَمَلۡنَٰكُمۡ فِي ٱلۡجَارِيَةِ
﴿١١﴾ لِنَجۡعَلَهَا لَكُمۡ تَذۡكِرَةٗ وَتَعِيَهَآ أُذُنٞ وَٰعِيَةٞ ﴿١٢﴾ فَإِذَا نُفِخَ فِي ٱلصُّورِ
نَفۡخَةٞ وَٰحِدَةٞ ﴿١٣﴾ وَحُمِلَتِ ٱلۡأَرۡضُ وَٱلۡجِبَالُ فَدُكَّتَا دَكَّةٗ وَٰحِدَةٗ ﴿١٤﴾
فَيَوۡمَئِذٖ وَقَعَتِ ٱلۡوَاقِعَةُ ﴿١٥﴾ وَٱنشَقَّتِ ٱلسَّمَآءُ فَهِيَ يَوۡمَئِذٖ وَاهِيَةٞ
﴿١٦﴾ وَٱلۡمَلَكُ عَلَىٰٓ أَرۡجَآئِهَاۚ وَيَحۡمِلُ عَرۡشَ رَبِّكَ فَوۡقَهُمۡ يَوۡمَئِذٖ ثَمَٰنِيَةٞ
﴿١٧﴾ يَوۡمَئِذٖ تُعۡرَضُونَ لَا تَخۡفَىٰ مِنكُمۡ خَافِيَةٞ ﴿١٨﴾ فَأَمَّا مَنۡ أُوتِيَ
كِتَٰبَهُۥ بِيَمِينِهِۦ فَيَقُولُ هَآؤُمُ ٱقۡرَءُواْ كِتَٰبِيَهۡ ﴿١٩﴾ إِنِّي ظَنَنتُ أَنِّي مُلَٰقٍ
حِسَابِيَهۡ ﴿٢٠﴾ فَهُوَ فِي عِيشَةٖ رَّاضِيَةٖ ﴿٢١﴾ فِي جَنَّةٍ عَالِيَةٖ ﴿٢٢﴾
قُطُوفُهَا دَانِيَةٞ ﴿٢٣﴾ كُلُواْ وَٱشۡرَبُواْ هَنِيٓـَٔۢا بِمَآ أَسۡلَفۡتُمۡ فِي ٱلۡأَيَّامِ
ٱلۡخَالِيَةِ ﴿٢٤﴾ وَأَمَّا مَنۡ أُوتِيَ كِتَٰبَهُۥ بِشِمَالِهِۦ فَيَقُولُ يَٰلَيۡتَنِي لَمۡ أُوتَ كِتَٰبِيَهۡ
﴿٢٥﴾ وَلَمۡ أَدۡرِ مَا حِسَابِيَهۡ ﴿٢٦﴾ يَٰلَيۡتَهَا كَانَتِ ٱلۡقَاضِيَةَ ﴿٢٧﴾ مَآ أَغۡنَىٰ
عَنِّي مَالِيَهۡۜ ﴿٢٨﴾ هَلَكَ عَنِّي سُلۡطَٰنِيَهۡ ﴿٢٩﴾ خُذُوهُ فَغُلُّوهُ ﴿٣٠﴾ ثُمَّ ٱلۡجَحِيمَ
صَلُّوهُ ﴿٣١﴾ ثُمَّ فِي سِلۡسِلَةٖ ذَرۡعُهَا سَبۡعُونَ ذِرَاعٗا فَٱسۡلُكُوهُ ﴿٣٢﴾ إِنَّهُۥ
كَانَ لَا يُؤۡمِنُ بِٱللَّهِ ٱلۡعَظِيمِ ﴿٣٣﴾ وَلَا يَحُضُّ عَلَىٰ طَعَامِ ٱلۡمِسۡكِينِ ﴿٣٤﴾

जसलाई उनीहरूमाथि अल्लाहले निरन्तर सात राती र आठ दिन सम्म आच्छादित गरि सक्नुभएको थियो जो माझमा कहिले बन्द भएन । ती रात र दिनहरूमा तिमीले ती समुदायहरूलाई यसरी मृतक देख्ने थियौ मानौ तिनीहरू खजूरका उखेलिएका र भित्री भाग खाइएका डाँठ हुन् । अब तिनीहरू मध्ये कसैलाई विनाश नभई जिउँदो बाँकी देख्छौ त ?

(9) (10) र अहंकारी फिर्औन र त्यो भन्दा अघिका समुदायहरूले रसूलहरूलाई झूठा ठानेका थिए र यसै गरी दूत लूत अलैहिस्सलामको समुदायले पनि झूठा ठानेका थिए जसको गाउँ र घरहरूलाई तिनीहरूले गरि राखेका कुफ्र, शिर्क र ठूलो पाप (गुदमैथुन) को कारणले उल्टो गरी सर्वनाश गरिदियो । तिनीहरू मध्ये सबै समुदायले आफ्ना रबका रसूललाई जो तिनीहरू तिर पठाइएकाथिए झूठा ठाने जसको कारणले तिनीहरूलाई अल्लाहले कडाईका साथ समाते ।

(11) (12) जब पानी बढेर सीमा भन्दा माथि चढन पुग्यो यहाँ सम्म कि प्रत्येक वस्तु भन्दा माथि भइसक्यो भने हामीले तिम्रा जरोहरूलाई एउटा डुंगामा सवार गरायौं जो पानीमा चल्दथ्यो । ताकि हामीले यस घटनालाई जसमा मोमिनहरूले मुक्ति पाए र काफिरहरूले पानीमा डुबे पाठ र शिक्षाप्रद स्मृति बनायौं । र सुरक्षित राख्ने कानले सुरक्षित राखुन् र अल्लाहबाट सुनेको कुरालाई बुझुन् ।

(13)-(18) फेरि जब नरसिंहा (सूर) मा फरिश्ता एक पटक फुक्नेछन, र पहिलो फुक हुनेछ जसबाट सम्पूर्ण संसार नष्ट हुनेछ । र पृथ्वी एवं पहाडहरूलाई माथि उठाइनेछ र एकै पटकमा टुक्रा-टुक्रा पारिदिनेछ । त्यस दिन महाप्रलय हुनेछ । अनि आकाश फाट्नेछ र त्यस दिन त्यो अति नै कम्जोर र ढीलो हुनेछ जसमा पकड र बल हुँदैन । र फरिश्ताहरू आकाशका किनाराहरूमा रहनेछन् र ठूल-ठूला आठ जना फरिश्ताहरू तिम्रा पालनकर्ताको सिंहासनलाई आफुमाथि उठाएका हुनेछन् । हे मानव! त्यस दिन तिमीहरू हिसाब किताब र प्रतिफलकोलागि अल्लाह सामु पेश हुनेछौ जसमाथि तिम्रा रहस्यहरू मध्ये केही लुप्त हुँदैन ।

(19)-(24) त्यस समय जसलाई दाहिने हातमा कर्मपत्र दिइनेछ उसले खुशी र प्रसन्नताले भन्नेछः लौ हेर, पढ मेरो कर्मपत्र, मलाई संसारमा पूर्ण विश्वास थियो कि प्रलयको दिन आफ्नो प्रफितल अवश्य पाउनेछु, त मैले यसकोलागि ईमान र सुकर्महरू गरेर तयारी गरेको थिएं । अतः ऊ अति नै प्रसन्न भई ऐश-आराममा हुनेछ । स्वर्गका उच्च र ठूल-ठूला दर्जाहरूमा रहनेछ । जसका फलहरू नजीक हुनको कारणले उभेको, बसेको र सुतेको मानिसले टिप्नेछ । तिनीहरूसँग भनिनेछः प्रत्येक प्रकारको हानि र मन नपराएको कुराबाट मुक्त भई मज्जाले खानपीन गर, ती कर्महरूको प्रतिदानस्वरूप जुन तिमीहरूले बिगतका सांसारिक दिनहरूमा गरेका थियौ ।

(25)-(29) र जसको कर्मपत्र उसको देब्रे हातमा दिइनेछ उसले लज्जित हुँदै र अफसोच गर्दै भन्नेछः हाय! मेरो कर्मपत्र मेरो हातमा न दिएको भए ! र मैले आफ्नो हिसाब नजानेको भए ! हाय! मेरो त्यही मृत्यु जसले गर्दा म मरेको थिए निर्णायक भएको भए ! र त्यस पछि म दोस्रोपल्ट नभएको भए ! मेरो धन जसलाई मैले संसारमा जम्मा गरेको थिएं मलाई केही लाभ दिएन ! मेरो हुज्जत र बहाना सबै समाप्त भयो अब केही बहाना बाँकी बचेको छैन ।

(30)-(34) नरकका सिपाहीसँग भनिनेछः यस पापी र अपराधीलाई समात र यसको हातलाई घाँटी साथ नेल लगाएर बाँधी देऊ । फेरि त्यसलाई नरकमा प्रवेश गराइदेऊ ताकि नरकको गर्मीको अनुमान गरोस् अनि सत्तरी हात लामो जञ्जीरमा जकडिएर नरकमा फ्याँकिदेऊ । किनभने ऊ मान्दैनथ्यो कि एक अल्लाह नै सत्य पूज्य हुन् र उनको पूजा अर्चनामा केही साझेदार छैन र अल्लाहको सुमार्गमा हिंदैनथ्यो । र संसारमा मानिसलाई गरीब र खाँचोमा परेकाहरूलाई खाना खुवाउनुमाथि प्रोत्साहित गर्दैनथ्यो ।

(35)-(37) त्यस काफिरको लागि प्रलयको दिन कोही नजीकी नातेदार यस्तो हुँदैन जो उसको यातनालाई

टाढा गरिसकोस् । र नरकवासीहरूको पीप बाहेक उसको लागि केही अरू भोजन हुनेछैन । जसलाई यस्ता पापीहरू खान्छन जो अल्लाहसँग कुफ्र गर्नुमाथि अडिग थिए ।

(38)-(43) होइन, म शपथ खान्छु ती चिजहरूको पनि जुन तिमीहरू प्रत्यक्ष हुनको कारण देख्छौ । र ती वस्तुहरूको पनि जुन तिमी बाट लुप्त हुनको कारण तिमीहरू देख्दैनौ । निस्सन्देह! यो कुरआन अल्लाहवाणी हो, जसलाई ठूलो दर्जावाला प्रतिष्ठित रसूल पाठ गरिरहेछन् । र तिमीहरूले अनुमान गरे अनुसार यो कुनै कविको भनाई होइन तिमीहरू कमै ईमान ल्याउँछौ । र न यो कुनै ज्योतिष वा भविष्वेत्ताको अंत्यानुप्रास हो,तिमीहरू मध्ये कमै व्यक्ति विचार गर्छ अनि दुबै कुरामा फरक पार्छ । यो त सम्पूर्ण जगतका रबको वाणी हो जसलाई उनले आफ्ना रसूल मुहम्मद सल्लल्लाहो अलैहे वसल्लममाथि अवतिरत गरे ।

(44)-(48) र यदि मुहम्मदले कुनै यस्तो कुरा जसलाई मैले भनेको होइन स्वयं रचेर तथा दाबी गरेर ल्याएको भए,त हामी प्रत्यपकार लिंदै उनको दाहिने हातलाई सामत्ने थियौं अनि उनको महाधमनी (मुटुको नसा) काट्ने थियौं । अनि तिमीहरू मध्ये कसैले पनि उनीबाट मेरो यातना रोक्न सक्दैनथ्यो । वास्तवमा यो कुरआन ईश्भय राख्नेहरूको लागि एउटा उपदेश हो जुन अल्लाहका आज्ञापालन गर्दैछन र मनाही गरेका कुराहरूबाट टाढा बस्छन् ।

(49)-(52) र हामीलाई राम्ररी थाहा छ कि तिमीहरू मध्ये केही व्यक्तिहरूले यस कुरआनलाई यसका आयतहरू स्पष्ट हुनको बावजुद झूठा ठहऱ्याउनेछन् । र यसलाई झूठा ठहऱ्याउने काफिरहरूको लागि ठूलो लज्जता र पश्चातापको कारण हुनेछ जब यिनीहरू आफ्नो यातनाको सामग्री र मोमिनहरूको अनुकम्पा हेर्छनेछन् । र यो अति विश्वासनिय सत्य हो जसमा केही शंका छैन् । अतः हे नबी! आफ्ना महान् रबलाई प्रत्येक नराम्रो कुराबाट पवित्रताको वर्णन गर र उनको महान नामको चर्चा गर ।

## सूरह अल्-मआरिज् - 70

(1)-(4) मुश्रिकहरू मध्ये कोहीले आफ्नो जीउ र आफ्नो समुदायमाथि यातना र प्रकोप आउने हेतु शाप दियो जुन प्रलयको दिन तिनीहरूमाथि अनिवार्य रूपमा आउनेछ । यसलाई कसैले महान र उच्चतम अल्लाहबाट टार्न वा रोक्न सक्दैन । फरिश्ताहरू र जिब्रईल अल्लाह तआला तिर चढेर जान्छन एउटा यस्तो दिनमा जसको नाप सांसारिक वर्षको हिसाबले पचास हजार वर्ष रहेको छ र त्यो ठूलो म्याद मोमिनहरूमाथि फर्ज नमाज पढनुमा लाग्ने समय जस्तो हुनेछ ।

(5) अतः हे रसूल! तपाईं यिनीहरूको खिल्ली गर्नु र यातना माग्नुमा छिटो गर्नुमा यस्तो धैर्य गर्नुहोस्

فَلَيْسَ لَهُ ٱلْيَوْمَ هَٰهُنَا حَمِيمٌ ﴿٣٥﴾ وَلَا طَعَامٌ إِلَّا مِنْ غِسْلِينٍ ﴿٣٦﴾ لَّا يَأْكُلُهُۥٓ إِلَّا ٱلْخَٰطِـُٔونَ ﴿٣٧﴾ فَلَآ أُقْسِمُ بِمَا تُبْصِرُونَ ﴿٣٨﴾ وَمَا لَا تُبْصِرُونَ ﴿٣٩﴾ إِنَّهُۥ لَقَوْلُ رَسُولٍ كَرِيمٍ ﴿٤٠﴾ وَمَا هُوَ بِقَوْلِ شَاعِرٍ ۚ قَلِيلًا مَّا تُؤْمِنُونَ ﴿٤١﴾ وَلَا بِقَوْلِ كَاهِنٍ ۚ قَلِيلًا مَّا تَذَكَّرُونَ ﴿٤٢﴾ تَنزِيلٌ مِّن رَّبِّ ٱلْعَٰلَمِينَ ﴿٤٣﴾ وَلَوْ تَقَوَّلَ عَلَيْنَا بَعْضَ ٱلْأَقَاوِيلِ ﴿٤٤﴾ لَأَخَذْنَا مِنْهُ بِٱلْيَمِينِ ﴿٤٥﴾ ثُمَّ لَقَطَعْنَا مِنْهُ ٱلْوَتِينَ ﴿٤٦﴾ فَمَا مِنكُم مِّنْ أَحَدٍ عَنْهُ حَٰجِزِينَ ﴿٤٧﴾ وَإِنَّهُۥ لَتَذْكِرَةٌ لِّلْمُتَّقِينَ ﴿٤٨﴾ وَإِنَّا لَنَعْلَمُ أَنَّ مِنكُم مُّكَذِّبِينَ ﴿٤٩﴾ وَإِنَّهُۥ لَحَسْرَةٌ عَلَى ٱلْكَٰفِرِينَ ﴿٥٠﴾ وَإِنَّهُۥ لَحَقُّ ٱلْيَقِينِ ﴿٥١﴾ فَسَبِّحْ بِٱسْمِ رَبِّكَ ٱلْعَظِيمِ ﴿٥٢﴾

آياتها ٤٤ — سُورَةُ ٱلْمَعَارِجِ — ترتيبها ٧٠

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَٰنِ ٱلرَّحِيمِ

سَأَلَ سَآئِلٌۢ بِعَذَابٍ وَاقِعٍ ﴿١﴾ لِّلْكَٰفِرِينَ لَيْسَ لَهُۥ دَافِعٌ ﴿٢﴾ مِّنَ ٱللَّهِ ذِى ٱلْمَعَارِجِ ﴿٣﴾ تَعْرُجُ ٱلْمَلَٰٓئِكَةُ وَٱلرُّوحُ إِلَيْهِ فِى يَوْمٍ كَانَ مِقْدَارُهُۥ خَمْسِينَ أَلْفَ سَنَةٍ ﴿٤﴾ فَٱصْبِرْ صَبْرًا جَمِيلًا ﴿٥﴾ إِنَّهُمْ يَرَوْنَهُۥ بَعِيدًا ﴿٦﴾ وَنَرَىٰهُ قَرِيبًا ﴿٧﴾ يَوْمَ تَكُونُ ٱلسَّمَآءُ كَٱلْمُهْلِ ﴿٨﴾ وَتَكُونُ ٱلْجِبَالُ كَٱلْعِهْنِ ﴿٩﴾ وَلَا يَسْـَٔلُ حَمِيمٌ حَمِيمًا ﴿١٠﴾

जसमा केही आतुरता र मानिस सित गुनासो र उपालम्भ न होस् ।

(6) (7) काफिरहरू यस यातना र प्रकोपलाई टाढा ठानी घटित न हुनेछ मान्छन्, जबकि हामी त्यसलाई अनिवार्य रूपमा नजीकै घटित हुनेवाला देख्दैछौं ।

(8) (9) त्यस दिन आकाश पग्लेर तेलझैं बग्नेछ र पहाडहरू कुटिएको ऊनझैं जसलाई हावाले उडाउँदै हुनेछन।

(10) र कुनै पनि नातेदार आफ्नो नातेदारको अवस्था बारे सोध्दैन किनभने त्यस दिन प्रत्येक व्यक्ति आफ्नो जीउमा नै लीन रहनेछ ।

(11)-(14) तिनीहरू एक अर्कालाई देख्नेछन् र चिन्नेछन् तर कसैले कसैलाई लाभ पुऱ्याउन सक्दैन । काफिर प्रलयको दिनको यातनाबाट बाँच्नको लागि आफ्नो जीउ तर्फबाट फिरौती स्वरूप दिन चाहनेछन आफ्ना सन्तानलाई, आफ्नी पत्नीलाई, आफ्नो दाजुभाईलाई र आफ्ना कूल खान्दानलाई जस सँग ऊ नाता गोता जोडछ, र धरतीमा रहेका

يُبَصَّرُونَهُمْ يَوَدُّ الْمُجْرِمُ لَوْ يَفْتَدِي مِنْ عَذَابِ يَوْمِئِذٍ بِبَنِيهِ ﴿١١﴾ وَصَاحِبَتِهِ وَأَخِيهِ ﴿١٢﴾ وَفَصِيلَتِهِ الَّتِي تُؤْوِيهِ ﴿١٣﴾ وَمَنْ فِي الْأَرْضِ جَمِيعًا ثُمَّ يُنْجِيهِ ﴿١٤﴾ كَلَّا إِنَّهَا لَظَىٰ ﴿١٥﴾ نَزَّاعَةً لِلشَّوَىٰ ﴿١٦﴾ تَدْعُو مَنْ أَدْبَرَ وَتَوَلَّىٰ ﴿١٧﴾ وَجَمَعَ فَأَوْعَىٰ ﴿١٨﴾ ۞ إِنَّ الْإِنْسَانَ خُلِقَ هَلُوعًا ﴿١٩﴾ إِذَا مَسَّهُ الشَّرُّ جَزُوعًا ﴿٢٠﴾ وَإِذَا مَسَّهُ الْخَيْرُ مَنُوعًا ﴿٢١﴾ إِلَّا الْمُصَلِّينَ ﴿٢٢﴾ الَّذِينَ هُمْ عَلَىٰ صَلَاتِهِمْ دَائِمُونَ ﴿٢٣﴾ وَالَّذِينَ فِي أَمْوَالِهِمْ حَقٌّ مَعْلُومٌ ﴿٢٤﴾ لِلسَّائِلِ وَالْمَحْرُومِ ﴿٢٥﴾ وَالَّذِينَ يُصَدِّقُونَ بِيَوْمِ الدِّينِ ﴿٢٦﴾ وَالَّذِينَ هُمْ مِنْ عَذَابِ رَبِّهِمْ مُشْفِقُونَ ﴿٢٧﴾ إِنَّ عَذَابَ رَبِّهِمْ غَيْرُ مَأْمُونٍ ﴿٢٨﴾ وَالَّذِينَ هُمْ لِفُرُوجِهِمْ حَافِظُونَ ﴿٢٩﴾ إِلَّا عَلَىٰ أَزْوَاجِهِمْ أَوْ مَا مَلَكَتْ أَيْمَانُهُمْ فَإِنَّهُمْ غَيْرُ مَلُومِينَ ﴿٣٠﴾ فَمَنِ ابْتَغَىٰ وَرَاءَ ذَٰلِكَ فَأُولَٰئِكَ هُمُ الْعَادُونَ ﴿٣١﴾ وَالَّذِينَ هُمْ لِأَمَانَاتِهِمْ وَعَهْدِهِمْ رَاعُونَ ﴿٣٢﴾ وَالَّذِينَ هُمْ بِشَهَادَاتِهِمْ قَائِمُونَ ﴿٣٣﴾ وَالَّذِينَ هُمْ عَلَىٰ صَلَاتِهِمْ يُحَافِظُونَ ﴿٣٤﴾ أُولَٰئِكَ فِي جَنَّاتٍ مُكْرَمُونَ ﴿٣٥﴾ فَمَالِ الَّذِينَ كَفَرُوا قِبَلَكَ مُهْطِعِينَ ﴿٣٦﴾ عَنِ الْيَمِينِ وَعَنِ الشِّمَالِ عِزِينَ ﴿٣٧﴾ أَيَطْمَعُ كُلُّ امْرِئٍ مِنْهُمْ أَنْ يُدْخَلَ جَنَّةَ نَعِيمٍ ﴿٣٨﴾ كَلَّا إِنَّا خَلَقْنَاهُمْ مِمَّا يَعْلَمُونَ ﴿٣٩﴾

सबै मानिस इत्यादी लाई ताकि अल्लाहको यातनाबाट बच्न सकोस ।

(15)-(18) कदापि मामिला यस्तो होइन जस्तो कि हे काफिर तिमीले आशा गरेका छौ कि फिरौती दिएर मुक्ति पाओस् । त्यो नरक छ जसको आगो दन्कँदो ज्वालावाला हुनेछ । जसको अति बढी तातोपनले टाउको र शरीरका छालालाई काट्नेछ । त्यो आगो प्रत्येक यस्तो व्यक्तिलाई बोलाउनेछ जसले संसारमा सत्यबाट पिठ्युँ फर्काई बिमुख भएको थियो र अल्लाह तथा उनका रसूलको आज्ञापालनलाई छौडेको थियो र धन-सम्पत्तिलाई जम्मा गरेर खजाना भित्र राख्दथ्यो र त्यसमा अल्लाहको हक दिँदैनथ्यो ।

(19)-(30) वास्तवमा मानव आतुर र अत्यन्त लोभी बनाइएको छ, जब उसमाथि मननपराएको कुरा वा संकट आउँछ भने धेरै बिचलित भई गुनासो गर्न थाल्छ । र जब उसलाई भलाई तथा सुख-सम्पन्नता पुग्छ भने त्यसलाई कठोरतासँग रोक्ने वाला हुन्छ । तर ती नमाजीहरू यस्ता छैनन् जो नमाजलाई कायम गरी त्यसको समयमा नै नियमित रूपले पढने गर्छन् र कुनै पनि कार्य तिनीहरूलाई त्यसबाट रोक्दैन । जसको धन-सम्पत्तिमा अल्लाहले अनिवार्य गरेको निश्चित हक हुन्छ, त्यो जकात हो जो मगन्ते र माग्नुबाट बंचित रहने व्यक्तिको लागि पनि छ । जो हिसाब र प्रतिफलको दिनमाथि ईमान ल्याउँदै सत्कर्महरू गरेर त्यसको तयारी गर्दछन् । जो अल्लाहको यातनाबाट डराउँदैछन किनकि तिनीहरूका रबको यातना यस्तो चिज हो जसबाट कसैको लागि निर्भय रहनु मनासिब छैन । अल्लाहले हराम गरेको कार्यबाट आफ्नो गुप्ताँगलाई सुरक्षा गर्छन् सिवाय आफ्नी पत्नी र दासी महिलासित जसबाट सुरक्षित न राखेमा कुनै आपत्ति र पकड छैन ।

(31)-(35) जसले पत्नीहरू र दासीहरू बाहेक अरू ठाउँमा आफ्नो कामवासना र चाहना पूरा गर्छन भने उनीहरू नै वैधलाई छाडी अवैध सम्म पुग्नको लागि सीमा उल्लंघनकारी छन । तर जो अल्लाहका नासोहरू र मानिसका नासोहरूलाई सुरक्षा गर्छन् र अल्लाहसँग तथा मानिस सँग गरेको वाचालाई पूर्ण गर्दछन्, जो आफ्नो गवाही बिना कुनै हेरफेर गरी र बिना त्यसलाई लुकाई सत्यसँग पेश गर्छन्, जो नमाजलाई रक्षा गर्छन् र त्यसका वाजिब कुराहरू मध्ये केहीलाई छोड्दैनन्, यी राम्रा गुणहरूबाट गुणी व्यक्तिहरू नै अनुकम्पावाला स्वर्गमा रहनेछन् र त्यस भित्र प्रत्येक प्रकारको सम्मानबाट सम्मानित हुनेछन् ।

(36)-(39) हे रसूल! यी काफिरहरूलाई कुन कुराले प्रेरित गरे पछि तपाईं तिर शिघ्रगतिमा दौडदै आउँदैछन्, तपाईं तिर घाँटी लामो गरेर आफ्ना आँखाले तपाईं तिर हेरिरहेछन । हुलका हुल र समूहका समूह तपाईंको दाहिने र देब्रे तिरबाट एकत्रित भएर कुराकानी गर्छन र आश्चर्य गर्छन् ? के यिनीहरू मध्ये प्रत्येकले यो लोभ गर्छ कि उसलाई वैभवपूर्ण बगैंचाहरूमा सधैंका लागि प्रवेश गराइनेछ ? यिनीहरूले लोभ गरे जस्तो मामिला कदापि छैन, यिनीहरू स्वर्गमा कहिल्यै प्रवेश हुनेछैनन् । हामीले तुच्छ पानीबाट अरू मानिस झैं तिनीहरूलाई सृष्टि गरेका छौं त्यो तिनीहरू राम्ररी जान्दछन् ता पनि तिनीहरूले ईमान ल्याएनन्, त कसरी र कताबाट तिनीहरू वैभवपूर्ण स्वर्गहरूमा प्रवेश गरेर सम्मानित हुन सक्छन् ।

(40) (41) अतः म कसम खान्छु सूर्य र तारागन उदाउने ठाउँहरू तथा अस्त हुने ठाउँहरूका रबको ! कि हामीले यिनीहरूको स्थानमा यिनीहरू भन्दा उत्तम र अल्लाह सित धेरै डराउनेवाला समुदायलाई

فَلَآ أُقۡسِمُ بِرَبِّ ٱلۡمَشَٰرِقِ وَٱلۡمَغَٰرِبِ إِنَّا لَقَٰدِرُونَ ﴿٤٠﴾ عَلَىٰٓ أَن نُّبَدِّلَ خَيۡرًا مِّنۡهُمۡ
وَمَا نَحۡنُ بِمَسۡبُوقِينَ ﴿٤١﴾ فَذَرۡهُمۡ يَخُوضُواْ وَيَلۡعَبُواْ حَتَّىٰ يُلَٰقُواْ يَوۡمَهُمُ ٱلَّذِي
يُوعَدُونَ ﴿٤٢﴾ يَوۡمَ يَخۡرُجُونَ مِنَ ٱلۡأَجۡدَاثِ سِرَاعٗا كَأَنَّهُمۡ إِلَىٰ نُصُبٖ يُوفِضُونَ
﴿٤٣﴾ خَٰشِعَةً أَبۡصَٰرُهُمۡ تَرۡهَقُهُمۡ ذِلَّةٞۚ ذَٰلِكَ ٱلۡيَوۡمُ ٱلَّذِي كَانُواْ يُوعَدُونَ ﴿٤٤﴾

## سُورَةُ نُوحٍ

ترتيبها ٧١ — آياتها ٢٨

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

إِنَّآ أَرۡسَلۡنَا نُوحًا إِلَىٰ قَوۡمِهِۦٓ أَنۡ أَنذِرۡ قَوۡمَكَ مِن قَبۡلِ أَن يَأۡتِيَهُمۡ
عَذَابٌ أَلِيمٞ ﴿١﴾ قَالَ يَٰقَوۡمِ إِنِّي لَكُمۡ نَذِيرٞ مُّبِينٌ ﴿٢﴾ أَنِ ٱعۡبُدُواْ
ٱللَّهَ وَٱتَّقُوهُ وَأَطِيعُونِ ﴿٣﴾ يَغۡفِرۡ لَكُم مِّن ذُنُوبِكُمۡ وَيُؤَخِّرۡكُمۡ
إِلَىٰٓ أَجَلٖ مُّسَمًّىۚ إِنَّ أَجَلَ ٱللَّهِ إِذَا جَآءَ لَا يُؤَخَّرُۚ لَوۡ كُنتُمۡ تَعۡلَمُونَ
﴿٤﴾ قَالَ رَبِّ إِنِّي دَعَوۡتُ قَوۡمِي لَيۡلٗا وَنَهَارٗا ﴿٥﴾ فَلَمۡ يَزِدۡهُمۡ دُعَآءِيٓ إِلَّا
فِرَارٗا ﴿٦﴾ وَإِنِّي كُلَّمَا دَعَوۡتُهُمۡ لِتَغۡفِرَ لَهُمۡ جَعَلُوٓاْ أَصَٰبِعَهُمۡ
فِيٓ ءَاذَانِهِمۡ وَٱسۡتَغۡشَوۡاْ ثِيَابَهُمۡ وَأَصَرُّواْ وَٱسۡتَكۡبَرُواْ ٱسۡتِكۡبَارٗا
﴿٧﴾ ثُمَّ إِنِّي دَعَوۡتُهُمۡ جِهَارٗا ﴿٨﴾ ثُمَّ إِنِّيٓ أَعۡلَنتُ لَهُمۡ وَأَسۡرَرۡتُ
لَهُمۡ إِسۡرَارٗا ﴿٩﴾ فَقُلۡتُ ٱسۡتَغۡفِرُواْ رَبَّكُمۡ إِنَّهُۥ كَانَ غَفَّارٗا ﴿١٠﴾

ल्याउनुमाथि सक्षम छौं,र हामीले यिनीहरूलाई दोस्रोपल्ट ल्याएको चाहेमा कुनै कुरा वा कसैले हामीलाई वेवश गर्न सक्दैन।

42-44 अतः यिनीहरूलाई छोडिदेऊ कि यिनीहरू आफ्नो व्यर्थ कुरामा मग्न रहुन् र आफ्नो संसारमा खेलठट्टा गरुन् यहाँ सम्म कि यिनीहरू त्यस दिनलाई भेट्नेछन् जसको यातनाको यिनीहरूसित वाचा गरिन्छ । त्यस दिन यिनीहरू चिहानबाट तेजगतिमा निस्कनेछन् जसरी कि यिनीहरू संसारमा अल्लाह बाहेक अरू देवी देवतालाई पूजाको योग्य बनाई त्यही पूज्य तर्फ दौड्दै थिए र भाग्दै थिए । यिनीहरूका आँखा अपमानित भई धरती तिर झुकिरहनेछन् । यिनीहरूलाई अपमान र बेइज्जतीले ढाकिरहनेछ । यो त्यही दिन हो जसको वाचा यिनीहरूसित संसारमा गरिन्थ्यो र जसलाई यिनीहरू झूठा ठानी ठट्टा र खिल्ली उडाउँदैथे ।

## सूरह नूह - 71

1-4 निस्सन्देह माहीले नूहलाई उनको समुदाय तर्फ पठायौं, र हामीले उनलाई भनौं: आफ्नो समुदाय र जातिबन्धुहरूलाई पीडादायी यातना आउनु भन्दा पहिले डराऊ । नूहले भनेः हे हाम्रा जातिबन्धुहरू हो ! म प्रष्ट रूपमा र खुल्लमखुल्ला तिमीहरूको लागि सचेतक छु अल्लाहको यातना बाट यदि तिमीहरूले अवज्ञा गर्छौ, र तिम्रो तर्फ अल्लाहका रसूल हुँ तसर्थ तिमीहरू मात्र उनैको पूजा गर र उनको यातनाबाट डराऊ । र मैले दिएको आदेशलाई पालन गर्दै र मैले मनाही गरेको कुराबाट बंचित बस्दै मेरो आज्ञापालन गर । यदि तिमीहरूले मेरो आज्ञापालन गऱ्यौ र मेरो कुरालाई स्वीकार गऱ्यौ भने अल्लाह तिम्रा पापलाई समाप्त गरी तिमीलाई क्षमा गर्नेछन र तिम्रो उमेरमा अल्लाहको ज्ञानको अनुसार एक निश्चित समय सम्म बृद्धि गर्छन, तर मृत्युको समय आए पछि त्यसमा केही ढीलो हुँदैन । यसको जानकारी तिमीलाई भयो भए तिमी ईमान र आज्ञापालन तिर तेजगतिले आउनेथियौ ।

5-10 नूहले भने : हे मेरा रब! मैले आफ्नो समुदायलाई तपाईंमाथि ईमान ल्याउने र तपाईंको आज्ञापालन गर्ने तिर रातदिन बोलाएं । तर मेरो ईमानतिर आह्वानले तिनीहरूको फरार हुने र विमुख हुने कार्यमा अभिवृद्धि नै भयो । र मैले जब जब तिनीहरूलाई तपाईंमाथि ईमान ल्याउनतिर बोलाएं ताकि तपाईं तिनीहरूका पापलाई क्षमा गर्नुस् तब तब तिनीहरूले आ-आफ्ना कानमा औंला राखे ताकि सत्यको निम्तोलाई नसुनुन्, र लुगाले आफुलाई ढाके ताकि मलाई नहेरुन्, र आफ्नो कुफ्र माथि अडिग रहे, र ईमान स्वीकार न गर्नुमा धेरै हठ गरेर घमण्ड गरे । फेरि मैले तिनीहरूलाई खुल्ला रूपमा नलुकाइकन ईमान तर्फ निम्तो दिएं, अनि कहिले तिनीहरूलाई ठूलो स्वरमा र कहिले गोप्य रूपमा बोलाएं, अनि मैले आफ्नो समुदाय सँग भनें: आफ्ना रबसित आफ्ना पापहरूको क्षमायाचना गर, एवं आफ्नो कुफ्रबाट तौबा गर, निस्सन्देह अल्लाह तआला तौबा गर्ने र उनी तिर लाग्ने दाससित अत्यन्त क्षमाशील छन ।

يُرْسِلِ ٱلسَّمَآءَ عَلَيْكُم مِّدْرَارًا ﴿١١﴾ وَيُمْدِدْكُم بِأَمْوَٰلٍ وَبَنِينَ وَيَجْعَل
لَّكُمْ جَنَّـٰتٍ وَيَجْعَل لَّكُمْ أَنْهَـٰرًا ﴿١٢﴾ مَّا لَكُمْ لَا تَرْجُونَ لِلَّهِ وَقَارًا ﴿١٣﴾
وَقَدْ خَلَقَكُمْ أَطْوَارًا ﴿١٤﴾ أَلَمْ تَرَوْا۟ كَيْفَ خَلَقَ ٱللَّهُ سَبْعَ سَمَـٰوَٰتٍ
طِبَاقًا ﴿١٥﴾ وَجَعَلَ ٱلْقَمَرَ فِيهِنَّ نُورًا وَجَعَلَ ٱلشَّمْسَ سِرَاجًا ﴿١٦﴾
وَٱللَّهُ أَنۢبَتَكُم مِّنَ ٱلْأَرْضِ نَبَاتًا ﴿١٧﴾ ثُمَّ يُعِيدُكُمْ فِيهَا وَيُخْرِجُكُمْ
إِخْرَاجًا ﴿١٨﴾ وَٱللَّهُ جَعَلَ لَكُمُ ٱلْأَرْضَ بِسَاطًا ﴿١٩﴾ لِّتَسْلُكُوا۟ مِنْهَا
سُبُلًا فِجَاجًا ﴿٢٠﴾ قَالَ نُوحٌ رَّبِّ إِنَّهُمْ عَصَوْنِى وَٱتَّبَعُوا۟ مَن لَّمْ يَزِدْهُ
مَالُهُۥ وَوَلَدُهُۥٓ إِلَّا خَسَارًا ﴿٢١﴾ وَمَكَرُوا۟ مَكْرًا كُبَّارًا ﴿٢٢﴾ وَقَالُوا۟
لَا تَذَرُنَّ ءَالِهَتَكُمْ وَلَا تَذَرُنَّ وَدًّا وَلَا سُوَاعًا وَلَا يَغُوثَ وَيَعُوقَ
وَنَسْرًا ﴿٢٣﴾ وَقَدْ أَضَلُّوا۟ كَثِيرًا ۖ وَلَا تَزِدِ ٱلظَّـٰلِمِينَ إِلَّا ضَلَـٰلًا ﴿٢٤﴾
مِّمَّا خَطِيٓـَٔـٰتِهِمْ أُغْرِقُوا۟ فَأُدْخِلُوا۟ نَارًا فَلَمْ يَجِدُوا۟ لَهُم مِّن دُونِ
ٱللَّهِ أَنصَارًا ﴿٢٥﴾ وَقَالَ نُوحٌ رَّبِّ لَا تَذَرْ عَلَى ٱلْأَرْضِ مِنَ ٱلْكَـٰفِرِينَ
دَيَّارًا ﴿٢٦﴾ إِنَّكَ إِن تَذَرْهُمْ يُضِلُّوا۟ عِبَادَكَ وَلَا يَلِدُوٓا۟ إِلَّا فَاجِرًا
كَفَّارًا ﴿٢٧﴾ رَّبِّ ٱغْفِرْ لِى وَلِوَٰلِدَىَّ وَلِمَن دَخَلَ بَيْتِىَ
مُؤْمِنًا وَلِلْمُؤْمِنِينَ وَٱلْمُؤْمِنَـٰتِ وَلَا تَزِدِ ٱلظَّـٰلِمِينَ إِلَّا تَبَارًۢا ﴿٢٨﴾

(11)-(16) यदि तिमीहरूले तौबा र क्षमायाचना गऱ्यौ भने अल्लाह तिमीहरूमाथि मुसलधारे र लगातार पानी बर्साउनेछन् । र तिम्रा धन-माल र सन्तानहरूलाई बढाउनेछन्, र तिमीहरूको लागि यस्ता बगैंचाहरू सृष्टि गर्नेछन जसको फल र सुन्दरताबाट तिमी लाभान्वित हुनेछौ, र तिमीहरूको लागि नहरहरू बगाउनेछन जसबाट तिमीहरू आफ्ना खेतीलाई सिंचाई गर्नेछौ र जनावरहरूलाई पानी ख्वाउनेछौ । हे समुदायका मानिसहरू हो! तिमीहरूलाई के भएको छ ? कि तिमीहरू अल्लाहको महान्ता र बादशाहियतबाट डराउँदैनौ, जबकि उनले तिमीहरूलाई विभिन्न अवस्थामा सृष्टि गरेः वीर्य अनि ढिक्को रगत अनि मासुको डल्लो अनि हड्डी र मासु ? के तिमीहरूले देखेनौ कसरी अल्लाहले सातवटा आकाशको तह एक अर्को माथि रही बनाएका छन्, र ती आकाशहरू भित्र चन्द्रमालाई प्रकाशमय बनाए र सूर्यलाई प्रकाशित दीप बनाए जसबाट धरतीवासीहरू प्रकाश प्राप्त गर्छन् ।

(17)-(20) र अल्लाहले तिमीहरूलाई धरतीबाट एक विषेश तरीकाले निर्माण गरे फेरि मृत्यु पश्चात तिमीहरूलाई यसै धरतीमा उनले फिर्ता लैजानेछन्, फेरि दोबारा जीउँदो हुन दिन तिमीहरूलाई यसैबाट सत्य रूपले निकालिनेछन । र अल्लाह तिमीहरूको लागि धरतीलाई कोमल बिछ्यौना सरह बनाए ताकि तिमीहरू त्यसका फराकिलो बाटोमा हिंड ।

(21)-(25) नूहले भनेः हे मेरा रब! मेरो समुदायका मानिसहरू मेरो अवज्ञामा र मलाई झूठा ठान्नुमा सीमा भन्दा अगाडि भएका छन्,र तिनीहरू मध्ये निर्बल र सानो प्रकारका मानिसहरूले यस्ता पथभ्ष्ट धनी मानिसहरूको अनुसरण गरे जसका धन-माल र सन्तानहरूले यस संसारमा पथभ्रष्टतामा र परलोकमा यातनामा अभिवृद्धि गरे । र पथभ्रष्ट मुख्य किसिमका मानिसले आफै भन्दा तल्लो स्तरका मानिस सँग ठूलो षड्यन्त्र गरे । र तिनीहरूले भनेः आफ्नो पूजनीयको पूजालाई छोडी मात्र एक अल्लाहको पूजा अर्चनामा न लाग जस तिर नूह बोलाउँदैछन, र वद्द, सुवाअ्, यगूस, यऊक र नस्रलाई न छोड । र यी पाँचौ नाम तिनीहरूका मूर्ति र देवताहरूका नाम छन् जसको पूजा तिनीहरू अल्लाह बाहेक गर्दथे । र यी सदाचारीहरूको नाम छन् उनीहरूको मृत्यु पश्चात शैतानले तिनीहरूलाई उनीहरूको मूर्ति र तस्वीर बनाऊ भन्ने सल्लाह दियो ताकि उनीहरूलाई हेरेर आफ्नो ख्यालमा पूजा अर्चना धेरै राम्रो रूपमा गरुन्, र तिनीहरूले बितिसके पछि र लामो अवधि भए पछि अर्का मानिसहरू तिनीहरूको स्थानमा आए, शैतानले तिनीहरूको हृदयमा यो कुरा हाल्यो कि तिम्रा पुर्खाहरूले यिनै मूर्ति र तस्वीरहरूको पूजा गर्दथे र यिनैलाई माध्यम बनाई अल्लाहलाई पुकार्दथे । मूर्ति बनाउनु हराम छ र चिहानमाथि मजार,कुब्बा र घर बनाउनु हराम छ भन्ने कुरामा यही रहस्य पाइन्छ किनकि अवधि लामो हुन साथै मुर्ख र अशिक्षित मानिसहरूको लागि ती मूर्ति आदि पूज्य भइहाल्छन् । र यी मुख्य व्यक्तिहरूले धेरै मानिसहरूलाई कुबाटो र प्रथभ्रष्टतालाई सुन्दर बनाई सुमार्ग र सत्यताबाट हटाएका छन् । फेरि नूह अलैहिस्सलामले भनेः हे मेरा रब! यी कुफ्र र अहंकार गर्ने अत्याचारीहरूलाई सत्यबाट अरू टाढा गरिदिनुहोस् । अतः तिनीहरू आफ्नो पाप र कुफ्रमाथि अडिग रहनको कारणले ठूलो बाढीमा डुबाइए, फेरि त्यस पछि ठूलो आगोमा तिनीहरू होमिए, र तिनीहरूले अल्लाहबाट बचाउने कुनै सहायक पाएनन् र कुनै यस्तो व्यक्ति पनि पाएनन् जसले अल्लाहको यातनालाई टार्न सकोस् ।

(26)-(28) नूह अहिस्सलामले निराश भएर भनेः हे मेरा रब! काफिरहरू मध्ये कसैलाई धरतीमाथि हिंड्दै र डुल्दै जीउँदो नछोड्नुहोस् । यदि तपाईंले तिनीहरूलाई बिना सर्वनाश गरेर छोडनुभयो भने तपाईंमाथि ईमान ल्याउने तपाईंका भक्तहरूलाई

सत्यबाट विचलित गरिदिनेछन्, र तिनीहरूको वंश र नातेदारहरूबाट सत्यबाट टाढा र तपाईंसँग ठूलो कुफ्र गर्नेवाला नै जन्म लिनेछ । हे मेरा रब! मलाई मेरा मातापितालाई र मेरो घरमा आस्थावानको हैसियतले प्रवेश गरेका हरेक व्यक्तिलाई अनि तपाईंमाथि सबै ईमान ल्याउने पुरुष र महिलाहरूलाई क्षमा गरिदिनुहोस्, र काफिरहरूलाई यस संसारमा पनि र आखिरतमा पनि बरबादी र सर्वनाशको अलावा अरू कुरामा अभिवृद्धि न गर्नुहोस् ।

## सूरह अल्-जिन्न - 72

سُورَةُ الجِنِّ — آياتها ٢٨ — ترتيبها ٧٢

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

قُلْ أُوحِيَ إِلَيَّ أَنَّهُ اسْتَمَعَ نَفَرٌ مِّنَ الْجِنِّ فَقَالُوا إِنَّا سَمِعْنَا قُرْآنًا عَجَبًا ﴿١﴾ يَهْدِي إِلَى الرُّشْدِ فَآمَنَّا بِهِ ۖ وَلَن نُّشْرِكَ بِرَبِّنَا أَحَدًا ﴿٢﴾ وَأَنَّهُ تَعَالَىٰ جَدُّ رَبِّنَا مَا اتَّخَذَ صَاحِبَةً وَلَا وَلَدًا ﴿٣﴾ وَأَنَّهُ كَانَ يَقُولُ سَفِيهُنَا عَلَى اللَّهِ شَطَطًا ﴿٤﴾ وَأَنَّا ظَنَنَّا أَن لَّن تَقُولَ الْإِنسُ وَالْجِنُّ عَلَى اللَّهِ كَذِبًا ﴿٥﴾ وَأَنَّهُ كَانَ رِجَالٌ مِّنَ الْإِنسِ يَعُوذُونَ بِرِجَالٍ مِّنَ الْجِنِّ فَزَادُوهُمْ رَهَقًا ﴿٦﴾ وَأَنَّهُمْ ظَنُّوا كَمَا ظَنَنتُمْ أَن لَّن يَبْعَثَ اللَّهُ أَحَدًا ﴿٧﴾ وَأَنَّا لَمَسْنَا السَّمَاءَ فَوَجَدْنَاهَا مُلِئَتْ حَرَسًا شَدِيدًا وَشُهُبًا ﴿٨﴾ وَأَنَّا كُنَّا نَقْعُدُ مِنْهَا مَقَاعِدَ لِلسَّمْعِ ۖ فَمَن يَسْتَمِعِ الْآنَ يَجِدْ لَهُ شِهَابًا رَّصَدًا ﴿٩﴾ وَأَنَّا لَا نَدْرِي أَشَرٌّ أُرِيدَ بِمَن فِي الْأَرْضِ أَمْ أَرَادَ بِهِمْ رَبُّهُمْ رَشَدًا ﴿١٠﴾ وَأَنَّا مِنَّا الصَّالِحُونَ وَمِنَّا دُونَ ذَٰلِكَ ۖ كُنَّا طَرَائِقَ قِدَدًا ﴿١١﴾ وَأَنَّا ظَنَنَّا أَن لَّن نُّعْجِزَ اللَّهَ فِي الْأَرْضِ وَلَن نُّعْجِزَهُ هَرَبًا ﴿١٢﴾ وَأَنَّا لَمَّا سَمِعْنَا الْهُدَىٰ آمَنَّا بِهِ ۖ فَمَن يُؤْمِن بِرَبِّهِ فَلَا يَخَافُ بَخْسًا وَلَا رَهَقًا ﴿١٣﴾

(1) (2) हे रसूल ! भनिदिनुहोसः कि मतिर अल्लाहले प्रकाशना गर्नुभएको छ कि जिन्नको एक टोलीले मबाट पाठ गरिएको कुरआनलाई ध्यान पूर्वक सुन्यो र सुने पछि आफ्नो समुदायसँग भन्यो : हामीले यस्तो कुरआन सुनेका छौं जो आफ्नो गद्य पद्यमा, आफ्नो निर्णयमा, आफ्नो नियम विधानमा र आफ्नो सूचना दिनमा आश्चर्यजनक र अदभुत हो, जुन सत्य र सुमार्गतिर निम्तो दिन्छ । त, हामीले त्यस कुरआनलाई सत्य मान्यौं र त्यही अनुसार व्यवहार गर्‍यौं । अनि हामी आफ्ना पालनकर्ताको पूजा अर्चनामा जसले हामीलाई जन्म दिनुभएको हो कसैलाई साझी गर्दैनौं ।

(3) र हाम्रा पालनकर्ताको शान र प्रतिष्ठा अति उच्च एवं महान छ । उनले कसैलाई पनि आफ्नो लागि पत्नी र सन्तान बनाएका छैनन् ।

(4) र हामीमध्ये बेकुफ तथा मुर्खले जो इब्लीस हो अल्लाह माथि मिथ्या कुरा गर्दथ्यो जुन सत्यबाट एकदमै टाढा छ अर्थात उसले दाबी गरेको थियो कि अल्लाहले आफ्नोलागि पत्नी र सन्तान बनाएका छन् ।

(5) किनकि हामीले यो ठानेका थियौं कि मानव र दानव (मनुष्य र जिन्न) मध्ये कसैले अल्लाहमाथि झूठा कुरा गर्दैन कि उनले आफ्नो लागि पत्नी र सन्तान बनाएका छन् ।

(6) र मनुष्यमध्ये केही व्यक्ति जिन्नमध्ये केही व्यक्तिसित शरण चाहन्थे, त मनुष्यबाट शरण चाहिने कारणले जिन्नमध्येका व्यक्तिहरूले उद्दण्डता र डराउनु धमकाउनुमा अझ बढे । र यो शरण चाहनु जसलाई अल्लाहले अधिका मानिसहरूको बारेमा वर्णन गर्नुभएको छ ठूलो शिर्क मध्ये हो जसलाई अल्लाह बिना सत्य तौबा गरेर क्षमा गर्ने छैनन् । यस आयतमा जादूगर, धोकाबाजहरू ईत्यादिबाट बच्नको लागि धेरै जोर दिएको छ ।

(7) मनुष्यमध्ये काफिरहरूले त्यही कुरा कल्पना र अनुमान गरेका छन् जसरी कि तिमीहरूले पनि हे जिन्नको समुदाय! कल्पना गरेका थियौ कि अल्लाहले कसैलाई मृत्यु पश्चात पुनर्जीवित गर्ने छैनन् ।

(8) र हामी जिन्नको समुदायले आकाश सम्म पुग्न खोज्यौं आकाशवासी (फरिश्ताहरू) को कुराकानी सुन्नको लागि त हामीले आकाशलाई सुरक्षित पायौं धेरै फरिश्ताहरूबाट र उल्काहरूबाट, जसले पनि नजीक हुनको साहस गर्छ त्यसले त्यसलाई हान्नेछ ।

(9) र यस अघि हामीले आकाशिय कुराकानी सुन्नको लागि आकाशमा विभिन्न ठाउँहरू बनाएका थियौं । अब जसले कान थाप्छ उसले एउटा उल्कालाई आफ्नो ताकमा पाउँछ जसले उसलाई पोलेर सर्वनाश गरिदिन्छ । यी दुबै आयतहरूमा जादूगर र धोकाबाजहरूमाथि खण्डन छ जसले अन्तर्यामी हुनको दाबी गर्छन् र मुर्ख तथा निर्बल बुद्धिवालालाई आफ्नो मिथ्या कुरा र छलले धोका दिन्छन् ।

(10) र हामी जिन्नको समुदायले यो कुरा जानेका छैनौं कि अल्लाहले धरतीवासी सित नराम्रो व्यवहार गर्नको इरादा गरेका छन् कि तिनीहरूसँग भलाई र सुमार्ग देखाउने नियत गरेका छन् ।

(11) र हामी मध्ये केही सत्कर्मी तथा सयंमी व्यक्तिहरू छन भने केही यसको विपरित काफिर तथा पापीहरू छन, र हामी विभिन्न टोली एवम विचारधाराहरूमा बाँडिएका छौं ।

(12) र हामीले यो विश्वास गर्‍यौं कि अल्लाह हामीमाथि सामर्थ्यवान छन्, र हामी उनैको प्रभुत्त्व एवम् अधीनमा रहेका छौं, र यदि हामीसँग केही कुराको उनले इरादा गरेका छन् भने हामी कतै भागेर जान

وَأَنَّا مِنَّا ٱلْمُسْلِمُونَ وَمِنَّا ٱلْقَٰسِطُونَ ۖ فَمَنْ أَسْلَمَ فَأُو۟لَٰٓئِكَ
تَحَرَّوْا۟ رَشَدًا ﴿١٤﴾ وَأَمَّا ٱلْقَٰسِطُونَ فَكَانُوا۟ لِجَهَنَّمَ حَطَبًا ﴿١٥﴾
وَأَلَّوِ ٱسْتَقَٰمُوا۟ عَلَى ٱلطَّرِيقَةِ لَأَسْقَيْنَٰهُم مَّآءً غَدَقًا ﴿١٦﴾ لِّنَفْتِنَهُمْ
فِيهِ ۚ وَمَن يُعْرِضْ عَن ذِكْرِ رَبِّهِۦ يَسْلُكْهُ عَذَابًا صَعَدًا ﴿١٧﴾ وَأَنَّ
ٱلْمَسَٰجِدَ لِلَّهِ فَلَا تَدْعُوا۟ مَعَ ٱللَّهِ أَحَدًا ﴿١٨﴾ وَأَنَّهُۥ لَمَّا قَامَ عَبْدُ ٱللَّهِ
يَدْعُوهُ كَادُوا۟ يَكُونُونَ عَلَيْهِ لِبَدًا ﴿١٩﴾ قُلْ إِنَّمَآ أَدْعُوا۟ رَبِّى وَلَآ أُشْرِكُ
بِهِۦٓ أَحَدًا ﴿٢٠﴾ قُلْ إِنِّى لَآ أَمْلِكُ لَكُمْ ضَرًّا وَلَا رَشَدًا ﴿٢١﴾ قُلْ إِنِّى
لَن يُجِيرَنِى مِنَ ٱللَّهِ أَحَدٌ وَلَنْ أَجِدَ مِن دُونِهِۦ مُلْتَحَدًا ﴿٢٢﴾ إِلَّا بَلَٰغًا
مِّنَ ٱللَّهِ وَرِسَٰلَٰتِهِۦ ۚ وَمَن يَعْصِ ٱللَّهَ وَرَسُولَهُۥ فَإِنَّ لَهُۥ نَارَ جَهَنَّمَ
خَٰلِدِينَ فِيهَآ أَبَدًا ﴿٢٣﴾ حَتَّىٰٓ إِذَا رَأَوْا۟ مَا يُوعَدُونَ فَسَيَعْلَمُونَ
مَنْ أَضْعَفُ نَاصِرًا وَأَقَلُّ عَدَدًا ﴿٢٤﴾ قُلْ إِنْ أَدْرِىٓ أَقَرِيبٌ
مَّا تُوعَدُونَ أَمْ يَجْعَلُ لَهُۥ رَبِّىٓ أَمَدًا ﴿٢٥﴾ عَٰلِمُ ٱلْغَيْبِ فَلَا
يُظْهِرُ عَلَىٰ غَيْبِهِۦٓ أَحَدًا ﴿٢٦﴾ إِلَّا مَنِ ٱرْتَضَىٰ مِن رَّسُولٍ فَإِنَّهُۥ
يَسْلُكُ مِنۢ بَيْنِ يَدَيْهِ وَمِنْ خَلْفِهِۦ رَصَدًا ﴿٢٧﴾ لِّيَعْلَمَ أَن قَدْ أَبْلَغُوا۟
رِسَٰلَٰتِ رَبِّهِمْ وَأَحَاطَ بِمَا لَدَيْهِمْ وَأَحْصَىٰ كُلَّ شَىْءٍ عَدَدًۢا ﴿٢٨﴾

सक्दैनौं, र यो पनि हामी शक्ति राख्दैनौं कि उनको यातनाबाट आकाश तिर भागेर जाऔं यदि उनले हामी सँग बुराईको इरादा गरिराखेका हुन्छन् भने ।

(13) र हामीले कुरआनलाई सुन्ने बित्तिकै त्यसमाथि ईमान ल्यायौं, र त्यो अल्लाहको तर्फबाट सत्य हो भन्ने कुरालाई स्वीकार गर्‍यौं । र जसले आफ्ना रबमाथि ईमान ल्याउनेछ उसलाई कुनै किसिमको पुण्यमा हक मारिने वा अत्याचार गरिने डर हुने छैन ।

(14) (15) र हामी मध्ये केही अल्लाहको आज्ञापालनमा झुकिरहन्छन् र हामी मध्ये केही अत्याचारी र अन्यायकारी रहदै सत्यबाट विचलित भएका छन् । र जसले इस्लाम स्वीकार गरे र अल्लाहको आज्ञापालनमा झुकि रहे ती मानिसहरूले नै सत्य र असलको इरादा गरेका छन् र सत्यलाई छनौट गर्नुमा प्रयास गरेका छन् भने अल्लाहले पनि तिनीहरूलाई सुमार्ग देखाउनुभएको छ । र इस्लामको बाटोबाट विमुख हुनेवाला नरकको इन्धन बन्नेछन् ।

(16) (17) र यदि मानव एवम दानव मध्ये काफिरहरूले इस्लामको बाटोमा रहेका भए र त्यसबाट विमुख न भएका भए हामी उनीहरूमाथि धेरै पानी बर्साउने थियौं । र उनीहरूमाथि आजीविकालाई फराकिलो गर्थ्यौं ताकि हामी उनलाई जाँचौं उनीहरू कसरी आफ्ना रबको अनुकम्पाको आभार व्यक्त गर्छन् ? र जो आफ्ना रबको आज्ञापालनबाट र कुरआनलाई सुन्नु तथा त्यसमा चिन्तन मनन गर्नुबाट र त्यस अनुसार व्यवहार गर्नुबाट विमुख हुन्छ त्यसलाई पीडादायक र कठोर यातना दिनेछौं ।

(18) र मस्जिदहरू मात्र एक अल्लाहको इबादत गर्नको लागि बनाइको छ त्यसमा उनी बाहेक अरूको इबादत न गर, र विशुद्ध भएर उनैलाई पुकार र उनैको पूजा गर । किनभने मस्जिदहरूको निर्माण मात्र एक अल्लाहको पूजा अर्चनाको लागि हुन्छ अरूको पूजा पाठको लागि हुँदैन । यस आयतमा यस कुरामाथि जोर दिएको छ कि मस्जिदहरूलाई शुद्धता (इख्लास) र नबी सल्लल्लाहो अलैहे वसल्लमको अनुसरण गर्नुमा जे कुरा पनि बाध्य वा रोकावट बन्छ ती सबैबाट चोखो र पवित्र राख्नु अनिवार्य छ ।

(19) र जब मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमले उभेर अल्लाहको इबादत गर्न खोज्नुभएको छ भने जिन्न उनीमाथि समूह समूह एक अर्कामाथि चढेर कुरआन सुन्नको लागि जाम लगाउँछन् ।

(20) हे रसूल! तपाईं भनिदिनुसः हे काफिरहरू! म मात्र आफ्ना एक पालनकर्ताको पूजा गर्छु र उनको पूजामा कसैलाई साझेदार बनाउँदिन ।

(21)-(23) हे रसूल! यिनीहरूसँग तपाईं भनिदिनुसः न म तिमीहरूबाट कुनै हानिलाई टार्नको सामर्थ्य राख्दछु न त तिमीहरूलाई कुनै लाभ पुर्‍याउनको । अल्लाहको अवज्ञा गरेमा कसैले मलाई अल्लाहको यातनाबाट बचाउन सक्दैन, र अल्लाहको यातना बाट भागेर उनी बाहेक अरू कसैको शरण म पाउँदिन । तर अल्लाहले तिमीहरू सम्म पुर्‍याउनको जुन आदेश दिएका छन र जुन दूतत्व मलाई प्रदान गरेका छन् सो केवल म तिमीहरू सम्म पुर्‍याउनको शक्ति राख्दछु । र जो अल्लाह र उनका रसूलको अवज्ञा गर्छ र उनको दीन धर्मबाट विमुख हुन्छ भने उसको बदला नरकको आगो हुनेछ जसबाट ऊ कहिल्यै निस्कन सक्दैन ।

(24) मुश्रिकहरूसित वाचा गरिएको यातनालाई जब तिनीहरूले हेर्नेछन् र त्यो यातना उनीमाथि आए पछि उनलाई थाहा हुनेछ कि कसको सहायक र सहयोगीहरू दुर्बल छन् र कसको सेना कम छन् ।

(25)-(28) हे रसूल! तपाईं यी मुश्रिकहरूसँग भनिदिनुसः मलाई थाहा छैन कि जुन यातनाको वाचा तिमीहरूसित गरिएको छ त्यसको घटित हुने समय नजीक छ वा त्यसको अवधिलाई मेरा रबले लामो गरिदिनेछन् ? उनी आँखाहरूबाट लुप्त कुराका ज्ञाता हुन्,आफ्नो परोक्षको ज्ञान कसैमाथि प्रकट गर्दैनन् तर जसलाई उनी आफ्नो दूतत्वको लागि चयन गर्छन् र जसबाट प्रसन्न हुन्छन् भने त्यसलाई आफ्नो परोक्षको ज्ञानको बारेमा केही जानकारी दिन्छन्, र त्यस दूत एवम् रसूलको अगाडि पछाडि फरिश्ताहरूलाई जिन्नहरूबाट सुरक्षा गर्नको लागि संरक्षक बनाएर लगाउँछन्, ताकि ती जिन्नहरू उनको कुरा चोरी गरेर ज्योतिष सम्म न पुगाओस् ।

र ताकि रसूल मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम पनि जानुन् कि उनी भन्दा अघिका रसूल र दूतहरू पनि अल्लाहको सन्देश सत्यसँग पुऱ्याई दिनुमा यसै अवस्थामाथि हुन्थे। र जिन्नबाट जसरी मुहम्मदको सुरक्षा गरिएको हो त्यसरी नै तिनीहरूको पनि सुरक्षा गरिएको थियो। र अल्लाहको ज्ञानले तिनीहरूका धर्मका प्रत्यक्ष र अप्रत्यक्ष सम्पूर्ण कुराहरू तथा नियम विधानहरूलाई परिधिमा लेएको छ, उनको ज्ञानबाट केही कुरा बाहिर हुन सक्दैन, र उनले एक-एक चिजलाई गणना गरेर सुरक्षित राखेका छन् र उनीमाथि केही कुरा लुक्न सक्दैन।

## सूरह अल्-मुज्जम्मिल् - 73

(1)-(4) हे आफ्नो लुगाले आफुलाई छोपिरहेको व्यक्ति! रातिको केही पहर बाहेक नमाज पढनको लागि उभ्ने गर, आधा रातमा उभ वा त्यस भन्दा अलि कम यहाँ सम्म कि रातिको तिहाई भाग सम्म पुगोस्, वा त्यस भन्दा अलि बढी यहाँ सम्म कि रातको दुई तिहाई सम्म पुगोस्। र कुरआनलाई मन्द गतिमा अक्षरहरू र रुक्ने ठाउँहरूलाई स्पष्ट गरी शुद्धसँग पढने गर।

(5) हे नबी ! हामी तपाईंमाथि एउटा महान् कुरआन अवतरित गर्नेछौं जसमा सम्पूर्ण प्रकारका आदेश, मनाही कुराहरू र शरियतका आदेश तथा नियम विधानहरू हुनेछन्।

(6) निस्सन्देह रातिमा इबादत गर्नाले हृदय धेरै प्रभावित हुन्छ, र सांसारिक झमेलाहरू तथा कार्यहरूबाट खाली रही कुरालाई प्रभावकारी रूपले बुझ्नको लागि अनुकूल हुन्छ।

(7) दिनको समयमा तपाईंको लागि आफ्ना कार्यहरू, यता उता जानु तथा दूतत्वका कार्यहरूमा धेरै व्यस्तता हुन्छ भने आफ्ना रबको इबादतको लागि आफुलाई रातिमा एकाग्र गर्नुहोस्।

(8) (9) हे नबी! आफ्ना रबको नाम जपनुस् र मात्र उनैलाई पुकार्नुस् र सबैबाट अलग रही उनीतर्फ एकाग्र भई उनको इबादतमा लीन रहनुस् र उनैमाथि भरोसा गर्नुस। उनी पूर्व तथा पश्चिमका स्वामी हुन्, उनी बाहेक कोही सत्य पूज्य छैन। अतः उनैमाथि भरोसा गर्नुस् र उनलाई आफ्नो कार्यसाधक मानी उनैतिर आफ्ना मामलाहरू सुम्पनुस्।

(10) मुश्रिकहरूले तपाईंबारे र तपाईंको धर्मबारे गरेको कुरामाथि धैर्यतापूर्वक सहन गर्नुस, र तिनीहरूसित अलग रही र तिनीहरूसँग बदला न लिने भावना राखी तिनीहरूका मिथ्या कार्यहरूको विपरित गर्नुस्।

(11) हे रसूल! मालई र संसारमा सुखी-सम्पन्न व्यक्तिहरूलाई जो मेरा आयतहरूलाई झूठा ठान्छन् छोडिदिनुस्, र यातना आउनुमा उनलाई केही अवसर दिनुस् ताकि यातना आउने समय सीमा पुगोस्।

سُورَةُ المُزَّمِّلِ (آياتها — ترتيبها)

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

يَٰٓأَيُّهَا ٱلۡمُزَّمِّلُ ﴿١﴾ قُمِ ٱلَّيۡلَ إِلَّا قَلِيلٗا ﴿٢﴾ نِّصۡفَهُۥٓ أَوِ ٱنقُصۡ مِنۡهُ قَلِيلًا
﴿٣﴾ أَوۡ زِدۡ عَلَيۡهِ وَرَتِّلِ ٱلۡقُرۡءَانَ تَرۡتِيلًا ﴿٤﴾ إِنَّا سَنُلۡقِي عَلَيۡكَ قَوۡلٗا
ثَقِيلًا ﴿٥﴾ إِنَّ نَاشِئَةَ ٱلَّيۡلِ هِيَ أَشَدُّ وَطۡـٔٗا وَأَقۡوَمُ قِيلًا ﴿٦﴾ إِنَّ لَكَ فِي
ٱلنَّهَارِ سَبۡحٗا طَوِيلٗا ﴿٧﴾ وَٱذۡكُرِ ٱسۡمَ رَبِّكَ وَتَبَتَّلۡ إِلَيۡهِ تَبۡتِيلٗا ﴿٨﴾
رَّبُّ ٱلۡمَشۡرِقِ وَٱلۡمَغۡرِبِ لَآ إِلَٰهَ إِلَّا هُوَ فَٱتَّخِذۡهُ وَكِيلٗا ﴿٩﴾ وَٱصۡبِرۡ
عَلَىٰ مَا يَقُولُونَ وَٱهۡجُرۡهُمۡ هَجۡرٗا جَمِيلٗا ﴿١٠﴾ وَذَرۡنِي وَٱلۡمُكَذِّبِينَ
أُوْلِي ٱلنَّعۡمَةِ وَمَهِّلۡهُمۡ قَلِيلًا ﴿١١﴾ إِنَّ لَدَيۡنَآ أَنكَالٗا وَجَحِيمٗا ﴿١٢﴾
وَطَعَامٗا ذَا غُصَّةٖ وَعَذَابًا أَلِيمٗا ﴿١٣﴾ يَوۡمَ تَرۡجُفُ ٱلۡأَرۡضُ وَٱلۡجِبَالُ
وَكَانَتِ ٱلۡجِبَالُ كَثِيبٗا مَّهِيلًا ﴿١٤﴾ إِنَّآ أَرۡسَلۡنَآ إِلَيۡكُمۡ رَسُولٗا شَٰهِدًا
عَلَيۡكُمۡ كَمَآ أَرۡسَلۡنَآ إِلَىٰ فِرۡعَوۡنَ رَسُولٗا ﴿١٥﴾ فَعَصَىٰ فِرۡعَوۡنُ ٱلرَّسُولَ
فَأَخَذۡنَٰهُ أَخۡذٗا وَبِيلٗا ﴿١٦﴾ فَكَيۡفَ تَتَّقُونَ إِن كَفَرۡتُمۡ يَوۡمٗا يَجۡعَلُ
ٱلۡوِلۡدَٰنَ شِيبًا ﴿١٧﴾ ٱلسَّمَآءُ مُنفَطِرُۢ بِهِۦۚ كَانَ وَعۡدُهُۥ مَفۡعُولًا ﴿١٨﴾
إِنَّ هَٰذِهِۦ تَذۡكِرَةٞۖ فَمَن شَآءَ ٱتَّخَذَ إِلَىٰ رَبِّهِۦ سَبِيلًا ﴿١٩﴾

(12) (13) निस्सन्देह हामीकहाँ उनीहरूको लागि आखिरतमा भारी नेलहरू र दन्कँदो आगो छन् जसमा उनीहरू होमिनेछन्, र घाँटी अड्कने, भित्र नजाने बेकार खाना र पीडादायी यातना हुनेछ।

(14) त्यस दिन जमीन र पहाड काँप्न र हल्न थाल्छन् र पहाडहरू ठोस र जमिएको भए पश्चात उड्दै बलुवाको थुम्को बन्न पुग्छन्।

(15) (16) हे मक्का वासीहरू हो! हामीले तिमीहरूतिर रसूल तिमीहरूबाट भएको कुफ्र र अवज्ञामाथि साक्षी बनाएर पठाएका छौं जसरी कि हामीले अहंकारी र घमण्डी फिऔंनतिर मूसालाई रसूल बनाएर पठाएका थियौं। त फिऔंनले मूसालाई झूठा मानी उनको दूतत्वमाथि ईमान ल्याएन र उनको अवज्ञा गऱ्यो, तब हामीले त्यसलाई पूर्ण रूपले सर्वनाश गरिदियौं। यस आयतमा चेतावनी छ त्यस व्यक्तिको लागि जो मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको अवज्ञा गर्छ कि फिऔंन र उसको समुदायमाथि आएको प्रकोप झैं उसमाथि पनि प्रकोप आउनेछ।

(17) यदि तिमीहरूले कुफ्र गऱ्यौ भने प्रलयको दिनको यातनाबाट कसरी आफुलाई जोगाउन सक्छौ

۞ إِنَّ رَبَّكَ يَعْلَمُ أَنَّكَ تَقُومُ أَدْنَىٰ مِن ثُلُثَيِ ٱلَّيْلِ وَنِصْفَهُۥ وَثُلُثَهُۥ وَطَآئِفَةٌ
مِّنَ ٱلَّذِينَ مَعَكَ ۚ وَٱللَّهُ يُقَدِّرُ ٱلَّيْلَ وَٱلنَّهَارَ ۚ عَلِمَ أَن لَّن تُحْصُوهُ فَتَابَ
عَلَيْكُمْ ۖ فَٱقْرَءُوا۟ مَا تَيَسَّرَ مِنَ ٱلْقُرْءَانِ ۚ عَلِمَ أَن سَيَكُونُ مِنكُم مَّرْضَىٰ ۙ
وَءَاخَرُونَ يَضْرِبُونَ فِى ٱلْأَرْضِ يَبْتَغُونَ مِن فَضْلِ ٱللَّهِ ۙ وَءَاخَرُونَ
يُقَـٰتِلُونَ فِى سَبِيلِ ٱللَّهِ ۖ فَٱقْرَءُوا۟ مَا تَيَسَّرَ مِنْهُ ۚ وَأَقِيمُوا۟ ٱلصَّلَوٰةَ وَءَاتُوا۟
ٱلزَّكَوٰةَ وَأَقْرِضُوا۟ ٱللَّهَ قَرْضًا حَسَنًا ۚ وَمَا تُقَدِّمُوا۟ لِأَنفُسِكُم مِّنْ خَيْرٍ تَجِدُوهُ
عِندَ ٱللَّهِ هُوَ خَيْرًا وَأَعْظَمَ أَجْرًا ۚ وَٱسْتَغْفِرُوا۟ ٱللَّهَ ۖ إِنَّ ٱللَّهَ غَفُورٌ رَّحِيمٌۢ ﴿٢٠﴾

## سُورَةُ المُدَّثِّرِ

ترتيبها ٧٤ — آياتها ٢٠

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَـٰنِ ٱلرَّحِيمِ

يَـٰٓأَيُّهَا ٱلْمُدَّثِّرُ ﴿١﴾ قُمْ فَأَنذِرْ ﴿٢﴾ وَرَبَّكَ فَكَبِّرْ ﴿٣﴾ وَثِيَابَكَ فَطَهِّرْ ﴿٤﴾
وَٱلرُّجْزَ فَٱهْجُرْ ﴿٥﴾ وَلَا تَمْنُن تَسْتَكْثِرُ ﴿٦﴾ وَلِرَبِّكَ فَٱصْبِرْ ﴿٧﴾
فَإِذَا نُقِرَ فِى ٱلنَّاقُورِ ﴿٨﴾ فَذَٰلِكَ يَوْمَئِذٍ يَوْمٌ عَسِيرٌ ﴿٩﴾ عَلَى ٱلْكَـٰفِرِينَ
غَيْرُ يَسِيرٍ ﴿١٠﴾ ذَرْنِى وَمَنْ خَلَقْتُ وَحِيدًا ﴿١١﴾ وَجَعَلْتُ لَهُۥ مَالًا
مَّمْدُودًا ﴿١٢﴾ وَبَنِينَ شُهُودًا ﴿١٣﴾ وَمَهَّدتُّ لَهُۥ تَمْهِيدًا ﴿١٤﴾ ثُمَّ يَطْمَعُ
أَنْ أَزِيدَ ﴿١٥﴾ كَلَّآ ۖ إِنَّهُۥ كَانَ لِءَايَـٰتِنَا عَنِيدًا ﴿١٦﴾ سَأُرْهِقُهُۥ صَعُودًا ﴿١٧﴾

जुन दिनले ठूलो डर र त्रासको कारणले बच्चालाई बृद्ध बनाइदिनेछ ?

(18) त्यस दिनको ठूलो भयंकर र डरलाग्दो हुनको कारणले आकाश फुट्छ, र त्यो दिन आउनेछ भन्ने अल्लाहको वाचा अनिवार्य रूपले पूरा हुनेछ ।

(19) र यी डराउने आयतहरू जसमा यातना र प्रकोपहरूको चर्चा गरिको छ भने त्यसमा मानिसहरूको लागि उपदेश र नसीहत छ । जुन् व्यक्ति ती आयतहरूबाट उपदेश प्राप्त गर्न चाहन्छ उसले आज्ञापालन र ईश्भयको बाटो अख्तियार गरेर आफ्ना जन्मदाता र पालनकर्ताको प्रसन्नता प्राप्त गर्न सक्छ ।

(20) हे नबी! तपाईंका रब जान्दछन कि तपाई तहज्जुद नमाज पढनको लागि कहिले रातिको दुईतिहाइ र कहिले आधी राति र कहिले तिहाइ राति सम्म उभिरहनु हुन्छ, र तपाईंका साथीहरू मध्ये एउटा समूह पनि तपाईं सँग उभ्छ । मात्र एक अल्लाह नै रात र दिनको हिसाब राख्दछन् र ती दुबैको अनुमान लगाएर दुबै मध्ये कुन समाप्त भयो र कुन बाँकी बच्यो सबै उनलाई थाहा छ । र अल्लाहलाई यो पनि थाहा छ कि तिमीहरू पूरै रात्री नमाज पढ्दैं उभ्न सक्दैनौ त्यसर्थ तिमीहरूमाथि सजिलो गरिएको छ । तसर्थ रात्रीको नमाजमा जति सम्भव होस् कुरआनको पाठ गर्न गर । र अल्लाहलाई यो पनि थाहा छ कि तिमीहरू मध्ये कतिपयले रोगको कारणले रात्रीमा नमाज पढन सक्दैन, र अर्को समुदाय जो धरतीमा हिंड डुल् गरेर व्यापार तथा अल्लाहले दिएको आजीविकाको खोजीमा लीन रहन्छन् र कतिपय अल्लाहको कुरा र उनको धर्मलाई व्यापक फैलाउनको लागि अल्लाहको बाटोमा धर्मयुद्ध गर्छन् । अतः आफ्नो नमाजमा जति कुरआन पढ्न सक्छौ पढ र सधैं नमाज कायम गर र अनिवार्य दान (जकात) देऊ र अल्लाहको प्रसन्नता प्राप्त गर्ने हेतु आफ्नो धन-मालबाट भलाई र उपकारको बाटोमा दान देऊ । र संसारमा पूण्य, सुकर्म र भलाईका जति कार्यहरू तिमीहरू गरिरहेछौ सबैको पूण्य र प्रतिफल तिमीहरू अल्लाहकहाँ कियामतको दिन पाउनेछौ, जुन अति उत्तम र महान प्रतिदानको रूपमा हुनेछ । र आफ्नो सबै अवस्थामा अल्लाहकै क्षमा माग्ने गर किनकि अल्लाह तिम्रो लागि अति क्षमाशील र तिमीमाथि परम दयालु छन् ।

## सूरह अल्-मुद्दस्सिर - 74

(1)-(7) हे लुगा बेरेर सुतेको मान्छे ! आफ्नो सुत्ने ठाउँबाट उभ र मानिसहरूलाई सावधान गर, र खास गरी आफ्ना रबको महानताको वर्णन गर र ऊ एक्लै छन् भने धारणा राख र मात्र उनैको पूजा गर, र अपवित्रताबाट आफ्नो लुगालाई सफा गर, किनभने प्रत्यक्षको पवित्रता आन्तरिक पवित्रताको प्रतीक हुन्छ, सधैं मूर्ति, देवी देवता तथा शिर्कका कार्यहरूलाई छोड् र त्यसको नजीक पनि न जाऊ, र धेरैको खोजीमा रही दान अनुदान न गर । र अल्लाहको प्रसन्नता प्राप्त गर्नको लागि उनका आदेशहरूको पालना र मनाही गरेका कुराहरूबाट बंचित रहनुमाथि धैर्य गर ।

(8)-(10) जब सूर (कर्कशध्वनी निस्कने औजार) मा पुनर्जन्मको लागि फुकिनेछ । त्यो दिन काफिरहरूमाथि अति कठिन हुनेछ । काफिरहरूको लागि आफ्ना कर्महरूको लेखा जोखा र प्रलयको डर तथा त्रासबाट आफुलाई जोगाउनु सहज हुँदैन ।

(11)-(17) हे रसूल! छोड्नुस् मलाई र मैले जसलाई उसकी आमाको गर्भमा एक्लै बिना धन र बिना सन्तानको जन्म दिएको छु, अनि मैले उसलाई धेरै धन-सम्पत्ति र मक्कामा उसैसँग उपस्थित सन्तानहरू दिएं जो उसबाट अउपस्थित रहदैनन् । र उसको जीवनका बाटोहरू अति नै सहज पारें । यो वरदानको बावजुद उसले चाहन्छ कि म अरू उसको धन-माल र सन्तानहरूमा अझ बृद्धि गरुँ जबकि उसले मलाई इन्कार पनि गर्‍यो, त यस

إِنَّهُۥ فَكَّرَ وَقَدَّرَ ﴿١٨﴾ فَقُتِلَ كَيۡفَ قَدَّرَ ﴿١٩﴾ ثُمَّ قُتِلَ كَيۡفَ قَدَّرَ ﴿٢٠﴾ ثُمَّ نَظَرَ
﴿٢١﴾ ثُمَّ عَبَسَ وَبَسَرَ ﴿٢٢﴾ ثُمَّ أَدۡبَرَ وَٱسۡتَكۡبَرَ ﴿٢٣﴾ فَقَالَ إِنۡ هَٰذَآ إِلَّا سِحۡرٞ
يُؤۡثَرُ ﴿٢٤﴾ إِنۡ هَٰذَآ إِلَّا قَوۡلُ ٱلۡبَشَرِ ﴿٢٥﴾ سَأُصۡلِيهِ سَقَرَ ﴿٢٦﴾ وَمَآ أَدۡرَىٰكَ
مَا سَقَرُ ﴿٢٧﴾ لَا تُبۡقِي وَلَا تَذَرُ ﴿٢٨﴾ لَوَّاحَةٞ لِّلۡبَشَرِ ﴿٢٩﴾ عَلَيۡهَا تِسۡعَةَ عَشَرَ
﴿٣٠﴾ وَمَا جَعَلۡنَآ أَصۡحَٰبَ ٱلنَّارِ إِلَّا مَلَٰٓئِكَةٗۙ وَمَا جَعَلۡنَا عِدَّتَهُمۡ إِلَّا فِتۡنَةٗ
لِّلَّذِينَ كَفَرُواْ لِيَسۡتَيۡقِنَ ٱلَّذِينَ أُوتُواْ ٱلۡكِتَٰبَ وَيَزۡدَادَ ٱلَّذِينَ ءَامَنُوٓاْ إِيمَٰنٗا
وَلَا يَرۡتَابَ ٱلَّذِينَ أُوتُواْ ٱلۡكِتَٰبَ وَٱلۡمُؤۡمِنُونَۙ وَلِيَقُولَ ٱلَّذِينَ فِي قُلُوبِهِم مَّرَضٞ
وَٱلۡكَٰفِرُونَ مَاذَآ أَرَادَ ٱللَّهُ بِهَٰذَا مَثَلٗاۚ كَذَٰلِكَ يُضِلُّ ٱللَّهُ مَن يَشَآءُ وَيَهۡدِي
مَن يَشَآءُۚ وَمَا يَعۡلَمُ جُنُودَ رَبِّكَ إِلَّا هُوَۚ وَمَا هِيَ إِلَّا ذِكۡرَىٰ لِلۡبَشَرِ ﴿٣١﴾ كَلَّا
وَٱلۡقَمَرِ ﴿٣٢﴾ وَٱلَّيۡلِ إِذۡ أَدۡبَرَ ﴿٣٣﴾ وَٱلصُّبۡحِ إِذَآ أَسۡفَرَ ﴿٣٤﴾ إِنَّهَا لَإِحۡدَى
ٱلۡكُبَرِ ﴿٣٥﴾ نَذِيرٗا لِّلۡبَشَرِ ﴿٣٦﴾ لِمَن شَآءَ مِنكُمۡ أَن يَتَقَدَّمَ أَوۡ يَتَأَخَّرَ ﴿٣٧﴾ كُلُّ
نَفۡسِۭ بِمَا كَسَبَتۡ رَهِينَةٌ ﴿٣٨﴾ إِلَّآ أَصۡحَٰبَ ٱلۡيَمِينِ ﴿٣٩﴾ فِي جَنَّٰتٖ يَتَسَآءَلُونَ
﴿٤٠﴾ عَنِ ٱلۡمُجۡرِمِينَ ﴿٤١﴾ مَا سَلَكَكُمۡ فِي سَقَرَ ﴿٤٢﴾ قَالُواْ لَمۡ نَكُ مِنَ
ٱلۡمُصَلِّينَ ﴿٤٣﴾ وَلَمۡ نَكُ نُطۡعِمُ ٱلۡمِسۡكِينَ ﴿٤٤﴾ وَكُنَّا نَخُوضُ مَعَ
ٱلۡخَآئِضِينَ ﴿٤٥﴾ وَكُنَّا نُكَذِّبُ بِيَوۡمِ ٱلدِّينِ ﴿٤٦﴾ حَتَّىٰٓ أَتَىٰنَا ٱلۡيَقِينُ ﴿٤٧﴾

पापी र अपराधीले चाहेको कुरा कहिले पनि पूरा हुँदैन र कहिल्यै उसको धन-मालमा बढोतरी गर्दैन । उसले कुरआन र अल्लाहका प्रमाणहरूलाई झूठा ठानेर तीसँग शत्रुता गऱ्यो, उसमाथि म यस्तो प्रकोप र अप्ठ्यारो दिन्छु जस बाट उसले मुक्ति पाउन सक्दैन । (यहाँ वलीद बिन मुगिरा अभिप्राय छ जसले सत्यतासँग अहंकारी गरेर अल्लाह तथा उनका रसूलसँग युद्ध गरेको थियो, त, यो प्रत्येक अपराधी र अहंकारीको निमित्त जसले सत्यलाई छोडी दिन्छ यस्तो खालको सजाय र प्रकोप हुन्छ) ।

18-25 उसले आन्तरिक विचार गऱ्यो र मुहम्मद तथा कुरआनको बारेमा कस्तो भर्त्सना गरियोस् सो योजना बनायो, तसर्थ त्यो धिक्कृत भई सर्वनाशको योग्य भयो । भर्त्सना र निन्दा गर्ने यो योजना कसरी उसले आन्तरिक रूपले बनायो ? फेरि धिक्कृत भयो अनि जुन योजना उसले बनायो त्यसमा पुनः विचार गऱ्यो र कुरआनमा भर्त्सना गर्ने दोबारा योजना तयार पाऱ्यो । अनि उसले मुख बिगाऱ्यो र कुरआनको निन्दा तथा भर्त्सना गर्ने कुनै बहाना न पाइकन अरू ठूलो रूपमा मुख बिगाऱ्यो र परेशान भयो । फेरि सत्यबाट बिमुखता गरेर घमण्ड र आफुलाई ठूलो मानी स्वीकार गरेन, र कुरआनको सम्बन्धमा भन्यो : मुहम्मदले भनेको यो कुरआन जादू बाहेक अरू केही छैन जुन अतीतका मानिसहरूबाट आइरहेछ, र यो कुरआन त एउटा मानवीय वाणी हो जसलाई मुहम्मदले कुनै मानवबाट सिकेको हो अनि उसले त्यो अल्लाहको तर्फबाट छ भन्ने दाबी गरेको छ ।

26-30 शिघ्र नै म उसलाई नरकमा होम्नेछु ताकि त्यसको आगो र गर्मीबाट त्यो पोलियोस । र तपाईंलाई के थाहा कि नरक भनेको के हो ? त्यसले कुनै मासु र कुनै हाडलाई बिना डढ़ाएर छोड्दैन । छालाहरूलाई परिवर्तन गर्ने, र त्यसलाई कालो गरी डढ़ाउनेछ । नरक र त्यसको आगोको रेख देख तथा त्यसमा यातना दिनेको लागि १९ जना कठोर फरिश्ताहरू नियुक्त छन् ।

31 र हामीले नरकका कार्यकर्ता र रेख देख गर्नेवाला कठोर फरिश्ताहरूलाई बनाएका छौं, र उनीहरूको संख्या काफिरहरूको लागि केवल परीक्षा स्वरूप तय गरेका छौं, ताकि यहूदी र ईसाईहरूलाई जसलाई आकाशिय ग्रन्थ दिइएको छ विश्वास भइहालोस् कि नरकका रक्षक र कार्यकर्ताको बारेमा कुरआनमा जुन वर्णन भएको छ त्यो सत्य हो, किनकि यो कुरा उनीहरूको ग्रन्थमा आएको ज्ञान माफिक छ, र मोमिनहरूलाई अल्लाह र उनका रसूललाई सत्य मान्नुमा र उनको शरियतलाई व्यवहारमा ल्याउनुमा अरू बृद्धि होस् । र यसमा यहूदी र ईसाईहरू एवम अल्लाह तथा रसूलमाथि ईमान ल्याउने मोमिनहरू शंका न गरुन् । ताकि हृदयमा छल कपट र रोग रहने व्यक्तिहरू (मोनाफिकहरू) तथा काफिरहरू भन्नुन् : यस अदभुत संख्याबाट अल्लाहको अभिप्राय के हो ? यसै गरी अल्लाह जसलाई चाहन्छन पथभ्रष्ट पार्छन् र जसलाई चाहन्छन् सीधामार्ग देखाउँछन् । र मात्र एक अल्लाह बाहेक उनको सेना (जस मध्ये फरिश्ताहरू पनि छन्) को संख्याको बारेमा कसैलाई थाहा छैन । र नरकको आगो मानिसहरूका लागि उपदेश र शिक्षाप्रद मात्र हो ।

32-37 मामिला त्यसतो छैन जसरी कि तिनीहरूले चर्चा गरेका छन् अर्थात रसूलले ल्याएको कुरालाई झूठा ठान्नु । अल्लाह चन्द्रमाको कसम खाइ रहेछन र रात्रीको जब त्यो फर्कोस र बिहानको जब त्यो प्रकाशमय होस्! यो नरकको आगो ठूलो चिजहरूमध्येको एक हो, मानिसहरूको लागि चेतावनी र डराउने कुरा, त्यो व्यक्तिको लागि जो सुकर्म गरेर कुकर्मबाट टाढा बसी आफ्ना रबको निकटता प्राप्त गर्ने कामना गरेको छ ।

38-47 प्रत्येक जीव आफुले गरेको कुकर्ममा बाँधिएको छ, त्यसबाट त्यो मुक्ति प्राप्त गर्न सक्दैन यहाँसम्म कि उसमाथि रहेका हकहरूलाई चुक्ता गरोस् र यातना सहोस् । सिवाय शुद्ध मुस्लिमहरूको जो दायाँ हातवालाहरू हुन् जसले आफ्नो घाँटीलाई सुकर्म गरेर मुक्ति दिलाएका छन्, यिनीहरू यस्तो स्वर्गमा हुनेछन् जसको गुणको बारेमा कसैलाई ज्ञान

فَمَا تَنفَعُهُمْ شَفَٰعَةُ ٱلشَّٰفِعِينَ ﴿٤٨﴾ فَمَا لَهُمْ عَنِ ٱلتَّذْكِرَةِ مُعْرِضِينَ
﴿٤٩﴾ كَأَنَّهُمْ حُمُرٌ مُّسْتَنفِرَةٌ ﴿٥٠﴾ فَرَّتْ مِن قَسْوَرَةٍۭ ﴿٥١﴾ بَلْ يُرِيدُ
كُلُّ ٱمْرِئٍ مِّنْهُمْ أَن يُؤْتَىٰ صُحُفًا مُّنَشَّرَةً ﴿٥٢﴾ كَلَّا ۖ بَل لَّا يَخَافُونَ
ٱلْءَاخِرَةَ ﴿٥٣﴾ كَلَّآ إِنَّهُۥ تَذْكِرَةٌ ﴿٥٤﴾ فَمَن شَآءَ ذَكَرَهُۥ ﴿٥٥﴾
وَمَا يَذْكُرُونَ إِلَّآ أَن يَشَآءَ ٱللَّهُ ۚ هُوَ أَهْلُ ٱلتَّقْوَىٰ وَأَهْلُ ٱلْمَغْفِرَةِ ﴿٥٦﴾

ترتيبها ٧٥ — سُورَةُ القِيَامَةِ — آياتها ٤٠

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَٰنِ ٱلرَّحِيمِ

لَآ أُقْسِمُ بِيَوْمِ ٱلْقِيَٰمَةِ ﴿١﴾ وَلَآ أُقْسِمُ بِٱلنَّفْسِ ٱللَّوَّامَةِ ﴿٢﴾ أَيَحْسَبُ
ٱلْإِنسَٰنُ أَلَّن نَّجْمَعَ عِظَامَهُۥ ﴿٣﴾ بَلَىٰ قَٰدِرِينَ عَلَىٰٓ أَن نُّسَوِّىَ بَنَانَهُۥ ﴿٤﴾ بَلْ
يُرِيدُ ٱلْإِنسَٰنُ لِيَفْجُرَ أَمَامَهُۥ ﴿٥﴾ يَسْـَٔلُ أَيَّانَ يَوْمُ ٱلْقِيَٰمَةِ ﴿٦﴾ فَإِذَا بَرِقَ ٱلْبَصَرُ
﴿٧﴾ وَخَسَفَ ٱلْقَمَرُ ﴿٨﴾ وَجُمِعَ ٱلشَّمْسُ وَٱلْقَمَرُ ﴿٩﴾ يَقُولُ ٱلْإِنسَٰنُ يَوْمَئِذٍ
أَيْنَ ٱلْمَفَرُّ ﴿١٠﴾ كَلَّا لَا وَزَرَ ﴿١١﴾ إِلَىٰ رَبِّكَ يَوْمَئِذٍ ٱلْمُسْتَقَرُّ ﴿١٢﴾ يُنَبَّؤُا۟ ٱلْإِنسَٰنُ
يَوْمَئِذٍۭ بِمَا قَدَّمَ وَأَخَّرَ ﴿١٣﴾ بَلِ ٱلْإِنسَٰنُ عَلَىٰ نَفْسِهِۦ بَصِيرَةٌ ﴿١٤﴾ وَلَوْ أَلْقَىٰ
مَعَاذِيرَهُۥ ﴿١٥﴾ لَا تُحَرِّكْ بِهِۦ لِسَانَكَ لِتَعْجَلَ بِهِۦٓ ﴿١٦﴾ إِنَّ عَلَيْنَا جَمْعَهُۥ
وَقُرْءَانَهُۥ ﴿١٧﴾ فَإِذَا قَرَأْنَٰهُ فَٱتَّبِعْ قُرْءَانَهُۥ ﴿١٨﴾ ثُمَّ إِنَّ عَلَيْنَا بَيَانَهُۥ ﴿١٩﴾

हुनु असम्भव छ । त्यसमा तिनीहरू ती काफिरहरूसित सोध-पुछ गर्नेछन् जो आफ्नो जीवनमा अपराध गरेका हुन्छन्: तिमीहरूलाई कुन कार्यले नरकमा पुऱ्यायो र त्यसको मज्जा चाख्नलाई बाध्य बनायो ? अपराधीहरू भन्नेछन्: हामी संसारमा नमाज पढनेहरू मध्ये थिएनौं, दीन-दुखी एवम् फकीरहरूलाई दान न दिई तीमाथि उपकार गर्दैनथ्यौं, र पथभ्रष्ट एवम् सत्यविरुद्ध कुरा गर्नेहरूसँग हामी पनि कुरा गर्थ्यौं । र हामी हिसाब तथा बदला दिइने दिनलाई झूठा ठहर गर्थ्यौं, यहाँ सम्म कि हामी मृत्यु सम्म पुग्यौं र हामी ती कुकर्म र पथभ्रष्टतामा नै थियौं ।

(48) त्यती खेर फरिश्ताहरू र नबीहरू आदि मध्ये कुनै सिफारिशकर्ताहरूको सिफारिश काम आउँदैन, किनभने सिफारिश त्यो व्यक्तिको लागि हुनेछ जसबाट अल्लाह प्रसन्न हुनेछन् र जसको लागि सिफारिश गर्नुको अनुमति दिनेछन् ।

(49)-(51) आखिर यो काफिरहरूलाई के भएको छ कि यस कुरआन र त्यसमा पाइने उपदेशबाट बिमुख भइरहेछन् ? मानौ तिनीहरू सख्त भड्केका जंगली गधा हुन जो सिंघ देखेर भाग्छन् ।

(52) (53) वास्तवमा यी मुश्रिकहरू मध्ये प्रत्येक व्यक्ति चाहन्छ कि तिनीहरू समक्ष आकाशबाट खुल्ला किताब आओस् जसरी कि मुहम्मद सल्लल्लाहो अलैहे वसल्लममाथि आएको छ । तिनीहरूले ख्याल गरेको कुरा कदापि पुरा हुँदैन, बरु वास्तविक कुरो यो हो कि यिनीहरू आखिरतबाट डराउँदैनन् र पुनर्जन्म तथा बदलाको दिनलाई सत्य मान्दैनन् ।

(54)-(56) यो सत्य हो कि यो कुरआन उपदेश लिनेको लागि पर्याप्त उपदेश र शिक्षा छ, र जसले यस बाट शिक्षा प्राप्त गर्न चाहन्छ शिक्षा प्राप्त गरोस् र जसले यसको सुमार्गबाट लाभान्वित हुन चाहन्छ लाभान्वित होस् । र अल्लाहले नचाहे सम्म तिनीहरूले कुनै पनि सुमार्ग र शिक्षा प्राप्त गर्न सक्दैनन् । र अल्लाह मात्र यसको योग्य छन् कि उनी सित डराउन र उनैको आज्ञापालन गरियोस्, र उनी ईमान ल्याएका र सुकर्म गर्नेहरूको निम्ति क्षमाशील छन् ।

## सूरह अल्-कियामह् - 75

(1)-(4) अल्लाह तआला हिसाब र बदलाको दिनको कसम खाइरहेछन, साथै यस्तो मोमिन र संयमी जीवको कसम खाइरहेछन जो सुकर्म छोडे पछि र कुकर्म गरे पछि आफुलाई धिक्कार गर्छ । निस्सन्देह मानिसहरू दोबारा जिउँदो भएर उभ्नेछन् । के काफिर मान्छेले यो ठानेको छ कि उसका हाडहरू अलग भए पछि एकत्रित गर्ने छैनौं ? किन न गर्नु, हामी त त्यसलाई जम्मा गर्ने छौं बरु हामी त उसका औंलाहरूका जोर्नीहरूसमेत जम्मा गर्ने र राम्ररी दोबारा जन्म दिने सामर्थ्य राख्छौं जसरी कि मृत्यु भन्दा अघि थियो ।

(5) (6) बरु मनुष्य पुनर्जन्मलाई इन्कार गर्दै आफ्नो बाँकी बचेको उमेरमा दुष्कर्ममाथि कायम रहन चाहन्छ, यो काफिर प्रलयको घटनालाई टाढा ठानी भन्नेछः महाप्रलयको दिन कहिले आउने हो ?

(7)-(10) अनि जब आँखाहरू तिरमिराउनेछन् र महाप्रलयका भयंकर स्थितीलाई हेरे पछि धेरै डराउनेछन्, र चन्द्रमा प्रकाशहीन हुनेछ । सूर्य तथा चन्द्रमालाई प्रकाशहीन हुनमा एकत्रित गरिनेछ । तसर्थ दुबै मध्ये कसैमा पनि प्रकाश रहने छैन । त्यस समय मनुष्यले भन्नेछः अब यातनाबाट भाग्ने ठाउँ कहाँ हो ?

(11) (12) हे मनुष्य! तिमीले भाग्ने कामना गर्ने कुरा जस्तो होइन! तिम्रो लागि केही आश्रय र जोगाउने ठाउँ छैन । मात्र एक अल्लाह कहाँ नै प्रलयको दिन सम्पूर्ण प्राणीहरूकोलागि आश्रय र ठेगाना हुनेछ, र सबैलाई जो जसको योग्य हुन्छ प्रतिफल दिइनेछ ।

(13) त्यस दिन मनुष्यलाई उसका सम्पूर्ण कार्यहरूको बारेमा बताइनेछ चाहे त्यो असल कार्य होस वा खराब कार्य, जसलाई उसले आफ्नो जीवनमा अघि गरेको हो वा पछि ।

(14) (15) बरु मनुष्य आफ्नो जीउमाथि स्वयं स्पष्ट प्रमाण हो जसले उसलाई गरेको कुरालाई वा छोडेको कुरालाई अनिवार्य गर्छ । चाहे उसले आफ्नो अपराधको तर्फबाट जति पनि बहाना पेश गरोस् त्यो लाभदायक सिद्ध हुनेछैन ।

كَلَّا بَلْ تُحِبُّونَ الْعَاجِلَةَ (٢٠) وَتَذَرُونَ الْآخِرَةَ (٢١) وُجُوهٌ يَوْمَئِذٍ نَّاضِرَةٌ (٢٢)
إِلَىٰ رَبِّهَا نَاظِرَةٌ (٢٣) وَوُجُوهٌ يَوْمَئِذٍ بَاسِرَةٌ (٢٤) تَظُنُّ أَن يُفْعَلَ بِهَا فَاقِرَةٌ (٢٥)
كَلَّا إِذَا بَلَغَتِ التَّرَاقِيَ (٢٦) وَقِيلَ مَنْ ۜ رَاقٍ (٢٧) وَظَنَّ أَنَّهُ الْفِرَاقُ (٢٨) وَالْتَفَّتِ
السَّاقُ بِالسَّاقِ (٢٩) إِلَىٰ رَبِّكَ يَوْمَئِذٍ الْمَسَاقُ (٣٠) فَلَا صَدَّقَ وَلَا صَلَّىٰ
(٣١) وَلَٰكِن كَذَّبَ وَتَوَلَّىٰ (٣٢) ثُمَّ ذَهَبَ إِلَىٰ أَهْلِهِ يَتَمَطَّىٰ (٣٣) أَوْلَىٰ لَكَ
فَأَوْلَىٰ (٣٤) ثُمَّ أَوْلَىٰ لَكَ فَأَوْلَىٰ (٣٥) أَيَحْسَبُ الْإِنسَانُ أَن يُتْرَكَ سُدًى (٣٦)
أَلَمْ يَكُ نُطْفَةً مِّن مَّنِيٍّ يُمْنَىٰ (٣٧) ثُمَّ كَانَ عَلَقَةً فَخَلَقَ فَسَوَّىٰ (٣٨) فَجَعَلَ مِنْهُ
الزَّوْجَيْنِ الذَّكَرَ وَالْأُنثَىٰ (٣٩) أَلَيْسَ ذَٰلِكَ بِقَادِرٍ عَلَىٰ أَن يُحْيِيَ الْمَوْتَىٰ (٤٠)

ترتيبها ٧٦ — سُورَةُ الْإِنسَانِ — آياتها ٣١

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

هَلْ أَتَىٰ عَلَى الْإِنسَانِ حِينٌ مِّنَ الدَّهْرِ لَمْ يَكُن شَيْئًا مَّذْكُورًا (١)
إِنَّا خَلَقْنَا الْإِنسَانَ مِن نُّطْفَةٍ أَمْشَاجٍ نَّبْتَلِيهِ فَجَعَلْنَاهُ سَمِيعًا
بَصِيرًا (٢) إِنَّا هَدَيْنَاهُ السَّبِيلَ إِمَّا شَاكِرًا وَإِمَّا كَفُورًا (٣)
إِنَّا أَعْتَدْنَا لِلْكَافِرِينَ سَلَاسِلَ وَأَغْلَالًا وَسَعِيرًا (٤) إِنَّ
الْأَبْرَارَ يَشْرَبُونَ مِن كَأْسٍ كَانَ مِزَاجُهَا كَافُورًا (٥)

(16)-(19) हे दूत ! वह्य (प्रकाशना) हुँदा खेरि कुरआनसँग त्यसलाई कण्ठ गर्नको लागि आफ्नो जिब्रो न चलाऊ त्यसलाई बिर्सनको भयले । यसलाई तपाईंको छाती भित्र संकलन गराउनु मेरो कार्य हो अनि जिब्रोले जुन समय चाहनु हुन्छ पढ्न सक्नु हुन्छ । तसर्थ जब मेरा दूत जिब्रील तपाईं समक्ष पढ्छन् भने त्यसलाई चुप लागेर राम्ररी सुन्नुस् अनि उनले पढाए जस्तो पढ्नुस् । फेरि त्यसको अर्थ, विश्लेषण र समस्याहरू तपाईंलाई सम्झाउनु मेरो जिम्मेवारी हो ।

(20) (21) हे मुश्रिकहरूको टोली ! तिमीहरूले कल्पना गरेको कुरा जस्तो होइन कि पुनर्जन्म र बदला हुने छैन, बरु तिमी यस्ता समुदाय छौ जो संसार र सांसारिक सुन्दरताको मोहमा डुबेकाछौ र आखिरत र त्यसको अनुकम्पालाई त्याग्छौ ।

(22) (23) प्रलयको दिन सुकर्मीहरू र स्वभाग्यता प्राप्त गरेका अनुहार कोमल,उज्जवल र सुन्दर हुनेछन् जो आफ्नो जन्मदाता र स्वामी तर्फ हेरिरहेका हुनेछन् र त्यसबाट लाभान्वित हुनेछन् ।

(24) (25) र कुकर्मीहरू र दुर्भाग्यता प्राप्त गरेका अनुहार उदास र अप्रसन्न हुनेछन् र तिनीहरूमाथि कम्मर र पिठ्युँको हाडलाई तोड्ने ठूलो प्रकोप र कष्ट अवतरण हुनेछ भन्ने सोचिरहेका हुनेछन् ।

(26)-(30) सत्य छ, जब प्राण छातीमाथि घाँटीसम्म आइ पुग्नेछ, र उपस्थित मानिसहरू एक अर्कोसँग भन्नेछः छ कोही धामी झाक्री जो यसलाई लागेको रोगबाट निको पारोस् ? र त्यो रोगी बुझ्नेछ कि उसलाई लागेको यो रोग संसारबाट बिछोडनको रोग हो किनकि उसले मृत्युको फरिश्ता (यमदूत) लाई हेरिराखेको हुन्छ । र संसारको अन्तिम समयको यो अप्ठ्यारो र कष्ट आखिरतको पहिलो कष्टसँग मिल्यो । प्रलयको दिन दासहरू अल्लाह तिर प्रस्थान गर्नेछन्ः चाहे स्वर्ग तिर अथवा नरक तिर ।

(31)-(35) काफिरले रसूल र कुरआनमाथि ईमान ल्याएन र नत अल्लाहकै लागि नमाजका अनिवार्य कुराहरू पूरा गरेर कुरआनलाई झूठा ठाने एवं ईमानबाट बिमुखता गरे, फेरि आफ्नो चालमा घमण्ड तथा गौरव गर्दै आफ्नो परिवार सम्म पुग्यो । तिम्रो लागि सर्वनाश हो अनि सर्वनाश! अनि फेरि तिम्रो लागि सर्वनाश नै सर्वनाश हो !!

(36)-(40) के यस पुनर्जन्मलाई इन्कार गर्ने मानिसले यो ठानेको छ कि उसलाई यस्तै बेलगाम छोडिनेछ जसलाई कुनै कुराको केही आदेश दिइनेछैन नत कुनै कुराबाट रोकिनेछ र नत उसको हिसाब किताब हुनेछ र नत उसलाई सजाय पनि दिइनेछ ? के यो मानिस तुच्छ पानीको निर्बल वीर्य थिएन जसलाई आमाको गर्भमा टप्काइएको थियो, फेरि त्यो जमेको रगतको डल्लो बन्न पुग्यो, अनि अल्लाहले आफ्नो शक्तिले त्यसको अंगलाई ठीक पारी राम्रो रूपमा जन्म दिए ? र त्यस मानिसबाट पुरुष र स्त्री दुई जोडी बानए । के यी सबै कुराहरूको जन्मदाता पूज्य यस कुरामाथि सामर्थ्यवान हुनुहुन्न कि त्यसको मृत्यु पश्चात् त्यसलाई दोबारा जन्म देऊन् ? हो र, पवित्र अल्लाह यसमाथि सक्षम हुनुहुन्छ ।

## सूरह अल्-इन्सान् - 76

(1) प्राण हाल्नु भन्दा अघि मनुष्यमाथि यस्तो ठूलो युग आयो जब ऊ कुनै उल्लेखिनीय चिज थिएन र उसको केही चिन्ह पनि थिएन ।

(2) (3) हामीले मानवलाई पुरुष र स्त्रीको मिश्रित वीर्यबाट सृष्टि गऱ्यौं, ताकि पछि उसमाथि धार्मिक नियम कानून लागु गरेर परीक्षा लियौं, यसै कारणले उसलाई सुन्न र देख्न सक्ने बनायौं ताकि ऊ कुरआनका आयतहरू सुनोस् र प्रमाणहरू देखोस् । हामीले उसलाई सुमार्ग एवं कुमार्ग तथा असल र खराब दुबै बाटोको चिनारी गरायौं ताकि ऊ चाहे कृतज्ञ (मोमिन) बनोस् वा कृतध्न (काफिर) बनोस् ।

(4) हामीले काफिरहरूका लागि तिनीहरूका खुट्टालाई जकड्नलाई फलामोको जन्जीर र हातलाई घाँटी साथ बाँध्नलाई नेलहरू र पोल्नका लागि आगो तयार परेका छौं ।

(5) सत्कर्मी र शुद्ध कार्य गर्नेहरू जसले अल्लाहको हक पूरा गर्छन् प्रलयको दिन ग्लासमा यस्तो मदिरा

عَيۡنٗا يَشۡرَبُ بِهَا عِبَادُ ٱللَّهِ يُفَجِّرُونَهَا تَفۡجِيرٗا ٦ يُوفُونَ بِٱلنَّذۡرِ وَيَخَافُونَ
يَوۡمٗا كَانَ شَرُّهُۥ مُسۡتَطِيرٗا ٧ وَيُطۡعِمُونَ ٱلطَّعَامَ عَلَىٰ حُبِّهِۦ مِسۡكِينٗا
وَيَتِيمٗا وَأَسِيرًا ٨ إِنَّمَا نُطۡعِمُكُمۡ لِوَجۡهِ ٱللَّهِ لَا نُرِيدُ مِنكُمۡ جَزَآءٗ وَلَا شُكُورًا
٩ إِنَّا نَخَافُ مِن رَّبِّنَا يَوۡمًا عَبُوسٗا قَمۡطَرِيرٗا ١٠ فَوَقَىٰهُمُ ٱللَّهُ شَرَّ ذَٰلِكَ
ٱلۡيَوۡمِ وَلَقَّىٰهُمۡ نَضۡرَةٗ وَسُرُورٗا ١١ وَجَزَىٰهُم بِمَا صَبَرُواْ جَنَّةٗ وَحَرِيرٗا
١٢ مُّتَّكِـِٔينَ فِيهَا عَلَى ٱلۡأَرَآئِكِۖ لَا يَرَوۡنَ فِيهَا شَمۡسٗا وَلَا زَمۡهَرِيرٗا ١٣
وَدَانِيَةً عَلَيۡهِمۡ ظِلَٰلُهَا وَذُلِّلَتۡ قُطُوفُهَا تَذۡلِيلٗا ١٤ وَيُطَافُ عَلَيۡهِم بِـَٔانِيَةٖ
مِّن فِضَّةٖ وَأَكۡوَابٖ كَانَتۡ قَوَارِيرَا۠ ١٥ قَوَارِيرَاْ مِن فِضَّةٖ قَدَّرُوهَا تَقۡدِيرٗا ١٦
وَيُسۡقَوۡنَ فِيهَا كَأۡسٗا كَانَ مِزَاجُهَا زَنجَبِيلًا ١٧ عَيۡنٗا فِيهَا تُسَمَّىٰ سَلۡسَبِيلٗا
١٨ ۞ وَيَطُوفُ عَلَيۡهِمۡ وِلۡدَٰنٞ مُّخَلَّدُونَ إِذَا رَأَيۡتَهُمۡ حَسِبۡتَهُمۡ لُؤۡلُؤٗا مَّنثُورٗا
١٩ وَإِذَا رَأَيۡتَ ثَمَّ رَأَيۡتَ نَعِيمٗا وَمُلۡكٗا كَبِيرًا ٢٠ عَٰلِيَهُمۡ ثِيَابُ سُندُسٍ
خُضۡرٞ وَإِسۡتَبۡرَقٞۖ وَحُلُّوٓاْ أَسَاوِرَ مِن فِضَّةٖ وَسَقَىٰهُمۡ رَبُّهُمۡ شَرَابٗا
طَهُورًا ٢١ إِنَّ هَٰذَا كَانَ لَكُمۡ جَزَآءٗ وَكَانَ سَعۡيُكُم مَّشۡكُورًا ٢٢ إِنَّا
نَحۡنُ نَزَّلۡنَا عَلَيۡكَ ٱلۡقُرۡءَانَ تَنزِيلٗا ٢٣ فَٱصۡبِرۡ لِحُكۡمِ رَبِّكَ وَلَا تُطِعۡ
مِنۡهُمۡ ءَاثِمًا أَوۡ كَفُورٗا ٢٤ وَٱذۡكُرِ ٱسۡمَ رَبِّكَ بُكۡرَةٗ وَأَصِيلٗا ٢٥

(सर्बत) पिउनेछन् जसमा सुगन्घ र कपुरको पानी मिश्रण हुन्छ ।

6-10 यो सर्बत जसमा कपुर मिश्रित हुन्छ एउटा यस्तो श्रोत हुनेछ जसबाट अल्लाहका भक्तहरू पिउनेछन् र त्यसमा चाहे जस्तो कार्य गर्नेछन् र त्यसबाट शाखा जहाँ निकालेर लैजान चाहनेछन् सहजतापूर्वक निकाल्न सक्छन् । यिनी त्यस्ता व्यक्तिहरू हुन् जो संसारमा आफ्नो जीउमाथि अल्लाहको आज्ञापालन अनिवार्य गरे पछि त्यसलाई पूरा गर्छन्, प्रलयको दिनमा अल्लाहको प्रकोपबाट डराउँछन् जसको संकट ठूलो हुनेछ र जसको कष्ट मानिसमाथि चारैतिर फैलिएको हुनेछ । अँ जसमाथि अल्लाहले दया गर्छन् त्यो सुरक्षित रहनेछ । र धन भोजनको आफैं आवश्यकता र लोभ राखी पनि गरीब, रोजी आर्जन गर्नबाट बेबस र जो सांसारिक केही वस्तुको मालिक छैन भने यी सबैलाई भोजन गराउँछन् । यसै गरी अनाथलाई जससँग केही धन सम्पत्ति छैन, र युद्धका बन्दीहरूलाई चाहे त्यो मुशिरकहरू मध्ये होस वा अरू मध्ये, यी सबैलाई भोजन गराए पछि आफ्नो जीउमा भन्छन्: हामी मात्र अल्लाहको प्रसन्नता र पुण्य प्राप्त गर्ने हेतु तिमीहरू माथि उपकार गर्छौं । तिमीहरूबाट हामीलाई न केही बदला चाहियो न कुनै आभार र नत कुनै प्रशंसा । हामी त आफ्ना रबसित त्यस कठोर दिनबाट डराउँछौं जसमा अनुहारहरू बिग्रिनेछन र त्यस दिनको महा भय र डरले पोशाकहरू कटिनेछन् ।

11-14 अतःअल्लाहले उनीहरूलाई त्यस दिनको निकृष्टताबाट बचाउनेछन्, र उनीहरूको अनुहारमा सुन्दरता र प्रकाश एवं हृदयमा प्रसन्नता र खुशी प्रदान गर्नेछन् । र उनीहरूलाई सुकर्ममाथि धैर्य गर्नको सट्टामा महान स्वर्ग प्रदान गर्नेछन् जसबाट उनीहरूले चाहेको वस्तु खानेछन् र त्यसमा कोमल रेशमको कपडा लाउनेछन् । उत्तम पोशाक र अति राम्रो पर्दामा उनीहरू उच्च गद्दीमाथि सिरानीहरूमा अडेस लगाएर बसेका हुनेछन्, त्यसमा उनीहरू सूर्यको गर्मी र जाडोको चिसो हेर्ने छैनन्, र स्वर्गका रूखहरू उनीहरूमाथि छाया गर्दै उनीहरूसित नजीकै हुनेछन् र त्यसका फल टिप्न एकदमै सजिलो हुनेछ ।

15-18 र उनीहरू समक्ष नोकरहरू चाँदीका भाँडाहरूमा खाना र शीशाका कचौराहरूमा पिउने वस्तु बारम्बार लिएर आउँनेछन्, र त्यो शीशा चाँदीका हुनेछन जसलाई पिलाउने नोकरहरू पिउने व्यक्तिको इच्छा बमोजिम भरेका हुनेछन् न त्यस भन्दा बढी न त कम । र यी सत्कर्मीहरूलाई स्वर्गमा गिलास भरी यस्तो मदिरा (सर्बत) पिलाउनेछन् जसमा अदुवाको मिश्रण हुनेछ । यिनीहरू सलसबील नामक मूलबाट स्वर्गमा पिउनेछन्,यो नाम यसलाई सुरिक्षत राख्नकोलागि र राम्रो एवं तुरुन्तै बच्नको कारणले राखिएको छ।

19 यी सत्कर्मीहरूको सेवाका लागि यस्ता बालकहरू ओहोर दोहोर गरिरहेका हुनेछन् जो सदा बालक नै रहनेछन्, तिमीले उनीहरूको सुन्दरता, सफा रंग तथा अनुहारको चमकलाई हेरेर उनीहरूलाई छरिएका चम्किलो मोती ठान्नेछौ ।

20 स्वर्गमा जता तिर हेर त्यहाँ तिमी अनुग्रह हेर्नेछौ जसको गुणको वर्णन गर्नु सम्भव छैन र ठूलो तथा व्यापक राज्य हेर्नेछौ जसको कतै अन्त छैन ।

21 उनीहरूमाथि उनीहरूका शरीरलाई सुन्दर बनाउनको लागि पातलो र हरियो रेशमका वस्त्रहरू हुनेछन् जसको प्रत्यक्ष भागमा मोटो रेशम लागनेछ । र उनीहरूलाई गहना मध्ये चाँदीका कंगनहरू पहिराइनेछन्, र यी सबै अनुग्रह लगायत उनीहरूका रबले उनीहरूलाई यस्तो सर्बत पिलाउनेछन् जसमा न केही मैला हुनेछ र न त केही फोहोर ।

22 उनीहरूसित भनिनेछन: यो प्रतिदान तिम्रा सुकर्महरूको बदलामा तयार पारिएकाछन, र तिमीले संसारमा गरेका कर्महरू अल्लाह समक्ष राम्रा र स्वीकार्य थिए ।

23 हे रसूल! हामीले नै तपाईंमाथि यो कुरआन थोरै थोरै गर्दै अवतरित गरेका छौं ताकि तपाईं मानिसहरूलाई यसमा पाइने वाचा, सजाय, पूण्य र प्रकोपबाट सचेत गर्नुहोस् ।

(24) (25) र तपाईं आफ्नो पालनकर्ताको नियम विधान अनुसार दिएको आदेशमाथि धैर्य गरेर त्यसलाई स्वीकार गर्नुस, र उनले दिएको धार्मिक आदेशलाई पूरा गर्ने गर्नुस, र मुश्रिकहरू जो कि कामवासनामा डुबेका छन् वा कुफ्र र पथभ्रष्टतामा सीमा नाघेका छन त्यसको आज्ञापालन न गर्नुस् । र आफ्ना रबको नाम दिनको पहिलो र अन्तिम भागमा स्मरण गर्ने गर्नुस् र यी दुबै समयमा उनीलाई पुकार्ने पनि गर्नुस् ।
(26) र रात्रीमा तपाईं आफ्नो पालनकर्ताको अगाडि झुक्नुस् (सज्दा गर्नुस्) र उनैको लागि नमाज पढनुस् र लामो समय सम्म उनको महिमागान गर्नुस् ।
(27) निस्सन्देह यी मुश्रिकहरू संसारलाई माया गर्छन् र त्यसैमा नै लीन रहन्छन् र आखिरतका लागि सुकर्म गर्नुलाई आफ्नो पिठ्यूँ पछाडि हाल्नेछन्, किनभने यसैमा तिनीहरूको लागि प्रलयको संकट बाट मुक्ति छ ।
(28) हामीले नै यिनीहरूलाई सृष्टि गरेका छौं र यिनीहरूको सृष्टिलाई ठोस बनाएका छौं, र हामीले जहिले चाहन्छौं यिनीहरूलाई सर्वनाश गरी अरू समुदायलाई यिनीहरूको स्थानमा लिएर आउन सक्छौं जो आफ्ना रबका आदेशापालन गर्नेछन् ।
(29)-(31) यो सूरह सम्पूर्ण संसारवासीका लागि उपदेश हो, जुन व्यक्ति आफ्नो जीउको लागि लोक परलोकमा स्वभाग्ता र भलाई चाहन्छ उसले ईमान र ईश्भयलाई अल्लाहको क्षमा र प्रसन्नता सम्म पुऱ्याउने बाटो बनाउनेछ । र समस्याहरू मध्ये कुनै समस्या अल्लाहले नियुक्त गरेको भाग्य र उनको चाहना बिना तिमीहरूले चाहेकोमा हुने छैन । निस्सन्देह अल्लाह आफ्ना प्राणीहरूका अवस्थालाई राम्ररी जान्नेवाला छन् र प्राणीहरूको लागि प्रबन्ध र योजना गर्नमा तत्त्वदर्शी छन् । आफ्ना दासहरू मध्ये जसलाई चाहन्छन् आफ्नो दया र प्रसन्नतामा प्रवेश गराउँछन र यी दासहरू मोमिन हुन,र अल्लाहका सीमा पार गर्ने अत्याचारीहरूको लागि पीडादायी यातना तयार गरेका छन् ।

## सूरह अल्-मुर्सलात् - 77

(1)-(7) अल्लाह हावाको कसम खोइरहेछन् जो लगातार र एक पछि अर्को नम्रतापूवक चल्छे, र तेजगतिमा सर्वनाश गर्ने चल्ने हावाको कसम, र ती फरिश्ताहरूको कसम जसले बादलहरूलाई अल्लाहको चाहना अनुसार उडाउँछन्, र ती फरिश्ताहरूको कसम जुन अल्लाहकहाँ बाट अवतरण भई सत्य र असत्य बीच एवं वैध र अवैध बीच फरक पार्छन्, र ती फरिश्ताहरूको कसम जुन अल्लाहको तर्फबाट वह्य (प्रकाशना) लिएर उनका दूतहरूमाथि अवतरण हुन्छन्, अभियोग निवारण गर्न वा चेतावनीको रूपमा, ताकि कसैको लागि केही प्रमाण र बहाना बाँकी न रहोस् । प्रलयको दिनको बारेमा र त्यसमा पाइने हिसाब र

وَمِنَ ٱلَّيْلِ فَٱسْجُدْ لَهُۥ وَسَبِّحْهُ لَيْلًا طَوِيلًا ﴿٢٦﴾ إِنَّ هَٰٓؤُلَآءِ يُحِبُّونَ ٱلْعَاجِلَةَ وَيَذَرُونَ وَرَآءَهُمْ يَوْمًا ثَقِيلًا ﴿٢٧﴾ نَّحْنُ خَلَقْنَٰهُمْ وَشَدَدْنَآ أَسْرَهُمْ ۖ وَإِذَا شِئْنَا بَدَّلْنَآ أَمْثَٰلَهُمْ تَبْدِيلًا ﴿٢٨﴾ إِنَّ هَٰذِهِۦ تَذْكِرَةٌ ۖ فَمَن شَآءَ ٱتَّخَذَ إِلَىٰ رَبِّهِۦ سَبِيلًا ﴿٢٩﴾ وَمَا تَشَآءُونَ إِلَّآ أَن يَشَآءَ ٱللَّهُ ۚ إِنَّ ٱللَّهَ كَانَ عَلِيمًا حَكِيمًا ﴿٣٠﴾ يُدْخِلُ مَن يَشَآءُ فِى رَحْمَتِهِۦ ۚ وَٱلظَّٰلِمِينَ أَعَدَّ لَهُمْ عَذَابًا أَلِيمًۢا ﴿٣١﴾

ترتيبها ٧٧ — سُورَةُ المُرۡسَلَاتِ — آياتها ٥٠

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

وَٱلْمُرْسَلَٰتِ عُرْفًا ﴿١﴾ فَٱلْعَٰصِفَٰتِ عَصْفًا ﴿٢﴾ وَٱلنَّٰشِرَٰتِ نَشْرًا ﴿٣﴾ فَٱلْفَٰرِقَٰتِ فَرْقًا ﴿٤﴾ فَٱلْمُلْقِيَٰتِ ذِكْرًا ﴿٥﴾ عُذْرًا أَوْ نُذْرًا ﴿٦﴾ إِنَّمَا تُوعَدُونَ لَوَٰقِعٌ ﴿٧﴾ فَإِذَا ٱلنُّجُومُ طُمِسَتْ ﴿٨﴾ وَإِذَا ٱلسَّمَآءُ فُرِجَتْ ﴿٩﴾ وَإِذَا ٱلْجِبَالُ نُسِفَتْ ﴿١٠﴾ وَإِذَا ٱلرُّسُلُ أُقِّتَتْ ﴿١١﴾ لِأَىِّ يَوْمٍ أُجِّلَتْ ﴿١٢﴾ لِيَوْمِ ٱلْفَصْلِ ﴿١٣﴾ وَمَآ أَدْرَىٰكَ مَا يَوْمُ ٱلْفَصْلِ ﴿١٤﴾ وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿١٥﴾ أَلَمْ نُهْلِكِ ٱلْأَوَّلِينَ ﴿١٦﴾ ثُمَّ نُتْبِعُهُمُ ٱلْآخِرِينَ ﴿١٧﴾ كَذَٰلِكَ نَفْعَلُ بِٱلْمُجْرِمِينَ ﴿١٨﴾ وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿١٩﴾

बदला सम्बन्धमा जुन तिमीहरूसँग वाचा गरिएको छ भने त्यो अवश्य नै हुनेछ ।
(8)-(15) जब ताराहरू प्रकाशहीन भई त्यसको प्रकाश समाप्त हुनेछ, र आकाश च्यातिनेछ, र पहाडहरू हावाले उडाएको धुला जस्तो उडनेछन्, र जब रसूलहरू र उनका अनुयायीहरू बीच निधो गर्ने समय आइ पुग्छ । भनिनेछः कुन ठूलो दिनकोलागि रसूलहरूलाई रोकेर राखिएका थिए, प्राणीहरू बीच निधो र निर्णय हुने दिनकोलागि रोकेर राखिएको थियो । र हे मनाव! तिमीलाई के थाहा! कि त्यो निर्णयको दिन र त्यसको कठोरता तथा डर के हो ? त्यो वाचा गरिएको दिनलाई झूठा ठान्नेहरूको लागि त्यस दिनमा ठूलो सर्वनाश हुन्छ ।
(16)-(18) के हामीले अतीतका अनुयायीहरूलाई विनाश गरेनौं । तिनीहरूले आफ्ना दूत नूह, आद र समूदलाई झूठा ठान्नको कारणले । फेरि तिनीहरू झैं पछि आएर झूठा ठान्ने र अवज्ञा गर्नेहरूलाई पनि विनाश गरिदियौं । र यही ठूलो विनाश हामी मक्काका काफिरहरू मध्ये अपराधीहरूसँग गर्नेछौं जसले रसूल मुहम्मदलाई झूठा ठान्छन् ।
(19) अल्लाहलाई एक सत्य पूज्य न मान्नेको लागि र दूतत्व तथा पुनर्जन्म एवं हिसाब किताबलाई झूठा ठहर गर्नेहरूको लागि प्रलयको दिन सर्वनाश र ठूलो यातना हुनेछ ।

أَلَمْ نَخْلُقكُّم مِّن مَّآءٍ مَّهِينٍ ﴿٢٠﴾ فَجَعَلْنَٰهُ فِي قَرَارٍ مَّكِينٍ ﴿٢١﴾ إِلَىٰ قَدَرٍ
مَّعْلُومٍ ﴿٢٢﴾ فَقَدَرْنَا فَنِعْمَ ٱلْقَٰدِرُونَ ﴿٢٣﴾ وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿٢٤﴾
أَلَمْ نَجْعَلِ ٱلْأَرْضَ كِفَاتًا ﴿٢٥﴾ أَحْيَآءً وَأَمْوَٰتًا ﴿٢٦﴾ وَجَعَلْنَا فِيهَا رَوَٰسِيَ
شَٰمِخَٰتٍ وَأَسْقَيْنَٰكُم مَّآءً فُرَاتًا ﴿٢٧﴾ وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿٢٨﴾
ٱنطَلِقُوٓا۟ إِلَىٰ مَا كُنتُم بِهِۦ تُكَذِّبُونَ ﴿٢٩﴾ ٱنطَلِقُوٓا۟ إِلَىٰ ظِلٍّ ذِي ثَلَٰثِ
شُعَبٍ ﴿٣٠﴾ لَّا ظَلِيلٍ وَلَا يُغْنِي مِنَ ٱللَّهَبِ ﴿٣١﴾ إِنَّهَا تَرْمِي بِشَرَرٍ
كَٱلْقَصْرِ ﴿٣٢﴾ كَأَنَّهُۥ جِمَٰلَتٌ صُفْرٌ ﴿٣٣﴾ وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿٣٤﴾
هَٰذَا يَوْمُ لَا يَنطِقُونَ ﴿٣٥﴾ وَلَا يُؤْذَنُ لَهُمْ فَيَعْتَذِرُونَ ﴿٣٦﴾ وَيْلٌ يَوْمَئِذٍ
لِّلْمُكَذِّبِينَ ﴿٣٧﴾ هَٰذَا يَوْمُ ٱلْفَصْلِ جَمَعْنَٰكُمْ وَٱلْأَوَّلِينَ ﴿٣٨﴾ فَإِن كَانَ
لَكُمْ كَيْدٌ فَكِيدُونِ ﴿٣٩﴾ وَيْلٌ يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿٤٠﴾ إِنَّ ٱلْمُتَّقِينَ فِي
ظِلَٰلٍ وَعُيُونٍ ﴿٤١﴾ وَفَوَٰكِهَ مِمَّا يَشْتَهُونَ ﴿٤٢﴾ كُلُوا۟ وَٱشْرَبُوا۟ هَنِيٓـًٔا
بِمَا كُنتُمْ تَعْمَلُونَ ﴿٤٣﴾ إِنَّا كَذَٰلِكَ نَجْزِي ٱلْمُحْسِنِينَ ﴿٤٤﴾ وَيْلٌ يَوْمَئِذٍ
لِّلْمُكَذِّبِينَ ﴿٤٥﴾ كُلُوا۟ وَتَمَتَّعُوا۟ قَلِيلًا إِنَّكُم مُّجْرِمُونَ ﴿٤٦﴾ وَيْلٌ يَوْمَئِذٍ
لِّلْمُكَذِّبِينَ ﴿٤٧﴾ وَإِذَا قِيلَ لَهُمُ ٱرْكَعُوا۟ لَا يَرْكَعُونَ ﴿٤٨﴾ وَيْلٌ
يَوْمَئِذٍ لِّلْمُكَذِّبِينَ ﴿٤٩﴾ فَبِأَيِّ حَدِيثٍ بَعْدَهُۥ يُؤْمِنُونَ ﴿٥٠﴾

(20)-(23) हे काफिरहरूका समूह! के हामीले तिमीहरूलाई तुच्छ र निर्बल पानी वीर्यबाट सृष्टि गरेनौं? त्यस पानीलाई हामीले एउटा निर्धारित र हामी निर थाहा भएको समयसम्म सुरक्षित ठाउँ आमाको गर्भमा राख्यौं, अनि त्यसलाई जन्म दिन, त्यसको रूप बनाउन एवं त्यसलाई संसारमा निकाल्नलाई हामी सामर्थ्यवान छौं, अतः हेर हामी कति राम्रो सामर्थ्यवान छौं ।

(24) हाम्रो सामर्थ्य र शक्तिलाई मिथ्या ठहर गर्नेहरूकोलागि प्रलय हुने दिन सर्वनाश र कठोर यातना छ ।

(25)-(27) के हामीले यस धरतीलाई बनाएनौ जसमा तिमीहरू जीवन व्यतीत गर्छौ र जसको पिठ्युँमाथि गणणा गर्न न सक्ने जिउँदो बस्छन् र त्यसै भित्र असंख्य मृत रहन्छन । र धरतीमा उच्च तथा स्थिर पहाडहरू स्थापना गर्‍यौं ताकि तिमीहरू स्थिर रहौ र तिमीहरूलाई मीठो र सजिलो तवरले पच्ने पानी पिउनदियौं ।

(28) यी अनुकम्पा र अनुग्रहहरूलाई झूठा ठहर गर्नेहरूका लागि प्रलयको दिन सर्वनाश र बरबादी छ ।

(29)-(33) प्रलयको दिन काफिरहरूसँग भनिनेछः हिंड नरकको यातनातिर जसलाई तिमीहरू संसारमा मिथ्या ठहर गर्ने गर्थ्यौ, हिंड अनि नरकको छायाँ प्राप्त गर जसका तीनवटा शाखाहरू छन, त्यस दिनको गर्मीबाट त्यो छायाँ छायाँ दिन सक्दैन र नरकको आगोलाई टार्न सक्दैन । निस्सन्देह नरक यस्ता ठूल-ठूला ज्वालाहरू फयाक्नेछ जस मध्ये प्रत्येक ज्वाला ठूलो, उच्च र बलियो भवन जस्तो हुनेछ । मानौ नरकबाट उड्ने ज्वालाहरू कालो ऊँट जस्ता छन् जसको रंग पहेलो हुन्छ ।

(34) अल्लाहका यी यातनाहरूलाई झूठा ठान्नेहरूकोलागि प्रलयको दिनमा सर्वनाश र ठूलो यातना नियुक्त छ।

(35) (36) यो प्रलयको दिन हो जसमा झूठाहरू आफुलाई लाभ पुर्‍याउने कुराकानीसमेत गर्नेछैनन्, र उजुरी गर्नको पनि उनीहरूलाई अनुमति हुनेछैन, किनकि उनीहरूको लागि केही उजुरी र बहाना नै हुने छैन ।

(37) त्यस दिन र त्यस दिनमा हुने घटनाहरूलाई झूठा ठहर गर्नेहरूको लागि प्रलयको दिन ठूलो यातना र सर्वनाश छ ।

(38) (39) यो यस्तो दिन हो जसमा अल्लाह प्राणीहरू बीच निर्णय गर्नेछन् र सत्यलाई मिथ्याबाट फरक पार्नेछन, यसै दिनमा हे यस अनुयायीका काफिरहरू! तिमीहरूलाई अतीतका काफिरहरूसँग एकत्रित गर्नेछौं, यदि तिमीहरूसँग यातनाबाट बच्नको लागि केही बहाना छ भने गरिहाल र अल्लाहको पकड तथा बदलाबाट आफुलाई जोगाऊ ।

(40) प्रलयको दिनलाई झूठा ठहर गर्नेहरूको लागि प्रलयको दिन बरबादी र सर्वनाश छ ।

(41)-(45) जो व्यक्तिहरू संसारमा आफ्ना पालनकर्तासित डराउँछन, र उनका आदेशापालन गर्दै तथा उनले मनाही गरेका कुराहरूबाट बंचित बस्दै उनको यातनाबाट भय गर्छन, यिनीहरू नै प्रलयको दिन रूखहरूका फराकिलो छायाँमा र बग्दै पानीका श्रोतहरूमा रहनेछन, र मनपराउने फलहरूबीच रही अनुग्रहहरूबाट लाभान्वित हुनेछन । यिनीहरूसँग भनिनेछः स्वादिस्ट खाना खा र राम्रो पानी पिऊ ती सुकर्महरूको प्रतिदानस्वरूप जुन तिमीहरूले संसारमा अघि गर्ने गर्थ्यौ । हामी यो ठूलो प्रतिदान झैं आफ्ना सुकर्मीहरू र आज्ञाकारीहरूलाई दिन्छौं । एवं यो हिसाब र बदला र त्यसमा पाइने अनुग्रह तथा यातनालाई झूठल्याउनेहरूको लागि प्रलयको दिन ठूलो कष्ट र बरबादी छ ।

(46) फेरि अल्लाह काफिरहरूलाई धमकी दिँदै भन्नुहुन्छः सांसारिक मज्जाबाट खा र मोजमस्ती गर, र केही दिनको लागि यसको समाप्त हुने कामवासनाबाट लाभ प्राप्त गर, वास्तवमा तिमीहरू नै अल्लाहसँग अरूलाई साझी बनाएर अपराधी भएका छौ ।

(47) हिसाब र बदलालाई झूठा मान्नेहरूको लागि प्रलयको दिन ठूलो यातना र सर्वनाश छ ।

(48) ४८) र जब यी मुशिरकहरूसँग भनिनेछः कि अल्लाहकै लागि नमाज पढ, र उनैको लागि झुक, त यिनीहरू नत झुक्छन र नत नमाज पढ्छन बरु आफ्नो घमण्डमाथि अडिग रहन्छन ।

(49) (50) अल्लाहका आयतहरूलाई झूठा ठान्नेहरूको लागि ठूलो यातना र सर्वनाश छ प्रलयको दिन ।

यदि यस कुरआनमाथि ईमान ल्याउँदैनन भने यस पछि अरू कुन यस्तो किबात वा वाणी हुनसक्छ जसमाथि यिनीहरू ईमान ल्याउँनेछन ? जबकि यो कुरआन प्रत्येक कुरालाई वर्णन गर्नेवाला,आफ्नो आदेश,नियम विधान र सूचना दिनुमा प्रष्ट छ, र आफ्नो शब्द तथा अर्थहरूमा चमत्कारी छ ।

## सूरह अन्-नबा - 78

(1)-(3) कुरैशका काफिरहरू एक अर्कासँग कुन कुराको बारेमा सोधपूछ गर्दैछन् ? ठूलो शान हुने खबरको विषयमा सोधपूछ गर्दछन्,त्यो कुरआन हो जो पुनर्जन्मको खबर दिन्छ जसमा कूरैशका काफिरहरू शंका गरेर झूठा ठहर गर्छन् ।

(4) (5) यी मुश्रिकहरूले विचार गरे झैं कुरा छैन, चाँडै नै यी मुश्रिकहरू आफ्नो झूठको दुषपरिणाम थाहा पाउनेछन, र अल्लाहले यिनीहरूको लागि प्रलयको दिन के तयार पारेर राखेकाछन प्रष्ट भइहाल्छ । फेरि चाँडै यिनीहरूलाई विश्वास हुनेछ र मुहम्मद ससल्लल्लाहो अलै वसल्लमले ल्याएको कुराको सत्यताको बारे पनि विश्वास भइहाल्छ, र त्यो कुरआन तथा पुनर्जन्मको कुरा हो । यो यिनीहरूको लागि अल्लाहको तर्फबाट डाँट र धिक्कार छ ।

(6) के हामीले धरतीलाई बिछ्यौना जस्तो बनाएनौं ?

(7) र पर्वतहरूलाई चुकुल ताकि धरती तिमीहरूलाई हल्लाएन ?

(8) र हामीले तिमीहरूलाई पुरुष र स्त्रीमा जोडा-जोडा सृष्टि गऱ्यौं ?

(9) र हामीले तिम्रो निद्रालाई तिम्रा शरीरका लागि आरामदायी बनायौं, त्यसमा तिमीहरू विश्राम गरेर आराम प्राप्त गर्छौ ?

(10) र हामीले रात्रीलाई पर्दा बनायौं कि त्यसको अन्ध्यारोले तिमीलाई ढाकी लिन्छ जसरी कि कपडा लगाउनेलाई कपडा छोपी लिन्छ ?

(11) र दिनलाई हामीले जीविकाको लागि बनायौं त्यसमा तिमी फैलेर आफ्नो आजीविका खोजी गर, र आफ्नो लाभको कुरालाई प्राप्त गर्नुको लागि प्रयास गर ?

(12) र तिमीहरूमाथि हामीले सातवटा बलियो, सुदृढ र ठोस आकाशहरू बनायौं जसमा नत केही प्वाल छ र नत केही कमी ?

(13) र हामीले सूर्यलाई अत्यन्त ज्योतिमय र उष्ण दीपक बनायौं ?

(14)-(16) र हामीले पानीबाट परिपूर्ण बादलहरूबाट अविरल पानी बर्सायौं, ताकि त्यस द्वारा हामी मनुष्यको लागि अनाज र जनावरहरूको लागि घाँस उमारौं, र सघन बगैंचाहरू जसका हाँगाहरू एक अर्का सँग मिलेको हुनेछ ।

سُورَةُ النَّبَإِ

آياتها ٤٠ — ترتيبها ٧٨

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

عَمَّ يَتَسَاءَلُونَ ﴿١﴾ عَنِ النَّبَإِ الْعَظِيمِ ﴿٢﴾ الَّذِي هُمْ فِيهِ مُخْتَلِفُونَ ﴿٣﴾ كَلَّا سَيَعْلَمُونَ ﴿٤﴾ ثُمَّ كَلَّا سَيَعْلَمُونَ ﴿٥﴾ أَلَمْ نَجْعَلِ الْأَرْضَ مِهَادًا ﴿٦﴾ وَالْجِبَالَ أَوْتَادًا ﴿٧﴾ وَخَلَقْنَاكُمْ أَزْوَاجًا ﴿٨﴾ وَجَعَلْنَا نَوْمَكُمْ سُبَاتًا ﴿٩﴾ وَجَعَلْنَا اللَّيْلَ لِبَاسًا ﴿١٠﴾ وَجَعَلْنَا النَّهَارَ مَعَاشًا ﴿١١﴾ وَبَنَيْنَا فَوْقَكُمْ سَبْعًا شِدَادًا ﴿١٢﴾ وَجَعَلْنَا سِرَاجًا وَهَّاجًا ﴿١٣﴾ وَأَنزَلْنَا مِنَ الْمُعْصِرَاتِ مَاءً ثَجَّاجًا ﴿١٤﴾ لِّنُخْرِجَ بِهِ حَبًّا وَنَبَاتًا ﴿١٥﴾ وَجَنَّاتٍ أَلْفَافًا ﴿١٦﴾ إِنَّ يَوْمَ الْفَصْلِ كَانَ مِيقَاتًا ﴿١٧﴾ يَوْمَ يُنفَخُ فِي الصُّورِ فَتَأْتُونَ أَفْوَاجًا ﴿١٨﴾ وَفُتِحَتِ السَّمَاءُ فَكَانَتْ أَبْوَابًا ﴿١٩﴾ وَسُيِّرَتِ الْجِبَالُ فَكَانَتْ سَرَابًا ﴿٢٠﴾ إِنَّ جَهَنَّمَ كَانَتْ مِرْصَادًا ﴿٢١﴾ لِّلطَّاغِينَ مَآبًا ﴿٢٢﴾ لَّابِثِينَ فِيهَا أَحْقَابًا ﴿٢٣﴾ لَّا يَذُوقُونَ فِيهَا بَرْدًا وَلَا شَرَابًا ﴿٢٤﴾ إِلَّا حَمِيمًا وَغَسَّاقًا ﴿٢٥﴾ جَزَاءً وِفَاقًا ﴿٢٦﴾ إِنَّهُمْ كَانُوا لَا يَرْجُونَ حِسَابًا ﴿٢٧﴾ وَكَذَّبُوا بِآيَاتِنَا كِذَّابًا ﴿٢٨﴾ وَكُلَّ شَيْءٍ أَحْصَيْنَاهُ كِتَابًا ﴿٢٩﴾ فَذُوقُوا فَلَن نَّزِيدَكُمْ إِلَّا عَذَابًا ﴿٣٠﴾

(17) (18) निस्सन्देह प्रलयको दिन नै प्राणीहरूबीच निर्णयको दिन हो जुन पहिला र अन्तिम सबै मानिसहरूको लागि निर्धारित गरिएको समयसीमा हो । जस दिन नरसिंहा (सूर अर्थात कर्कशध्वनी निस्केन औजार) मा पुनर्जन्मको सूचना दिनको लागि फरिश्ता फूक हान्नेछन् त्यस पछि तिमीहरू हुलका हुल आउनेछौ, प्रत्येक समूह आफ्नो अगुवासँग हुनेछ ।

(19) र आकाश खोलिनेछ र त्यो फरिश्ताहरूको अवतरण हुनको लागि धेरै ढोकावाला भइहाल्छ ।

(20) र पहाडहरूलाई स्थापित गरे पछि उखेलिनेछन र ती पहाडहरू मृगतृष्णा झैं हुन पुग्नेछन् ।

(21)-(26) निस्सन्देह त्यस दिन नरक काफिरहरूका लागि ताकमा बसेको हुन्छ जसलाई यिनीहरूको निम्ति नै तयार परिएको छ र जुन काफिरहरूको फर्किने ठाउँ छ, जसमा तिनीहरू एक युग बितेर अर्को युग आउने छ र न समाप्त हुने युगौंसम्म रहनेछन् । नत तिनीहरू त्यसमा शीतलताको केही स्वाद चाख्नेछन जसबाट नरकको गर्मीलाई चिसो गरुन् र नत तिनीहरूले तिर्खा बुझाउने पेय नै पिउनेछन । मात्र उम्लँदो ताँतो पानी र

إِنَّ لِلْمُتَّقِينَ مَفَازًا ﴿٣١﴾ حَدَآئِقَ وَأَعْنَٰبًا ﴿٣٢﴾ وَكَوَاعِبَ أَتْرَابًا ﴿٣٣﴾ وَكَأْسًا
دِهَاقًا ﴿٣٤﴾ لَّا يَسْمَعُونَ فِيهَا لَغْوًا وَلَا كِذَّٰبًا ﴿٣٥﴾ جَزَآءً مِّن رَّبِّكَ عَطَآءً
حِسَابًا ﴿٣٦﴾ رَّبِّ ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضِ وَمَا بَيْنَهُمَا ٱلرَّحْمَٰنِ لَا يَمْلِكُونَ
مِنْهُ خِطَابًا ﴿٣٧﴾ يَوْمَ يَقُومُ ٱلرُّوحُ وَٱلْمَلَٰٓئِكَةُ صَفًّا لَّا يَتَكَلَّمُونَ
إِلَّا مَنْ أَذِنَ لَهُ ٱلرَّحْمَٰنُ وَقَالَ صَوَابًا ﴿٣٨﴾ ذَٰلِكَ ٱلْيَوْمُ ٱلْحَقُّ فَمَن
شَآءَ ٱتَّخَذَ إِلَىٰ رَبِّهِۦ مَـَٔابًا ﴿٣٩﴾ إِنَّآ أَنذَرْنَٰكُمْ عَذَابًا قَرِيبًا يَوْمَ
يَنظُرُ ٱلْمَرْءُ مَا قَدَّمَتْ يَدَاهُ وَيَقُولُ ٱلْكَافِرُ يَٰلَيْتَنِى كُنتُ تُرَٰبًۢا ﴿٤٠﴾

ترتيبها ٧٩ — سُورَةُ النَّازِعَاتِ — آياتها ٤٦

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَٰنِ ٱلرَّحِيمِ

وَٱلنَّٰزِعَٰتِ غَرْقًا ﴿١﴾ وَٱلنَّٰشِطَٰتِ نَشْطًا ﴿٢﴾ وَٱلسَّٰبِحَٰتِ سَبْحًا
﴿٣﴾ فَٱلسَّٰبِقَٰتِ سَبْقًا ﴿٤﴾ فَٱلْمُدَبِّرَٰتِ أَمْرًا ﴿٥﴾ يَوْمَ تَرْجُفُ ٱلرَّاجِفَةُ
﴿٦﴾ تَتْبَعُهَا ٱلرَّادِفَةُ ﴿٧﴾ قُلُوبٌ يَوْمَئِذٍ وَاجِفَةٌ ﴿٨﴾ أَبْصَٰرُهَا
خَٰشِعَةٌ ﴿٩﴾ يَقُولُونَ أَءِنَّا لَمَرْدُودُونَ فِى ٱلْحَافِرَةِ ﴿١٠﴾ أَءِذَا كُنَّا
عِظَٰمًا نَّخِرَةً ﴿١١﴾ قَالُوا۟ تِلْكَ إِذًا كَرَّةٌ خَاسِرَةٌ ﴿١٢﴾ فَإِنَّمَا هِىَ زَجْرَةٌ
وَٰحِدَةٌ ﴿١٣﴾ فَإِذَا هُم بِٱلسَّاهِرَةِ ﴿١٤﴾ هَلْ أَتَىٰكَ حَدِيثُ مُوسَىٰٓ ﴿١٥﴾

नरकवासीहरूको रगत पीप पिउनेछन् । तिनीहरूले संसारमा गरिराखेका कुकर्महरूको बराबर यो निसाफमाथि आधारित पूर्ण बदला हो ।

(27)-(30) तिनीहरू हिसाबको दिन (प्रलय) बाट न डराई त्यसको लागि सुकर्म गर्दैनथे, र रसूलहरूले ल्याएका कुराहरूलाई मात्र झूठा ठान्दथे । र हामीले जानेका र लेखेका सम्पूर्ण कुराहरू लोहे महफूफ भन्ने किताबमा सुरिक्षत छ । त हे काफिरहरू! तिमीहरू आफ्ना कर्तुतको बदला चाख, हामी त तिमीहरूको यातनामा अभिवृद्धि नै अभिवृद्धि गर्दै जानेछौं ।

(31)-(35) निस्सन्देह जुन व्यक्तिहरू आफ्नो पालनकर्तासित डराउँछन र सुकर्म पनि गर्छन् यिनीहरू स्वर्गमा प्रवेश गरेर ठूलो सफला प्राप्त गर्नेछन्, यिनीहरूको लागि ठूला बगैंचाहरू र अंगुरहरू छन्, र यसै गरी यिनीहरूका लागि नया उमेरका पत्नीहरू छन जुन कि कुमारी र सम-वयस्क हुनेछन । यिनीहरूको लागि मदिरा (सर्बत) ले भरिएको ग्लास हुनेछन् । यिनीहरूले स्वर्गमा कुनै मिथ्या कुरा सुन्ने छैनन र नत एक अर्को सँग झूठ कुरा गर्नेछन् ।

(36)-(39) यो अल्लाहको तर्फबाट तिनीहरूको लागि प्रतिदान, उपकार र पर्याप्त तथा ठूलो वरदान छ, जो आकाशहरू र धरती तथा दुबै बीचका चिजहरूका प्रभु हुन्, र लोक परलोकका लागि अत्यन्त करुणामय छन्, बिना अनुमति कोही उनीसित सोध्नको साहस गर्दैन । जुन दिन जिब्रील र अरू फरिश्ताहरू पंक्तिबद्ध भई खडा हुनेछन, रहमान (करुणामय अल्लाह) को अनुमति बिना फरिश्ताहरू कसैको लागि सिफारिश गर्दैनन्, र बोल्नेले सत्य नै बोल्नेछ । त्यो सत्य दिन हो जसको घटित हुनमा केही शंका छैन, अतः जसले त्यस दिनको भय र त्रासबाट मुक्ति चाहन्छ भने ऊ सुकर्म गरेर आफ्नो रबकहाँ बासस्थान बनाओस् ।

(40) हामीले तिमीहरूलाई परलोकको चाँडै आउने यातनाबाट सचेत गराएका थियौं जसमा प्रत्येक व्यक्तिले गरेको सुकर्म र आर्जन गरेको कुकर्म हेरिहाल्नेछ । र काफिर हिसाबको सख्ती र त्रासलाई हेरेर भन्छः हाय ! म माटो नै हुन्थें ताकि दोबारा जन्म लिनबाट बंचित हुन्थें ।

## सूरह अन्-नाजिआत - 79

(1)-(7) अल्लाह ती फरिश्ताहरूको कसम खान्छन् जो काफिरहरूको प्राण कठोर रूपमा लुछ्दछन्, र ती फरिश्ताहरूको कसम जो मोमिनहरूको प्राण सरलतापूर्वक र नम्रतासँग निकाल्दछन्, र ती फरिश्ताहरूको कसम जो आकाशबाट झर्दा र चढ्दा अल्लाहको पवित्रताको वर्णन गर्दछन् । अनि ती फरिश्ताहरूको कसम जो अल्लाहको आज्ञापालनमा अग्रसर रही चाँडै गर्छन्, अनि ती फरिश्ताहरूको कसम जसतिर संसारका मामलाहरूमध्ये जसको परिचालन गर्न सुम्पिन्छ आफ्नो स्वामीको आदेशानुसार त्यसलाई पूरा गर्दछन् । (प्राणीहरू (मनुष्य) को लागि आफ्नो जन्मदाता बाहेक अरूको कसम लिनु जायज छैन,यदि यस्तो गर्छन् भने शिर्क गर्छन्) । अवश्य नै प्राणीहरूलाई दोबारा जन्म दिएर तिन सँग हिसाब लिइनेछ । जुन दिन पहिलो फूकले धरती काम्नेछ र त्यो सबैलाई मार्ने फूक हुनेछ । त्यस पछि अर्को फूक हुनेछ जो सबैलाई जिवित गर्नको लागि फूकिनेछ ।

(8) (9) काफिरहरूका हृदय त्यस दिन भयको कठोरताले काँप्नेछन्, र ती हृदयका आँखाहरू ठूलो त्रास हेरेर झुकिरहनेछन् ।

(10)-(12) पुनर्जन्मलाई झूठा ठहर गर्नेहरू भन्छनः के हामी धरतीमा जस्ता जिउँदो थियौं त्यसरी नै फेरि हामीलाई मृत्यु पश्चात जिउँदो गन्छि ? जबकि हामी सडेका हड्डी बनिसकेका हुनेछौं ? तिनीहरू भन्छन्ः तब त त्यो हाम्रो फिर्ती घाटापूर्ण झूठ हुनेछ ।

إِذْ نَادَىٰهُ رَبُّهُۥ بِٱلْوَادِ ٱلْمُقَدَّسِ طُوًى ﴿١٦﴾ ٱذْهَبْ إِلَىٰ فِرْعَوْنَ إِنَّهُۥ طَغَىٰ ﴿١٧﴾
فَقُلْ هَل لَّكَ إِلَىٰٓ أَن تَزَكَّىٰ ﴿١٨﴾ وَأَهْدِيَكَ إِلَىٰ رَبِّكَ فَتَخْشَىٰ ﴿١٩﴾ فَأَرَىٰهُ
ٱلْـَٔايَةَ ٱلْكُبْرَىٰ ﴿٢٠﴾ فَكَذَّبَ وَعَصَىٰ ﴿٢١﴾ ثُمَّ أَدْبَرَ يَسْعَىٰ ﴿٢٢﴾ فَحَشَرَ
فَنَادَىٰ ﴿٢٣﴾ فَقَالَ أَنَا۠ رَبُّكُمُ ٱلْأَعْلَىٰ ﴿٢٤﴾ فَأَخَذَهُ ٱللَّهُ نَكَالَ ٱلْـَٔاخِرَةِ وَٱلْأُولَىٰٓ
﴿٢٥﴾ إِنَّ فِى ذَٰلِكَ لَعِبْرَةً لِّمَن يَخْشَىٰٓ ﴿٢٦﴾ ءَأَنتُمْ أَشَدُّ خَلْقًا أَمِ ٱلسَّمَآءُ ۚ بَنَىٰهَا
﴿٢٧﴾ رَفَعَ سَمْكَهَا فَسَوَّىٰهَا ﴿٢٨﴾ وَأَغْطَشَ لَيْلَهَا وَأَخْرَجَ ضُحَىٰهَا ﴿٢٩﴾
وَٱلْأَرْضَ بَعْدَ ذَٰلِكَ دَحَىٰهَآ ﴿٣٠﴾ أَخْرَجَ مِنْهَا مَآءَهَا وَمَرْعَىٰهَا ﴿٣١﴾
وَٱلْجِبَالَ أَرْسَىٰهَا ﴿٣٢﴾ مَتَٰعًا لَّكُمْ وَلِأَنْعَٰمِكُمْ ﴿٣٣﴾ فَإِذَا جَآءَتِ ٱلطَّآمَّةُ
ٱلْكُبْرَىٰ ﴿٣٤﴾ يَوْمَ يَتَذَكَّرُ ٱلْإِنسَٰنُ مَا سَعَىٰ ﴿٣٥﴾ وَبُرِّزَتِ ٱلْجَحِيمُ
لِمَن يَرَىٰ ﴿٣٦﴾ فَأَمَّا مَن طَغَىٰ ﴿٣٧﴾ وَءَاثَرَ ٱلْحَيَوٰةَ ٱلدُّنْيَا ﴿٣٨﴾ فَإِنَّ ٱلْجَحِيمَ
هِىَ ٱلْمَأْوَىٰ ﴿٣٩﴾ وَأَمَّا مَنْ خَافَ مَقَامَ رَبِّهِۦ وَنَهَى ٱلنَّفْسَ عَنِ ٱلْهَوَىٰ
﴿٤٠﴾ فَإِنَّ ٱلْجَنَّةَ هِىَ ٱلْمَأْوَىٰ ﴿٤١﴾ يَسْـَٔلُونَكَ عَنِ ٱلسَّاعَةِ أَيَّانَ مُرْسَىٰهَا
﴿٤٢﴾ فِيمَ أَنتَ مِن ذِكْرَىٰهَآ ﴿٤٣﴾ إِلَىٰ رَبِّكَ مُنتَهَىٰهَآ ﴿٤٤﴾ إِنَّمَآ أَنتَ مُنذِرُ
مَن يَخْشَىٰهَا ﴿٤٥﴾ كَأَنَّهُمْ يَوْمَ يَرَوْنَهَا لَمْ يَلْبَثُوٓا۟ إِلَّا عَشِيَّةً أَوْ ضُحَىٰهَا ﴿٤٦﴾

ترتيبها ٨٠ — سُورَةُ عَبَسَ — آياتها ٤٢

(13) (14) त्यो पहिलो फूक हुनेछ,अनि तिमीहरू अनायास धरती भित्रबाट धरतीमाथि जिउँदो भएर निस्कनेछौ ।

(15) हे रसूल! के तपाईं समक्ष दूत मूसाको खबर पुगेको छ ?

(16)-(19) जबकि उनका रबले उनलाई तुवा भन्ने पवित्र र शुभ उपत्यकामा पुकारे, अनि उनी सँग भनेः फिर्औनकहाँ जाऊ, किनभने ऊ अवज्ञामा सीमा उल्लंघन गरिसकेको छ, र उसलाई भनः के तिमी पापहरूबाट आफ्नो जीउलाई पवित्र गर्न चाहन्छौ र ईमानबाट सफा गर्न चाहन्छौ, र तिमीलाई तिम्रा रबको आज्ञापालन तिर डोऱ्याउ ताकि तिमी उनी सँग डर र भय मान ?

(20)-(22) फेरि मूसाले फिर्औनलाई ठूलो चिन्ह देखाए र त्यो लौरो र हात थिए, अनि फिर्औनले अल्लाहका दूत मूसालाई झूठा ठहर गऱ्यो र आफ्नो पालनकर्ताको अवज्ञा गऱ्यो, फेरि ईमान ल्याउनुबाट बिमुख भई दूत मूसाको विरुद्धमा प्रयास गर्न थाल्यो ।

(23)-(26) फिर्औनले आफ्ना देशवासीहरूलाई एकत्रित गरेर घोषणा गऱ्यो अनि भन्योः म तिमीहरूका सब भन्दा ठूलो प्रभु हुँ । अन्ततः अल्लाहले उसबाट लोक परलोक दुबैमा यातना दिएर बदला लिए । र उसलाई ऊ जस्ता अहंकारी र उद्दण्डीहरूका लागि पाठ र यातना बनाए । पाठ प्राप्त गर्ने र डराउने व्यक्तिहरूको लागि फिर्औन र उसमाथि अवतरित प्रकोपमा उपदेश हो ।

(27)-(33) हे मानव! तिमीहरूलाई मृत्यु पश्चात फेरि जन्म दिनु तिम्रो अनुमानमा ज्यादै गाह्रो छ वा आकाशलाई सृष्टि गर्नु ? त्यसलाई तिमीहरूमाथि घर जस्तो बनाए, र उनले त्यसको छानालाई हावामा माथि उठाए जसमा केही प्वाल एवं हेरफेर हुँदैन । र सूर्यलाई आस्त गरी त्यसको रातलाई अन्धकारमय बनाए, र सूर्यलाई उदय गरी त्यसको दिनलाई प्रकाशमय बनाए । र आकाशलाई सृष्टि गरे पछि उनले धरतीलाई ओछ्याए । र उनैले धरतीमा लाभ दायक वस्तुहरू राखे, र त्यसमा पानीका श्रोतहरू फुटाएर त्यसमा जनावरहरूले खाने घाँस र सब्जी साग उमारे । र त्यसमाथि पहाडहरूलाई चुकुल बनाएर स्थापित गरे । यी सबै अनुग्रहहरूलाई महान अल्लाहले तिम्रो र तिम्रा जनावरहरूका लागि लाभ पुऱ्याउने वस्तु बनाए । (र यी वस्तुहरूको सृष्टि गर्नु भन्दा अति नै सजिलो छ तिमीहरूलाई प्रलयको दिन अर्को चोटि जन्म दिनु, र यी सबै कुराहरू अल्लाहको लागि अत्यन्त सजिलो छन्) ।

(34)-(36) जब महाप्रलय एवं ठूलो हाहाकार हुनेछ र त्यो नै अर्को पटक सूरमा फूक हान्नु हो । त्यस बेला मनुष्यमाथि उसले गरेका सुकर्म र कुकर्म सबै पेश गरिनेछ । र त्यसलाई स्मरण गरेर स्वीकार गर्नेछ । र प्रत्येक देख्ने व्यक्तिहरूसमक्ष नरकलाई प्रकट गरिनेछ जसलाई सबैले हेर्नेछन् ।

(37)-(39) अनि जसले अल्लाहको आदेशलाई नमानी उद्दण्डता देखाएको हुनेछ र सांसारिक जीवनलाई पारलोकिक जीवनमाथि प्राथमिकता दिएको हुनेछ त्यसतोको फर्किने ठेगाना नरक नै हुनेछ ।

(40) (41) तर जो हिसाबको लागि आफना पालनकर्तासामु उभ्ने डराएको हुनेछ र आफ्नो मनलाई कुअभिलाषाहरूबाट बचाएको हुनेछ निस्सन्देह त्यसतोको बासस्थान स्वर्ग नै हुनेछ ।

(42)-(46) हे रसूल! तपाईंसँग बहुदेववादीहरूले -खिल्ली उडाउँदै- प्रलयको समय कहिले आउनेछ भनी सोध्छन् जसको वाचा तपाईंले तिनीहरूसँग गर्नुभएको छ । त्यसको अलिकित पनि ज्ञान तपाईं सँग छैन । त्यसको पूर्ण ज्ञान र कहिले घटित हुनेछ सबै अल्लाहमा नै निहित छ । प्रलयको मामलामा

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

عَبَسَ وَتَوَلَّىٰٓ ﴿١﴾ أَن جَآءَهُ ٱلۡأَعۡمَىٰ ﴿٢﴾ وَمَا يُدۡرِيكَ لَعَلَّهُۥ يَزَّكَّىٰٓ ﴿٣﴾ أَوۡ
يَذَّكَّرُ فَتَنفَعَهُ ٱلذِّكۡرَىٰٓ ﴿٤﴾ أَمَّا مَنِ ٱسۡتَغۡنَىٰ ﴿٥﴾ فَأَنتَ لَهُۥ تَصَدَّىٰ ﴿٦﴾
وَمَا عَلَيۡكَ أَلَّا يَزَّكَّىٰ ﴿٧﴾ وَأَمَّا مَن جَآءَكَ يَسۡعَىٰ ﴿٨﴾ وَهُوَ يَخۡشَىٰ ﴿٩﴾ فَأَنتَ
عَنۡهُ تَلَهَّىٰ ﴿١٠﴾ كَلَّآ إِنَّهَا تَذۡكِرَةٞ ﴿١١﴾ فَمَن شَآءَ ذَكَرَهُۥ ﴿١٢﴾ فِي صُحُفٖ مُّكَرَّمَةٖ
﴿١٣﴾ مَّرۡفُوعَةٖ مُّطَهَّرَةِۭ ﴿١٤﴾ بِأَيۡدِي سَفَرَةٖ ﴿١٥﴾ كِرَامِۭ بَرَرَةٖ ﴿١٦﴾ قُتِلَ ٱلۡإِنسَٰنُ
مَآ أَكۡفَرَهُۥ ﴿١٧﴾ مِنۡ أَيِّ شَيۡءٍ خَلَقَهُۥ ﴿١٨﴾ مِن نُّطۡفَةٍ خَلَقَهُۥ فَقَدَّرَهُۥ ﴿١٩﴾ ثُمَّ
ٱلسَّبِيلَ يَسَّرَهُۥ ﴿٢٠﴾ ثُمَّ أَمَاتَهُۥ فَأَقۡبَرَهُۥ ﴿٢١﴾ ثُمَّ إِذَا شَآءَ أَنشَرَهُۥ ﴿٢٢﴾ كَلَّا لَمَّا
يَقۡضِ مَآ أَمَرَهُۥ ﴿٢٣﴾ فَلۡيَنظُرِ ٱلۡإِنسَٰنُ إِلَىٰ طَعَامِهِۦٓ ﴿٢٤﴾ أَنَّا صَبَبۡنَا ٱلۡمَآءَ صَبّٗا
﴿٢٥﴾ ثُمَّ شَقَقۡنَا ٱلۡأَرۡضَ شَقّٗا ﴿٢٦﴾ فَأَنۢبَتۡنَا فِيهَا حَبّٗا ﴿٢٧﴾ وَعِنَبٗا وَقَضۡبٗا ﴿٢٨﴾
وَزَيۡتُونٗا وَنَخۡلٗا ﴿٢٩﴾ وَحَدَآئِقَ غُلۡبٗا ﴿٣٠﴾ وَفَٰكِهَةٗ وَأَبّٗا ﴿٣١﴾ مَّتَٰعٗا لَّكُمۡ
وَلِأَنۡعَٰمِكُمۡ ﴿٣٢﴾ فَإِذَا جَآءَتِ ٱلصَّآخَّةُ ﴿٣٣﴾ يَوۡمَ يَفِرُّ ٱلۡمَرۡءُ مِنۡ أَخِيهِ ﴿٣٤﴾
وَأُمِّهِۦ وَأَبِيهِ ﴿٣٥﴾ وَصَٰحِبَتِهِۦ وَبَنِيهِ ﴿٣٦﴾ لِكُلِّ ٱمۡرِيٕٖ مِّنۡهُمۡ يَوۡمَئِذٖ شَأۡنٞ
يُغۡنِيهِ ﴿٣٧﴾ وُجُوهٞ يَوۡمَئِذٖ مُّسۡفِرَةٞ ﴿٣٨﴾ ضَاحِكَةٞ مُّسۡتَبۡشِرَةٞ ﴿٣٩﴾ وَوُجُوهٞ
يَوۡمَئِذٍ عَلَيۡهَا غَبَرَةٞ ﴿٤٠﴾ تَرۡهَقُهَا قَتَرَةٌ ﴿٤١﴾ أُوْلَٰٓئِكَ هُمُ ٱلۡكَفَرَةُ ٱلۡفَجَرَةُ ﴿٤٢﴾

तपाईंको काम मात्र त्यसबाट डराउने मानिसहरूलाई सचेत गर्नु हो। जुन दिन तिनीहरूले महाप्रलयको घटना हेर्नेछन भने ठूलो भयको कारणले तिनीहरूलाई यस्तो लाग्नेछ कि जोहरको नमाज (मध्याह्न) देखि सूर्यास्त सम्म वा सूर्योदय भए पछि मध्याह्न सम्म मात्र संसारमा बिताएका थिए।

## सूरह अऩ्ब-स - 80

(1) (2) रसूलुल्लाह सल्लल्लाहो अलैहे वसल्लमको अनुहारमा परिवर्तन र नराम्रो भाव प्रकट भयो। उहाँले मुख यस कारणले फर्काउनुभो किनकि अब्दुल्लाह बिन अम्मे मक्तूम नामक एउटा अन्धो मान्छेले उहाँ समक्ष सुमार्गको खोजीमा आएको थियो, र त्यस बेला नबी सल्लल्लाहो अलैहे वसल्लम कुरैश कुलका ठूल-ठूला मान्छेहरूलाई इस्लाम तिर निम्तो दिनुमा व्यस्त थिए।

(3) (4) तपाईंलाई उसको मामलाको वास्तविक्ताको बारेमा कुन कुराले ज्ञान दियो ? शायद कि उसले आफ्नो आत्मालाई शुद्ध र पवित्र पार्ने हेतुले प्रश्न गरेको हुन्थ्यो वा त्यसले गर्दा उसलाई अत्यधिक पाठ र उपदेश प्राप्त गर्नुहुन्थ्यो।

(5)-(7) तर जसले तपाईंको सुबाटोलाई वास्ता नै गर्दैन तपाईं सामु भएर त्यसको कुरा ध्यान दिएर सुन्नुहुन्छ, जबकि त्यो आफ्नो कुफ्र (अवज्ञा) बाट चोखो न भएमा तपाईंमाथि कुनै उत्तरदायित्व छैन।

(8)-(16) तर जुन व्यक्ति तपाईंसँग भेट गर्नको इच्छुक छ र त्यो सुमार्गको खोजीमा हुने कमीबाट अल्लाहसित पनि डराउँछ त्यसलाई तपाईंले अपेक्षा गर्नुभो। हे रसूल! तपाईंले गरेको यो कार्य कदापि राम्रो होइन !! निस्सन्देह यो सूरह तपाईंको लागि र जसले पाठ प्राप्त गर्न चाहन्छ त्यसको लागि एउटा उपदेश हो। त जसले चाहन्छ अल्लाहलाई स्मरण गरेर उनको वह्य (प्रकाशना,ईश्वाणी) लाई व्यवहारमा ल्याउँछ। र त्यो प्रकाशना कुरआन नै हो जो महान र प्रतिष्ठित पानाहरूमा छ र जो उच्चकोटिका र हरेक प्रकारको कमी बेशी र खराबीबाट पवित्र छन। जुन लिपिकार फरिश्ताहरूको हातमा रहेकाछन् जो अल्लाह र उनका प्राणीहरू बीच दूतहरू छन्, जो प्राणीहरूमा प्रतिष्ठित र तिनीहरूको व्यवहार र कार्यहरू सवच्छ र पवित्र हुन्।

(17)-(23) काफिर मानिसको लागि सत्यानाश र यातना निश्चित छ आफ्नो पालनकर्ता सित कति घोर कृतघ्न गरि रहेको छ !! के उसले हेरेन कि कुन तत्वबाट अल्लाहले उसलाई पहिलो पटक सृष्टि गरे ? अल्लाहले उसलाई थोरै पानी वीर्यबाट सृष्टि गरे अनि सृष्टिका चरणहरू निर्धारित गरे। फेरि उसको निम्ति सुमार्ग र कुमार्ग दुबै स्पष्ट पारे, फेरि उसलाई मृत्यु दिएर उसको निमित्त चिहानको ठाउँ निर्धारित गरे। फेरि अल्लाह जहिले चाहन्छन् उसलाई पुनर्जीवित पार्नेछन् र हिसाब तथा बदलाको लागि मृत्यु पश्चात उसलाई दोबारा जीवित गर्नेछन्। काफिरले भनेको वा गरेको कुरा जस्तो होइन, अल्लाहले ईमान ल्याउने र सुकर्म गर्ने दिएको आदेशलाई उसले पूरा गरेन।

(24)-(32) मानिसलाई चाहियो कि उ चिन्तन् मनन् गरोस् अल्लाहले उसको खाने कुराहरूलाई कसरी सृष्टि गरे जो उसको जीवन कायम राख्नको साधन हो ? निस्सन्देह हामीले धरतीमाथि प्रशस्त पानी बर्सायौं, फेरि भूमिलाई हामीले निकालिएका विभिन्न सागपात र आनाजबाट चिर्यौं, अनि त्यसमा अन्न-बाली, अंगुर र जनावरहरूको भोजन घाँस-पात उब्जायौं। यसै गरी हामीले जैतुन एवं खजूर र ठूल-ठूला रूख भएका बगैंचाहरू र धेरै फलहरू उब्जायौं। यी सबैबाट तिमीहरू र तिम्रा जनावरहरू लाभ प्राप्त गर।

(33)-(37) अन्ततः जब प्रलयको दिन कर्कशध्वनी आउनेछ जसको भयले कानहरू बहिरा हुनेछन्, त्यस दिनको भयले मनुष्य भाग्नेछ आफ्ना दाजुभाईबाट, आफ्ना आमाबुबाबाट, तथा आफ्नी पत्नी र आफ्ना सन्तानबाट। त्यस दिन सबै आफ्नै चिन्तामा ग्रस्त हुनेछन् अर्कोको बारेमा चिन्ता गर्नलाई अवसर मिल्दैन।

(38)-(42) स्वर्गवासीहरूका अनुहारहरू त्यस दिन उज्जवल, धेरै प्रसन्न र खुशी हुनेछन्। र नरकबासीहरूका मुहारहरू काला र अन्ध्यारोमा

हुनेछन् अपमानले तीलाई छोपेको हुनेछ । यी अवगुणीहरू यस्ता छन जसले अल्लाहका अनुग्रहहरूसँग कृतध्न गरे र उनका आयतहरू (चिन्हहरू) लाई झूठा ठहर गरे। दुष्कर्म एवं उद्दण्ड गर्दै अल्लाहले बर्जित गरेका वस्तुहरूलाई गर्नुमाथि साहस गरे।

## सूरह अत्-तक्वीर - 81

1-14 जब सूर्यलाई बेरिनेछ र त्यसको प्रकाश समाप्त हुनेछ । र जब ताराहरू छर्कनेछन् र त्यसका प्रकाश समाप्त हुनेछ । र जब पहाडहरूलाई उड्ने धुलो जस्तो बनाएर धरतीमाथि चलाइनेछ, र जब गर्भिणी ऊँटनीहरू त्यागिनेछन्, र जब जंगली जनावरहरू एकत्रित गरिनेछन् र परस्पर मिल्नेछन् ताकि अल्लाह एक अर्कोबाट एक अर्कोको लागि बदला लिऊन् । र जब समुद्रहरू कन्काइनेछन ती ठूलो हुनको बावजुद दन्कँदो आगो भइहाल्छन् । र जब आत्माहरू आफ्ना जस्तासँग जोडिनेछन । र जब जिउँदो गाडिएकी बालिकालाई प्रलयको दिन उसलाई प्रसन्न पार्नको लागि र उसलाई जिउँदो गाडनेलाई रुवाउने हेतु सोधिनेछ : कुन पापको कारण उसलाई जिउँदो गाडिएको थियो ? र जब कर्मपत्रहरू पेश गरिनेछन, र जब आकाशलाई उखेलिनेछ र आफ्नो ठाउँबाट नष्ट गरिनेछ । र जब नरक दन्काइनेछ त्यो एकदमै आगो भइहाल्छ। र जब अनुग्रहको घर स्वर्ग ईश्भय राख्ने स्वर्गवासीको नजिक ल्याइनेछ । जब यो घटना घट्नेछ भने प्रत्येक प्राणी सुकर्म वा कुकर्म ल्याएको छ भन्ने कुरा पाएर त्यसमाथि विश्वास गर्नेछ।

15-21 अल्लाह ती ताराहरूको कसम खाइरहेछन जसको प्रकाश दिनमा लुप्त भइहाल्छ, जो आफ्ना ठाउँमा सर्दै लुप्त हुन्छन् । र रात्रीको कसम जब त्यो आफ्नो अन्ध्यारोसँग आउँछ । र प्रभातको कसम जब उसको प्रकाश प्रकट हुन्छ । निस्सन्देह यो कुरआन एक प्रतिष्ठित दूत जिब्रील अलैहिस्सलामले पुगाउनुभएको हो, जो आदेशलाई पूरा गर्नमा शक्तिशाली र अल्लाहकहाँ उच्च पदाधिकारी हुन्, फरिश्ताहरू उनको आज्ञा पालन गर्छन् र जो प्रकाशना अथवा ईश्वाणी लिएर अवतिरत हुन्छन त्यसमाथि ईमानदार पनि छन् ।

22-25 र यो मुहम्मद जसलाई तिमीहरू राम्ररी चिन्छौ उन्मादी होइनन् । र निश्चय नै मुहम्मदले

سُورَةُ التَّكْوِيرِ

ترتيبها ٨١ — آياتها ٢٩

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَٰنِ ٱلرَّحِيمِ

إِذَا ٱلشَّمْسُ كُوِّرَتْ ١ وَإِذَا ٱلنُّجُومُ ٱنكَدَرَتْ ٢ وَإِذَا ٱلْجِبَالُ سُيِّرَتْ ٣ وَإِذَا ٱلْعِشَارُ عُطِّلَتْ ٤ وَإِذَا ٱلْوُحُوشُ حُشِرَتْ ٥ وَإِذَا ٱلْبِحَارُ سُجِّرَتْ ٦ وَإِذَا ٱلنُّفُوسُ زُوِّجَتْ ٧ وَإِذَا ٱلْمَوْءُۥدَةُ سُئِلَتْ ٨ بِأَيِّ ذَنۢبٍ قُتِلَتْ ٩ وَإِذَا ٱلصُّحُفُ نُشِرَتْ ١٠ وَإِذَا ٱلسَّمَآءُ كُشِطَتْ ١١ وَإِذَا ٱلْجَحِيمُ سُعِّرَتْ ١٢ وَإِذَا ٱلْجَنَّةُ أُزْلِفَتْ ١٣ عَلِمَتْ نَفْسٌ مَّآ أَحْضَرَتْ ١٤ فَلَآ أُقْسِمُ بِٱلْخُنَّسِ ١٥ ٱلْجَوَارِ ٱلْكُنَّسِ ١٦ وَٱلَّيْلِ إِذَا عَسْعَسَ ١٧ وَٱلصُّبْحِ إِذَا تَنَفَّسَ ١٨ إِنَّهُۥ لَقَوْلُ رَسُولٍ كَرِيمٍ ١٩ ذِى قُوَّةٍ عِندَ ذِى ٱلْعَرْشِ مَكِينٍ ٢٠ مُّطَاعٍ ثَمَّ أَمِينٍ ٢١ وَمَا صَاحِبُكُم بِمَجْنُونٍ ٢٢ وَلَقَدْ رَءَاهُ بِٱلْأُفُقِ ٱلْمُبِينِ ٢٣ وَمَا هُوَ عَلَى ٱلْغَيْبِ بِضَنِينٍ ٢٤ وَمَا هُوَ بِقَوْلِ شَيْطَٰنٍ رَّجِيمٍ ٢٥ فَأَيْنَ تَذْهَبُونَ ٢٦ إِنْ هُوَ إِلَّا ذِكْرٌ لِّلْعَٰلَمِينَ ٢٧ لِمَن شَآءَ مِنكُمْ أَن يَسْتَقِيمَ ٢٨ وَمَا تَشَآءُونَ إِلَّآ أَن يَشَآءَ ٱللَّهُ رَبُّ ٱلْعَٰلَمِينَ ٢٩

سُورَةُ الانفِطَارِ

ترتيبها ٨٢ — آياتها ١٩

जिब्रीललाई जो उनीमाथि ईश्वाणी लिएर आउँछन खुल्ला क्षितिजमा देखेका छन् । र उनी ईश्वाणी पुऱ्याउने काममा कन्जुस छैनन् । र यो कुरआन तिरस्कृत र अल्लाहको दयाबाट टाढा भएको कुनै शैतानको कथन होइन बरु अल्लाहको कथन र उनको वाणी हो ।

26-29 यी प्रष्ट र ठोस प्रमाणहरू पश्चात तिमीहरूको बुद्धि तिमीलाई कुरआनलाई झूठा ठहर गर्नुमा कता लिएर जान्छ ? यो त मात्र अल्लाहको तर्फबाट मानिसहरूका लागि एउटा उपदेश एवं पाठ हो । तिमीहरू मध्ये जो सत्य र ईमानमाथि कायम रहन चाहन्छ सोको लागि पनि । सम्पूर्ण प्राणीहरूको पालनकर्ता अल्लाहको चाहना बिना तिमीहरूले सत्य र ईमानमाथि कायम रहनचाहन्छौ भने कायम रहन सक्दैनौ ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

إِذَا السَّمَاءُ انفَطَرَتْ ﴿١﴾ وَإِذَا الْكَوَاكِبُ انتَثَرَتْ ﴿٢﴾ وَإِذَا الْبِحَارُ فُجِّرَتْ ﴿٣﴾ وَإِذَا الْقُبُورُ بُعْثِرَتْ ﴿٤﴾ عَلِمَتْ نَفْسٌ مَّا قَدَّمَتْ وَأَخَّرَتْ ﴿٥﴾ يَا أَيُّهَا الْإِنسَانُ مَا غَرَّكَ بِرَبِّكَ الْكَرِيمِ ﴿٦﴾ الَّذِي خَلَقَكَ فَسَوَّاكَ فَعَدَلَكَ ﴿٧﴾ فِي أَيِّ صُورَةٍ مَّا شَاءَ رَكَّبَكَ ﴿٨﴾ كَلَّا بَلْ تُكَذِّبُونَ بِالدِّينِ ﴿٩﴾ وَإِنَّ عَلَيْكُمْ لَحَافِظِينَ ﴿١٠﴾ كِرَامًا كَاتِبِينَ ﴿١١﴾ يَعْلَمُونَ مَا تَفْعَلُونَ ﴿١٢﴾ إِنَّ الْأَبْرَارَ لَفِي نَعِيمٍ ﴿١٣﴾ وَإِنَّ الْفُجَّارَ لَفِي جَحِيمٍ ﴿١٤﴾ يَصْلَوْنَهَا يَوْمَ الدِّينِ ﴿١٥﴾ وَمَا هُمْ عَنْهَا بِغَائِبِينَ ﴿١٦﴾ وَمَا أَدْرَاكَ مَا يَوْمُ الدِّينِ ﴿١٧﴾ ثُمَّ مَا أَدْرَاكَ مَا يَوْمُ الدِّينِ ﴿١٨﴾ يَوْمَ لَا تَمْلِكُ نَفْسٌ لِّنَفْسٍ شَيْئًا ۖ وَالْأَمْرُ يَوْمَئِذٍ لِّلَّهِ ﴿١٩﴾

ترتيبها ٨٣ — سُورَةُ الْمُطَفِّفِينَ — آياتها ٣٦

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

وَيْلٌ لِّلْمُطَفِّفِينَ ﴿١﴾ الَّذِينَ إِذَا اكْتَالُوا عَلَى النَّاسِ يَسْتَوْفُونَ ﴿٢﴾ وَإِذَا كَالُوهُمْ أَو وَّزَنُوهُمْ يُخْسِرُونَ ﴿٣﴾ أَلَا يَظُنُّ أُولَٰئِكَ أَنَّهُم مَّبْعُوثُونَ ﴿٤﴾ لِيَوْمٍ عَظِيمٍ ﴿٥﴾ يَوْمَ يَقُومُ النَّاسُ لِرَبِّ الْعَالَمِينَ ﴿٦﴾

## सूरह अल्-इन्फितार - 82

(1)-(5) जब आकाश चर्केर त्यसको ढाँचा बिगर्नेछ। र जब ताराहरू झर्नेछन्। र समुद्रहरूलाई अल्लाह एक एर्कामा बगाइनेछन् त्यस कारण त्यसको पानी समाप्त हुनेछ । र जब चिहानहरूलाई त्यसमा रहेका मृतकहरूलाई पुनर्जिवित गरेर खोलिनेछ । त्यती बेला प्रत्येक व्यक्तिले अगाडि पठाएका र पछाडि छोडेका आफ्ना सम्पूर्ण कार्यहरूको थाहा पाउनेछन् ।

(6)-(8) हे प्रलयको दिन पुनर्जन्मलाई इन्कार गर्ने मानव! कुन चिजले तिमीलाई आफ्ना ठूला दानी, उदार र आभार तथा आज्ञापालनका योग्य पालनकर्ताबारे धोकामा पारेको छ ? के त्यही पालनकर्ता होइनन् जसले तिमीलाई सृष्टि गरे अनि तिम्रा अंग प्रत्यंगलाई सन्तलित पारे अनि तिमीलाई आफ्ना कार्य पूरा गर्नुलाई ढाले र जस रूपमा चाहे तिमीलाई जन्म दिए ?

(9)-(12) तिमीहरूले भनेको कुरा जस्तो होइन कि तिमीहरू अल्लाहबाहेक अरूको पूजा गर्नुमा सत्य छौ, बरु तिमीहरू हिसाब र बदलाको दिनलाई झूठा ठान्छौ । निस्सन्देह तिमीहरूमाथि निगरानी गर्ने फरिश्ताहरू नियुक्त छन जो अल्लाहनिर प्रतिष्ठित छन र आदेश दिएको गतिविधिहरूलाई लेखिरहेका छन् तिम्रा कर्म र रहस्यहरूमध्ये केही कुरा उनीहरूबाट छुट्न सक्दैन, तिमीहरूले गरिराखेको सुकर्म र कुकर्म सबैलाई उनीहरू जान्छन् ।

(13) निस्सन्देह ईश्भय राख्ने सत्कर्मीहरू अनुग्रह (स्वर्ग) मा हुनेछन जो अल्लाहका हक र दासहरूका हक पूर्ण रूपले पूरा गर्छन् ।

(14)-(16) र निस्सन्देह दुष्कर्मीहरू नरकमा हुनेछन जो अल्लाहका हक र दासहरूका हक पूर्ण रूपले पूरा गरेका छैनन् । निर्णयको दिन तिनीहरूलाई त्यसको आगोको ज्वाला लाग्नेछ । र तिनीहरू नरकको यातनाबाट कहिल्यै लुप्त हुन सक्दैनन् न त त्यहाँबाट निस्केर नत मृत्युले ।

(17)-(19) हिसाबको दिनको महानताबारे तिमीलाई के थाहा ? फेरि तिमीलाई के थाहा कि हिसाबको दिनको महानता के हो ? हिसाबको दिन त्यो हो जसमा कसैले कसैलाई लाभ पुऱ्याउन शक्ति राख्दैन । र त्यस दिन सम्पूर्ण प्रकारका अधिकार मात्र एक अल्लाहमा नै निहित रहनेछ जसलाई कोही पराजित गर्न सक्दैन र नत उनीमाथि प्रभुत्त्व कायम राख्न सक्छ र नत उनीसित कोही झगडा गर्न सक्छ ।

## सूरह अल्-मुतफ्फिफीन - 83

(1)-(6) नाप-तौलमा कमी गर्नेहरूको लागि ठूलो यातना छ, जो मानिसहरूबाट आफ्नो लागि किन्दा पूरा नाप र पूरा तौल लिन्छन्, र जब मानिसहरूको लागि नापेर वा तौलेर बेच्छन् भने नाप-तौलमा कमी गरि दिन्छन् । र नाप-तौलमा चोरी गर्ने र मानिसहरूको चिजमा कमी गर्नेहरूको परिणाम कस्तो हुन्छ ? यिनीहरूको लागि नाप-तौलमा हेरफेर गर्नेहरू भन्दा ठूलो दुष्परिणाम हुनेछ । यी नाप-तौलमा कमी गर्नेहरूले यो आस्था राखेका होइनन कि निस्सन्देह अल्लाह यिनीहरूलाई दोबारा जन्म दिएर यिनीहरूले गरेका कुकर्ममाथि एउटा ठूलो भयंकर दिनमा हिसाब लिनेछन् । जस दिन मानिसहरू अल्लाहसामु उभ्नेछन्, अनि तिनीहरूसित सानोतिनो सबै कुरामाथि हिसाब लिनेछन् र त्यस दिन तिनीहरू सम्पूर्ण संसारका पालनकर्ता अल्लाहको लागि झुकि रहनेछन् ।

كَلَّآ إِنَّ كِتَٰبَ ٱلۡفُجَّارِ لَفِي سِجِّينٖ ﴿٧﴾ وَمَآ أَدۡرَىٰكَ مَا سِجِّينٞ ﴿٨﴾ كِتَٰبٞ مَّرۡقُومٞ ﴿٩﴾ وَيۡلٞ يَوۡمَئِذٖ لِّلۡمُكَذِّبِينَ ﴿١٠﴾ ٱلَّذِينَ يُكَذِّبُونَ بِيَوۡمِ ٱلدِّينِ ﴿١١﴾ وَمَا يُكَذِّبُ بِهِۦٓ إِلَّا كُلُّ مُعۡتَدٍ أَثِيمٍ ﴿١٢﴾ إِذَا تُتۡلَىٰ عَلَيۡهِ ءَايَٰتُنَا قَالَ أَسَٰطِيرُ ٱلۡأَوَّلِينَ ﴿١٣﴾ كَلَّاۖ بَلۡۜ رَانَ عَلَىٰ قُلُوبِهِم مَّا كَانُواْ يَكۡسِبُونَ ﴿١٤﴾ كَلَّآ إِنَّهُمۡ عَن رَّبِّهِمۡ يَوۡمَئِذٖ لَّمَحۡجُوبُونَ ﴿١٥﴾ ثُمَّ إِنَّهُمۡ لَصَالُواْ ٱلۡجَحِيمِ ﴿١٦﴾ ثُمَّ يُقَالُ هَٰذَا ٱلَّذِي كُنتُم بِهِۦ تُكَذِّبُونَ ﴿١٧﴾ كَلَّآ إِنَّ كِتَٰبَ ٱلۡأَبۡرَارِ لَفِي عِلِّيِّينَ ﴿١٨﴾ وَمَآ أَدۡرَىٰكَ مَا عِلِّيُّونَ ﴿١٩﴾ كِتَٰبٞ مَّرۡقُومٞ ﴿٢٠﴾ يَشۡهَدُهُ ٱلۡمُقَرَّبُونَ ﴿٢١﴾ إِنَّ ٱلۡأَبۡرَارَ لَفِي نَعِيمٍ ﴿٢٢﴾ عَلَى ٱلۡأَرَآئِكِ يَنظُرُونَ ﴿٢٣﴾ تَعۡرِفُ فِي وُجُوهِهِمۡ نَضۡرَةَ ٱلنَّعِيمِ ﴿٢٤﴾ يُسۡقَوۡنَ مِن رَّحِيقٖ مَّخۡتُومٍ ﴿٢٥﴾ خِتَٰمُهُۥ مِسۡكٞۚ وَفِي ذَٰلِكَ فَلۡيَتَنَافَسِ ٱلۡمُتَنَٰفِسُونَ ﴿٢٦﴾ وَمِزَاجُهُۥ مِن تَسۡنِيمٍ ﴿٢٧﴾ عَيۡنٗا يَشۡرَبُ بِهَا ٱلۡمُقَرَّبُونَ ﴿٢٨﴾ إِنَّ ٱلَّذِينَ أَجۡرَمُواْ كَانُواْ مِنَ ٱلَّذِينَ ءَامَنُواْ يَضۡحَكُونَ ﴿٢٩﴾ وَإِذَا مَرُّواْ بِهِمۡ يَتَغَامَزُونَ ﴿٣٠﴾ وَإِذَا ٱنقَلَبُوٓاْ إِلَىٰٓ أَهۡلِهِمُ ٱنقَلَبُواْ فَكِهِينَ ﴿٣١﴾ وَإِذَا رَأَوۡهُمۡ قَالُوٓاْ إِنَّ هَٰٓؤُلَآءِ لَضَآلُّونَ ﴿٣٢﴾ وَمَآ أُرۡسِلُواْ عَلَيۡهِمۡ حَٰفِظِينَ ﴿٣٣﴾ فَٱلۡيَوۡمَ ٱلَّذِينَ ءَامَنُواْ مِنَ ٱلۡكُفَّارِ يَضۡحَكُونَ ﴿٣٤﴾

(7)-(9) अवश्य दुष्कर्मीहरूको फर्किने र शरण लिने ठाउँ अति नै साँघुरो हुनेछ, र तपाईंलाई के थाहा कि त्यो साँघुरो ठाउँ के हो ? त्यो सदाको लागि कारावास र पीडादायक यातना छ, तिनीहरूको फर्किने ठाउँ तिनीहरूको लागि यही लेखिएको थियो, यो यस्तो लेख छ जसमा नत कमी हुन सक्छ र नत बेशी ।

(10)-(17) झूठा ठान्नेहरूको लागि त्यस दिन कठोर यातना छ जो प्रतिफलको दिनलाई झूठा ठहर गर्छन्, र यसलाई मात्र अत्याचारी र धेरै पाप गर्ने व्यक्ति नै झूठा ठान्छन् । जब उ समक्ष कुरआनका आयतहरू पढिन्छ तब भन्छः यो बितेका मानिसहरूको दन्त्यकथा मात्र हो । यिनीहरूले अनुमान गरेको यो कुरा सत्य होइन बरु यो अल्लहाको वाणी र उनले आफ्नो दूत तर्फ गरेको प्रकाशना हो । तिनीहरूले धेरै मात्रामा पाप गर्नको कारणले तिनीहरूका आत्मा यसलाई सत्य मान्दैनन् । काफिरहरूले ठानेको कुरा सत्य होइन बरु तिनीहरू प्रलयको दिन आफ्ना पालनकर्ताको दर्शनबाट बञ्चित गरिनेछन् । (यो यस कुरामाथि प्रमाण छ कि मोमिनहरू आफ्ना पालनकर्तालाई स्वर्गमा हेर्नेछन्) फेरि ती काफिरहरू आगोमा प्रवेश हुनेछन् जसको तातोपनको अनुमान लगाउनेछन्, फेरि तिनीहरूलाई भनिनेछन्: यही हो जसलाई तिमीहरू असत्य ठान्थ्यौ ।

(18)-(21) निस्सन्देह सत्कर्मीहरूको (र ती संयमीहरू छन्) कर्मपत्र स्वर्गका ठूला दर्जाहरूमा हुनेछ, र हे रसूल! तपाईंलाई के थाहा के ती दर्जाहरू के छन् ? सत्कर्मीहरूको कर्मपत्र लिखिएर त्यसबाट निवृत्त भएको छ र त्यसमा नत कमी हुन सक्छ र नत बेशी । जसलाई प्रत्येक आकाशका अल्लाहका निकटतम फरिश्ताहरू हेर्छन् ।

(22)-(28) सत्कर्मी र आज्ञाकारीहरू स्वर्गका अनुग्रहहरूबाट लाभान्वित हुँदै हुनेछन् । आसनहरूमा बसेर आफ्ना पालनकर्ता र उनीहरूको लागि तयार पारिएका अनुकम्पाहरू तिर हेर्दै गर्नेछन् । उनीहरूको अनुहारमा तिमी सुख-सम्पन्नताको आभा देख्नेछौ । उनीहरूलाई यस्तो मदिरा पान गराइनेछ जो सवच्छ र त्यसलाई सिलबन्द गरिएको हुन्छ जसको अन्तमा कस्तूरीको सुगन्घ आउँछ । यसै सदा रहने अहुग्रहको लागि प्रतिस्पर्धा गर्नेहरूले प्रतिस्पर्धा गर्नुपर्छ । त्यो यस्तो पेय हुनेछ जसमा स्वर्गको उच्च स्थानबाट फुटेको तस्नीम नमाक मूलबाट निश्रण हुनेछ । यो यस्तो मूल हो जसबाट अल्लाहका निकटतम भक्तजनहरूले पिउनको लागि र त्यसबाट मज्जा प्राप्त गर्नको लागि तयार पारिएको हो ।

(29)-(34) निस्सन्देह पापीहरू संसारमा मोमिनहरूसँग उपहास गर्दछन् । र उनीहरूको छेउबाट हिंड्दा तिनीहरूले उपहास गर्दै आँखाा झिम्क्याइ व्यंग्य गर्थे । र जब यी पापीहरू आफ्ना घर र आफन्त तर्फ फर्कन्छन तब मोमिनहरूसित गरेको उपहासको चर्चा गर्दै तिनीहरूसँग हाँसखेल गर्छन् । र जब यी काफिरहरू मुहम्मद सल्लल्लाहो अलेवसल्लमका साथीहरूलाई जसले सुमार्ग अपनाएका छन् हेर्छन् तब भन्छन्: यिनीहरूले मुहम्मदको अनुसरण गरेर बहकेकाछन् । यी काफिरहरू मुहम्मदका साथीहरूमाथि संरक्षक बनाएर पठाइएका छैनन् । प्रलयको दिन जसले अल्लाह र उनका रसूललाई सत्य मानेका छन् र अल्लाहले नियुक्त गरेका नियम विधानलाई व्यवहारमा ल्याएकाहरूले काफिरहरूसँग उपहास गर्नेछन् जसरी कि काफिरहरूले तिनीहरूसँग संसारमा उपहास गरेका थिए ।

(35) (36) उच्च कोटिका आसनहरूमाथि बसेर मोमिनहरू स्वर्गमा अल्लाहले वरदान गरेका अनुग्रह र सम्मानलाई हेर्नेछन्, र ती अनुग्रहहरूमध्ये सब भन्दा ठूलो अनुग्रह महान अल्लाहको अनुहारलाई देख्नु

عَلَى ٱلْأَرَآئِكِ يَنظُرُونَ ﴿٣٥﴾ هَلْ ثُوِّبَ ٱلْكُفَّارُ مَا كَانُوا۟ يَفْعَلُونَ ﴿٣٦﴾

سُورَةُ ٱلْانْشِقَاقِ

ترتيبها ٨٤ — آياتها ٢٥

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَٰنِ ٱلرَّحِيمِ

إِذَا ٱلسَّمَآءُ ٱنشَقَّتْ ﴿١﴾ وَأَذِنَتْ لِرَبِّهَا وَحُقَّتْ ﴿٢﴾ وَإِذَا ٱلْأَرْضُ مُدَّتْ
﴿٣﴾ وَأَلْقَتْ مَا فِيهَا وَتَخَلَّتْ ﴿٤﴾ وَأَذِنَتْ لِرَبِّهَا وَحُقَّتْ ﴿٥﴾ يَٰٓأَيُّهَا
ٱلْإِنسَٰنُ إِنَّكَ كَادِحٌ إِلَىٰ رَبِّكَ كَدْحًا فَمُلَٰقِيهِ ﴿٦﴾ فَأَمَّا مَنْ أُوتِىَ
كِتَٰبَهُۥ بِيَمِينِهِۦ ﴿٧﴾ فَسَوْفَ يُحَاسَبُ حِسَابًا يَسِيرًا ﴿٨﴾ وَيَنقَلِبُ
إِلَىٰٓ أَهْلِهِۦ مَسْرُورًا ﴿٩﴾ وَأَمَّا مَنْ أُوتِىَ كِتَٰبَهُۥ وَرَآءَ ظَهْرِهِۦ ﴿١٠﴾ فَسَوْفَ
يَدْعُوا۟ ثُبُورًا ﴿١١﴾ وَيَصْلَىٰ سَعِيرًا ﴿١٢﴾ إِنَّهُۥ كَانَ فِىٓ أَهْلِهِۦ مَسْرُورًا ﴿١٣﴾
إِنَّهُۥ ظَنَّ أَن لَّن يَحُورَ ﴿١٤﴾ بَلَىٰٓ إِنَّ رَبَّهُۥ كَانَ بِهِۦ بَصِيرًا ﴿١٥﴾ فَلَآ أُقْسِمُ
بِٱلشَّفَقِ ﴿١٦﴾ وَٱلَّيْلِ وَمَا وَسَقَ ﴿١٧﴾ وَٱلْقَمَرِ إِذَا ٱتَّسَقَ ﴿١٨﴾
لَتَرْكَبُنَّ طَبَقًا عَن طَبَقٍ ﴿١٩﴾ فَمَا لَهُمْ لَا يُؤْمِنُونَ ﴿٢٠﴾ وَإِذَا قُرِئَ
عَلَيْهِمُ ٱلْقُرْءَانُ لَا يَسْجُدُونَ ۩ ﴿٢١﴾ بَلِ ٱلَّذِينَ كَفَرُوا۟ يُكَذِّبُونَ
﴿٢٢﴾ وَٱللَّهُ أَعْلَمُ بِمَا يُوعُونَ ﴿٢٣﴾ فَبَشِّرْهُم بِعَذَابٍ أَلِيمٍ ﴿٢٤﴾
إِلَّا ٱلَّذِينَ ءَامَنُوا۟ وَعَمِلُوا۟ ٱلصَّٰلِحَٰتِ لَهُمْ أَجْرٌ غَيْرُ مَمْنُونٍ ﴿٢٥﴾

हो । के काफिरहरूले संसारमा आफुले गरेका पाप र अपराधहरूका पूरा पूरा फल पाएनन् ?

## सूरह अल्-इन्शिकाक - 84

(1)-(5) जब आकाश बादल सहित प्रलयको दिन फट्नेछ र आफ्नो प्रभुको तर्फबाट आएको फट्ने आदेशको पालना गर्छ, र आदेशको पालना गर्नु उसको लागि यथोचित हो । र जब धरतीलाई फैलाइएर फराकिलो गरिदिन्छ एवं त्यस दिन पहाडहरू टुक्रा टुक्रा हुनेछन् । र धरती भित्र जति मृतकहरू छन् सबैलाई बाहिर निकालेर खाली हुनेछ । र आफ्नो प्रभुको आदशेको पालना गर्छ र उसको लागि यसो गर्नु यथोचित पनि हो ।

(6) हे मानव! तिमी अल्लाहतर्फ भाग्नेछौ र सुकर्म तथा कुकर्म गर्दैछौ फेरि प्रलयको दिन अल्लाहसँग भेटनेछौ र तिमीले गरेको कार्यमाथि आफ्नो दया वा न्यायले प्रतिफल दिनेछन् ।

(7)-(9) अतः जसलाई उसको कर्मपत्र उसको दाहिने हातमा दिइनेछ र ऊ आफ्ना पालनकर्तामाथि ईमान ल्याउनेवाला पनि छ भने ऊसँग सरलतासँग हिसाब लिइनेछ र ऊ स्वर्गमा आफ्ना आफन्तहरूकहाँ हर्षोल्लासका साथ फर्कनेछ ।

(10)-(15) तर जसलाई उसको कर्मपत्र उसको पिठ्युँपछाडिबाट दिइनेछ र त्यो अल्लाहको अवज्ञा गर्नेवाला छ भने उसले मृत्यु र सर्वनाशलाई डाक्नेछ र नरकमा त्यसको तातोपनलाई अनुमान गर्दै प्रवेश हुनेछ किनकि त्यो संसारमा आफ्ना घरपरिवारमा मोजमस्ती र घमण्डमा बस्थ्यो र अल्लाहको यातनाबारे चिन्तन मनन गर्दैन थियो । र उसले हिसाबको लागि आफ्ना जन्मदाताकहाँ फेरि जिउँदो भई कहिल्यै फर्केर जाने छैन भन्ने ठानेको थियो । किन न फर्कनु, अल्लाह उसलाई चाँडै पहिलो पटक जन्म दिइ झैं फेरि जन्म दिनेछन् अनि उसले गरेको कर्ममाथि बदला दिनेछन् । निस्सन्देह उसका रबले जन्म हुने दिन देखि फेरि जन्म लिने सम्मको उसको अवस्थालाई देखिरहेका थिए ।

(16)-(19) सूर्यास्त हुने समय आकाशमा भएको लालीको कसम अल्लाह खान्छन र रातको कसम र त्यमा एकत्रित हुने जिव-जन्तु, किरा र हानि पुऱ्याउने जनावरहरू इत्यादिको कसम । र चन्द्रमाको कसम जबकि त्यसको प्रकाश पूरा हुन्छ । हे मानव! तिमी अवश्य नै धेरै चरण र विभिन्न अवस्थाहरू हुँदै जानेछौः पहिलो वीर्य अनि रगतको डल्लो अनि मासुको टुक्रा अनि त्यसमा आत्यमा हाल्नु अनि मृत्यु अनि दोबारा जन्म लिनु फेरि एकत्रित हुने मैदानमा जम्मा हुनु । मनुष्यको लागि अल्लाह बाहेक अरूको कसम लिनु कदापि उचित हुँदैन यदि उसले यस्तो गर्छ भने उसले शिर्क गऱ्यो ।

(20)-(25) चिन्ह र प्रमाणहरू प्रष्ट भए पछि कुन कुराले तिनीहरूलाई अल्लाह र आखिरतमाथि ईमान ल्याउनुबाट रोक्छ ? र तिनीहरूलाई के भएको छ जब तिनीहरू समक्ष कुरआन पाठ गरिन्छ भने अल्लाहको लागि सज्दा गर्दैनन् र त्यसमा आएको आदेशलाई मान्दैनन् ? बरु काफिरको बानि झूठा ठहर गर्नु र सत्यको विरुद्ध गर्नु नै हो । र तिनीहरूले आफ्ना छातीमा लुकाएको शत्रुता अल्लाह राम्ररी जान्दैछन् किनकि तिनीहरूलाई ज्ञान छ कि कुरआनले दिएको आदेश एक्दमै सत्य हो । अतः हे रसूल! तिनीहरूलाई तिनीहरूको लागि अल्लाहले जुन दुःखदायक यातना तयार पारेका छन् त्यसको बारेमा शुभ-सूचना सुनाइदिनुस् । तर जुन मानिसहरूले अल्लाह र उनका रसूलमाथि ईमान ल्याएर अल्लाहले उनीहरूमथि अनिवार्य गरेको कुरालाई पूरा गरे उनीहरूको लागि परलोकमा न समाप्त र न कम हुने पूण्य हुनेछ ।

# सूरह अल्-बुरूज् - 85

سُورَةُ البُرُوجِ — آياتها ٢٢ — ترتيبها ٨٥

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

وَالسَّمَاءِ ذَاتِ الْبُرُوجِ ﴿١﴾ وَالْيَوْمِ الْمَوْعُودِ ﴿٢﴾ وَشَاهِدٍ وَمَشْهُودٍ
﴿٣﴾ قُتِلَ أَصْحَابُ الْأُخْدُودِ ﴿٤﴾ النَّارِ ذَاتِ الْوَقُودِ ﴿٥﴾ إِذْ هُمْ عَلَيْهَا
قُعُودٌ ﴿٦﴾ وَهُمْ عَلَىٰ مَا يَفْعَلُونَ بِالْمُؤْمِنِينَ شُهُودٌ ﴿٧﴾ وَمَا نَقَمُوا
مِنْهُمْ إِلَّا أَنْ يُؤْمِنُوا بِاللَّهِ الْعَزِيزِ الْحَمِيدِ ﴿٨﴾ الَّذِي لَهُ مُلْكُ
السَّمَاوَاتِ وَالْأَرْضِ ۚ وَاللَّهُ عَلَىٰ كُلِّ شَيْءٍ شَهِيدٌ ﴿٩﴾ إِنَّ الَّذِينَ
فَتَنُوا الْمُؤْمِنِينَ وَالْمُؤْمِنَاتِ ثُمَّ لَمْ يَتُوبُوا فَلَهُمْ عَذَابُ جَهَنَّمَ وَلَهُمْ
عَذَابُ الْحَرِيقِ ﴿١٠﴾ إِنَّ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ لَهُمْ
جَنَّاتٌ تَجْرِي مِنْ تَحْتِهَا الْأَنْهَارُ ۚ ذَٰلِكَ الْفَوْزُ الْكَبِيرُ ﴿١١﴾ إِنَّ بَطْشَ
رَبِّكَ لَشَدِيدٌ ﴿١٢﴾ إِنَّهُ هُوَ يُبْدِئُ وَيُعِيدُ ﴿١٣﴾ وَهُوَ الْغَفُورُ الْوَدُودُ ﴿١٤﴾
ذُو الْعَرْشِ الْمَجِيدُ ﴿١٥﴾ فَعَّالٌ لِمَا يُرِيدُ ﴿١٦﴾ هَلْ أَتَاكَ حَدِيثُ الْجُنُودِ
﴿١٧﴾ فِرْعَوْنَ وَثَمُودَ ﴿١٨﴾ بَلِ الَّذِينَ كَفَرُوا فِي تَكْذِيبٍ ﴿١٩﴾ وَاللَّهُ مِنْ
وَرَائِهِمْ مُحِيطٌ ﴿٢٠﴾ بَلْ هُوَ قُرْآنٌ مَجِيدٌ ﴿٢١﴾ فِي لَوْحٍ مَحْفُوظٍ ﴿٢٢﴾

سُورَةُ الطَّارِقِ — آياتها ١٧ — ترتيبها ٨٦

1-9 नक्षत्रगन आकाशको कसम अल्लाह खाइरहेछन जहाँ देखि सूर्य र चन्द्रमा हिंडदैछन् । र प्रलयको दिनको कसम जसमा सम्पूर्ण प्राणीहरूलाई एकत्रित गर्ने अल्लाहले वाचा गरेकाछन् । साक्षी दिनेको कसम र जसमाथि साक्षी दिइन्छ । अल्लाह आफ्ना प्राणीहरूमध्ये जसको कसम लिन चाहन्छन् उनी लिन सक्छन् तर प्राणीको लागि अल्लाहबाहेक अरूको कसम लिनु अवैध छ किनभने अल्लाहबाहेक अरूको कसम लिनु शिर्क हो । धिक्कार छ ती व्यक्तिहरूको निम्ति जसले मोमिनहरूलाई यातना दिँदै धरतीमा ठूलो उपद्रव गरे र दन्कँदो महान आगोमा जलाए । त्यो अग्नियुक्त खाडलको वरिपरि ती व्यक्तिहरू अनिवार्य रूपले बसेका थिए,र मोमिनहरूसँग गरिरहेका यातना र सजायको स्वयं तिनीहरू दर्शक बनी उपस्थित थिए । प्रभुत्त्वशाली र प्रशंसनीय अल्लाहमाथि ईमान ल्याउनको कारणले तिनीहरूले मोमिनहरूलाई यातना दिएका थिए, यस्ता प्रभुत्त्शाली अल्लाह जसलाई कोही पराजित गर्न सक्दैन जो आफ्ना वचन र कार्यहरूमा प्रशंसनीय हुन् र उनैको लागि आकाशहरू र धरतीको शासन छ र उनी प्रत्येक कुरालाई हेरिरहेकाछन् उनीमाथि केही कुरा लुप्त हुनसक्दैन ।

10 निस्सन्दहे जुन व्यक्तिहरूले मोमिन पुरुष र स्त्रीहरूलाई अल्लाहको धर्मबाट फेर्नको निम्ति आगोबाट पोलेका थिए फेरि त्यसपछि प्रायश्चित गरेनन् भने तिनीहरूको लागि परलोकमा नरकको यातना र कठोर पोलने सजाय रहेछ ।

11 निस्सन्देह जो व्यक्तिहरूले अल्लाह तथा उनका रसूलमाथि ईमान ल्याएर सुकर्महरू गरे तिनीहरूको लागि यस्ता बगैंचाहरू छन जसक महलहरूको तलतिरबाट नहरहरू बगिरहनेछन,र यही महान सफलता हो।

12-16 निस्सन्देह तिम्रा रबको प्रत्योपकार आफ्ना शत्रुहरूसित लिनु र तिनलाई यातना दिनु एकदमै कठोर रहेकोछ । उनले पहिलो पटक प्राणीलाई सृजना गर्छन अनि फेरि पनि सृजना गर्नेछन् । प्रायश्चित गर्नेको लागि माफ गर्नेवाला आफ्ना मित्रहरूसँग धेरै प्रेम र स्नेह गर्नेवाला छन् । राजसिंहासनका स्वामी एवं महान हुन उनको दया र कृपा अन्तिम सीमा सम्म पुगेको छ । जो चाहन्छन् गर्छन् उनको चाहनाबाट कसैले उनलाई रोक्दैन ।

17-22 हे रसूल! के तपाईंसमक्ष ती काफिरहरूका समूहहरूको खबर पुगेको छ जसले आफ्ना दूतहरूलाई झूठा ठहर गरेका थिए अर्थात फिर्औन र समूद र तिनीहरूमाथि आएको यातना र प्रकोपको खबर । समुदायले यस कुराबाट पाठ प्राप्त गरेका थिएनन् । बरु काफिरहरू अघिका मानिसहरू झैं निरन्तर झूठ्ल्याएका थिए । अल्लाहले तिनीहरूलाई आफ्नो ज्ञान र शक्तिको परिधि भित्र लिएका छन तिनीहरूको कृयाकलापबाट केही कुरा उनीमाथि लुक्न सक्दैन । झूठ्ल्याउने बहुदेववादीहरूको भनाई अनुसार यो कुरआन कविता र जादू होइन, अनि त्यसलाई झूठा पनि ठानेका छन्, बरु यो त उच्च कोटिको कुरआन हो, सुरिक्षत पेटिकामा छ, त्यसमा हेरफेर हुनु असम्भव छ ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

وَالسَّمَاءِ وَالطَّارِقِ ﴿١﴾ وَمَا أَدْرَاكَ مَا الطَّارِقُ ﴿٢﴾ النَّجْمُ الثَّاقِبُ ﴿٣﴾ إِن كُلُّ
نَفْسٍ لَّمَّا عَلَيْهَا حَافِظٌ ﴿٤﴾ فَلْيَنظُرِ الْإِنسَانُ مِمَّ خُلِقَ ﴿٥﴾ خُلِقَ مِن مَّاءٍ
دَافِقٍ ﴿٦﴾ يَخْرُجُ مِن بَيْنِ الصُّلْبِ وَالتَّرَائِبِ ﴿٧﴾ إِنَّهُ عَلَىٰ رَجْعِهِ لَقَادِرٌ ﴿٨﴾
يَوْمَ تُبْلَى السَّرَائِرُ ﴿٩﴾ فَمَا لَهُ مِن قُوَّةٍ وَلَا نَاصِرٍ ﴿١٠﴾ وَالسَّمَاءِ ذَاتِ الرَّجْعِ ﴿١١﴾
وَالْأَرْضِ ذَاتِ الصَّدْعِ ﴿١٢﴾ إِنَّهُ لَقَوْلٌ فَصْلٌ ﴿١٣﴾ وَمَا هُوَ بِالْهَزْلِ ﴿١٤﴾ إِنَّهُمْ
يَكِيدُونَ كَيْدًا ﴿١٥﴾ وَأَكِيدُ كَيْدًا ﴿١٦﴾ فَمَهِّلِ الْكَافِرِينَ أَمْهِلْهُمْ رُوَيْدًا ﴿١٧﴾

ترتيبها ٨٧ — سُورَةُ الأَعْلَىٰ — آياتها ١٩

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

سَبِّحِ اسْمَ رَبِّكَ الْأَعْلَى ﴿١﴾ الَّذِي خَلَقَ فَسَوَّىٰ ﴿٢﴾ وَالَّذِي قَدَّرَ فَهَدَىٰ
﴿٣﴾ وَالَّذِي أَخْرَجَ الْمَرْعَىٰ ﴿٤﴾ فَجَعَلَهُ غُثَاءً أَحْوَىٰ ﴿٥﴾ سَنُقْرِئُكَ
فَلَا تَنسَىٰ ﴿٦﴾ إِلَّا مَا شَاءَ اللَّهُ ۚ إِنَّهُ يَعْلَمُ الْجَهْرَ وَمَا يَخْفَىٰ ﴿٧﴾ وَنُيَسِّرُكَ
لِلْيُسْرَىٰ ﴿٨﴾ فَذَكِّرْ إِن نَّفَعَتِ الذِّكْرَىٰ ﴿٩﴾ سَيَذَّكَّرُ مَن يَخْشَىٰ ﴿١٠﴾
وَيَتَجَنَّبُهَا الْأَشْقَى ﴿١١﴾ الَّذِي يَصْلَى النَّارَ الْكُبْرَىٰ ﴿١٢﴾ ثُمَّ لَا يَمُوتُ
فِيهَا وَلَا يَحْيَىٰ ﴿١٣﴾ قَدْ أَفْلَحَ مَن تَزَكَّىٰ ﴿١٤﴾ وَذَكَرَ اسْمَ رَبِّهِ فَصَلَّىٰ ﴿١٥﴾

## सूरह अत्-तारिक - 86

(1)-(4) अल्लाह आकाश र रातमा आउने ताराको कसम खाइरहेछन्, र यस ताराको महानताको बारेमा तपाईंलाई के थाहा ? त्यो चम्किलो र प्रकाशमय तारा हो, प्रत्येक व्यक्तिमाथि एउटा संरक्षक फरिश्ता नियुक्त छ जो उसका कर्महरूलाई सुरिक्षत राख्छ ताकि त्यही अनुसार प्रलयको दिन तिमीहरूको हिसाब किताब होस् ।

(5)-(8) पुनर्जन्मलाई इन्कार गर्ने मानिसलाई चाहियो कि कुन तत्वबाट उसको सृष्टि गरिएको हो भन्ने कुरामा चिन्तन गरोस् ? ताकि यो जानोस् कि पहिलो पटक सृष्टि गर्नु भन्दा पुनः जन्म दिनु गाह्रो छैन, पहिलो पटक तिब्रगतिमा छचल्कँदो गर्भमा आउने पानीबाट सृष्टि गरिएको हो जुन पानी पुरुषको पिठ्यूँ र महिलाको छातीको बीचबाट निस्कन्छ । निस्सन्देह जो अल्लाहले मानिसलाई यस पानीबाट सृष्टि गर्नुभएको छ भने उसको मृत्यु पश्चात पनि उसलाई दोबारा जन्म दिनुमाथि समर्थ छन् ।

(9) (10) जुन दिन गोप्य भेदहरूको परीक्षण हुनेछ र असल तथा खराब रहस्यमा फरक पारिनेछ, त्यस बेला मनुष्यको यत्रो शक्ति हुँदैन कि आफ्नो तर्फबाट सफाइ पेश गरोस् र न कुनै सहयोगी हुनेछ जो उसबाट अल्लाहको यातनालाई टार्न सकोस् ।

(11)-(14) पटक पटक पानी बर्साउने आकाशको कसम! र अनाज भित्र पस्नको कारणले चर्किने धरतीको कसम! निस्सन्देह यो कुरआन सत्य र असत्य बीच निर्णायक वाणी हो, यो कुनै ख्यालठट्टा होइन । प्राणीको लागि अल्लाहबाहेक अरूको कसम खानु जायज हुँदैन यसो गरेमा शिर्क हुन्छ ।

(15)-(17) रसूल सल्लल्लाहो अलैहे वसल्लम र कुरआनलाई झूठा ठहर गर्नेहरू चाल चलिरहेका छन् ताकि आफ्नो चालले सत्यलाई टार्न सकुन् र असत्यको सहायता गर्नसकुन्, र म पनि सत्यलाई स्पष्ट पार्नको लागि चाल चलिरहेको छु यद्यपि काफिरहरूलाई यो किन खराब न लागोस् । हे रसूल! तपाईं तिनीहरूमाथि प्रकोप र यातना अवतरण हुनको मागमा हतार न गर्नुहोस बरु तिनीहरूलाई केही दिनको लागि मौका दिनुहोस् र तिनको निमित चाँडै न गर्नुहोस् । र चाँडै तपाईं तिनीहरूमाथि आउने यातना, प्रकोप, सजाय र सर्वनाशलाई हेर्नुहुन्छ ।

## सूरह अल्-आअ्ला - 87

(1)-(5) (हे सन्देष्टा!) आफ्ना सर्वोच्च पालनकर्ताको नामको प्रत्येक प्रकारको साझेदारी र कमी कमजोरीबाट पवित्रता वर्णन गर्नुहोस् यस्तो पवित्रताको जो उनको महानताको योग्य होस् । जसले प्रत्येक प्राणीहरूलाई सृष्टि गरे अनि राम्रोसित सृष्टि गरेर अंग प्रत्यंग मिलाए । र जसले भाग्यहरू निर्धारित गरे अनि प्रत्येक प्राणीलाई जुन उसको हितमा उचित छ भन्ने कुरातिर मार्गदर्शन गरे । र जसले हरियो बालीनाली उमारे, त्यस पछि त्यसलाई कुटिएको र परिवर्तन भएको सुखा घाँस बनाइदिए ।

(6) (7) हे दूत! हामी तपाईंलाई यस कुरआनलाई यसरी पढाउनेछौं कि तपाईं यसलाई बिर्सनु हुनुहुन्न । अँ, यदि अल्लाहले जानेको कुनै महत्वपूर्ण रहस्यको कारणले बिर्साए भने त्यो बेग्लै कुरा हो, किनभने उनी कर्म तथा वचनमध्ये दृश्य र अदृश्य सबैलाई जान्दछन् ।

(8) र हामीले तपाईंका सम्पूर्ण मामिलाहरूमा सजिलो तरिकाको सुविधा प्रदान गर्नेछौं र त्यसमध्ये दूतत्वको बोझलाई उठाउनुमा सजिलो गर्नु, यसै गरि हामीले तपाईंको धर्मलाई सरल बनायौं जसमा केही कठोरता र सख्ती पाउँदैन ।

(9) हे दूत! तपाईंतिर गरिएको प्रकाशनामध्ये जो तपाईंको लागि सजिलो होस त्यहीबाट आफ्ना समुदायलाई उपदेश गर्नुहोस् र जसमा तिनीहरूका निमित्त लाभ र भलाई होस त्यसतिर तिनीहरूलाई डोऱ्याउनुहोस्, र जस व्यक्तिबाट उपदेश स्वीकार गर्नको आशा हुन्छ त्यसलाई खास गरी उपदेश गर्नुहोस्, र जसलाई उपदेश गर्नाले उसको

بَلْ تُؤْثِرُونَ ٱلْحَيَوٰةَ ٱلدُّنْيَا ﴿١٦﴾ وَٱلْـَٔاخِرَةُ خَيْرٌ وَأَبْقَىٰٓ ﴿١٧﴾ إِنَّ
هَـٰذَا لَفِى ٱلصُّحُفِ ٱلْأُولَىٰ ﴿١٨﴾ صُحُفِ إِبْرَٰهِيمَ وَمُوسَىٰ ﴿١٩﴾

## سُورَةُ الغَاشِيَةِ

ترتيبها ٨٨ — آياتها ٢٦

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَـٰنِ ٱلرَّحِيمِ

هَلْ أَتَىٰكَ حَدِيثُ ٱلْغَـٰشِيَةِ ﴿١﴾ وُجُوهٌ يَوْمَئِذٍ خَـٰشِعَةٌ ﴿٢﴾
عَامِلَةٌ نَّاصِبَةٌ ﴿٣﴾ تَصْلَىٰ نَارًا حَامِيَةً ﴿٤﴾ تُسْقَىٰ مِنْ عَيْنٍ ءَانِيَةٍ ﴿٥﴾
لَّيْسَ لَهُمْ طَعَامٌ إِلَّا مِن ضَرِيعٍ ﴿٦﴾ لَّا يُسْمِنُ وَلَا يُغْنِى مِن جُوعٍ ﴿٧﴾
وُجُوهٌ يَوْمَئِذٍ نَّاعِمَةٌ ﴿٨﴾ لِّسَعْيِهَا رَاضِيَةٌ ﴿٩﴾ فِى جَنَّةٍ عَالِيَةٍ ﴿١٠﴾
لَّا تَسْمَعُ فِيهَا لَـٰغِيَةً ﴿١١﴾ فِيهَا عَيْنٌ جَارِيَةٌ ﴿١٢﴾ فِيهَا سُرُرٌ مَّرْفُوعَةٌ ﴿١٣﴾
وَأَكْوَابٌ مَّوْضُوعَةٌ ﴿١٤﴾ وَنَمَارِقُ مَصْفُوفَةٌ ﴿١٥﴾ وَزَرَابِىُّ مَبْثُوثَةٌ ﴿١٦﴾
أَفَلَا يَنظُرُونَ إِلَى ٱلْإِبِلِ كَيْفَ خُلِقَتْ ﴿١٧﴾ وَإِلَى ٱلسَّمَآءِ كَيْفَ
رُفِعَتْ ﴿١٨﴾ وَإِلَى ٱلْجِبَالِ كَيْفَ نُصِبَتْ ﴿١٩﴾ وَإِلَى ٱلْأَرْضِ كَيْفَ
سُطِحَتْ ﴿٢٠﴾ فَذَكِّرْ إِنَّمَآ أَنتَ مُذَكِّرٌ ﴿٢١﴾ لَّسْتَ عَلَيْهِم
بِمُصَيْطِرٍ ﴿٢٢﴾ إِلَّا مَن تَوَلَّىٰ وَكَفَرَ ﴿٢٣﴾ فَيُعَذِّبُهُ ٱللَّهُ ٱلْعَذَابَ
ٱلْأَكْبَرَ ﴿٢٤﴾ إِنَّ إِلَيْنَآ إِيَابَهُمْ ﴿٢٥﴾ ثُمَّ إِنَّ عَلَيْنَا حِسَابَهُم ﴿٢٦﴾

उद्दण्डता र घृणामा बढोतरी गर्छ त्यसतोलाई उपदेश गर्नुमा आफुलाई नथकाउनुहोस् ।

(10)-(13) आफ्ना पालनकर्तासित भय राख्ने व्यक्तिले नै उपदेश ग्रहण गर्नेछ, र त्यो अभागी जो आफ्ना पालनकर्तासित डराउँदैन यस उपदेशबाट टाढा बस्छ । जो विशाल नरकको आगोमा चाँडै प्रवेश हुनेछ जसको गर्मीको अनुमान लगाउनेछ । जहाँ नत उसलाई मृत्यु नै आउनेछ जसबाट ऊ संचो पाओस र नत यस्तो जीवन जिउनेछ जसबाट ऊ लाभ प्राप्त गरोस् ।

(14) (15) निस्सन्देह जसले आफुलाई कुव्यवहार र खराब आचरणबाट पवित्र पार्यो त्यो सफल भयो र अल्लाहलाई स्मरण गर्‍यो र उनीलाई एक जानी मात्र उनैलाई गुहार्‍यो र मात्र उनैलाई प्रसन्न पार्ने हेतु सुकर्म गर्‍यो अनि नमाजलाई त्यसका निर्धारित समयमा स्थापित गर्‍यो, मात्र अल्लाहको खुशी र प्रसन्नता प्राप्त गर्नको निम्ति र अल्लाहले निर्धारित गरेको नियम विधान (शरिअत) को पालना गर्नको लागि ।

(16) हे मानव! तिमी परलोकको अनुग्रहमाथि सांसारिक जीवनको शोभा र सुन्दरतालाई प्राथमिकता दिन्छौ ।

(17) जबकि परलोकको जीवन जसमा सदैंको लागि अनुग्रह हुनेछ संसारबाट अति उत्तम र चिरस्थायी छ ।

(18) (19) निस्सन्देह यस सूरहमा जस कुराहरूसित तिमीहरूलाई अवगत गराइएको छ त्यसको अर्थ कुरआन अवतरण हुनु भन्दा अघिका ग्रन्थहरूमा पनि पाइन्छ अर्थात आदरणीय इब्राहीम र मूसा अलैहिस्सलमका ग्रन्थहरूमा ।

## सूरह अल्-गाशियह् - 88

(1) १) हे दूत! के तपाईंकहाँ महाप्रलयको खबर पुगेको छ जसको भय तथा त्रासले मानिसहरूलाई ढपक्कै ढाक्नेछ ?

(2)-(7) त्यस दिन काफिरहरूका अनुहार यातना दिनको कारणले अपमानित हुनेछन्, परिश्रम गरिरहेका थकित हुनेछन्, कठोर रूपका ज्वालाहरूसहित आगो उसलाई पुग्नेछ, अति नै तातो मुहानबाट पानी खुवाइनेछ । नरकवासीहरूको खाना धरतीसितै मिलेको काँडैकाँड भएको घाँस बाहेक अरू केही हुँदैन त्यो अति नै खराब र बेकार खाना हुनेछ । जसले गर्दा त्यसलाई खाने शरीरलाई नत मोटो गर्छ र न उसको भोकलाई समाप्त गर्छ ।

(8)-(16) मोमिनहरूका अनुहार महाप्रलयको दिन प्रतिफुल्लित हुनेछन, संसारमा सुकर्महरू गर्नुमा परिश्रम गर्नाले परलोकमा प्रसन्न हुनेछन्, उच्च दर्जा र ठाउँ हुने स्वर्गमा बस्नेछन् जसमा एउटा पनि कुशब्द सुन्ने छैनन्, जसमा तिब्रगतिमा बगिरहेका मुहानहरू हुनेछन्, जहाँ उच्च आसनहरू हुनेछन र पीउनेहरूको निमित्त तयार परिएको जाम राखिएका हुनेछन र सिरानीहरू पंक्तिहरूमा एक अर्को साथै लगाइएका हुनेछन र धेरै मात्रामा मखमली गलैंचाहरू बिछ्याइएका हुनेछन् ।

(17)-(20) के झूठा ठहर गर्ने काफिरहरू ऊँटतिर हेर्दैनन् कि यो अनौठो प्राणीलाई कसरी सृष्टि गरियो ? र यो अद्भुत रूपले माथि उठ्एको आकाशलाई कसरी माथि उठाइयो ? र पहाडहरूतिर कि कसरी गाडिदिए र जसको माध्यमले धरतीलाई स्थिरता एवं स्थायित्व प्राप्त भयो ? र धरतीतिर कि कसरी बिछ्याइयो र समतल बनाइयो ?

(21) (22) अतः हे दूत! तपाईंको दूतत्वका कुराहरूबाट विमुख भएका मानिसहरूलाई उपदेश गर्नुहोस र तिनीहरूको विमुखतामाथि चिन्ता नगर्नुहोस् किनकि तपाईं मात्र एउटा उपदेशक हुनुहुन्छ, तिनीहरूलाई ईमान ल्याउनुमाथि वेवश गर्नु तपाईंको कार्य होइन ।

(23) (24) तर जो व्यक्ति उपदेश र पाठको कुराबाट विमुख भई आफ्नो कुफ्र (अवज्ञा) माथि अडिग भए उसलाई अल्लाहले आगोमा ठूलो यातना दिनेछन् ।

(25) (26) निस्सन्देह हामीतिर तिनीहरू मृत्यु पश्चात् फर्कनुछ अनि तिनीहरूले गरेका कर्महरूको बदला दिनु हाम्रै जिम्मा हो ।

سُورَةُ الفَجْرِ

ترتيبها ٨٩ — آياتها ٣٠

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَٰنِ ٱلرَّحِيمِ

وَٱلْفَجْرِ ﴿١﴾ وَلَيَالٍ عَشْرٍ ﴿٢﴾ وَٱلشَّفْعِ وَٱلْوَتْرِ ﴿٣﴾ وَٱلَّيْلِ إِذَا يَسْرِ ﴿٤﴾ هَلْ فِى ذَٰلِكَ قَسَمٌ لِّذِى حِجْرٍ ﴿٥﴾ أَلَمْ تَرَ كَيْفَ فَعَلَ رَبُّكَ بِعَادٍ ﴿٦﴾ إِرَمَ ذَاتِ ٱلْعِمَادِ ﴿٧﴾ ٱلَّتِى لَمْ يُخْلَقْ مِثْلُهَا فِى ٱلْبِلَٰدِ ﴿٨﴾ وَثَمُودَ ٱلَّذِينَ جَابُوا۟ ٱلصَّخْرَ بِٱلْوَادِ ﴿٩﴾ وَفِرْعَوْنَ ذِى ٱلْأَوْتَادِ ﴿١٠﴾ ٱلَّذِينَ طَغَوْا۟ فِى ٱلْبِلَٰدِ ﴿١١﴾ فَأَكْثَرُوا۟ فِيهَا ٱلْفَسَادَ ﴿١٢﴾ فَصَبَّ عَلَيْهِمْ رَبُّكَ سَوْطَ عَذَابٍ ﴿١٣﴾ إِنَّ رَبَّكَ لَبِٱلْمِرْصَادِ ﴿١٤﴾ فَأَمَّا ٱلْإِنسَٰنُ إِذَا مَا ٱبْتَلَىٰهُ رَبُّهُۥ فَأَكْرَمَهُۥ وَنَعَّمَهُۥ فَيَقُولُ رَبِّىٓ أَكْرَمَنِ ﴿١٥﴾ وَأَمَّآ إِذَا مَا ٱبْتَلَىٰهُ فَقَدَرَ عَلَيْهِ رِزْقَهُۥ فَيَقُولُ رَبِّىٓ أَهَٰنَنِ ﴿١٦﴾ كَلَّا ۖ بَل لَّا تُكْرِمُونَ ٱلْيَتِيمَ ﴿١٧﴾ وَلَا تَحَٰٓضُّونَ عَلَىٰ طَعَامِ ٱلْمِسْكِينِ ﴿١٨﴾ وَتَأْكُلُونَ ٱلتُّرَاثَ أَكْلًا لَّمًّا ﴿١٩﴾ وَتُحِبُّونَ ٱلْمَالَ حُبًّا جَمًّا ﴿٢٠﴾ كَلَّآ إِذَا دُكَّتِ ٱلْأَرْضُ دَكًّا دَكًّا ﴿٢١﴾ وَجَآءَ رَبُّكَ وَٱلْمَلَكُ صَفًّا صَفًّا ﴿٢٢﴾ وَجِا۟ىٓءَ يَوْمَئِذٍۭ بِجَهَنَّمَ ۚ يَوْمَئِذٍ يَتَذَكَّرُ ٱلْإِنسَٰنُ وَأَنَّىٰ لَهُ ٱلذِّكْرَىٰ ﴿٢٣﴾

## सूरह अल्-फज्र - 89

(1)-(5) अल्लहा तआला प्रभातकालको कसम खाइरहेछन्, र जिलहिज्जा महिनाका प्रारम्भिक सम्मानित र महत्वपूर्ण रातहरूको कसम, र प्रत्येक वस्तुको जोर तथा बेजोरको कसम, र रातको कसम जब त्यो आफ्नो अन्ध्यारो समेत विदा हुन लाग्छ । के यी उप्रयुक्त कसमहरू बुद्धिमानकोलागि प्रयाप्त छैनन् ?

(6)-(8) हे दूत! के तपाईंले हेर्नुभएको होइन कि तपाईंका पालनकर्ताले आद समुदायसित के कस्तो व्यवहार गरे, जो इरम कूलका र अग्ला तथा बलियो स्तम्भहरूमाथि आधारित महलहरूवाला थिए, शारीरिक महानता र युद्धको शक्तिमा जसको समान संसारमा अरू कुनै समुदाय सृष्टि गरिएन ?

(9) र दूत सालेहको समुदाय समूदसँग के व्यवहार गरे जो उपत्यकामा चट्टान काटेर घर बनाउने गर्थे ?

(10) अनि मिस्रको राजा फिर्औनसित के व्यवहार गरे जो यस्तो सेनावाल थियो जसले उसको राज्यलाई कायम राख्यो र उसको मामलालाई शक्ति प्रदान गऱ्यो ?

(11)-(14) यिनीहरूले अल्लाहको राज्यमा अत्याचारी र अन्याय गरेका थिए अनि आफ्नो अन्यायको कारणले नगरहरूमा फसाद फैलायो, अन्ततः तिम्रा रबले तिनीहरूमाथि कठोर यातना बर्साए । हे दूत! तपाईंका पालनकर्ता अवज्ञा गर्नेहरूको लागि ताकमा छन् अवज्ञाकारीलाई अलिकति अवसर दिन्छ फेरि त्यसलाई प्रभुत्त्वशाली एवं शक्तिशालीको पकड जस्तो समातिलिन्छन् ।

(15) तर मानवको हाल के छ भने जब उसको प्रभुले उसलाई धन-सम्पत्ति, रोजीमामा बढोतरी र राम्रो जीवन प्रदान गरेर परीक्षा लिन्छन भने यो उसका प्रभुकहाँ उसको सम्मानको कराणले भएको छ भन्ने कुरा ठान्दै भन्छः मेरा पालनकार्ताले मलाई सम्मानिनीय बनाए ।

(16) तर जब रबले उसको परीक्षा उसको जीविका सीमित गरेर लिन्छन भने यो उसका प्रभुकहाँ उसको अपमानको कारणले भएको छ भन्ने कुरा ठान्दै भन्छः मेरा पलानकर्ताले मलाई अपमान गरे ।

(17)-(20) यस मानवले ठाने जस्तो कुरा छैनन्, बरु सम्मान अल्लाहको आज्ञापालन गरेर मिल्छ र उनको अवज्ञा गरेर अपमान प्राप्त हुन्छ । र तिमीहरू अनाथको सत्कार गर्दैनौ र ऊसँग राम्रो व्यवहार गर्दैनौ, र तिमी असहायलाई खुवाउन एक अर्कालाई प्रेरित गर्दैनौ, र पैतृक धन-सम्पत्ति पूरै हडपेर खाइदिन्छौ र सम्पत्तिको ज्यादै भन्दा ज्यादै मोह गर्छौ ।

(21)-(23) यो मनासिब छैन कि तिम्रो अवस्था यसरी होस्! जब धरतीलाई हल्लाएर टुक्रा-टुक्रा गरिदिइन्छ, र तपाईंका पालनकर्ता प्राणीहरू बीच निधो गर्नेको निमित्त आउनेछन र फरिश्ताहरूपनि पंक्तिबद्ध भई उपस्थित हुनेछन । र त्यस ठूलो दिनमा नरक परस्तुत गराइनेछ, त्यस दिन काफिर सचेत भएर पाठ प्राप्त गर्नेछ र प्रायश्चित गर्नेछ त यो पाठ र प्रायश्चित उसलाई कसरी फाइदा दिनेछ जबकि उसले संसारमा धेरै मनमानी गरेको थियो र यहाँ यी दुबै (पाठ र प्रायश्चित) को समय समाप्त भइसक्यो ।

(24) उसले भन्नेछः हाय! मैले पारलौकिक जीवनमा फाइदा पुऱ्याउनको निम्ति सांसारिक जीवनमा सुकर्महरू गरेर पठाएको भए !

(25) (26) त्यो कठोर दिनमा कसैले अवज्ञाकारीलाई अल्लाहले दिने यातना जस्तो यातना दिने शक्ति राख्दैन, र अल्लाहले बाँध्ने बन्धन जस्तो बन्धन कसैले बाँधने सक्दैन र यसमा अल्लाहले पुग्ने सीमा सम्म कसैले पुग्न सक्दैन ।

(27)-(30) अल्लाहको स्मरण र उनीमाथि ईमान ल्याउनुमा र मोमिनहरूको निम्ति तयार परिएका अनुग्रहहरूमा हे सन्तुष्ट आत्मा! तिमीलाई अल्लाहले प्रदान गरेको सम्मान सत्कारबाट प्रसन्न भई आफ्ना रबतिर फर्क, अल्लाह चाहिं तिमीसित प्रसन्न भए । तिमी अल्लाहका विशिष्ट र असल भक्तहरूमा सामेल होऊ अनि तिनीहरूसँगै मेरो स्वर्गमा प्रवेश गर ।

## सूरह अल्-बलद् - 90

(1)-(4) अल्लाह यस सम्मानित र बर्जित नगरको कसम खाइरहेछन् र त्यो मक्का हो । र हे दूत! तपाईं यस सम्मानित नगरमा बस्नुहुन्छ । यसै गरी मानव पिता आदम अलैहिस्सलाम तथा उनीबाट निस्केको सम्पूर्ण सन्तान (अर्थात मानव) को कसम खााइरहेछन्, निस्सन्देह हामीले मानवलाई सांसारिक कष्ट एवं सख्तीमा सृष्टि गरेका छौं ।

(5) के मानवले जम्मा गरेको माल-सम्पत्तिको कारणले यो ठानी राखेको छ कि अल्लाह उसलाई नियन्त्रणमा लिन सक्दैनन् ?

(6) (7) ऊ गौरव गर्दै भन्छः मैले धेरै धन-सम्पत्ति उडाइदिए, के उसले यो कार्य गरेर यो ठानेको छ कि उसलाई अल्लाहले देख्दैनन्, र उसलाई सानो-ठूलो कुरामाथि हिसाब लिंदैनन् ?

(8)-(10) के हामीले उसलाई देख्नको निमित्त दुईवटा आँखा दिएनौं, र कुराकानी गर्नको लागि जिब्रो तथा दुईटा ओठहरू, यसै गरी हामीले उसको लागि सुबाटो तथा कुबाटो प्रष्ट गरेनौं ?

(11) त किन उसले आफ्नो धन-सम्पत्ति खर्च गरेर परलोकको कष्ट पार गरी सुरिक्षत भएन ।

(12) र तपाईंलाई के थाहा कि परलोकको कष्ट के हो ? र त्यसलाई पार गर्नेमाथि कुन कुराले सहयोग पुऱ्याउँछ ।

(13) त्यो मोमिन घाँटीलाई दासताबाट मुक्त गर्नु हो ।

يَقُولُ يَٰلَيۡتَنِي قَدَّمۡتُ لِحَيَاتِي ﴿٢٤﴾ فَيَوۡمَئِذٖ لَّا يُعَذِّبُ عَذَابَهُۥٓ أَحَدٞ ﴿٢٥﴾ وَلَا يُوثِقُ وَثَاقَهُۥٓ أَحَدٞ ﴿٢٦﴾ يَٰٓأَيَّتُهَا ٱلنَّفۡسُ ٱلۡمُطۡمَئِنَّةُ ﴿٢٧﴾ ٱرۡجِعِيٓ إِلَىٰ رَبِّكِ رَاضِيَةٗ مَّرۡضِيَّةٗ ﴿٢٨﴾ فَٱدۡخُلِي فِي عِبَٰدِي ﴿٢٩﴾ وَٱدۡخُلِي جَنَّتِي ﴿٣٠﴾

سُورَةُ البَلَدِ — ترتيبها ٩٠ — آياتها ٢٠

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

لَآ أُقۡسِمُ بِهَٰذَا ٱلۡبَلَدِ ﴿١﴾ وَأَنتَ حِلُّۢ بِهَٰذَا ٱلۡبَلَدِ ﴿٢﴾ وَوَالِدٖ وَمَا وَلَدَ ﴿٣﴾ لَقَدۡ خَلَقۡنَا ٱلۡإِنسَٰنَ فِي كَبَدٍ ﴿٤﴾ أَيَحۡسَبُ أَن لَّن يَقۡدِرَ عَلَيۡهِ أَحَدٞ ﴿٥﴾ يَقُولُ أَهۡلَكۡتُ مَالٗا لُّبَدًا ﴿٦﴾ أَيَحۡسَبُ أَن لَّمۡ يَرَهُۥٓ أَحَدٌ ﴿٧﴾ أَلَمۡ نَجۡعَل لَّهُۥ عَيۡنَيۡنِ ﴿٨﴾ وَلِسَانٗا وَشَفَتَيۡنِ ﴿٩﴾ وَهَدَيۡنَٰهُ ٱلنَّجۡدَيۡنِ ﴿١٠﴾ فَلَا ٱقۡتَحَمَ ٱلۡعَقَبَةَ ﴿١١﴾ وَمَآ أَدۡرَىٰكَ مَا ٱلۡعَقَبَةُ ﴿١٢﴾ فَكُّ رَقَبَةٍ ﴿١٣﴾ أَوۡ إِطۡعَٰمٞ فِي يَوۡمٖ ذِي مَسۡغَبَةٖ ﴿١٤﴾ يَتِيمٗا ذَا مَقۡرَبَةٍ ﴿١٥﴾ أَوۡ مِسۡكِينٗا ذَا مَتۡرَبَةٖ ﴿١٦﴾ ثُمَّ كَانَ مِنَ ٱلَّذِينَ ءَامَنُواْ وَتَوَاصَوۡاْ بِٱلصَّبۡرِ وَتَوَاصَوۡاْ بِٱلۡمَرۡحَمَةِ ﴿١٧﴾ أُوْلَٰٓئِكَ أَصۡحَٰبُ ٱلۡمَيۡمَنَةِ ﴿١٨﴾ وَٱلَّذِينَ كَفَرُواْ بِـَٔايَٰتِنَا هُمۡ أَصۡحَٰبُ ٱلۡمَشۡـَٔمَةِ ﴿١٩﴾ عَلَيۡهِمۡ نَارٞ مُّؤۡصَدَةُۢ ﴿٢٠﴾

سُورَةُ الشَّمۡسِ — ترتيبها ٩١ — آياتها ١٥

(14)-(16) वा अत्यन्त भोकमरीमा खाना खुवाउनु हो कुनै नातेदार अनाथलाई कि यसमा दान दिनको र नातागोतालाई जोडनको प्राधानता एकत्रित हुन्छ, वा यस्तो गरीब फकीरलाई जस सँग केही न होस् ।

(17) फेरि उपर्युक्त सुकर्महरू गर्नुसाथै त्यो व्यक्ति ती व्यक्तिहरूमध्ये भयो जो अल्लाहमाथि शुद्धतासँग ईमान ल्याउँछन् र अल्लाहको आज्ञापालन गर्नु तथा अवज्ञा न गर्नुमाथि सन्तोष गर्नको लागि एक अर्कालाई प्रेरित गर्छन अनि प्राणीहरूसँग दया गर्नुमाथि एक अर्कालाई उपदेश पनि गर्छन् ।

(18) यी सुकर्मीहरू दाहिने हातवाला हुन्, यी नै ती व्यक्तिहरू छन जसलाई दाहिने तिरबाट स्वर्गमा प्रलयको दिन प्रवेश गराइनेछ ।

(19) र त्यस व्यक्तिहरू जसले कुरआनलाई झूठा ठहर गरे तिनीहरू देब्रे हातवाला हुन् र तीलाई देब्रे तिरबाट नरकमा प्रलयको दिन होमिइनेछ ।

(20) उनीहरूको बदला यो हुन्छ कि उनीहरूमाथि नरकको आगो चारैतिरबाट बन्द हुनेछ ।

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

وَٱلشَّمۡسِ وَضُحَىٰهَا ﴿١﴾ وَٱلۡقَمَرِ إِذَا تَلَىٰهَا ﴿٢﴾ وَٱلنَّهَارِ إِذَا جَلَّىٰهَا ﴿٣﴾
وَٱلَّيۡلِ إِذَا يَغۡشَىٰهَا ﴿٤﴾ وَٱلسَّمَآءِ وَمَا بَنَىٰهَا ﴿٥﴾ وَٱلۡأَرۡضِ وَمَا طَحَىٰهَا
﴿٦﴾ وَنَفۡسٖ وَمَا سَوَّىٰهَا ﴿٧﴾ فَأَلۡهَمَهَا فُجُورَهَا وَتَقۡوَىٰهَا ﴿٨﴾ قَدۡ
أَفۡلَحَ مَن زَكَّىٰهَا ﴿٩﴾ وَقَدۡ خَابَ مَن دَسَّىٰهَا ﴿١٠﴾ كَذَّبَتۡ ثَمُودُ
بِطَغۡوَىٰهَآ ﴿١١﴾ إِذِ ٱنۢبَعَثَ أَشۡقَىٰهَا ﴿١٢﴾ فَقَالَ لَهُمۡ رَسُولُ ٱللَّهِ
نَاقَةَ ٱللَّهِ وَسُقۡيَٰهَا ﴿١٣﴾ فَكَذَّبُوهُ فَعَقَرُوهَا فَدَمۡدَمَ
عَلَيۡهِمۡ رَبُّهُم بِذَنۢبِهِمۡ فَسَوَّىٰهَا ﴿١٤﴾ وَلَا يَخَافُ عُقۡبَٰهَا ﴿١٥﴾

ترتيبها ٩٢ — سُورَةُ اللَّيۡلِ — آياتها ٢١

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

وَٱلَّيۡلِ إِذَا يَغۡشَىٰ ﴿١﴾ وَٱلنَّهَارِ إِذَا تَجَلَّىٰ ﴿٢﴾ وَمَا خَلَقَ ٱلذَّكَرَ وَٱلۡأُنثَىٰٓ ﴿٣﴾
إِنَّ سَعۡيَكُمۡ لَشَتَّىٰ ﴿٤﴾ فَأَمَّا مَنۡ أَعۡطَىٰ وَٱتَّقَىٰ ﴿٥﴾ وَصَدَّقَ بِٱلۡحُسۡنَىٰ ﴿٦﴾
فَسَنُيَسِّرُهُۥ لِلۡيُسۡرَىٰ ﴿٧﴾ وَأَمَّا مَنۢ بَخِلَ وَٱسۡتَغۡنَىٰ ﴿٨﴾ وَكَذَّبَ بِٱلۡحُسۡنَىٰ
﴿٩﴾ فَسَنُيَسِّرُهُۥ لِلۡعُسۡرَىٰ ﴿١٠﴾ وَمَا يُغۡنِي عَنۡهُ مَالُهُۥٓ إِذَا تَرَدَّىٰٓ ﴿١١﴾ إِنَّ عَلَيۡنَا
لَلۡهُدَىٰ ﴿١٢﴾ وَإِنَّ لَنَا لَلۡأٓخِرَةَ وَٱلۡأُولَىٰ ﴿١٣﴾ فَأَنذَرۡتُكُمۡ نَارٗا تَلَظَّىٰ ﴿١٤﴾

## सूरह अश्-शम्स् - 91

(1)-(10) अल्लाह सूर्य, त्यसको दिन र बिहानको प्रकाशको कसम खाइरहेछन्, र चन्द्रमाको कसम जबकि त्यो उदय र आस्त हुनमा सूर्य पछि आउँछ, र दिनको कसम जबकि त्यो अन्ध्यारोलाई समाप्त गरेर सूर्यलाई प्रकट गर्छ, र रातको कसम जबकि त्यो धरतीलाई छोप्छ र त्यसमाथि रहेका सबै वस्तु अन्ध्यारोमा डुब्छ, र आकाशको कसम अनि त्यसको बलियो र ठोस सिर्जनाको कसम, र पृथ्वीको कसम अनि त्यसको बिस्तारको कसम, र प्रत्येक ज्यानको अनि त्यसले आफ्नो कार्य पूरा गर्नको लागि त्यसको सृष्टिलाई अल्लाहबाट परिपूर्णताको कसम, फेरि उसको लागि सुबाटो र कुबाटो प्रष्ट पारे । निस्सन्देह जसले आफ्नो आत्मालाई पवित्र पारेर त्यसमा सुकर्म गरी बढोतरी गऱ्यो त्यो सफल भयो । र जसले आफ्नो आत्मालाई पापहरूमा लीन गऱ्यो त्यो विफल भयो ।

(11)-(15) समूदले अवज्ञा र उद्दण्डतामा सीमा लांघेर आफ्ना दूतलाई झूठा ठहर गऱ्यो । जब समुदायमध्येको सर्वाधिक अभागी ऊँटनीको खुट्टा काट्ने हेतु उभ्यो । तब अल्लाहका रसूल सालेह अलैहिस्सलमाले तिनीहरूलाई भनेः सावधान! ऊँटनीलाई कुनियतले नछोऊ, किनभने त्यो तिमीहरूतिर अल्लाहको तर्फबाट पठाइएको एउटा चिन्ह हो जो तिम्रा दूत (सालेह) को सत्यतामाथि प्रामण छ, सावधान! त्यसको पानी पीउनमाथि अन्याय गरी बाधा नपुऱ्याऊ किनकि त्यसको लागि पानी पीउने दिन खास छ र तिम्रो लागि पनि एउटा खास दिन नियुक्त छ । तर तिनीहरूले दूतले वाचा गरेको कुरामा उनलाई मिथ्या ठहर गरी ऊँटनीलाई काटेर मारिदिए, अन्ततः पालनकर्ताले तिनीहरूको अपराधको कारण तिनीहरूमाथि प्रकोप अवतरित गरे र यस प्रकोपमा सबैलाई सम्मिलित गरी कसैलाई छोडेन । र अल्लाह शक्तिशालीलाई उनले अवतरित गरेको ठूलो प्रकोपले गर्दा केही भय छैन ।

## सूरह अल्-लैल् - 92

(1)-(4) अल्लाह रातको कसम खाइरहेछन् जबकि त्यो धरती र त्यसमाथि रहेका सबै वस्तुलाई आफ्नो अन्ध्यारोले छोपिलिन्छ, र दिनको कसम जबकि त्यो आफ्नो प्रकाशले रातको अन्ध्यारोबाट प्रकट हुन्छ, र पुरुष तथा स्त्री दुबै जोडाको सृष्टिको कसम! निस्सन्देह तिमीहरूको कर्म संसारको निमित्त कार्य गर्ने र आखिरतको लागि कार्य गर्ने बीच विभिन्न छ ।

(5)-(7) त जसले माल खर्च गऱ्यो र त्यसमा अल्लाहको भय पनि राख्यो र लाइलाह इल्लल्लाह र त्यसको अर्थलाई सत्य ठान्यो र त्यसमाथि पाइने पूण्यलाई पनि सत्य मान्यो भने उसलाई हामी भलाई र पूण्य कार्य तिर डोऱ्याई त्यसको साहस दिनेछौं र उसका सबै मामलाहरू सहज पार्नेछौं ।

(8)-(11) तर जसले आफ्नो मालमा कन्जुसी गर्दै आफ्नो पालनकर्ताको प्रतिफलबाट लापरवाही गऱ्यो अनि लाइलाह इल्लल्लाह र त्यसको अर्थलाई मिथ्या ठहर गऱ्यो अनि त्यसमाथि पाइने पूण्यलाई असत्य मान्यो भने उसको लागि अभाग्यताका कारणहरू सजिलो पार्नेछौं र उसलाई त्यो माल-सम्पत्ति जसमा उसले कन्जुसी गरेको छ आगोमा होमिदा खेरि उसलाई केही लाभ पुऱ्याउन सक्दैन ।

(12) (13) निस्सन्देह हामीमाथि हाम्रो कृपा र तत्त्वदर्शीताले अल्लाह र उनको स्वर्ग सम्म पुऱ्याउने बाटो पथभ्रष्टताको बाटोबाट छुट्याई प्रष्ट पार्नु हो । र निस्सन्देह लौकिक र पारलौकिक जिन्दगानीको राज्य मात्र हाम्रो लागि छ ।

(14) हे मानव! मैले तिमीहरूलाई दन्कँदो आगोबाट सावधान गरिदिएको छु र त्यो नरकको आगो छ ।

(15) (16) त्यसमा केवल त्यो अत्यन्त आभागी होमिनेछ जसले नबी मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई मिथ्या ठहर गऱ्यो र अल्लाह तथा उनका रसूलमाथि ईमान ल्याउनुबाट अनि उनको आज्ञापालन गर्नबाट बिमुख भयो ।

(17)-(21) तर चाँडै अत्यन्त ईश्भय राख्ने त्यो व्यक्तिलाई त्यस (नरक) बाट सुरक्षित राखिनेछ जो अधिक भलाई प्राप्त गर्ने हेतु आफ्नो धन-सम्पत्ति खर्च गर्छ, र कसैको उसमाथि उपकार छैन जसको बदला चुकाउनुको लागि ऊ आफ्नो धन-माल खर्च गर्छ, ऊ त केवल आफ्ना सर्वोच्च पालनकर्ताको प्रसन्नता र खुशी प्राप्त गर्न चाहन्छ, र अल्लाह पनि उसलाई शीघ्र नै स्वर्गमा दिनेछन् जसबाट ऊ प्रसन्न हुनेछ ।

## सूरह अज्-जुहा - 93

(1)-(3) अल्लाह प्रकाशमय बिहानीको समयको कसम खाइरहेछन्, र त्यसबाट यहाँ पूरै दिन अभि प्राय छ, र रातको कसम जब प्राणीहरू लगायत सन्नाटा छाउँछ र अत्यन्त अन्ध्यारो हुन्छ । अल्लाहको लागि आफ्ना प्राणीहरूमध्ये कुनै प्राणीको कसम लिनु जायज छ तर मनुष्यको लागि आफ्ना जन्मदाताबाहेक अरूको कसम खानु जायज छैन किनकि अल्लाहबाहेक अरूको कसम खानु शिर्क हो । हे दूत! तपाईंलाई तपाईंका पालनकर्ताले छोडेका छैनन् र प्राकशना गर्नुमा ढीलो भएको कारणले उनी तपाईंमाथि अप्रसन्न पनि छैनन् ।

(4) (5) र तपाईंकालागि पारलोकिक जीवन सांसारिक जीवन भन्दा राम्रो हुनेछ । र हे दूत! तपाईंका पालनकर्ता तपाईंलाई परलोकका अनुग्रहमध्ये शीघ्र नै यति दिनेछन् कि त्यसले गर्दा प्रसन्न हुनुहुन्छ ।

(6)-(8) के उनले तपाईंलाई यस भन्दा अघि अनाथ पाएर तपाईंलाई आश्रय एवं रेख-देख प्रदान गरेका होइनन् ? अनि तपाईंलाई यस्तो अवस्थामा पाए कि तपाईंलाई नत किताब (कुरआन) को सम्बन्धमा केही ज्ञान थियो र नत ईमानकै सम्बन्धमा, फेरि तपाईंलाई ज्ञान नभएको कुराको ज्ञान दिए र तपाईंलाई सत्कर्म तिर डोऱ्याई त्यसको साहस प्रदानगरे ? अनि तपाईंलाई गरीब निर्धन देखेर तपाईंको लागि आजिवीका प्रदान गरेर तपाईंको आत्मामा धैर्य तथा निसपृहता प्रदानगरे ?

(9)-(11) अतः तपाईं पनि अनाथसँग कुव्यवहार नगर्नुहोस्, र भिकारीलाई नहाप्काउनुहोस्, बरु उसलाई खाना खुवाएर उसको आवश्यकता पूरा गर्नुस्, र तपाईंका पालनकर्ताले तपाईंमाथि गरेको अनुकम्पा तथा अनग्रहको चर्चा गर्दै गर्नुहोस् ।

لَا يَصۡلَىٰهَآ إِلَّا ٱلۡأَشۡقَى ﴿١٥﴾ ٱلَّذِي كَذَّبَ وَتَوَلَّىٰ ﴿١٦﴾ وَسَيُجَنَّبُهَا ٱلۡأَتۡقَى ﴿١٧﴾ ٱلَّذِي يُؤۡتِي مَالَهُۥ يَتَزَكَّىٰ ﴿١٨﴾ وَمَا لِأَحَدٍ عِندَهُۥ مِن نِّعۡمَةٖ تُجۡزَىٰٓ ﴿١٩﴾ إِلَّا ٱبۡتِغَآءَ وَجۡهِ رَبِّهِ ٱلۡأَعۡلَىٰ ﴿٢٠﴾ وَلَسَوۡفَ يَرۡضَىٰ ﴿٢١﴾

### سُورَةُ الضُّحَىٰ
ترتيبها ٩٣ — آياتها ١١

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

وَٱلضُّحَىٰ ﴿١﴾ وَٱلَّيۡلِ إِذَا سَجَىٰ ﴿٢﴾ مَا وَدَّعَكَ رَبُّكَ وَمَا قَلَىٰ ﴿٣﴾ وَلَلۡأٓخِرَةُ خَيۡرٞ لَّكَ مِنَ ٱلۡأُولَىٰ ﴿٤﴾ وَلَسَوۡفَ يُعۡطِيكَ رَبُّكَ فَتَرۡضَىٰٓ ﴿٥﴾ أَلَمۡ يَجِدۡكَ يَتِيمٗا فَـَٔاوَىٰ ﴿٦﴾ وَوَجَدَكَ ضَآلّٗا فَهَدَىٰ ﴿٧﴾ وَوَجَدَكَ عَآئِلٗا فَأَغۡنَىٰ ﴿٨﴾ فَأَمَّا ٱلۡيَتِيمَ فَلَا تَقۡهَرۡ ﴿٩﴾ وَأَمَّا ٱلسَّآئِلَ فَلَا تَنۡهَرۡ ﴿١٠﴾ وَأَمَّا بِنِعۡمَةِ رَبِّكَ فَحَدِّثۡ ﴿١١﴾

### سُورَةُ الشَّرۡحِ
ترتيبها ٩٤ — آياتها ٨

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

أَلَمۡ نَشۡرَحۡ لَكَ صَدۡرَكَ ﴿١﴾ وَوَضَعۡنَا عَنكَ وِزۡرَكَ ﴿٢﴾ ٱلَّذِيٓ أَنقَضَ ظَهۡرَكَ ﴿٣﴾ وَرَفَعۡنَا لَكَ ذِكۡرَكَ ﴿٤﴾ فَإِنَّ مَعَ ٱلۡعُسۡرِ يُسۡرًا ﴿٥﴾ إِنَّ مَعَ ٱلۡعُسۡرِ يُسۡرٗا ﴿٦﴾ فَإِذَا فَرَغۡتَ فَٱنصَبۡ ﴿٧﴾ وَإِلَىٰ رَبِّكَ فَٱرۡغَب ﴿٨﴾

## सूरह अश्-शर्ह - 94

(1)-(4) हे रसूल! के हामीले तपाईंको छाती धार्मिक विधान,अल्लाहतिर निम्तो दिनु एवं सदव्यवहारहरूका लागि फराकिलो गरिदिएनौं र हामीले तपाईंबाट त्यो बोझ पनि हटाइदियौं जुन तपाईंको पिठ्युँमाथि भारी थियो,र हामीले तपाईंमाथि सदव्यहारहरूको अनुग्रह गर्दै तपाईंलाई उच्च दर्जा प्रदान गऱ्यौं?

(5) (6) तपाईंलाई तपाईंका शत्रुहरूको कष्ट दूतत्वको कुरा अरू सम्म पुगाउनुमा रोकावट नबनोस् किनकि कठिनाईसँगै सरलता छ, निस्सन्देह कठिनाईसँगै सरलता छ ।

(7) (8) अतः सांसारिक कार्य र मामलाहरूबाट फुर्सद पाउँदा उपासनामा जुटने गर्नुस्, र मात्र आफ्ना पालनकार्तातिर उनीकहाँ पाइने अनुग्रहमा मोहित रहनुहोस् ।

سُورَةُ التِّينِ

ترتيبها ٩٥ — آياتها ٨

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

وَالتِّينِ وَالزَّيْتُونِ ﴿١﴾ وَطُورِ سِينِينَ ﴿٢﴾ وَهَٰذَا الْبَلَدِ الْأَمِينِ ﴿٣﴾ لَقَدْ خَلَقْنَا الْإِنسَانَ فِي أَحْسَنِ تَقْوِيمٍ ﴿٤﴾ ثُمَّ رَدَدْنَاهُ أَسْفَلَ سَافِلِينَ ﴿٥﴾ إِلَّا الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ فَلَهُمْ أَجْرٌ غَيْرُ مَمْنُونٍ ﴿٦﴾ فَمَا يُكَذِّبُكَ بَعْدُ بِالدِّينِ ﴿٧﴾ أَلَيْسَ اللَّهُ بِأَحْكَمِ الْحَاكِمِينَ ﴿٨﴾

سُورَةُ الْعَلَقِ

ترتيبها ٩٦ — آياتها ١٩

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

اقْرَأْ بِاسْمِ رَبِّكَ الَّذِي خَلَقَ ﴿١﴾ خَلَقَ الْإِنسَانَ مِنْ عَلَقٍ ﴿٢﴾ اقْرَأْ وَرَبُّكَ الْأَكْرَمُ ﴿٣﴾ الَّذِي عَلَّمَ بِالْقَلَمِ ﴿٤﴾ عَلَّمَ الْإِنسَانَ مَا لَمْ يَعْلَمْ ﴿٥﴾ كَلَّا إِنَّ الْإِنسَانَ لَيَطْغَىٰ ﴿٦﴾ أَن رَّآهُ اسْتَغْنَىٰ ﴿٧﴾ إِنَّ إِلَىٰ رَبِّكَ الرُّجْعَىٰ ﴿٨﴾ أَرَأَيْتَ الَّذِي يَنْهَىٰ ﴿٩﴾ عَبْدًا إِذَا صَلَّىٰ ﴿١٠﴾ أَرَأَيْتَ إِن كَانَ عَلَى الْهُدَىٰ ﴿١١﴾ أَوْ أَمَرَ بِالتَّقْوَىٰ ﴿١٢﴾ أَرَأَيْتَ إِن كَذَّبَ وَتَوَلَّىٰ ﴿١٣﴾ أَلَمْ يَعْلَم بِأَنَّ اللَّهَ يَرَىٰ ﴿١٤﴾ كَلَّا لَئِن لَّمْ يَنتَهِ لَنَسْفَعًا بِالنَّاصِيَةِ ﴿١٥﴾ نَاصِيَةٍ كَاذِبَةٍ خَاطِئَةٍ ﴿١٦﴾ فَلْيَدْعُ نَادِيَهُ ﴿١٧﴾ سَنَدْعُ الزَّبَانِيَةَ ﴿١٨﴾ كَلَّا لَا تُطِعْهُ وَاسْجُدْ وَاقْتَرِب ۩ ﴿١٩﴾

## सूरह अत्-तीन - 95

1-6 अल्लाह अञ्जीर एवं जैतूनको कसम खाइरहेछन् र यी दुबै प्रसिद्ध फलहरूमध्ये छन्, र त्यो तुरे सीना पर्वतको कसम जसमाथि अल्लाहले दूत मूसासँग कुराकानी गर्नुभएको थियो, र प्रत्येक भयबाट सुरक्षित यस शान्त नगरको कसम खाइरहेछन् र त्यो मक्का नगर हो जहाँबाट इस्लाम फैलियो । निश्चय नै हामीले मनुष्यलाई सर्वोत्तम संरचनामा सृष्टि गऱ्यौं, फेरि हामीले उसलाई अल्लाह तथा उनका रसूलको आज्ञापलन नगरेमा नरकको आगोसम्म पुगाइदियौं । तर जुन व्यक्तिहरूले ईमान ल्याएर सत्कर्महरू गरे तिनीहरूका लागि नसमाप्त हुने र न कम हुने ठूलो पूण्य हुनेछ ।

7 हे मानव! तिमीलाई कुन कुराले यसमाथि प्रेरित गऱ्यो कि तिमी पुनर्जन्म र प्रतिदान दिवसको विषयमा मिथ्या ठहर गरोस् जबकि यसमाथि अल्लाहको भरपूर शक्ति लगायत धेरै मात्रामा प्रमाणहरू प्रष्ट भइसकेकाछन् ।

8 के अल्लाह जसले यस दिनलाई मानिसहरू माझ निधो गर्नको लागि बनाएको छ प्राणीहरूमा समस्त शासकहरू भन्दा ठूलो शासक होइनन् ? हो र, त के प्राणी बिना आदेश दिइ र बिना मनाही गरी उस्तै बेकार छोडिन्छ, उसलाई पूण्य तथा सजाय दिइने छैन यो कदापि सत्य होइन र कहिल्यै हुन सक्दैन ।

## सूरह अल्-अलक - 96

1-5 हे दूत! आफ्ना एक्लै जन्मदाताको नामबाट आरम्भ गर्दै तपाईंतिर अवतरित गरिएको कुरआनलाई पढ्नुस्, जसले प्रत्येक मनुष्यलाई बाक्लो र रातो रगतको डल्लोबाट जन्म दिए । हे दूत! तपाईं तिर अवतरित भएको कुरा पढ्नुस् निस्सन्देह तपाईंका रब धेरै उपकार गर्नेवाला र ठूला दानी छन् । जसले आफ्नो सृष्टिलाई कलमको माध्यमले लेख्न सिकाए, मनुष्यलाई त्यो कुरा सिकाए जुन कुराको ज्ञान उसलाई थिएन र उसलाई अज्ञानताको अन्ध्यारोबाट निकालेर ज्ञानको प्रकाशतिर डोऱ्याए ।

6-8 साँच्चीकै मनुष्य निश्चय नै अल्लाहले निर्धारित गरेको सीमालाई उल्लंघन गर्छ जब ऊ आफुलाई परिपूर्ण पाउँछ । प्रत्येक अहंकारी यो जानी राखोस् कि अल्लाहतिर उसले फर्केर जानु पर्नेछ अनि प्रत्येक मनुष्यलाई उसले गरेको कर्ममाथि बदला दिनेछन् ।

9 19 के तपाईंले यस व्यक्ति (अबुजहल) को अहंकार देख्नु भएको होइन जो हाम्रा भक्तलाई आफ्ना पालनकर्ताका लागि नमाज पढनुबाट मनाही गर्दछ (र ऊ मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम हुन्) ? अलि विचार गर यदि नमाजबाट नमाही गरिएको मान्छे सत्मार्गमा छ भने कसरी उसलाई रोक्छ ? वा त्यो मान्छे अरूलाई ईश्भयको उपदेश दिन्छ भने त्यसबाट पनि ऊ उसलाई मनाही गर्छ ? के तपाईंले देख्नुभएको होइन कि यस रोक्ने मान्छेले जुन कुरातिर उसलाई निम्तो दिइन्छ त्यसलाई झूठा ठहर गरी त्यसबाट विमुख भएको छ । के उसलाई थाहा छैन कि उसले गरेको कार्य अल्लाह देखिरहेछन् । अबुजहले विचार गरे झैं कुरा छैन, यदि उसले आफ्नो उद्दण्दता र कष्ट दिनलाई छोडेन भने हामी उसको टाउकोको अगाडि भागलाई अत्यन्त कठोर रूपमा समातेर नरकको आगोमा फ्याक्नेछौं । उसको निधार कुराकानी गर्नमा झूठो र कर्म गर्नमा पापी छ । अनि यस अहंकारीलाई चाहियो कि आफ्नो सहयोगी समूहलाई बोलाओस्, हामी पनि यातना दिने फरिश्ताहरूलाई शीघ्र नै बोलाउनेछौं । अबुजहलले विचार गरे झैं कुरा होइन । हे दूत! ऊ तपाईंसम्म कुनियतले पुग्न सक्दैन । अतः तपाईं नमाज न पढने उसले दिएको आदेशको पालना नगर्नुस् । बरु आफ्ना पालनकर्ताको सज्दा (ढोग) गर्नुस र उनको आज्ञापालन गर्दै उनको समीपता प्राप्त गर्नुस् ।

سُورَةُ الْقَدْرِ

آياتها ٥ — ترتيبها ٩٧

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

إِنَّآ أَنزَلۡنَٰهُ فِي لَيۡلَةِ ٱلۡقَدۡرِ ﴿١﴾ وَمَآ أَدۡرَىٰكَ مَا لَيۡلَةُ ٱلۡقَدۡرِ ﴿٢﴾
لَيۡلَةُ ٱلۡقَدۡرِ خَيۡرٞ مِّنۡ أَلۡفِ شَهۡرٖ ﴿٣﴾ تَنَزَّلُ ٱلۡمَلَٰٓئِكَةُ وَٱلرُّوحُ
فِيهَا بِإِذۡنِ رَبِّهِم مِّن كُلِّ أَمۡرٖ ﴿٤﴾ سَلَٰمٌ هِيَ حَتَّىٰ مَطۡلَعِ ٱلۡفَجۡرِ ﴿٥﴾

سُورَةُ الْبَيِّنَةِ

آياتها ٨ — ترتيبها ٩٨

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

لَمۡ يَكُنِ ٱلَّذِينَ كَفَرُواْ مِنۡ أَهۡلِ ٱلۡكِتَٰبِ وَٱلۡمُشۡرِكِينَ مُنفَكِّينَ
حَتَّىٰ تَأۡتِيَهُمُ ٱلۡبَيِّنَةُ ﴿١﴾ رَسُولٞ مِّنَ ٱللَّهِ يَتۡلُواْ صُحُفٗا مُّطَهَّرَةٗ ﴿٢﴾
فِيهَا كُتُبٞ قَيِّمَةٞ ﴿٣﴾ وَمَا تَفَرَّقَ ٱلَّذِينَ أُوتُواْ ٱلۡكِتَٰبَ إِلَّا مِنۢ
بَعۡدِ مَا جَآءَتۡهُمُ ٱلۡبَيِّنَةُ ﴿٤﴾ وَمَآ أُمِرُوٓاْ إِلَّا لِيَعۡبُدُواْ ٱللَّهَ مُخۡلِصِينَ
لَهُ ٱلدِّينَ حُنَفَآءَ وَيُقِيمُواْ ٱلصَّلَوٰةَ وَيُؤۡتُواْ ٱلزَّكَوٰةَۚ وَذَٰلِكَ دِينُ
ٱلۡقَيِّمَةِ ﴿٥﴾ إِنَّ ٱلَّذِينَ كَفَرُواْ مِنۡ أَهۡلِ ٱلۡكِتَٰبِ وَٱلۡمُشۡرِكِينَ
فِي نَارِ جَهَنَّمَ خَٰلِدِينَ فِيهَآۚ أُوْلَٰٓئِكَ هُمۡ شَرُّ ٱلۡبَرِيَّةِ ﴿٦﴾ إِنَّ
ٱلَّذِينَ ءَامَنُواْ وَعَمِلُواْ ٱلصَّٰلِحَٰتِ أُوْلَٰٓئِكَ هُمۡ خَيۡرُ ٱلۡبَرِيَّةِ ﴿٧﴾

## सूरह अल्-कद्र - 97

(1) निस्सन्देह हामीले यस कुरआनलाई सम्मानित तथा प्रधानताबाट परिपूर्ण रात्रीमा अवतरित गऱ्यौं र त्यो रमजानका रात्रीहरूमध्ये एक राती छ ।

(2) र हे दूत! तपाईंलाई के थाहा सम्मानित र प्रधानताबाट परिपूर्ण रात के हो ?

(3) सम्मानित रात अभिबृद्धिको रात छ, यस रात्रीको महत्व हजार महिनाको महत्व भन्दा उत्तम छ जसमा यो राती न होस् ।

(4) त्यस रातीमा फरिश्ताहरू र जिब्रील अलैहिस्सलाम आफ्ना पालनकर्ताको आदेशले यस वर्ष हुने कार्यहरू सम्पन्न गर्नको लागि धेरै मात्रामा अवतरित हुन्छन् ।

(5) यो पूर्ण शान्तिको रात हो जसमा केही खराबी छैन र यो प्रातःकालको आगमनसम्म रहन्छ ।

## सूरह अल्-बैयिनह - 98

(1) यहूद, क्रिश्चियन र मुश्रिकहरूमध्ये कुफ्र गर्ने व्यक्तिहरूले तिनीहरूकहाँ अघिका ग्रन्थहरूमा गरिएको वाचा अनुकूल प्रत्यक्ष प्रमाण नआउञ्जेल आफ्नो कुफ्र त्याग्नेवाला छैनन् ।

(2) र त्यो प्रमाण अल्लाहका रसूल मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम हुन जो पवित्र पानाहरूमा रहेको कुरआन पाठ गर्छन् ।

(3) ती पानाहरूमा सत्य खबरहरू र न्यायमाथि आधारित आदेशहरू छन जुन सत्यता र सुमार्गतिर डोऱ्याउँछन् ।

(4) र अह्ले किताब अर्थात यहूद र क्रिश्चियनहरूले मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई सत्य रसूल हुनमा विभाजन भएनन किनकि यिनीहरू उनका गुणहरू आफ्नो ग्रन्थमा पाउँछन् तर तौरैत तथा इन्जीलमा जस नबीको आगमनको वाचा गरिएको थियो त्यो मुहम्मद नै हुन भन्ने कुरा स्पष्ट भए पछि यिनीहरू उनको नबी हुनमाथि एकमत थिए, तर मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको आगमन पश्चात् यिनीहरूले उनलाई अस्वीकार गरे र परस्पर विभाजन भए ।

(5) सम्पूर्ण धर्महरूमा यिनीहरूलाई यही आदेश दिइएको थियो कि तिनीहरू मात्र एक अल्लाहको पूजा अर्चना गरुन र आफ्नो पूजामा मात्र एक अल्लाहको प्रसन्नता प्राप्त गर्ने इरादा होस् जसमा शिर्कबाट फर्केर ईमानतिर लागुन्, अनि नमाज कायम गरुन् र जकात देऊन् र यही सत्यसिद्ध धर्म हो र यही नै इस्लाम हो ।

(6) यहूद, क्रिश्चियन तथा मुश्रिकहरूमध्ये जसले पनि कुफ्र गरे तिनीहरूको सजाय नरकको आगो हुनेछ जसमा तिनीहरू सधैंका लागि रहनेछन्, तिनीहरू नै हुन् दुष्ट प्राणी ।

(7) निस्सन्देह जसले अल्लाहलाई सत्य मानेर उनका रसूलको अनुसरण गरे र सत्कर्म गरे तिनीहरू नै सर्वश्रेष्ठ प्राणी हुन् ।

(8) यस्ता व्यक्तिहरूको प्रतिदान उनका पालनकर्ताकहाँ प्रलयको दिन अत्यन्त सुन्दरतासँग सुसज्जित बस्नको लागि सदा रहने बगैंचाहरू हुन जसका महलहरूको तलतिर देखि नहरहरू बगिरहेका हुनेछन जहाँ उनीहरू सदासर्वदा रहनेछन्, अल्लाह उनीहरूसित प्रसन्न भएर उनीहरूका सत्कर्महरूलाई स्वीकारे, र अल्लाहले

جَزَآؤُهُمْ عِندَ رَبِّهِمْ جَنَّٰتُ عَدْنٍ تَجْرِى مِن تَحْتِهَا ٱلْأَنْهَٰرُ خَٰلِدِينَ
فِيهَآ أَبَدًا ۖ رَّضِىَ ٱللَّهُ عَنْهُمْ وَرَضُوا۟ عَنْهُ ۚ ذَٰلِكَ لِمَنْ خَشِىَ رَبَّهُۥ ﴿٨﴾

سُورَةُ الزَّلْزَلَة — ترتيبها ٩٩ — آياتها ٨

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَٰنِ ٱلرَّحِيمِ

إِذَا زُلْزِلَتِ ٱلْأَرْضُ زِلْزَالَهَا ﴿١﴾ وَأَخْرَجَتِ ٱلْأَرْضُ أَثْقَالَهَا ﴿٢﴾ وَقَالَ ٱلْإِنسَٰنُ مَا لَهَا ﴿٣﴾ يَوْمَئِذٍ تُحَدِّثُ أَخْبَارَهَا ﴿٤﴾ بِأَنَّ رَبَّكَ أَوْحَىٰ لَهَا ﴿٥﴾ يَوْمَئِذٍ يَصْدُرُ ٱلنَّاسُ أَشْتَاتًا لِّيُرَوْا۟ أَعْمَٰلَهُمْ ﴿٦﴾ فَمَن يَعْمَلْ مِثْقَالَ ذَرَّةٍ خَيْرًا يَرَهُۥ ﴿٧﴾ وَمَن يَعْمَلْ مِثْقَالَ ذَرَّةٍ شَرًّا يَرَهُۥ ﴿٨﴾

سُورَةُ العَادِيَات — ترتيبها ١٠٠ — آياتها ١١

بِسْمِ ٱللَّهِ ٱلرَّحْمَٰنِ ٱلرَّحِيمِ

وَٱلْعَٰدِيَٰتِ ضَبْحًا ﴿١﴾ فَٱلْمُورِيَٰتِ قَدْحًا ﴿٢﴾ فَٱلْمُغِيرَٰتِ صُبْحًا ﴿٣﴾ فَأَثَرْنَ بِهِۦ نَقْعًا ﴿٤﴾ فَوَسَطْنَ بِهِۦ جَمْعًا ﴿٥﴾ إِنَّ ٱلْإِنسَٰنَ لِرَبِّهِۦ لَكَنُودٌ ﴿٦﴾ وَإِنَّهُۥ عَلَىٰ ذَٰلِكَ لَشَهِيدٌ ﴿٧﴾ وَإِنَّهُۥ لِحُبِّ ٱلْخَيْرِ لَشَدِيدٌ ﴿٨﴾ ۞ أَفَلَا يَعْلَمُ إِذَا بُعْثِرَ مَا فِى ٱلْقُبُورِ ﴿٩﴾

उनीहरूको लागि तयार पारेका विभिन्न प्रकारका आदर सत्कारलाई हेरेर उनीहरू अल्लाहसित प्रसन्न हुनेछन्, यो उत्तम बदला अल्लाहसित भय राख्ने र उनको अवज्ञाबाट बच्ने व्यक्तिको लागि हुनेछ ।

## सूरह अज्-जल्जलह् - 99

(1)-(3) जब पृथ्वीलाई ठूलो र पूर्णरूपले हल्लाहइनेछ,र पृथ्वीले आफ्नो भित्र रहेका मृतक तथा खजानाहरू बाहिर निकालेर फ्याँकिदिनेछ, र मनुष्य भयले भन्नेछः यसलाई के भयो ?

(4) (5) प्रलयको दिन पृथ्वीले त्यसमाथि भएको सुकर्म तथा कुकर्महरू बारे खबर गर्नेछ । किनभने अल्लाह तआलाले त्यसलाई यस्तो गर्ने आदेश दिएका हुन्छन् ।

(6) त्यस दिन मानिसहरू हिसाबको मैदानबाट विभिन्न टोली टोलीमा फर्कनेछन् ताकि अल्लाह उनीहरूलाई उनीहरूले गरेका पाप तथा पूण्यका कार्यहरू देखाऊन्, र त्यस अनुसार उनीहरूलाई बदला देऊन् ।

(7) (8) अनि जसले सानो कमिलोको वजन बराबर सत्कर्म गरेको हुन्छ उसको पूण्य उसले परलोकमा देख्नेछ, र जसले सानो कमिलाको वजन बराबर कुकर्म गरेको हुन्छ, त्यसको सजाय परलोकमा उसले देख्नेछ ।

## सूरह अल्-आदियात् - 100

(1) अल्लाह तआला उनको बाटोमा शत्रुतिर दौडने घोडाहरूको कसम खाइरहेछन् जसको तिब्रगतिमा दौडनको कारणले ठूलो आवाज निस्कन्छ । मनुष्यको लागि अल्लाहबाहेक अरूको कसम खानु जायज छैन किनभने अल्लाहबाहेक अरूको कसम लिनु शिर्क हो ।

(2) ती घोडाहरू जसको बलियो खुर र तिब्रगतिमा दौड्नको कारणले आगो निस्कन्छ ।

(3) जो बिहानीपख शत्रुहरूमाथि छापा मार्छन् ।

(4) तिब्रगतिमा दौड्ने कारणले धुलो उडाउँछन् ।

(5) अनि आफ्ना सवारीसँगै शत्रुहरूको बीच पस्छन् ।

(6)-(8) निस्सन्देह मनुष्य आफ्ना पालनकर्ताका अनुकम्पाहरू प्रति इन्कार गर्नेवाला छ । र आफ्नो यस इन्कारलाई त्यो स्वीकार पनि गर्छ, र ऊ सम्पत्तिको मोहमा धेरै नै लिप्त छ ।

(9) के मनुष्यलाई थाहा छैन जसको त्यो प्रतिक्षा गरिरहेको छ । जब अल्लाह चिहानहरूबाट मृतकहरूलाई हिसाब र बदला दिनको लागि निकाल्नेछन् ।

(10) र छातीहरूभित्र रहेका असल र खराब कुराहरूलाई बाहिर निकालिनेछन् ।

(11) निस्सन्दहे तिनीहरूका पालनकर्ता त्यस दिन तिनीहरूका कर्महरूबाट अवगत हुनेछन् उनीमाथि केही कुरा लुप्त हुनसक्दैन ।

## सूरह अल्-कारिअह् - 101

(1) महा प्रलयको समय जसले मानिसका हृदयहरूलाई आफ्नो भयावह अवस्थाहरूको कारण हल्लाइदिनेछ ।

(2) यो हल्लाइने भयावह घटना के हो ?

(3) र तिमीलाई के थाहा कि के हो त्यो भयावह घटना ?

(4) त्यस दिनमा मानिसहरू आफ्नो अधिक संख्या, र भिन्नता तथा गतिविधिको कारणले छरिएका कीरा फट्याङ्ग्रा जस्ता हुनेछन्, जो आगोमा खस्छन् ।

(5) र पहाडहरू विभिन्न रंगले रंगेको अनि हातले कुटिएको ऊनझैं हुनेछन, अनि उड्दै धुलो जस्तो भ ई धरतीमाथिबाट समाप्त हुनेछन् ।

(6) (7) अनि जसका सुकर्महरूको वजन भारी हुन्छ त्यो स्वर्गमा प्रसन्नताको जीवनमा हुनेछ ।

(8) (9) र जसका सुकर्महरूको वजन हलुको हुनेछ र कुकर्मको वजन बढ्नेछ त्यसको बासस्थान नरक हुनेछ ।

(10) र हे रसूल! तपाईंलाई के थाहा हाविया (नरक) भनेको के हो ?

(11) त्यो इन्घनको करणले दन्कँदो आगो हुनेछ ।

## सूरह अत्-तकासुर् - 102

(1) अत्यधिक धन-सम्पत्ति तथा सन्तानहरूमा घमण्ड र गौरव गर्नाले तिमीहरूलाई अल्लाहको आज्ञापालनबाट रोकिराखेको छ ।

(2) र तिम्रो यो व्यस्तता तथा तल्लीनता चिहानसम्म पुग्न एवं त्यसमा दफन हुन(गाडन) सम्म बाँकी रहनेछ ।

(3) यो उचित छैन कि तिमीलाई सम्पत्तिको अधिकताले लापरवाहीमा हालोस्, र शीघ्र नै स्पष्ट हुनेछ कि पारलोकिक जीवन नै तिम्रोलागि उत्तम छ ।




(4) सावधान!! शीघ्र नै तिमी परलोकबाट आफ्नो यस विमुख्ताको कुपरिणाम जान्नेछौ ।

(5)-(8) यो उचित छैन कि तिमीलाई सम्पत्तिको अधिकताले लापरवाहीमा हालोस्, यदि तिमीहरूलाई विश्वासनीय ज्ञान भएको भए तिमीहरूले डराउँदैथियौ र आफ्नो जीउलाई सर्वनानबाट जोगाउनमा हतार गर्नेथिए । तिमीहरू अवश्य नरक देख्नेछौ, अनि तिमीहरू त्यसलाई अवश्य देख्नेछौ बिना कुनै शंकाको । अनि प्रलयको दिन प्रत्येक प्रकारका सुख-सामग्रीबारे अवश्य सोधिनेछ ।

سُورَةُ العَصۡرِ

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

وَٱلۡعَصۡرِ ﴿١﴾ إِنَّ ٱلۡإِنسَٰنَ لَفِي خُسۡرٍ ﴿٢﴾ إِلَّا ٱلَّذِينَ ءَامَنُواْ وَعَمِلُواْ ٱلصَّٰلِحَٰتِ وَتَوَاصَوۡاْ بِٱلۡحَقِّ وَتَوَاصَوۡاْ بِٱلصَّبۡرِ ﴿٣﴾

سُورَةُ الهُمَزَةِ

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

وَيۡلٞ لِّكُلِّ هُمَزَةٖ لُّمَزَةٍ ﴿١﴾ ٱلَّذِي جَمَعَ مَالٗا وَعَدَّدَهُۥ ﴿٢﴾ يَحۡسَبُ أَنَّ مَالَهُۥٓ أَخۡلَدَهُۥ ﴿٣﴾ كَلَّاۖ لَيُنۢبَذَنَّ فِي ٱلۡحُطَمَةِ ﴿٤﴾ وَمَآ أَدۡرَىٰكَ مَا ٱلۡحُطَمَةُ ﴿٥﴾ نَارُ ٱللَّهِ ٱلۡمُوقَدَةُ ﴿٦﴾ ٱلَّتِي تَطَّلِعُ عَلَى ٱلۡأَفۡـِٔدَةِ ﴿٧﴾ إِنَّهَا عَلَيۡهِم مُّؤۡصَدَةٞ ﴿٨﴾ فِي عَمَدٖ مُّمَدَّدَةِۭ ﴿٩﴾

سُورَةُ الفِيلِ

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

أَلَمۡ تَرَ كَيۡفَ فَعَلَ رَبُّكَ بِأَصۡحَٰبِ ٱلۡفِيلِ ﴿١﴾ أَلَمۡ يَجۡعَلۡ كَيۡدَهُمۡ فِي تَضۡلِيلٖ ﴿٢﴾ وَأَرۡسَلَ عَلَيۡهِمۡ طَيۡرًا أَبَابِيلَ ﴿٣﴾ تَرۡمِيهِم بِحِجَارَةٖ مِّن سِجِّيلٖ ﴿٤﴾ فَجَعَلَهُمۡ كَعَصۡفٖ مَّأۡكُولِۭ ﴿٥﴾

## सूरह अल्-अस्र - 103

(1) (2) अल्लाह युगको कसम खाइरहेछन् कि निस्सन्देह सम्पूर्ण आदमका सन्तानहरू घाटा र सर्वनाशमा छन् । र मनुष्यको लागि अल्लाहबाहेक अरूको कसम खानु जायज हुँदैन किनभने अल्लाहबाहेक अरूको कसम लिनु शिर्क हो ।

(3) ती मानिसहरूबाहेक जसले अल्लाहमाथि ईमान ल्याएर सत्कर्म गरे, तथा परस्पर सत्यलाई राम्ररी समात्ने र अल्लाहको आज्ञापालन गर्ने एवं त्यसमाथि धैर्य गर्नेमाथि उपदेश र अर्ती दिइरहे ।

## सूरह अल्-हुमजह् - 104

(1) यस्तो प्रत्येक व्यक्तिको लागि बरबादी र सर्वनाश होस् जसले मानिसको चुक्ली गर्छ र व्यङ्ग्य गर्छ ।

(2) जसको पूर्ण इच्छा धन-माल जम्मा गर्नु र त्यसलाई गनेर राख्नु हो ।

(3) के उसले यो ठानेको छ कि ऊ द्वारा जम्मा गरिएको माल-सम्पत्तिले उसको लागि संसारमा सधैं रहने तथा परलोकमा हिसाबबाट टाढा रहनेको जमानत (अभिभूति) लिएको छ ।

(4) उसले कल्पना गरेझैं मामला छैन, अवश्य ऊ यस्तो आगोमा होमिनेछ जसमा पर्ने प्रत्येक वस्तुलाई पोलेर भसम गरिदिन्छ ।

(5) र हे रसूल! तपाईंलाई के थाहा कि त्यो आगोको वास्तविकता के हो ?

(6) (7) त्यो अल्लाहको दन्कँदो आगो हो जुन शरीरलाई पोले पछि मुटुसम्म पुग्नेछ ।

(8) (9) निस्सन्देह त्यसलाई जञ्जीर र लामो नेलहरूमा जकडिएर तिनीहरूमाथि बन्द गरिनेछ ताकि त्यसबाट बाहिर न निक्लुन् ।

## सूरह अल्-फील् - 105

(1) हे रसूल! के तपाईंले जान्नुभएको हैन के तपाईंका पालनकर्ताले हात्तीवालाहरूसित कस्तो व्यवहार गरे, र ती अब्रहा अल-हबशी नामक राजा र उसको सेना हुन जसले सम्मानित काबालाई नष्ट गर्ने इच्छा राखेका थिए ?

(2) उनले तिनीहरूले गरेको खराब योजना विफल तथा बरबाद तुल्याइदिएनन् ?

(3) (4) र तिनीहरूमाथि हुलका हुल पंक्षीहरू पठाइदिए जो तिनीहरूलाई माटोको सानो सानो ढुंगा जस्तो टुक्राले हानी रहन्थे ।

(5) अन्ततः उनले तिनीहरू जनावरले खाएको बालाको सुकेको पातो झैं बनाइदिए ।





## सूरह कुरैश - 106

(1) (2) आश्चर्य गर कुरैशको मेलजुल, शान्ति, तिनीहरूको कार्यको स्थिरता र जाडोमा यमनतिर एवं गर्मीमा सिरियातिर यात्राको योजना गर्नुसित अनि त्यसलाई सजिलो पार्नीतिर ताकि तिनीहरूको आवश्यकता परेको कुरालाई त्यहाँबाट ल्याउन् ।

(3) तिनीहरूलाई चाहियो कि तिनीहरू यसको आभार व्यक्त गरुन् अनि यस घर -काबा-को मालिक (अल्लाह)को पूजा गरुन् जसले यसलाई सम्मान दिनुभो, र उनीलाई एक मान्नु तथा शुद्धतासँग उनैको पूजा गर्नु ।

(4) जसले तिनीहरूलाई अत्यन्त भोकमरीबाट बचाएर खाना खुवाए ताथ ठूलो भयबाट जोगाएर शान्ति प्रदान गरे ।

## सूरह अल्-माऊन् - 107

(1) के तपाईंले त्यस व्यक्तिको अवस्था हेर्नुभएको छैन जसले पुनर्जन्म तथा बदलाको दिनलाई झूठा ठान्छ ?

(2) त्यो नै हो जो आफ्नो कठोर आत्माको कारणले अनाथलाई उसको हक अधिकारबाट सख्तीसित बंचित राख्छ ।

(3) र अरूलाई दीन-दुःखीलाई खुवाउनुमाथि प्रोत्साहित गर्दैन भने ऊ आफै कसरी दीन-दुःखीलाई खुवाउन सक्छ ?

(4) (5) ठूलो यातना छ ती नमाजीहरूका लागि जो आफ्नो नमाजबाट लापरवाही गर्छन् त्यसलाई असल र उचित तरिका अनुसार कायम गर्दैनन् र त्यसलाई समयमा पढ्दैनन् ।

(6) जो मानिसलाई देखावाको लागि असल कार्यहरू गर्दछन् ।

(7) र हानि न पुऱ्याउने सानोतिनो वस्तु पनि कसैलाई साप्टी दिन रोक्छन् । अतः तिनीहरूले नत आफ्ना पालनकर्ताको पूजा राम्ररी गरे र नत अल्लाहका प्राणीहरूसित राम्रो व्यवहार गरे ।



سُورَةُ قُرَيْشٍ

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

لِإِيلَافِ قُرَيْشٍ ﴿١﴾ إِيلَافِهِمْ رِحْلَةَ الشِّتَاءِ وَالصَّيْفِ ﴿٢﴾ فَلْيَعْبُدُوا رَبَّ هَٰذَا الْبَيْتِ ﴿٣﴾ الَّذِي أَطْعَمَهُم مِّن جُوعٍ وَآمَنَهُم مِّنْ خَوْفٍ ﴿٤﴾

سُورَةُ الْمَاعُونِ

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

أَرَأَيْتَ الَّذِي يُكَذِّبُ بِالدِّينِ ﴿١﴾ فَذَٰلِكَ الَّذِي يَدُعُّ الْيَتِيمَ ﴿٢﴾ وَلَا يَحُضُّ عَلَىٰ طَعَامِ الْمِسْكِينِ ﴿٣﴾ فَوَيْلٌ لِّلْمُصَلِّينَ ﴿٤﴾ الَّذِينَ هُمْ عَن صَلَاتِهِمْ سَاهُونَ ﴿٥﴾ الَّذِينَ هُمْ يُرَاءُونَ ﴿٦﴾ وَيَمْنَعُونَ الْمَاعُونَ ﴿٧﴾

سُورَةُ الْكَوْثَرِ

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

إِنَّا أَعْطَيْنَاكَ الْكَوْثَرَ ﴿١﴾ فَصَلِّ لِرَبِّكَ وَانْحَرْ ﴿٢﴾ إِنَّ شَانِئَكَ هُوَ الْأَبْتَرُ ﴿٣﴾

## सूरह अल्-कौसर - 108

(1) हे दूत! हामीले तपाईंलाई लोक परलोकमा धेरै भलाई प्रदान गरेका छौं त्यसमध्ये स्वर्गमा बग्ने अल-कौसर भन्ने नहर पनि छ जसका दुबै किनारामा शुद्ध मोतीले बनेका शिविरहरू हुनेछन् र त्यसको माटो कस्तूरी हुनेछ ।

(2) आफ्ना सम्पूर्ण नमाजहरू आफ्ना पालनकर्ताको लागि शुद्ध गर्नुहोस्, र मात्र उनैको लागि र उनैको नाममा आफ्नो जनावर जबह (हलाल) गर्नुहोस् ।

(3) तपाईं र तपाईंले ल्याएको सुमार्ग तथा प्रकाशसँग घृणा गर्नेवाला नै जरो कटा र प्रत्येक भलाईबाट बंचित रहनेछ ।



سُورَةُ الكَافِرُونَ

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

قُلۡ يَٰٓأَيُّهَا ٱلۡكَٰفِرُونَ ١ لَآ أَعۡبُدُ مَا تَعۡبُدُونَ ٢ وَلَآ أَنتُمۡ عَٰبِدُونَ مَآ أَعۡبُدُ ٣ وَلَآ أَنَا۠ عَابِدٞ مَّا عَبَدتُّمۡ ٤ وَلَآ أَنتُمۡ عَٰبِدُونَ مَآ أَعۡبُدُ ٥ لَكُمۡ دِينُكُمۡ وَلِيَ دِينِ ٦

سُورَةُ النَّصْرِ

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

إِذَا جَآءَ نَصۡرُ ٱللَّهِ وَٱلۡفَتۡحُ ١ وَرَأَيۡتَ ٱلنَّاسَ يَدۡخُلُونَ فِي دِينِ ٱللَّهِ أَفۡوَاجٗا ٢ فَسَبِّحۡ بِحَمۡدِ رَبِّكَ وَٱسۡتَغۡفِرۡهُۚ إِنَّهُۥ كَانَ تَوَّابَۢا ٣

سُورَةُ المَسَدِ

بِسۡمِ ٱللَّهِ ٱلرَّحۡمَٰنِ ٱلرَّحِيمِ

تَبَّتۡ يَدَآ أَبِي لَهَبٖ وَتَبَّ ١ مَآ أَغۡنَىٰ عَنۡهُ مَالُهُۥ وَمَا كَسَبَ ٢ سَيَصۡلَىٰ نَارٗا ذَاتَ لَهَبٖ ٣ وَٱمۡرَأَتُهُۥ حَمَّالَةَ ٱلۡحَطَبِ ٤ فِي جِيدِهَا حَبۡلٞ مِّن مَّسَدِۭ ٥

## सूरह अल्-काफिरून् - 109

(1) हे रसूल! अल्लाह र उनका रसूलको अवज्ञा गर्नेहरूसित भन्नुस्: हे काफिरहरू हो !

(2) तिमीहरूले पूज्दै गरेका देवी देवता तथा मिथ्या भग्वानहरूको पूजा म गर्दिन ।

(3) र नत तिमीहरू नै मैले उपासना गर्दै गरेका मात्र एक पूज्यको उपासना गर्छौ, र त्यो अल्लाह नै हुन् जो सम्पूर्ण संसारका पालनकर्ता र मात्र एक्लै पूजाका योग्य हुन् ।

(4) र म ती देवी देवता तथा मिथ्या भग्वानहरूको भक्ति गर्नेवाला छैन जसको भक्ति तिमीहरूले गर्‍यौ ।

(5) र न तिमीहरू भविष्यमा भक्ति गर्नेवाला हौ जसको भक्ति म गर्छु । यो आयत मुश्रिकहरूमध्ये केही यस्ता खास मानिसहरूको बारेमा अवतरण भएको छ जसबारेमा अल्लाहले जानेका थिए कि तिनीहरू कहिल्यै ईमान ल्याउने छैनन् ।

(6) तिमीहरूका निम्ति तिम्रो धर्म जसको अनुसरण गर्नुमाथि तिमीहरू अडिग रहेका छौ, र मेरो लागि मेरो धर्म जसबाहेक अरू धर्म म खोज्दिन ।

## सूरह अन्-नस्र् - 110

(1) हे रसूल! जब तपाईंको सहायता कुरैशका काफिरहरूमाथि आइपुग्यो एवं तपाईंका लागि मक्का नगर विजय भइसक्यो ।

(2) र जब तपाईंले इस्लाम धर्ममा मानिसहरूलाई हुलका हुल पसिरहेका हेर्नुहोस् ।

(3) जब माथिका कुराहरू घटित हुन्छन् तब आफ्ना पालनकर्तासँग भेट गर्नलाई तयारी गर्नुहोस् अत्यधिक मात्रामा उनको प्रशंसा गर्दै र अधिकमात्रामा उनीसित क्षमा याचान गर्दै निस्सन्देह उनी पवित्रताको महिमागान गर्ने तथा क्षमा याचना गर्नेहरूको लागि प्रायश्चित स्वीकार गर्नेवाला हुन्, तिनीहरूको प्रायश्चित स्वीकार गर्छन् र तिनीहरूमाथि दया गर्छन् ।

## सूरह अल्-मसद् - 111

(1) रसुलुल्लाह सल्लल्लाहो अलैहे वसल्लमलाई कष्ट दिनको कारणले अबु लहबका दुबै हात भाँचिए अनि बरबाद भएर त्यो अभागी भयो र उसको सर्वनाश निश्चित भयो ।

(2) उसको धन-सम्पत्ति तथा उसका सन्तानले उसलाई केही लाभ पुर्‍याएनन्, र उसमाथि आएको अल्लाहको यातनालाई ऊबाट दुबै मध्ये कसैले टार्न सकेन ।

(3) (4) शीघ्र नै ऊ दन्कँदो आगोमा होमिनेछ र साथै उसकी पत्नी पनि जो काँटाहरू छानेर नबी सल्लल्लाहो अलैहे वसल्लमलाई कष्ट दिने निमित्त उनको बाटोमा राख्दैथिई ।

(5) उसको घाँटीमा कठोर र अकोमल वस्तुले बटारिएको बलियो डोरी हुनेछ जसको माध्यमले उसलाई नरकको आगोसम्म उठाई त्यसको तल्लो भागमा फ्याँकिदिनेछ ।

## सूरह अल्-इख्लास् - 112

(1) हे रसूल! तपाईं भनिदिनुस्ः उनी अल्लाह जो आफ्नो पूज्य हुनमा, पालनकर्ता हुनमा र आफ्ना उच्च तथा राम्रा नाम एवं गुणहरूमा एक्ला छन् यी विशेषताहरूमा उनीसित कोही साझेदार हुनसक्दैन ।

(2) अल्लाह एक्लै सम्पूर्ण आवश्यकताहरू र कामनाहरू पूर्ण गर्नमा सबैको आश्रय हुन् ।

(3) उनीसँग न कुनै सन्तान छ नत उनी कसैका पिता र नत उनीसँग पत्नी नै ।

(4) उनका प्राणीहरूमध्ये कोही उनको बराबर र उनी जस्तो छैन नत उनका नामहरूमा र नत गुणहरूमा र नत उनका कार्यहरूमा । उनी बृद्धिवाला उच्चतम अनि सबै प्रकारका अवगुणबाट चोखो हुन् ।

## सूरह अल्-फलक् - 113

(1) हे रसूल! तपाईं भनिदिनुसः म प्रातःकालका स्वामीको शरण चाहन्छु र उनीसित शक्ति प्राप्त गर्छु ।

(2) सम्पूर्ण प्राणीहरूको दुष्टता र कष्टबाट ।

(3) र अत्यन्त अन्धकारमय रातीको दुष्टताबाट जब कि त्यो प्रवेश भएर फैलिन्छ अनि त्यसमा पाइने खराबी तथा कष्ट दिने जीव-जन्तुबाट ।

(4) र बोक्सीहरूको दुष्टताबाट जुनकि बोक्सेरो गर्ने हेतु गाँठो बनाएर त्यसमा फुक हानिन्छिन् ।

(5) र ईर्ष्यालुको दुष्टताबाट जो मानिसहरूलाई अल्लाहले वरदान दिएको धन-सम्पत्तिसित ईर्ष्या र घृणा गर्छ र त्यस धनको समाप्तिको कामना गर्दै तिनीहरूलाई कष्ट दिन्छ ।

## सूरह अन्-नास् - 114

(1) हे रसूल! तपाईं भनिदिनुस्ः म प्रातःकालका स्वामीको शरण चाहन्छु र उनीसित शक्ति प्राप्त गर्छु । किनकि मात्र उनी एक्लै भ्रमको दुष्टतालाई टार्न शक्ति राख्नुहुन्छ ।



(2) मानिसहरूका स्वामीसित जो तिनीहरूको मामलाहरूको योजना गर्छन् र उनी तिनीहरूसित लापरवाह पनि हुन् ।

(3) मानिसहरूका पूज्यसित जसबाहेक कोही सत्य पूज्य छैन ।

(4) शैतानको कष्टबाट जो लापरवाही र अचेतनाको समय भ्रम हाल्छ र अल्लाहलाई स्मरण गर्दा खेरि लुप्त भइहाल्छ ।

(5) जो मानिसहरूको हृदयमा खराबी तथा भ्रमहरू हाल्छ ।

(6) जो जिन्न र मावनका शैतानहरूमध्ये छ ।





# मुसलमानहरूको जीवनका लागि महत्वपूर्ण प्रश्नहरू

**१- मुसलमानले आफ्नो अकीदा (आस्था) को बारेमा कताबाट जानकारी प्राप्त गरोस् ?** मुसलमान आफ्नो अकीदाको बारेमा जानकारी अल्लाहको किताब कुरआन र उनका नबी सल्लल्लाहो अलैहेव सल्लमका सत्य दहीसहरूबाट प्राप्त गरोस् किनकि नबी मात्र ईश्वाणी अनुसार नै कुराकानी गर्दछन् ﴿ إِنْ هُوَ إِلَّا وَحْيٌ يُوحَىٰ ﴾ " *त्यो त मात्र ईश्वाणी हो जुन उनीमाथि पठाइदैंछ* " र त्यो जानकारी सहाबा किराम (नबीका साथीहरू) र सलफ सालेहीन (ताअबईन र तबअ ताबईन अर्थात सहाबाका साथीहरू अनि उनका साथीहरू) को सम्झना अनुसार हुनु जरूरी छ ।

**२- मतभेद भएमा फैसला कहाँ गराउनु पर्छ ?** अल्लाहको किताब कुरआन तथा नबीको हदीसबाट निर्णय लिनु पर्छ, यस सम्बन्धमा अल्लाहको भनाई छ : ﴿ فَإِن تَنَٰزَعۡتُمۡ فِي شَيۡءٖ فَرُدُّوهُ إِلَى ٱللَّهِ وَٱلرَّسُولِ ﴾ " *फेरि यदि तिमीहरूको आपसीमा मतभेद भएको अवस्थामा त्यस कुरालाई अल्लाह र त्यसका रसूल तिर फर्काई देऊ* " र यस संदर्भमा नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभएको छ : " मैले तिमीहरूका लागि दुई वस्तु छाडेको छु जब सम्म तिम्रो व्यवहार त्यस अनुसार हुँदै रहनेछ तिमी पथभ्रष्ट हुँदैनौ, त्यो छ : अल्लाहको किताब कुरआन र उनका नबीको हदीस "।

**३- प्रलय हुने दिन सफलता पाउने टोली को हो ?** अल्लाहका नबी सल्लल्लाहो अलैहे वसल्लमले भन्नुभयो " मेरो अनुयायी ७३ टोलीमा बाँडी हाल्छ जस मध्ये एक समूह मात्र जन्नत (स्वर्ग) मा जान्छ र बाँकी सबैका सबै नरकमा, सहाबाहरूले सोधे : त्यो स्वर्गमा जाने समूह को हो ? हे अल्लाहका रसूल! भन्नुभो : जुन कुरामाथि म र मेरा सहाबाहरू छन त्यसको अनुसरण गर्नेवाला समूह स्वर्गवासी छ " । (अहमद) सत्यता र वास्तविकता मात्र त्यो काममा छ जसलाई अल्लाहका नबी र उहाँका साथीहरूले गर्नुभएको थियो । अतः तिमी त्यही कुराको अनुसरण आफ्नो माथि अनिवार्य गरि लेऊ र दीन धर्ममा कुनै नयाँ कुरा आविष्कार गर्नुबाट टाढा बस किनकि सफलता प्राप्त गर्ने र सुकर्महरू स्वीकार्य हुने हेतु त्यो कुरालाई अपनाउनु अनिवार्य छ ।

**४- सुकर्म स्वीकार्य हुनका शर्तहरू कतिवटा छन ?** शर्तहरू : १) अल्लाहमाथि ईमान ल्याउनु र मात्र उनै एकको लागि सारा पूजा र सुकर्म गर्नु, किनकि मुश्रिक (अल्लाहको पूजामा अरूलाई साझी मान्ने व्यक्ति) को कुनै पनि सुकर्म स्वीकार्य हुन सक्दैन । २) शुद्धता अर्थात मात्र अल्लाहको रोजाई र चाहना प्राप्त गर्ने हेतु कुनै सुकर्म गर्नु । ३) त्यो सुकर्मलाई नबीको तरीका अनुसार गर्नु, अर्थात अल्लाहको इबादत र पूजा नबी सल्लल्लाहो अलैहे वसल्लमले गर्नुभएको विधि अनुसार गर्नु पर्छ । यी तीनै शर्तहरू कुनै सुकर्ममा एकै चोटि पाउनु अनिवार्य छ नत्र त्यो कर्म अस्वीकार्य हुनेछ । यस विषयमा अल्लाहको भनाई छ : ﴿ وَقَدِمۡنَآ إِلَىٰ مَا عَمِلُواْ مِنۡ عَمَلٖ فَجَعَلۡنَٰهُ هَبَآءٗ مَّنثُورًا ﴾ " *र,हामी तिनीहरूले गरेका प्रत्येक कार्य तर्फ बढनेछौं अनि ती कार्यहरूलाई धुलाका कणहरू झैं छरपस्ट बनाइदिनेछौं*"।

**५- दीनका कति दर्जाहरू छन् ?** दीनका तीनवटा दर्जाहरू छन : इस्लाम, ईमान र एहसान ।

**६- इस्लाम भनेको के हो ? र उसका कतिवटा आधारहरू छन् ?** तौहीदलाई स्वीकार गर्दै एक अल्लाहको लागि आत्मसमर्पण गर्नु र उहाँको आज्ञा पालन गर्नु र शिर्क तथा मुश्रिकसँग सम्पर्क नराखीकन टाढा बस्नु नै इस्लाम हो । र इस्लामका पाँचवटा आधारहरू छन् जुन नबी सल्लल्लाहो अलैहेवसल्लमको यस हदीसबाट प्रष्ट हुन्छन् : " इस्लामको जग पाँच कुराहरूमाथि आधारित छः यो गवाही दिनु कि अल्लाहबाहेक अन्य कोही सत्य पूज्य छैन र मुहम्मद अल्लाहका दूत हुन्, र नमाज कायम गर्नु र जकात (दान) दिनु, र बैतुल्लाहको हज गर्नु तथा रमजान महीनाको ब्रत बास्नु "। (बुखारी र मुस्लिम)

**७- ईमान भनेको के हो ? र उसका कतिवटा आधारहरू छन् ?** हृदयमा ठोस् आस्था राख्नु, मुखले स्वीकार गरेर भन्नु र अंगहरूबाट व्यवहार गर्नु नै ईमान हो जुन सुकर्म गर्नाले बढ्छ र कुकर्म गर्नाले घट्छ । अल्लाह तआला भन्नुहुन्छ : ﴿ لِيَزۡدَادُوٓاْ إِيمَٰنٗا مَّعَ إِيمَٰنِهِمۡ ﴾ "*ताकि आफ्नो ईमानको साथै उनीहरूले अरू ईमानको अभिवृद्धि गरुन्*"। र नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभो : " ईमानका ७० भन्दा बढी शाखाहरू छन्, ती मध्ये सब भन्दा श्रेष्ठ शाखा लाइलाह इल्लल्लाह भन्नु हो, र सब भन्दा तल्लो ईस्तरको शाखा हो बाटोबाट हानिकारक वस्तुलाई टाढा गर्नु र लज्जा ईमानको एउटा शाखा हो "। (मुस्लिम) यस कुराको पुष्टि यसबाट पनि हुन्छ कि पूण्य र भलाईको जमानामा सुकर्म र भलो काम गर्नाले आफ्नो दिलमा खुशी महसूस गर्छ र पाप गरेर आल्छी र चिन्तित रहन्छ । अल्लाह भन्नुहुन्छः ﴿ إِنَّ ٱلۡحَسَنَٰتِ يُذۡهِبۡنَ ٱلسَّيِّـَٔاتِ ﴾ " *निःसन्देह सत्य कर्महरूले पापहरूलाई समाप्त गरिदिन्छन* " । र ईमानका ६ वटा आधारहरू छन् जसलाई नबी

सल्लल्लाहो अलैहेवसल्लमले आफ्नो यस हदीसमा भन्नुभो : " अल्लाहमाथि इमान ल्याउनु, फरिश्ताहरूमाथि ईमान राख्नु, आकाशिय ग्रन्थहरूमाथि ईमान राख्नु, उनका रसूलहरूमाथि ईमान राख्नु, प्रलय हुने दिनमाथि आस्था राख्नु र भलो तथा बुरो भाग्यमाथि ईमान राख्नु " I (बुखारी)

**८- लाइलाह इल्लल्लाहको अर्थ के हो ?** अल्लाह बाहेक अरूको लागि कुनै प्रकारको इबादत अथवा पूजालाई नकार्नु, र पूजाका सम्पूर्ण प्रकारहरू मात्र एक अल्लाहको लागि सिद्ध गर्नु I

**९- के अल्लाह तआला हामीहरू सँग हुनुहुन्छ ?** हो, अल्लाह हाम्रो साथ हुनुहुन्छ आफ्नो ज्ञान द्वारा, किनकि उनी हाम्रो कुरालाई सुन्नेवाला, हामीलाई हेर्ने तथा सुरक्षा गर्नेवाला र हामीलाई घेरामा लिएका छन्, यसै गरी हामीमाथि शक्ति राख्नेवाला छन उनैको चहाना यस संसारमा चलिरहेछ I तर उहाँको अस्तित्व सृष्टिहरू सँग सम्मिलित छैन र न त कुनै सृष्टि उहाँलाई घेरामा लिन सक्छ I

**१०- के अल्लाह तआलालाई आँखाले हेर्न सक्छ ?** सम्पूर्ण मुसलमानहरू यस कुरामाथि एक मत छन कि अल्लाहलाई यस संसारमा हेर्न सक्दैन I अँ, मोमिनहरूले अल्लाहलाई परलोकमा प्रलयको मैदान तथा स्वर्गमा हेर्न सक्छन् I अल्लाह भन्नुहुन्छ : ﴿ وُجُوهٌ يَوْمَئِذٍ نَّاضِرَةٌ ﴿٢٢﴾ إِلَىٰ رَبِّهَا نَاظِرَةٌ ﴾ " *त्यस दिन धेरै अनुहारहरू प्रफुल्लित र गौरवान्वित हुनेछन I आफ्नो पालनकर्ता तिर देखि राखेका हुनेछन* " I

**११- अल्लाह तआलाका नाम र गुणको जानकारी प्राप्त गर्नाले के लाभ हुन्छ ?** सबै भन्दा पहिलो जुन कुराको जानकारी प्राप्त गर्नु अल्लाहले हामीमाथि अनिवार्य गर्नुभएको छ, त्यो छ अल्लाहको बारेमा ज्ञान प्राप्त गर्नु, किनकि मानिस आफ्नो पूजनीयको बारेमा ज्ञान प्राप्त गरेर उहाँको पूजा अर्चना यथावथ रूपमा गर्नेछन I अल्लाहको भनाई छ : ﴿ فَٱعْلَمْ أَنَّهُۥ لَآ إِلَٰهَ إِلَّا ٱللَّهُ وَٱسْتَغْفِرْ لِذَنۢبِكَ ﴾ " *अतः तपाईं यो जानकारी प्राप्त गर्नुस् कि अल्लाह बाहेक कोही सत्य पूज्य छैन, र आफ्ना त्रुटिहरूको क्षमाको लागि याचना गर्नुहोस्* " I त्यसर्थ अल्लाहलाई उनको व्यापक दया र कृपा सित स्मरण गर्नुले उनीमाथि आशा राख्नु अनिवार्य गर्छ, र उनको कठोर सजायलाई स्मरण गर्नुले उनी सित डराउनु अनिवार्य गर्छ, र उनी मात्र एक उपकार गर्नेवाला भन्ने स्मरण गर्नाले उनको आभार व्यक्त गर्नु जरूरी गर्छ I

र अल्लाह तआलाको पूजा अर्चना उनका नाम र गुणहरू सँग गर्नुको अर्थ छ : ती नाम र गुणहरूको जानकारी तथा तिनको अर्थको ज्ञान प्राप्त गर्नु एवम त्यही अनुसार व्यवहार गर्नु I अल्लाह तआलाका केही नाम र गुणहरू यस्ता छन् जुनलाई अपनाउनु मनुष्यको लागि प्रशंसाको पात्र हो : जस्तो ज्ञान, दया र न्याय I र केही नाम तथा गुणहरू यस्ता छन् जुनलाई व्यवहरमा ल्याउनु दासको लागि अपमानको कारण बन्छ, जस्तोः उलुहियत (पूज्य हुनुको योग्यता) तजब्बुर (प्रभुत्वशाली हुनु) तकब्बुर (गौरव र घमण्डवाला हुनु) I र मनुष्यका केही यस्ता गुणहरू छन् जुनमाथि उसलाई प्रशंसा गरीन्छ र तिनलाई गर्नको आदेश दिइएको छ I जस्तो : पूजा गर्नु, अल्लाहको अगाडि आफ्नो कमी कमजोरी प्रकट गर्नु र नम्रतापूर्वक अल्लाहलाई आफ्नो आवश्यकताको पूर्तिका लागि गुहार्नु आदि, तर यी गुणहरू अल्लाह तआलाका लागि हुन सक्दैनन् I र अल्लाह समक्ष सब भन्दा राम्रो व्यक्ति त्यो हो जुन अल्लाहले मनपराएका गुणहरूलाई व्यवहारमा ल्याउँछ, र सब भन्दा नराम्रो मान्छे अल्लाह समीप त्यो हो जुन अल्लाहले नरोजाएका गुणहरूलाई चलनमा ल्याउँछ I

**१२- अल्लाहका राम्रा नामहरू के छन् ?** अल्लाह भन्नुहुन्छः ﴿ وَلِلَّهِ ٱلْأَسْمَآءُ ٱلْحُسْنَىٰ فَٱدْعُوهُ بِهَا ﴾ " *र राम्रा-राम्रा नामहरू अल्लाहकै लागि हुन्, यसर्थ ती नामहरू द्वारा नै उनलाई पुकार* " I र नबी सल्लल्लाहो अलैहेव सल्लमबाट यो कुरा प्रमाणित छ कि तपाईंले भन्नुभो : " **निःसन्देह अल्लाहका ९९ वटा नामहरू छन् सयमा एक कम, जसले ती नामहरूलाई स्मरण गरेर त्यसको अनुसार कार्य गऱ्यो भने त्यो जन्नतमा जानेछ** " I (बुखारी र मुस्लिम)

**एहसाओहा (स्मरण गर्न) को अर्थ छ : १)** नामहरूलाई कण्ठ गर्नु, **२)** नामहरूको अर्थ र तीबाट सिद्ध हुने कुरालाई सम्झना गरी त्यसमाथि ईमान ल्याउनु, त जब (अल्हकीम अर्थात बुद्धिमान र तत्यदर्शी) भनोस् भने आफ्नो सम्पूर्ण कार्यहरू उनै तिर फर्काओस् किनकि सम्पूर्ण कार्य तथा कुराहरू उनैको ज्ञान र बुद्धि अनुसार भइरहेछन् I र जब (अल्कुद्दुस) भनोस् भने यो कुरा मष्तिस्कमा बसाओस् कि अल्लाह सम्पूर्ण कमी कमजोरीबाट चोखो र पवित्र हुनुहुन्छ I **३)** ती नामहरू द्वारा अल्लाहलाई गुहार्नु र पुकार्नु, र यो दुई प्रकारको छः **क)** पूजा र प्रशंसा गर्नको लागि गुहार्नु, **ख)** केही कुरा प्राप्तीको लागि गुहार्नु I र कुरआन तथा हदीसहरूमा खोजी गरेर अल्लाहका राम्रा-राम्रा नामहरू एकत्रित गरिएको छ I ती नामहरू छन :

| नाम | तीबाट सिद्ध हुने अर्थ र मतलब |
|---|---|
| अल्लाह | सम्पूर्ण सृष्टिको लागि पूजा र अर्चनाको लागि योग्य,त्यो नै सत्य पूज्य,उनैका लागि नम्रता पूर्वक निहुर्नु र ढोग गर्नु पर्छ, र पूजाका प्रत्येक प्रकारहरू उनैका निम्ति खास गर्नु पर्छ । |
| १ अर्रहमान | अल्लाहको अपरम्पार दया कृपा सिद्ध गर्ने नाम जो हरेक सृष्टिका लागि व्यापक छ,र यो अल्लाहकै लागि खास नाम हो, उनी बाहेक अरूलाई यस सित संज्ञा दिनु जायज होइन । |
| २ अर्रहीम | लोक परलोकमा मोमिनहरूमाथि दया,कृपा एवम क्षमा गर्नेवाला,अल्लाहले तिनीहरूलाई आफ्नो पूजाको लागि छान्नु भएको छ, र परलोकमा आफ्नो जन्नत प्रदान गरेर तिनीहरूलाई सम्मानित गर्ने छन् । |
| ३ अल्अफ्व | पापलाई समाप्त गरेर माफ गर्नेवाला, सजायको हकदार भएमा पनि दासलाई सजाय नदिइकन क्षमा गर्नेवाला । |
| ४ अल्गफूर | आफ्नो भक्तको पापमाथि पर्दा हाल्ने वाला, र न त उसलाई अपमान गर्नेछन् र न त उसलाई सजाय दिनेछन् । |
| ५ अल्गफ्फार | जुन दासले पाप गरेर क्षमा याचना गर्छ भने त्यस्तोको लागि अल्लाह अति नै क्षमा गर्नेवाला हुनुहुन्छ भन्ने प्रमाणित गर्छ यो नाम । |
| ६ अर्रऊफ | अति नै दयालु र कृपालु, र यो दया तथ कृपा यस संसारमा प्रत्येक सृष्टिका लागि छ, तथा परलोकमा केही खास भक्तहरूका लागि हुने छ र ती भक्तहरू अल्लाहका मोमिन मित्रहरू छन् । |
| ७ अल्हलीम् | सजाय दिनमाथि सामर्थ्यवान भई दासहरूलाई सजाय दिनमा हतार न गर्नेवाला, बरू क्षमा याचना गर्नेलाई क्षमा गरिदिन्छ । |
| ८ अत्तव्वाब् | दासहरू मध्ये जसलाई चाहन्छ पाप गरे पछि तौबा (प्रायश्चित) गर्नको साहस दिनेवाला अनि त्यसलाई स्वीकार्नेवाला । |
| ९ अस्सित्तीर | आफ्नो दासमाथि पर्दा हाल्नेवाला र उसलाई अपमानित हुनुबाट जोगाउनेवाला,आफ्नो भक्तबाट यो चाहना राख्दछ कि ऊ पनि आफ्नो र अर्कोको दोषमाथि पर्दा हालोस्, र आफ्नो गुप्ताँगलाई सुरक्षा गरोस् । |
| १० अल्गनी | आफ्नो परिपूर्णता र परिपूर्ण गुणहरूको कारणले सृष्टि मध्ये कसै सँग कहिल्यै केही माग्दैन, बरू सम्पूर्ण सृष्टि उसको दयादृष्टिको मुखापेक्षि अथवा भिखारी र उसको उपकार तथा सम्मानको याचक छन् । |
| ११ अल्करीम | धेरै भलाई र दान प्रदान गर्नेवाला, जसलाई जे चाहन्छ जसरी चाहन्छ दिन्छ, चाहे प्रार्थना गरोस वा नगरोस, पापहरूलाई क्षमा गर्नेवाला र दोषहरूलाई लुकाउनेवाला । |
| १२ अल्अक्रम | अति नै दान-प्रदान गर्नेवाला,कोही पनि उसको बराबरी यस खण्डमा कहिल्यै गर्न सक्दैन,प्रत्येक प्रकारको भलाई उसैको तर्फबाट हो, मोमिनलाई आफ्नो कृपाले राम्रो प्रतिफल दिनेछ र कुकर्मीलाई मोहलत दिई न्यायको साथ हिसाब लिनेछ । |
| १३ अल्वह्हाब | धेरै दिनेवाला बिना कुनै बदला पाउनको इच्छा राखी दिन्छ,बिना कुनै स्वार्थको प्रदान गर्छ, र नमागे पनि दिन्छ । |
| १४ अल्जव्वाद | सृष्टिमाथि धेरै भन्दा धेरै उपकार र दान प्रदान गर्नेवाला,उस्का उपकारहरू मध्ये मोमिनको लागि ठूलो भाग नियुक्त छ । |
| १५ अल्वदूद | आफ्ना मित्रहरू (अवलिया) सँग प्रेम गर्नेवाला,र तिनीहरूलाई क्षमा तथा अनुकम्पाहरू दिनेवाला, तिनबाट प्रसन्न भई तिनका सुकर्महरूलाई स्वीकार गर्दछ र धरतीमा तिनका लागि सम्मानता प्रदान गर्दछ । |
| १६ अल्मोअती | आफ्नो सृष्टि मध्ये जसलाई जे चाहन्छ आफ्नो खजानाबाट दिइहाल्छ, र आफ्ना मित्रहरूका लागि त्यस मध्ये ठूलो भाग नियुक्त गरी राखेको छ, उही सबैलाई जन्म दिई राम्रो रूप प्रदान गर्नेवाला हो । |
| १७ अल्वासेअ् | बडो व्यापक गुणहरूबाला,कुनै व्यक्ति उसको प्रशंसा पूर्ण रूपले गर्न सक्दैन,महान र ठूलो सम्राट,बडो व्यापक क्षमाशील र दयालु, र व्यापक दान-प्रदान तथा उपकार गर्नेवाला । |
| १८ अल्मोहसिन | जुन आफ्नो अस्तित्वमा,आफ्नो नाम र गुणहरू तथा कर्महरूमा अति नै सुन्दर, सबै वस्तुलाई राम्रो रूप र ढाँचामा जन्मदाता र सबै सृष्टिहरू सित उपकार गर्नेवाला । |
| १९ अर्राजिक | सम्पूर्ण सृष्टिहरूको अन्नदाता, उसैले दुबै संसारलाई रच्नु भन्दा अघि नै अन्न र भोजनको प्रबन्ध गर्नेवाला, र पूर्ण रूपले रोजी प्रदान गर्नेवाला यद्यपि केही छन् पछि किन न होस् । |
| २० अर्रज्जाक | यो नाम अल्लाहलाई आफ्नो सृष्टिलाई धेरै भन्दा धेरै रोजी प्रदान गर्नेवाला सिद्ध गर्छ, प्रार्थना नगरेर पनि रोजी दिनेवाला, बरू पापी र कुकर्मीहरूको लागि पनि भोजनको प्रबन्ध गर्दछन् । |
| २१ अल्लतीफ् | ऊ सानो भन्दा सानो कुरालाई जन्नेवाला,कुनै प्रकारको भेद ऊमाथि लुकि रहन सक्दैन,भलाई र लाभ पुऱ्याउने कुराहरू आफ्ना भक्तहरू सम्म यस्तो गुप्त रूपमा पुगाउँछ कि उनीहरूलाई त्यसको चेतना पनि हुँदैन । |
| २२ अल्खबीर | उसको ज्ञानले सानो तिनो,लुप्त कुराहरू चाहे त्यो प्रत्यक्ष हुन वा अप्रत्यक्ष सबैलाई घेरामा लिइराखेको छ । |
| २३ अल्फत्ताह | उसले आफ्नो ठूलो ज्ञान र तत्वदर्शीताको अनुसार जति चाहन्छ आफ्नो मुलुक, दया र रोजीको खाजानाबाट खर्च गर्दछ । |

| | |
|---|---|
| २४ अल्अलीम | उसको ज्ञानले प्रत्यक्ष र अप्रत्यक्ष, लुप्त र प्रष्ट, अतीत, वर्तमान र भविष्यमा हुने कुराहरूलाई घेरी राखेको छ, उसमाथि कुनै कुरा लुप्त हुन सक्दैन । |
| २५ अल्बर्र | आफ्नो सृष्टिमाथि व्यापक उपकार गर्नेवाला, सबैलाई दिनेवाला, उसको धन र अनुकम्पालाई गन्ने शक्ति कसैमा छैन, आफ्नो वाचा पूरा गर्नमा साचो, भक्तको पापलाई क्षमा गर्दैछ र उसको सहायता गर्दै सुरक्षा पनि गर्दछ र थोरै दानलाई पनि स्वीकार गरेर त्यसमा बृद्धि गर्दछ । |
| २६ अल्हकीम् | जुनले वस्तुहरूलाई उनको असल ठाउँमा राख्दैछ, उसले गरेको प्रबन्ध र अनुमानमा कहिल्यै त्रुटि, कमी कमजोरी आउँदैन । |
| २७ अल्हकम् | जसले न्याय सँग आफ्नो सृष्टिहरू बीच निधो गर्दै कुनैमाथि अन्याय गर्दैन,जसले आफ्नो महान ग्रन्थ अवतरण गऱ्यो ताकि मानिसहरू त्यसको अनुसार आफ्नो फैसला गरुन । |
| २८ अश्शाकिर | उसको आज्ञापालन गर्नेलाई उसले प्रशंसा गर्छ र प्रत्येक कर्मको प्रतिफल दिन्छ चाहे त्यो सानो किन नहोस, उसले प्रदान गरेको धन र अनुकम्पामाथि आभार व्यक्त गर्नेलाई यस संसारमा पनि बृद्धि गर्छ र परलोकमा पनि पूण्यबाट सम्मानित गर्नेछ । |
| २९ अश्शकूर | भक्तहरूका कर्महरू मध्ये सानो कर्ममा पनि बृद्धि गर्छ र उसको प्रतिफल दुगुना दिन्छ,अल्लाहको आभार भक्तको लागि यो छ कि अल्लाहले भक्तले गरेको आभारमाथि पुण्य देऊन् र उसले गरेको सुकर्मलाई स्वीकार गरुन् । |
| ३० अल्जमील् | ऊ आफ्नो अस्तित्व, नाम, गुण र कर्महरूमा अति नै  सुन्दर छ, र सृष्टिहरूमा जे-जति सुन्दरता पाइन्छ त्यो सबै अल्लाहको तर्फ बाट नै हो । |
| ३१ अल्मजीद् | उसैको लागि आकाशहरू र धरतीमा गौरव, इज्जत, उच्चतम र सम्मान सत्कार छ । |
| ३२ अल्वली | सृष्टिका सम्पूर्ण कुराहरू र लोक परलोकको प्रबन्ध उसैबाट स्थिर छ, ऊ आफ्नो मित्रहरूलाई सहयोग गर्नेवाला छ। |
| ३३ अल्हमीद् | ऊ नै आफ्नो नाम, गुण तथा कर्महरूमा प्रशंसित छ, उसैको प्रशंसा खुशीमा र शोकमा,अप्ठ्यारोमा र सहजतामा भइरहेछ,सम्पूर्ण प्रकारको प्रशंसा र स्तुती उसैको लागि हो,किनकि सबै प्रकारको परिपूर्णता मात्र उसैमा निहित छ। |
| ३४ अल्मौला | ऊ नै पालनकर्ता,ऊ नै प्रभु,ऊ नै मालिक,ऊ नै आफ्ना मित्रहरूको सहायक र सहयोगी छ । |
| ३५ अन्नसीर | ऊ जसलाई चाहन्छ सहयोग पुऱ्याउछ, र जसलाई मद्दत गर्छ उसलाई कोही पराजित गर्न सक्दैन,र जसलाई अपमान गर्न चाहन्छ त्यसलाई कोही सहयोग पुऱ्याउन सक्दैन । |
| ३६ अस्समीअ् | ऊ आफ्नो सुन्ने शक्तिले हरेक प्रकारको कुरालाई घेरि राखेको छ चाहे त्यो सानो भन्दा सानो र लुप्त रहस्य किन नहोस् वा खुल्ला र प्रष्ट कुरा किन न होस्, बरू प्रत्येक प्रकारको स्वरलाई सुन्नेवाला चाहे मसिनो होस वा ठूलो, र ऊ सित प्रार्थना गर्नेहरूको प्रार्थना स्वीकार गर्दछ । |
| ३७ अल्बसीर | ऊ आफ्नो हेर्ने शक्तिले सम्पूर्ण विद्यमानलाई घेरि राखेको हो चाहे त्यो परोक्षमा होस् वा सामुन्ने, लुप्त होस् वा प्रष्ट, सानो होस वा ठूलो । |
| ३८ अश्शहीद | ऊ आफ्नो सृष्टिमाथि संरक्षक छ,र ऊ एक्लै छ भन्ने आफै गवाही दिन्छ, र न्यायलाई कायम राख्छ,उसलाई एक्लै ठान्ने मोमिनहरूको सत्यताको साक्षी दिई आफ्ना दूतहरूको सत्यता र फरिश्ताहरूको विद्यमान माथि साक्षी दिन्छ । |
| ३९ अर्रकीब | आफ्नो सृष्टिलाई रेख देख गर्नेवाला,तिनीहरूका कर्महरूलाई गनेर सुरिक्षत राख्नेवाला,कुनै आँखाको झपक्क र कुनै मुटुमा उत्पन्न हुने ख्याल उसबाट टाढा हुन सक्दैन । |
| ४० अर्रफीक | आफ्ना कार्यहरूलाई नम्रतापूर्वक गर्नेवाला,अल्लाह तआला सृष्टिको मामिलामा ढील र मोहलत दिँदैछन,र आफ्ना भक्तहरू सित नम्रता र सहजता सँग व्यवहार गर्दछन्, तिनीहरूमाथि सामर्थ्य नभएको कार्य अनिवार्य गर्दैनन्, कोमलता तथा नम्रता अपनाउने व्यक्ति सँग प्रेम गर्दछन् । |
| ४१ अल्करीब | ऊ सर्वज्ञाता र अपरम्पार शक्तिशाली हुनाले सम्पूर्ण सृष्टिको नजीक हो,र आफ्नो दयादृष्टि र सहयोग सँग मोमिन भक्तहरू सित हो, यस्को बावजुद ऊ सातौं आकाशमाथि महान सिंहासनमाथि बिराजमान छ,उसको अस्तित्व सृष्टिहरूमा मिल्न वा समावेस हुन सक्दैन । |
| ४२ अल्मोजीब | उसको बुद्धिमता र ज्ञानले चाहे अनुसार प्रार्थना गर्नेहरूको प्रार्थना र याचकहरूको याचना स्वीकार गर्दछ । |
| ४३ अल्मोकीत | ऊ अन्न आनाज र रोजीहरूलाई जन्म दिई त्यसलाई प्राणीहरू सम्म पुगाउछ, र त्यसलाई रेखदेख गरी सुरक्षित राख्दछ र केही कमी नगरीकन भक्तहरूको सुकर्मलाई सुरक्षित राख्दछ । |
| ४४ अल्हसीब | ऊ आफ्ना दासहरूको लागि सम्पूर्ण धार्मिक र संसारिक कार्यहरूमा पर्याप्त छ,र मोमिन भक्तहरूका निमित्त बढी रूपमा पर्याप्त छ,र तिनीहरूले संसारमा गरेका कार्यहरूको हिसाब लिनेछ । |
| ४५ अल्मोअ्मिन | रसूल र उनका अनुयायीहरूलाई सत्य मानी उनको सत्यताको गवाही दिनेवाला र उनको सत्यतामाथि प्रमाणहरूलाई सिद्ध पार्नेवाला,र जे जति अमन शान्ति लोक परलोकमा पाइन्छ उसैबाट हो,र मोमिनहरूमाथि अन्याय नगरे र तिनलाई यातना न दिई तथा प्रलय हुने दिन डर र भयबाट जोगाई अमन र शान्तिमा राख्नेवाला । |

| | |
|---|---|
| ४६ अल्मन्नान | आफ्ना सृष्टिहरूमाथि धेरै भन्दा धेरै दान-प्रदान, ठूलो उपकार तथा अत्याधिक अनुकम्पा गर्नेवाला। |
| ४७ अत्तैइब | ऊ प्रत्येक प्रकारको खोट र कमी कमजोरीबाट चोखो हो,र उसैका लागि सम्पूर्ण प्रकारका सुन्दरता र परिपूर्णता हो, आफ्नो सृष्टिमाथि अत्याधिक रूपमा दान-प्रदान गर्दैछ,र पवित्र एवम वैध वुस्तुहरू बाटै दान र सुकर्म स्वीकार गर्दछ जो मात्र शुद्ध आत्माले गरिएको हो। |
| ४८ अश्शाफी | उसले नै हृदय तथा शरीरलाई रोगबाट निको पार्छ,निको पार्नको शक्ति मनुष्यको हातमा छैन, औषधी र उचार गर्नु मात्र मनुष्यको हातमा छ तर वास्तविकमा रोगबाट निको पार्नु मात्र एक अल्लाहको हातमा हो। |
| ४९ अल्हफीज | उसले नै आफ्ना मोमिन भक्तहरूलाई तथा सुकर्मीहरूलाई आफ्नो दया दृष्टिले सुरक्षा गरिरहेछ,र आफ्नो महा शक्तिले सम्पूर्ण सृष्टिहरूलाई रेखदेख र सुरक्षा गर्दैछ। |
| ५० अल्वकील | ऊ नै लोक परलोकमा सर्वोत्तम योजनाकार,जन्मदाता र प्रबन्धक हो, सम्पूर्ण सृष्टिलाई आविष्कार गर्नु र तिनलाई सहयोग पुऱ्याउनु उसैमा निहित छ, जुन मोमिनहरूले प्रयास आरम्भ गर्नु भन्दा अघि आफ्नो मामिला र कार्य उसै तिर सोम्पेका छन्,र रोजी आर्जन गर्दा खेरि उसै सित मद्दत मागेका छन्, र काम गर्नको साहस प्राप्त भए पछि उसैको आभार व्यक्त गरेका छन्, र परिश्रम गरे पश्चात जुन वस्तु उसले प्रदान गऱ्यो त्यस बाट प्रसन्न भएका छन् भने यस्ता मोमिनहरूको लागि अल्लाह सर्वोत्तम योजना गर्नेवाला हुनुहुन्छ। |
| ५१ अल्खल्लाक | यस्तो नाम जो अल्लाहलाई अत्याधिक जन्मदाता हुने सिद्ध गर्छ, किनकि अल्लाह तआला सधैं जन्म दिनुहुन्छ र यस गुणमाथि सधैं कायम रहने छन्। |
| ५२ अल्खालिक | पहिलो पटक आविष्कार गर्नेवाला बिना कुनै नमूना र उदारणको। |
| ५३ अल्बारी | सृष्टिहरू मध्ये जतिलाई अनुमान लगाओस् ती सबैलाई जन्म दिने र निर्माण गर्नेवाला। |
| ५४ अल्मोसव्विर | उसको बुद्धिमता,ज्ञान र दयाले चाहे अनुसार सम्पूर्ण सृष्टिलाई मनपराउने रूपमा निर्माणकर्ता। |
| ५५ अर्रब्ब | आफ्नो धन र अनुकम्पा द्वारा सृष्टिहरूको पालनकर्ता र तिनीहरूलाई अलि-अलि लालन पालन गर्नेवाला, आफ्ना मित्रहरूलाई यस्तो हुर्काउँछ (तर्बीयत गर्छ) कि उनीहरूको हृदय पनि राम्रो भ इहाल्छ, ऊ नै स्वामी, मालिक र जन्मदाता हो। |
| ५६ अल्अजीम | सम्पूर्ण प्रकारको महानता उसैका लागि छ उसको अस्तित्वमा, उसका नाम तथा गुणहरूमा, यसैले गर्दा सबै प्राणीमाथि उसलाई महान ठान्नु र उसलाई आदर सत्कार गर्नु अति नै अनिवार्य छ, यसै गरी उसले दिएको आदेशलाई पनि आदर सत्कार र महान मानी व्यवहारमा ल्याउनु जरूरी छ। |
| ५७ अल्काहिर<br>५८ अल्कह्हार | ऊ नै दासहरूलाई अपमान गर्दछ र आफ्नो सृष्टिलाई दास र गुलाम बनाएको छ र तिनीहरूमाथि उच्चतम छ, सबै घाँटी र अनुहारहरूले ब्याकुल भई उसै प्रभुत्त्वशालीको आगाडि निहुर्ने गर्छन। अल्कह्हारमा अत्याधिक अर्थ पाइन्छ। |
| ५९अल्मोहैमिन | वस्तुहरूलाई कायम राख्नेवाला र तिनलाई रेखदेख गरेर सुरक्षित राखी त्यसलाई घेरामा लिनेवाला। |
| ६० अल्अजीज | प्रभुत्वशाली र शक्तिवान हुनका सबै अर्थ उसैका लागि छन्, उसैको निम्ति सम्पूर्ण शक्ति हो, उसलाई कोही पराजित गर्नेवाला छैन, ऊ यति प्रभुत्व सम्पन्न छ कि कसैको खाँचो उसलाई पर्दैन, र यति प्रभ त्वशाली एवम शक्तिशाली छ कि कुनै वस्तु उसको अनुमति बिना हल्न पनि सामर्थ्य राख्दैन। |
| ६१ अल्जब्बार | उसैको चाहना र इच्छा यस संसारमा चलिरहेछ,सबै सृष्टिहरू उसैको अगाडि झुकेकाछन् र उसको महानताको सामुन्ने निहुरेकाछन, उसको आदेशानुसार कार्यमा लीन छन, ऊ नै निर्बललाई पूर्ति गर्नेवाला, भिकारीलाई धनी बनाउनेवाला, दीन दुखीलाई दिनेवाला, र बिरामीलाई रोगबाट निको पार्नेवाला छ। |
| ६२ अल्मोतकब्बिर | त्यो महान हो, प्रत्येक प्रकारको कमी र दुर्गुण बाट उच्चतम,आफ्ना दासहरूमाथि अन्याय गर्नुबाट धेरै टाढा, उसको सृष्टिमाथि अन्याय गर्नेलाई सामत्नेवाला, सम्पूर्ण प्रकारको महानता बाट गुणी, उसको महानता यदि कुनै खोस्न चाहन्छ भने उसलाई सर्वनाश गरिदिनेछ। |
| ६३ अल्कबीर | ऊ आफ्नो अस्तित्व, गुण र कार्यहरूमा अति नै महान, ऊ भन्दा ठूलो कुनै वस्तु छैन, बरू उसको महानता र गरिमामयको अगाडि प्रत्येक कुरा सानो छ। |
| ६४ अल्हैय्इय | उसको लागि यस्तो लाज र शर्म हो जो उसको महान राज्य तथा गरिमामयको योग्य छ, अतः अल्लाह तआलाको लाज वास्तवमा सम्मान, भलाई, दान-प्रदान गर्नै र महानताको लाज हो। |
| ६५ अल्हैय | उसैको लागि सधैं देखि र परिपूर्ण जीवन छ, ऊ अमर र अविनाशी, न त उसको लागि आरम्भ छ र न त अन्त,र सम्पूर्ण प्राणीहरूको ज्यान र जीवन उसै तर्फ बाट आएको छ। |
| ६६ अल्कय्यूम | ऊ आफैं कायम रहने वाला, आफ्नो सम्पूर्ण सृष्टिबाट बेपरवाह, आकाश र धरतीमा जे-जति कुराहरू छन सबैलाई थामी राख्नेवाला, सबैले आ-आफ्नो जरूरत पूर्तिको लागि उसैलाई गुहार्छन्। |
| ६७ अल्वारिस | सबै सृष्टि नाश भए पछि ऊ नै बॉकी बाच्नेवाला,सम्पूर्ण कुराहरू सर्वनाश भएर उसै तिर फर्केर जानेछन्.र जे-जति वस्तु,धन सम्पत्ति हाम्रो हातमा छन् सबै उसैको नासो हुन् एक दिन सबै आफ्नो स्वामी तिर फर्केर जान्छन्। |

| | |
|---|---|
| ६८ अद्दैय्यान | सम्पूर्ण सृष्टि उसैको अधीनमा हिंडीरहेछन र उसैको लागि निहुरी रहेछन, दासहरूले गरेका कर्महरूमाथि प्रतिफल दिनेवाला, यदि सुकर्म हुन्छ भने दोब्बर पूण्य दिन्छ र यदि कुकर्म हुन्छ भने त्यसमाथि सजाय दिन्छ वा क्षमा गरिदिन्छ । |
| ६९ अल्मलिक | उसैको लागि आदेश र प्रभुत्व छ,ऊ नै आफ्नो रचनामा आफ्नो आदेश र कार्य द्वारा प्रबन्धन गर्नेवाला,आफ्नो राजसत्ता र प्रजालाई सम्हाली राखेमा उसमाथि कसैको केही महानता होइन । |
| ७० अल्मालिक | वास्तविक र असल राजसत्ता एवं बादशाहियत उसैको लागि हो र ऊ यस्को अधिकार पनि राख्दैछ,सृष्टिलाई रच्नु आरम्भ गर्दा खेरि पनि उसैको राज्य थियो, किनकि ऊ बाहेक अरू कोही थिएन, र सबै सृष्टिको समाप्ति पश्चात पनि अन्तमा उसैको मुलुक र राज्य बाँकी रहनेछ । |
| ७१ अल्मलीक | यो नाम परिपूर्ण स्वामी हुनको गुणलाई सिद्ध गर्दछ, त यो नाम मालिक भन्दा अधिक अर्थमाथि आधारित छ । |
| ७२ अस्सोब्बूह | प्रत्येक प्रकारको कमी कमजोरी र दुर्गुणबाट चोखो, किनभने उसैका लागि समस्त परिपूर्ण गुणहरू र हरेक खालको सुन्दरता र कमाल छन् । |
| ७३ अल्कुद्दूस | प्रत्येक किसिमको कमी कमजोरी तथा दुर्गुणबाट पवित्र किनकि ऊ एक्लैको लागि सबै प्रकारका परिपूर्ण गुणहरू छन्, उसको लागि उदाहरण प्रस्तुत गर्नु मिल्दैन । |
| ७४ अस्सलाम | प्रत्येक प्रकारको कमी कमजोरी र नराम्रो गुणहरूबाट सुरक्षित र पवित्र आफ्नो अस्तित्वमा,नाममा र गुणहरूमा, लोक परलोकमा जे-जति शान्ति र अमन पाइन्छ सबै उसै तर्फबाट नै छन् । |
| ७५ अल्हक्क | ऊ साँचो हो उसमा न त केही शंका छ र न त केही भ्रम, नत्र उसका नामहरूमा, नत्र उसका गुणहरूमा, र उसले एक्लै पूज्य हुनमा केही शंका छैन,ऊ सत्य पूजनीय हो उस बाहेक सत्य पूजनीय अरू कोही छैन । |
| ७६ अल्मोबीन | उसको मामिला बिल्कुलै स्पष्ट हो उसको एक्लै हुनमा,बद्धिमता र दयालु हुनमा,आफ्ना दासहरूलाई सुबाटो प्रष्ट पार्छ ताकि तिनीहरू त्यसलाई अपनाउन्,र कुबाटोलाई पनि प्रष्ट पार्छ ताकि तिनीहरू त्यसबाट आफुलाई जोगाउन्। |
| ७७ अल्कवी | उसैको लागि सम्पूर्ण प्रकारको शक्ति छ र हरेक किसिमको चाहना तथा इच्छा । |
| ७८ अल्मतीन | ऊ आफ्नो शक्ति र सामर्थ्यमा अति नै कठोर हो,उसलाई कुनै काम गर्दा खेरि थकावट,अप्ठ्यारो र अल्छी लाग्दैन। |
| ७९ अल्कादिर | ऊ प्रत्येक कुरामाथि सामर्थ्यवान हो,आकाश र धरतीमा कुनै वस्तुले उसमाथि रोकावट गर्दैन,र ऊ नै हरेक वस्तुलाई अनुमान गर्नेवाला हो । |
| ८० अल्कदीर | यसको अर्थ र अल्कादिरको अर्थ एउटै हो, तर अल्कदीरमा अलि बढी अर्थ पाउँदैछ जो अल्लाहको लागि निकै राम्रो छ । |
| ८१ अल्मुक्तदिर | यो नाम भाग्यहरूलाई कार्यमा लगाउनुमाथि अल्लाह तआलाको महाशक्तिशाली हुनेलाई सिद्ध गर्छ, अल्लाह तआलाले आफ्नो अनन्त र अदभुत ज्ञान अनुसार ती भाग्यहरूलाई नियुक्त गर्नुभएको छ । |
| ८२ अल्अली<br>८३ अल्आला | उसको शान उच्चतम,उसको अस्तित्व सबभन्दा माथि र ऊ सबैमाथि प्रभुत्व राख्नेवाला,प्रत्येक वस्तु उसको महान राज्य र प्रभुत्वको अधीनमा रहेको छ,ऊ भन्दा माथि कुनै कुरा कहिल्यै हुन सक्दैन । |
| ८४ अल्मोतआल | उसको उच्चतम र महान शानको अगाडि सबै वस्तु निर्बल र सानो हो,ऊ भन्दा माथि कुनै कुरै छैन बरू प्रत्येक कुरा ऊ भन्दा तल रही उसको प्रभुत्व तथा राज्यको अधीनमा बसीरहेछ । |
| ८५ अल्मोकद्दिम | उही नै सम्पूर्ण वस्तुहरूलाई प्रस्तुत गरी आफ्नो बुद्धिमता र इच्छा अनुसार त्यसको आ-आफ्नो ठाउँमा राखिरहेछ, र आफ्नो ज्ञान अनुसार सृष्टिहरू मध्ये कोहीलाई कोहीमाथि प्रधानता दिइराखेको छ । |
| ८६ अल्मोअख्खिर | उसले नै वस्तुहरूलाई तिनका ठाउँहरूमा सजाइ राखेर आफ्नो बुद्धिमताको माफिक केहीलाई अगाडि गर्छ त केहीलाई पछाडि,दासहरूलाई यातना दिनमा ढीलो गर्छ शायद कि उनीहरू प्रायश्चित्तगरी अल्लाहतिर फर्कि हालुन्। |
| ८७ अल्मोसअइर | ऊ नै वस्तुहरूको भाउ र मूल्यमा बृद्धि तथा कमी गर्छ र कुनै वस्तुलाई माथि र कुनैलाई तल झार्छ, उसको बुद्धि र ज्ञानले चाहे अनुसार वस्तहरूको भाउ बढ्ने घट्ने गर्छ । |
| ८८ अल्काबिज | प्राणहरूलाई ऊ नै निकाल्छ,र सृष्टिहरू मध्ये कसैलाई आफ्नो बुद्धि र ज्ञानले परीक्षा लिनका लागि रोजी र धन सम्पत्तिमा कमी गरिदिन्छ । |
| ८९ अल्बासित | उसले नै आफ्नो दया र दानशीलताले आफ्ना दासहरूको रोजी र धन सम्पत्तिमा बृद्धि गर्छ,र आफ्नो बुद्धिमताको अनुसार तिनीहरूलाई माल धन दिई परीक्षा लिन्छ,र पापीले गरेको प्रायश्चित्तलाई हात फैलाई स्वीकार गर्दछ । |
| ९० अल्अव्वल | ऊ पहिला,ऊ भन्दा पहिलो केही वस्तु थिएन,बरु सम्पूर्ण सृष्टि उसले रचना गरे पछि विद्यमानमा आयो, किन्तु अल्लाह तआलाको लागि आरम्भ छैन । |
| ९१ अल्आखिर | ऊ अनन्त,ऊ भन्दा पछि केही वस्तु हुने छैन, ऊ नै अमर हो र धरतीमा जे-जति कुराहरू छन सबै नाश भइहाल्नेछन, फेरि फर्केर उसै तिर जानु पर्छ, अल्लाह तआलाको लागि अन्त हुने छैन । |

| | |
|---|---|
| ९२ **अज्जाहिर** | ऊ प्रत्येक वस्तु भन्दा माथि र उच्चतम,ऊ भन्दा माथि कुनै कुरा छैन,ऊ सबै माथि प्रभुत्वशाली र सबैलाई घेरामा राखि रहेको छ। |
| ९३ **अल्बातिन** | ऊ बाट केही कुरा लुप्त होइन,ऊ धेरै नजीक,सबैलाई घेरामा लिनेवाला,र संसारमा सृष्टिको आँखाबाट लुप्त छ। |
| ९४ **अलवित्र** | ऊ एक्लै हो उसको कोही साझी र साथी छैन,ऊ एक्लै छ ऊ बराबर कोही होइन। |
| ९५ **अस्सैइद** | सम्पूर्ण सृष्टिमाथि उसैको स्वामित्व छ र ऊ नै तिनीहरूको प्रभु र पालनकर्ता हो. र तिनीहरू उसको रचना र दास छन। |
| ९६ **अस्समद** | यस्तो स्वामी जुन आफ्नो स्वामित्वमा परिपूर्ण हो,सम्पूर्ण सृष्टि आफ्नो आवश्यकतालाई पूर्ति गर्ने हेतु उसैलाई गुहार्छन किनकि सबै त्यही एक दरबारका भिकारी हुन, ऊ सबैलाई भोजन दिन्छ र उसलाई भोजन गर्नको खाँचो छैन। |
| ९७ **अल्वाहिद**<br>९८ **अल्अहद** | प्रत्येक प्रकारका परिपूर्ण र अनुपम गुणहरूलाई मात्र ऊ एक्लैका लागि मान्नु अनिवार्य हो यसमा उसको कोही साझी र साथी छैन,र ऊ जस्तो केही होइन,यो कुरा माने पछि मात्र ऊ एक्लैलाई पूज्नु अनिवार्य छ र उसको पूजामा अरू कसैलाई सहभागी न मानियोस्। |
| ९९ **अल्इलाह** | ऊ सत्य पूजनीय हो,र मात्र एक्लै पूज्नको योग्य पनि ऊ नै हो र ऊ बाहेक अरू कोही पूजाको योग्य छैन। |

**१३- अल्लाहका नाम र गुणहरूमा के अन्तर हो ?** नाम र गुणहरू सित शरण माग्नु र शपथ लिनुमा केही अन्तर छैन,तर केही कुरामा दुबै बीच भिन्नता छ,जुन मध्ये महत्वपूर्ण अन्तरहरू यी हुन्: १) अल्लाह तआलाका नामहरू सित दुआ गर्नु र ती सँग अब्दलाई जोडेर नाम राख्नु जायज छ,तर गुणहरू सँग यो कार्य जायज छैन, जस्तो (अब्दुल् करीम) नाम राख्नु जायज हो तर (अब्दुल करम) नाम राख्नु जायज होइन, यसै गरी (या करीम) भनेर दुआ गर्नु वैध हो तर (या करमल्लाह) भनेर दुआ गर्नु अवैध हो। २) अल्लाहका नामहरू बाट उनका गुणहरू सिद्ध हुन्छन जस्तो कि (अर्रहमान) बाट गुण (अर्रह्मत) सिद्ध हुन्छ,तर उनका गुणहरू बाट यस्ता नामहरू सिद्ध गर्नु जायज छैन जस्को चर्चा कुरआन र हदीसमा आएको छैन,जस्तो अल्लाहको गुण (अल्इस्तेवा) बाट (अल्मुस्तवी) नाम सिद्ध हुन सक्दैन। ३) अल्लाह तआलाका कर्महरूबाट यस्ता नामहरू प्रमाणित गर्नु अवैध छ जस्को चर्चा कुरआन र हदीसमा आएको होइन,जस्तो कि अल्लाहका कर्महरू मध्ये (अल्गजब) रिसाउनु हो त यस कर्मबाट अल्लाहको नाम (अल्गाजिब) रिसाउनेवाला सिद्ध हुन सक्दैन। तर कर्महरूबाट गुण साबित हुन सक्छ : अतः (अल्गजब) ,रिस, गुणलाई सिद्ध गर्न सक्छौं किनकि अल्गजब ,रिस गर्नु, अल्लाहका कर्महरू मध्ये छ।

**१४- फरिश्ताहरूमाथि ईमान ल्याउनुको अर्थ के हो ?** उनीहरूको विद्यमानमाथि दृढ विश्वास राख्नु र यस माथि पनि विश्वास गर्नु कि अल्लाह तआलाले उनीहरूलाई आफ्नो पूजा गर्न एवं आफ्नो आदेशलाई जारी गर्नका लागि जन्म दिनुभएको छ। ﴿عِبَادٌ مُّكْرَمُونَ ۝٢٦ لَا يَسْبِقُونَهُۥ بِٱلْقَوْلِ وَهُم بِأَمْرِهِۦ يَعْمَلُونَ﴾ " *तिनीहरू उनका प्रतिष्ठित भक्तहरू हुन्। उनी भन्दा अगाडि बढेर कुनै कुरा गर्दैनन् र उनको आदेशको पालन गर्दछन्*"। फरिश्ताहरूमाथि ईमान ल्याउनु चार कुराहरूलाई सामेल छ : १) उनीहरूको विद्यमान माथि ईमान राख्नु। २) उनीहरू मध्ये जसको नाम हामीलाई थाहा छ उनको नाम सँगै उनीमाथि ईमान ल्याउनु जस्तो कि जिब्रील। ३) उनीहरूको जुन गुणको बारेमा हामी जानकारी राख्दैछौं त्यो गुणमाथि ईमान ल्याउनु जस्तो कि उनीहरूको महान विद्यमान। ४) उनका जुन कर्महरूको बारेमा हामी ज्ञान राख्दैछौं तीमाथि ईमान राख्नु, जस्तो कि यमदूत कि उनको काम छ ज्यान निकाल्नु।

**१५- कुरआन भनेको के हो ?** कुरआन अल्लाह तआलाको वाणी हो,त्यसलाई पाठ गर्नु इबादत (पूजा) हो, अल्लाहबाटै आरम्भ भएको छ र उनै तिर फर्केर गइहाल्नेछ,वास्तवमा अल्लाहले अक्षर र स्वर लगायत कुरआनलाई भन्नुभएको छ,जिब्रीलले अल्लाहबाट त्यसलाई सुन्नुभो अनि नबी सल्लल्लाहो अलैहेवसल्लम सम्म पुगाउनुभो,र सबै आकाशिय ग्रन्थहरू ईश्वाणी छन।

**१६- के हामी मात्र कुरआनलाई व्यवहारमा ल्याई नबीको सुन्नत (हदीसहरू) बाट बेपर्वाह हुन सक्छौं ?** यस्तो गर्नु जायज छैन,किनकि अल्लाहले नै नबीको सुन्नतलाई व्यवहारमा ल्याउनुको आदेश दिनुभ ो,अल्लाह भन्नुहुन्छः ﴿وَمَآ ءَاتَىٰكُمُ ٱلرَّسُولُ فَخُذُوهُ وَمَا نَهَىٰكُمْ عَنْهُ فَٱنتَهُوا۟﴾ " *जे-जति कुरा तिमीलाई रसूल दिन्छन त्यो लिइहाल्,र जुन कुराबाट मनाही गर्दछन त्यसलाई छाडिदिऊ* "। हदीस कुरआनको विश्लेषण र व्याख्या हो,बिना हदीसलाई व्यवहारमा ल्याई इस्लाम धर्मका समस्याहरूको विस्तार पूर्वक ज्ञान प्राप्त गर्नु सम्भव छैन, जस्तो कि नमाजका समस्याहरूलाई बिना हदीसलाई सम्झनु असम्भव छ। नबी सल्लल्लाहो

अलैहेवसल्लमले भन्नुभयोः " *सावधान !! मलाई कुरआन र त्यो जस्तो एउटा अरू कुरा दिइएको छ (अर्थात हदीस), सावधान !! नजीकै यो घट्नेछ कि एउटा सुखी सम्पन्न व्यक्तिले मसलन्दमाथि अडेस लिएर भन्ने छ : कुरआनलाई मात्र व्यवहारमा ल्याऊ र जो कुरा तिमी त्यसमा वैध पाउँछौ त्यसलाई वैध मान र जो कुरा अवैध छ त्यसलाई अवैध मान* "। (अबुदाऊद)

**१७- रसूलहरूमाथि ईमान ल्याउनुको अर्थ के हो ?** यसको अर्थ होः दृढ विश्वास राख्नु कि अल्लाह तआलाले प्रत्येक समुदायमा एउटा रसूल पठाउनुभो जुन समुदायका मानिसहरूलाई मात्र एक अल्लाहको पूजा अर्चना र उनी बाहेक जे-जति पूजनीय बनेका छन् सबैलाई नकार्नु तिर निम्तो दिँदै थियो । र यो पनि विश्वास राख्नु पर्छ कि उनीहरू सबैका सबै एकदमै सत्य, नेक, असल, सम्मानित, महान, अल्लाह सित सब भन्दा बढी डराउनेवाला,अमानतलाई सुरक्षित राख्नेवाला र सुपथमाथि हिंडनेवाला हुन्थे । र यो पनि विश्वास राख्नु पर्छ कि उनीहरूमाथि जुन कुराहरूलाई अरू सम्म पुऱ्याउनुको जिम्मेवारी अल्लाहले दिनुभएको थियो तिनलाई राम्ररी पुऱ्याएका थिए, र उनीहरू सृष्टिमा सबभन्दा श्रेष्ठ र उत्तम हुन्थे, र उनीहरू जन्म देखि मृत्यु सम्म अल्लाह सँग कसैलाई साझी मान्नुबाट एक्दमै चोखो थिए ।

**१८- कियामतको दिन कति प्रकारको सिफारिश हुनेछ ?** सिफारिश अनेकौं प्रकारको हुन्छ,जस मध्ये सब भन्दा ठूलो सिफारिश हुनेछ जसलाई **(१)** शफाअते उज्मा भनिन्छः यो प्रलयको मैदानमा सिद्ध हुनेछ जब मानिस पचास हजार वर्ष सम्म उभेर निधो हुनको लागि पर्खी रहनेछन,तब नबी सल्लल्लाहो अलैहेवसल्लमले आफ्नो प्रभु सित सिफारिश गर्नेछन् र मानिस बीच निधो गर्नको लागि प्रार्थना गर्नेछन् । र यो ठूलो सिफारिश हाम्रा सरदार मुहम्मद सल्लल्लाहो अलैहेवसल्लम सँग खास छ, र यसैलाई मकामे महमूद पनि भनिन्छ जसलाई उनलाई प्रदान गर्ने हेतु अल्लाहले वाचा गर्नुभएको हो । **(२)** स्वर्गको ढोका खोलाउनको लागि सिफारिश, सब भन्दा पहिला हाम्रा नबी मुहम्मद सल्लल्लाहो अलैहेवसल्लमले ढोका खोलाउनेछन,र समस्त अनुयायीहरू मध्ये सब भन्दा पहिला मुहम्मद सल्लल्लाहो अलैहेवसल्लमका अनुयायी स्वर्गमा प्रवेश गर्नेछन् । **(३)** यस्ता समुदायहरूलाई नरकबाट जोगाउनको लागि सिफारिश गरिन्छ जुनलाई नरकमा प्रवेश हुनको आदेश भइसकेको हुन्छ । **(४)** तौहीदलाई मान्नेहरू मध्ये केही नरकमा प्रवेश भइसके पछि नरकबाट मुक्ति दिलाउनको निम्ति सिफारिश । **(५)** स्वर्गमा प्रवेश भइसकेका केही समुदायहरूको दर्जा उच्चतम हुने हेतु सिफारिश । **(६)** स्वर्गमा बिना हिसाब किताब लिई प्रवेश हुने हेतु केही समुदायहरूका लागि सिफारिश । **(७)** केही काफिरहरूको यातनामा कमी गराउनको लागि सिफारिश । यो सिफारिश हाम्रा नबी सल्लल्लाहो अलैहे वसल्लमले आफ्नो काका अबुतालिबको यातनामा कमी गराउनको निम्ति गर्नेछन । **(८)** बिना कसैले सिफारिश गरेकन् केही यस्ता समुदायहरूलाई अल्लाह तआलाले आफ्नो दयादृष्टिले नरकबाट निकाल्नेछन जस्को मृत्यु तौहीदमाथि भएको थियो,यी समुदायहरूको संख्या कति हुनेछ मात्र अल्लाहलाई थाहा छ, तिनीहरूलाई आफ्नो दयाले अल्लाह तआलाले स्वर्गमा प्रवेश हुनको आदेश दिनेछन ।

**१९- के जीउँदो सित मद्दत माग्नु वा सिफारिश चाहनु जायज छ ?** हो,जायज छ, र शरियत (इस्लाम) ले अर्कोलाई सहयोग पुऱ्याउनु माथि धेरै प्रेरित गरेको छ,अल्लाह तआला भन्नुहुन्छ : ﴿ وَتَعَاوَنُواْ عَلَى ٱلۡبِرِّ وَٱلتَّقۡوَىٰ ﴾ " *संयमपूर्ण र भलाईका कामहरूमा एक अर्कोको मद्दत गर्ने गर* "। र नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभयोः " *अल्लाह तआला दासको सहयोगमा रहने छन जब सम्म त्यो दास आफ्नो भाईलाई मद्दत पुऱ्याउनुमा लीन रहने छ* "। र सिफारिशको ठूलो प्रधानता छ र यस्को अर्थ हो कसैको लागि माध्यम बन्नु । अल्लाह तआलाको वाणी हो : ﴿ مَّن يَشۡفَعۡ شَفَٰعَةً حَسَنَةٗ يَكُن لَّهُۥ نَصِيبٞ مِّنۡهَا ﴾ " *जुन व्यक्तिले असल कामको लागि सिफारिश गर्दछ उसले पनि त्यसबाट केही भाग प्राप्त गर्नेछ* "। र नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभएको छ : " *सिफारिश गर पूण्य पाउने छौ* " (बुखारी) । तर यसको लागि केही शर्तहरू छन : **१)** मद्दत र सिफारिश माग्नु मात्र जीउँदो सित होस,मृतक सित मद्दत माग्नुलाई दोआ भनिन्छ र मृतकले कसैको पुकार सुन्दैन । अल्लाह तआला भन्नुहुन्छः ﴿ إِن تَدۡعُوهُمۡ لَا يَسۡمَعُواْ دُعَآءَكُمۡ وَلَوۡ سَمِعُواْ مَا ٱسۡتَجَابُواْ لَكُمۡ ﴾ " *यदि तिमी उनीहरूलाई पुकार्दछौ भने उनीहरूले तिम्रो पुकार सुन्ने छैनन्, र यदि (मानिलिउ) सुनि पनि हालेछन् भने तिम्रो कुरालाई स्वीकार गर्न सक्ने छैनन्* "। र कसरी मृतकलाई पुकारिन्छ जबकि ऊ जीउँदोको दुआको अधिक खाँचो राख्दछ । र उसका सम्पूर्ण कार्यहरू मृत्यु हुनको कारणले समाप्त भइसकेका छन । हो, केही कुराहरू यस्ता छन जस्को पूण्य उसलाई पुग्नेछ जस्तो दुआ आदि । नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः

" *मानवको मृत्यु पश्चात उसका सबै कर्महरू समाप्त भइहाल्छन,तर तीन कुराको पूण्य उसलाई पुगी रहनेछः यस्तो दान उसले गर्‍यो जो जारी रहने छ,यस्तो शिक्षा-दिक्षा उसले छाडयो जसबाट लाभ प्राप्त हुँदैरहनेछ, यस्तो सपुत उसले छाडयो जो उसको हकमा दुआ गर्दैछ* "। **२)** सम्बोधन गर्ने कुरालाई सम्झिन्छ । **३)** जस व्यक्ति सित सिफारिश वा मद्दत माग्दैछ त्यो उपस्थित होस् । **४)** यस्तो कुरालाई पाउनको लागि सिफारिश होस जसको सामर्थ्य मनुष्यले राख्दैछ । **५)** सांसारिक कुराहरूको बारेमा सिफारिश होस् । **६)** जायज वस्तुको प्राप्तीको लागि होस जसमा केही हानि नहोस् ।

**२०- वसीला (माध्यम) कति प्रकारको हुन्छ ?** दुई प्रकार छनः **पहिलो- जायज वसीलाः** र यो तीन प्रकारको हुन्छः **१)** अल्लाह तआलाका नाम र गुणहरूलाई वसीला (माध्यम) बनाउनु । **२)** आफ्नो केही सुकर्मलाई अल्लाह समक्ष वसीला बनाएर पेश गर्नु,जस्तो कि गुफामा फंसे पछि तीन जनाले गरेका थिए । **३)** यस्तो असल,नेक,भलो,जीउँदो र उपस्थित भएको मुस्लिमको दुआलाई अल्लाह समक्ष वसीला बनाएर पेश गर्नु जस्को दुआलाई स्वीकार हुनको आशा होस् । **दोस्रो- हराम वसीलाः** यो पनि दुई प्रकारको छ : **१)** नबी सल्लल्लाहो अलैहेवसल्लमको सम्मान वा कुनै वलीको सम्मानलाई माध्यम बनाएर अल्लाह सित माग्नु,जस्तो कि यो भन्नुः हे अल्लाह म तपाईंको नबीको सम्मान र ईज्जतलाई माध्यम बनाएर तपाईं सित माग्दैछु,वा आदरणीय हुसैनको सम्मान र सत्कारलाई माध्यम बनाएर तपाईंलाई गुहार्दैछु । यो कुरा सत्य हो कि नबी सल्लल्लाहो अलैहेवसल्लमको इज्जत र सम्मान अल्लाह कहाँ सब भन्दा महान छ,यसै गरी संयमी र सुकर्मीहरूको आदर र सत्कार ठूलो छ, तर सहाबा केराम (नबीका साथीहरू) ले भलाईको काममा सबै भन्दा अगाडि रहनको बावजुद अकाल भएको बेलामा नबी सल्लल्लाहो अलैहेवसल्लमको आदर र सत्कारलाई माध्यम न बनाईकन उहाँका काका अब्बासको दुआलाई अल्लाह समक्ष माध्यम बनाएका थिए जबकि नबी सल्लल्लाहो अलैहेवसल्लमको पवित्र चिहान त्यही ठाउँमा थियो । **२)** नबी सल्लल्लाहो अलैहे वसल्लम वा कुनै वलीको शपथ लिई अल्लाह सित आफ्नो आवश्यकता माग्नु,जस्तो कि यो भन्नु कि हे अल्लाह! म तपाईंलाई फलानो वलीको माध्यमले गुहार्दैछु वा तपाईंको नबीको हकलाई वसीला बनाएर तपाईं सित माग्दैछु । त यस्तो भन्नु हराम छ किनकि कुनै प्राणीको कसम कुनै प्राणीमाथि लिनु वर्जित हो र महान अल्लाहको लागि यस्तो गर्नु अरू सख्त मनाही छ । फेरि यो कुरा पनि स्वीकार्य छ कि मात्र आज्ञा पालन गर्नाले नै कुनै दासको हक अल्लाहमाथि अनिवार्य हुँदैन ।

**२१- अन्तिम दिन (कियामत) माथि ईमान ल्याउनुको अर्थ के हो ?** यो दृढ विश्वास राख्नु कि एक दिन कियामत हुनेछ । र यसमा मृत्यु एवं मृत्यु पश्चात हुने घटनाहरूमाथि ईमान ल्याउनु पनि सम्मिलित छ जसरी चिहान भित्र परीक्षा लिनु र चिहानको यातना वा अनुकम्पा,नरसिंहामा फूक हान्नु,मानिसहरूले आफ्नो प्रभु अगाडि उभ्नु,कर्मपत्रहरूलाई खोलिनु, तराजू कायम गर्नु, पुल, हौज (जलाशय), सिफारिश, र त्यस पछि चाहे स्वर्गमा प्रवेश चाहे नरकमा ।

**२२- महाप्रलय हुनुका चिन्हहरू के हुन् ?** **नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभएको छः** " ***दशवटा चिन्हहरू प्रकट हुनु भन्दा अघि कियामत कायम हुने छैन,धुवाँ प्रकट हुनु,दज्जालले (महा धोकेबाज) आउनु,दाब्बहले (खास किसिमको जनावर) निस्कनु,पश्चिम तिरबाट सूर्य उदय हुनु,मर्यमका पुत्र ईसु मसीहले आकाशबाट अवतरण हुनु,याजुज माजुज (ठूलो उपद्रव गर्नेहरू) ले प्रकट हुनु,र तीन वटा घटना धरती धस्नुको हुनेछनः एउटा पूर्वमा अर्को पश्चिममा र तेस्रो अरब टापुमा,र अन्तमा यमन देशबाट एउटा ठूलो आगो निस्कनेछ जो मानिसलाई प्रलयको मैदान सम्म पुगाइ दिनेछ*** "।

**२३- मानिसहरूमाथि सब भन्दा ठूलो परीक्षा के हुनेछ ?** नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभएको छः " *आदमको जन्म देखि कियामत हुने सम्म दज्जाल भन्दा ठूलो घटना अरू केही हुने छैन* "। दज्जाल आदमको सन्तान मध्ये हुने छ जो अन्तिम समयमा आउनेछ,उसको दुबै आँखा बीच (ك ف ر क फ र) उल्लेख हुनेछ जसलाई प्रत्येक मोमिन पढनेछ,त्यो दायाँ आँखाको कानो हुनेछ,उसको आँखा अंगूरको ठूलो दाना जस्तो हुनेछ । धरतीमा निस्कने बित्तिकै सब भन्दा पहिलो आफु सुकर्मी हुनको दाबी गर्छ अनि नबी हुनको फेरि ईश्वर हुनको दाबी गर्नेछ,एउटा समुदाय कहाँ आएर आफुलाई सत्य मान्न तिर निम्तो दिन्छ तर समुदायका मानिसहरू उसलाई झूठो ठान्नेछन र उसको भनाईलाई उसै तिर फर्काई दिनेछन,तब दज्जाल त्यहाँ देखि लाग्नेछ,तर तिनीहरूको धन-सम्पत्ति उसै साथ गइहाल्नेछ,र तिनीहरू निर्धन भइहाल्नेछन । फेरि एक अर्को समुदाय कहाँ गएर आफुलाई साँचो मान्नुको निम्तो दिन्छ त यिनीहरू उसलाई

स्वीकार गरी साँचो मान्नेछन,तब त्यो आकाशलाई आदेश दिन्छ भने वर्षा हुनेछ र धरतीलाई आदेश दिन्छ भने त्यसबाट आनाज र दाना उम्रनेछ । र केही मानिसहरू कहाँ आउनेछ र उ सँग पानी र आगो हुनेछ, उसको आगो चिसो पानी हुनेछ र पानी आगो हुनेछ । मोमिनलाई चाहियो कि नमाजको अन्तमा दज्जालको उपद्रवबाट शरण मागोस्,र यदि उ सँग भेला पर्छ भने उसको अगाडि सूरह कहफको आरम्भका केही आयतहरू पढोस्,र उपद्रव तथा परीक्षामा फस्नको भयले उ सँग भेला गर्नको इच्छा न गरोस् । नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभएको छ : " *जुन व्यक्तिले दज्जालको प्रकट हुनको बारेमा सुन्यो भने त्यसलाई चाहियो कि उसबाट टाढा बसोस्, अल्लाहको कसम! मान्छे आफुलाई मोमिन ठानेर उ समीप जान्छ र उसको शंका उपशंकालाई हेरी उसैको अनुयायी भइहाल्नेछ* "। धरतीमा त्यो चालीस दिन सम्म बसोबास गर्नेछ, त्यस मध्ये एक दिन एक वर्षको बराबर,र अर्को दिन एक महीनाको बराबर,र तेस्रो दिन एक सप्ताको बराबर र बाँकी दिनहरू समान दिन जस्तो हुनेछन्,मक्का र मदीनालाई छाडी प्रत्येक मुलुक र नगरमा प्रवेश गर्नेछ । फेरि ईसु मसीह अलैहिस्सलामले आकाशबाट झरेर उसलाई हत्या गर्नेछन ।

**२४- के स्वर्ग र नरक विद्यमान छन् ?** हो,अल्लाह तआलाले दुबैलाई मनुष्यको जन्म भन्दा अघि नै जन्म दिनुभएको थियो,यी दुबै कहिल्यै समाप्त हुँदैनन् र न त कहिल्यै नष्ट हुनेछन,अल्लाह तआलाले आफ्नो दया र कृपाले स्वर्गको लागि केही मानिसलाई जन्म दिनुभयो,र आफ्नो न्याय र निसाफले केही मानिसलाई नरकको लागि जन्म दिनुभएको छ,र दुबै थरीको लागि त्यो कुरा सजिलो पारिदिनुभो जसको निम्ति त्यसलाई जन्म दिनुभयो ।

**२५- भाग्यमाथि ईमान ल्याउनुको के अर्थ हो ?** यस कुरामाथि दृढ विश्वास राख्नु कि हरेक भलाई वा बुराई अल्लाह तआलाले गर्नु भएको फैसला र उनी द्वारा उल्लेतिख भाग्यको अनुसार नै हुँदैछ । र उनी जे चाहनु हुन्छ गर्नुहुन्छ । अल्लाहका नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभयोः " *यदि अल्लाह तआलाले आकाश बासी र धरती बासीलाई यातना दिनेछन भने यसमा उनी तिनीहरूमाथि अन्याय गर्नेवाला हुँदैनन्,र यदि तिनीहरूमाथि दया गर्नुहुन्छ भने उनको दया तिनीहरूको कर्म भन्दा राम्रो हुनेछ,र यदि तिमी उहुद पहाडको बराबर सुन अल्लाहको बाटोमा खर्च गर्नेछौ भने अल्लाह तआला स्वीकार गर्नेछैनन् यहाँ सम्म कि तिमी भाग्यमाथि ईमान ल्याओस्,र यो कुरा स्मरण रहोस्! कि जुन वस्तु तिमीले पाएकाछौ त्यो तिमी देखि टाढा हुनेवाला थिएन, र जुन वस्तु तिमी देखि टाढा भएकोछ त्यो तिमीले कहिल्यै पाउनेवाला थिएनौ,र यदि तिम्रो मृत्यु यस आस्था बाहेक अरू आस्थामाथि हुन्छ भने तिमी नरकमा जानेछौ* "। र भाग्यमाथि ईमान ल्याउनुमा चार कुराहरू सम्मिलित छन् : १) यो ईमान राख्नु कि अल्लाह तआलालाई समस्त वस्तुहरूको विस्तारपूर्वक स्पष्ट रूपले जानकारी छ । २) यो आस्था राख्नु कि अल्लाह तआलाले जम्मै कुराहरूलाई लोहे महफूजमा लेखेर राख्नुभएको छ,नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभो : "*आकाश र धरतीलाई जन्म दिनु भन्दा ५० हजार वर्ष अघि नै अल्लाहले सम्पूर्ण सृष्टिहरूको भाग्य लेख्नु भएको छ* "। ३) यो आस्था राख्नु कि जे-जति कुराहरू भइरहेछन सबै अल्लाहको चाहना र इच्छा बमोजिम भइरहेछन उनको चाहनालाई कोही टार्ने शक्ति राख्दैन,उनी यत्रो शक्तिशाली हुन् कि कोही उनलाई बेबश र कमजोर पार्नको सामर्थ्य राख्दैन,जे चाहनुहुन्छ त्यही हुन्छ र जे चाहनुहुन्न त्यो हुँदैन । ४) यस कुरामाथि ईमान राख्नु कि अल्लाह नै जन्मदाता र सबै वस्तुहरूलाई आविष्कार गर्नेवाला हुनुहुन्छ,र उनी बाहेक सम्पूर्ण वस्तुहरू उनका रचना र सृष्टि हुन् ।

**२६- के प्राणीहरूको लागि पनि शक्ति,चाहना र वास्तविक इच्छा हुन्छ ?** हो,मनुष्यको लागि चाहना,इरादा र अख्तियार पनि हुन्छ तर अल्लाहको चाहनाबाट बाहिर हुन सक्दैन,अल्लाह तआला भन्नुहुन्छ : ﴿ وَمَا تَشَآءُونَ إِلَّآ أَن يَشَآءَ ٱللَّهُ ﴾ " *र तिमीले विश्वका पालनकर्ताले नचाहिकन केही पनि चाहन सक्दैनौ* "। र नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभो : " *कर्म गर्दै गर,किनकि प्रत्येक व्यक्तिको लागि त्यो कर्म सजिलो बनाइएको छ जसको निम्ति उसलाई जन्म दिइएको छ* "। र अल्लाह तआलाले हामीलाई शुद्ध र अशुद्धमा फरक पार्नको लागि बुद्धि,कान र आँखा दिनुभो,त के यस्तो बुद्धिमान पनि छ जो चोरी गरेर भन्न खोज्छ कि अल्लाहले ममाथि भाग्यमा यो चोरी लेख्नुभएको थियो ? र यदि यस्तो कुरा गर्छ भने मानिसले त्यसको भनाई स्वीकार्ने छैनन्, बरु उसलाई सजाय दिई यो भन्नेछन कि अल्लाहले तिम्रो भाग्यमा यो सजाय पनि लेख्नुभएको छ । अतः भाग्यलाई प्रमाण तथा बहाना बनाउनु कदापि जायज

छैन,बरु वास्तवमा यो भाग्यलाई झूठा ठान्नु हो । अल्लाह तआला भन्नुहुन्छ :
﴿ سَيَقُولُ ٱلَّذِينَ أَشْرَكُوا۟ لَوْ شَآءَ ٱللَّهُ مَآ أَشْرَكْنَا وَلَآ ءَابَآؤُنَا وَلَا حَرَّمْنَا مِن شَىْءٍ ۚ كَذَٰلِكَ كَذَّبَ ٱلَّذِينَ مِن قَبْلِهِمْ ﴾ "*यी मुशिरकहरूले (बहुदेववादीहरू) भन्ने छनः कि यदि अल्लाहले चाहेको भए हामीले अल्लाहको साझेदार ठहराउने थिएनौं र न त हाम्रा बाबु बाजेहरूले नै गर्दथे,र न त हामीले कुनै कुरालाई त्याज्य ठहराउदथ्यौं, यस्तै यिनीहरूका पूर्वजले पनि सत्य कुरालाई गलत भन्ने गरेका थिए*" ।

**२७- एहसान भनेको के हो ?** नबी सल्लल्लाहो अलैहेवसल्लम सँग एहसानको बारेमा सोधियो भने उहाँले उत्तर दिनुभयोः " ***अल्लाहको पूजा यस्तो गर कि मानौ तिमीले अल्लाहलाई हेर्दैछौ,र यदि तिमीले हेर्दैनौ भने यो विश्वास राख कि उनी तिमीलाई हेर्दैछन्***" । र दीनका तीनवटा दर्जाहरू मध्ये यो सब भन्दा उच्च दर्जा हो ।

**२८- तौहीदका कतिवटा प्रकारहरू छन ?** तीनवटा प्रकारहरू छनः १) तौहीद रोबुबीयतः अल्लाहलाई उनका सबै कामहरूमा एक मान्नु जस्तो जन्म दिनु,अन्न दिनु,जीउँदो पार्नु आदि,र नबी सल्लल्लाहो अलैहेवसल्लम भन्दा अधिका काफिरहरूले पनि यस तौहीदलाई मान्दैथिए । २) तौहीद ओलुहियतः पूजाका जति किसिमहरू छन् सबै मात्र एक अल्लाहको लागि गर्नु,जस्तो नमान,भाकल र दान आदि,र मात्र एक अल्लाहको लागि नै इबादत अर्थात पूजा होस् भन्ने कुरालाई सिद्ध पार्नको निम्ति सबै रसूलहरूलाई पठाइयो र सम्पूर्ण ग्रन्थहरूलाई पनि अवतरण गरियो । ३) तौहीद अस्मा व सिफातः अल्लाह र उसका रसूलले जुन राम्रा राम्रा नाम र उच्च गुणहरू अल्लाहको लागि प्रमाणित गरेका छन ती सबैलाई बिना हेरफेर गरी,र बिना त्यसको उदाहरण बयान गरी सिद्ध गर्नु ।

**२९- वली को हो ?** नेक,असल र अल्लाह सित डराउनेवाला मोमिन नै वली हो,अल्लाह तआला भन्नुहुन्छः ﴿ أَلَآ إِنَّ أَوْلِيَآءَ ٱللَّهِ لَا خَوْفٌ عَلَيْهِمْ وَلَا هُمْ يَحْزَنُونَ ﴿٦٢﴾ ٱلَّذِينَ ءَامَنُوا۟ وَكَانُوا۟ يَتَّقُونَ ﴾ " *सुनी राखः कि अल्लाहका मित्रहरूलाई न कुनै भय-त्रास हुनेछ र न त तिनीहरू दुःखी हुनेछन् । यी तिनीहरू हुन् जसले ईमान ल्याएर आत्मसंयमी रहे* " । र नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभयोः "***मेरो वली अल्लाह हुनुहुन्छ र असल मोमिनहरू***" ।

**३०- नबी सल्लल्लाहो अलैहेवसल्लमका साथीहरू प्रति हाम्रोमाथि कुन कुरा अनिवार्य छ ?** हाम्रोमाथि अनिवार्य छ कि हामी उनीहरू सँग प्रेम गरौं,उनको नाम सँग रजियल्लाहो अन्हो (अल्लाह उनी सित प्रसन्न हुन) भनौं,आफ्ना हृदय र जिभ्रालाई उनी प्रति सफा र चोखो राखौं,उनको प्रधानता र प्रतिष्ठालाई व्यापक गरौं,उनीहरू बीच भएको मतभेदबाट हामी चुप लागौं,उनीहरू गल्ती र चूकबाट पवित्र थिएनन् तर उनीहरूले वास्तविकता सम्म पुग्नका लागि प्रयास गरे,उनी मध्ये जस्ले सत्य सम्म पुग्यो उसको लागि दुईवटा पूण्य छन् र जुनले पुगेन उसको लागि उसले गरेको प्रयासमाथि एउटा पूण्य छ । उनीहरूको भूलचूक क्षम्य छ,र यदि उनीहरूबाट केही भूलचूक र गल्ती पनि भयो भने उनको सुकर्म र प्रधानता यत्रो मात्रामा छ कि त्यसलाई त्यो नष्ट गरिदिनेछ । उनीहरू मध्ये एक अर्कामाथि प्रधानता र श्रेष्ठता प्राप्त छ,उनीहरू मध्ये सब भन्दा महान र श्रेष्ठ दश सहाबा केराम छनः अबुबक्र अनि उमर अनि उसमान अनि अली फेरि तल्हा, जोबैर,अब्दुर्रहमान बिन औफ,साद बिन अबी वक्कास,सईद बिन जैद, र अबु ओबैदा बिन जर्राह । फेरि आम मोहाजेरीन् (मक्काबाट प्रवास गरेर मदीना आउनेहरू) फेरि मोहाजेरीन र अन्सार मध्ये जस्ले बदर युद्धमा सहभागी भएका थिए, फेरि अन्सारहरू मध्ये बाँकी सहाबाहरू अनि सम्पूर्ण सहाबाहरू । (अन्सार मदीना बासीहरू जुनले ईमान ल्याएर नबी र उनका साथीहरूलाई धेरै सहयोग पुऱ्याएका थिए) । नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभो : " ***मेरा सहाबा केरामहरूलाई गाली नगर,उस हस्तीको कसम जस्को हातमा मेरो ज्यान हो यदि तिमीहरू मध्ये कुनै व्यक्ति उहुद पहाडको बराबर सुन खर्च गरोस् भने उनीहरूले खर्च गरेको मुद्दको बराबर वा त्यसको आधा सम्म पनि पुग्दैन***" । (मुद्दः दुबै हत्केला मिलाएर जति मात्रा बन्छ त्यसलाई मुद्द भनिन्छ) । र एक अर्को हदीसमा नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभएको हो : " ***जस्ले मेरा साथीहरूलाई गाली गर्छ उसमाथि अल्लाह, फरिश्ताहरू र सम्पूर्ण मनुष्यको धिक्कार र श्राप होस***

**३१- जति दर्जा र प्रतिष्ठा अल्लाहले नबीलाई दिनुभो त्यसमा अत्युक्ति गरेर उहाँलाई प्रशंसा गर्नु जायज छ ?** यसमा केही शंका छैन कि हाम्रा नबी सल्लल्लाहो अलैहेवसल्लम सम्पूर्ण प्राणी र सृष्टिहरूमा सब भन्दा उत्तम र श्रेष्ठ हुनुहुन्छ, तर सीमालाई नाघेर उनको प्रशंसा गर्नु जायज छैन, जसरी कि क्रिश्चियनहरूले ईसु मसीह अलैहिस्सलामको प्रशंसामा सीमालाई नाघेका छन् । किनभने नबी सल्लल्लाहो

अलैहेवसल्लमले हामीलाई यस्तो गर्नुबाट मनाही गर्नुभएको छ, उहाँले भन्नुहुन्छः " *मेरो प्रशंसा गर्नुमा तिमीहरू सीमाबाट बाहिर न जाऔ जसरी कि क्रिश्चियनहरूले मरयमको पुत्र ईसु मसीहको प्रशंसामा सीमाबाट बाहिर गएका छन् म त अल्लाहको भक्त हुँ, तसर्थ तिमीहरूले मलाई अल्लाहका भक्त र उसका रसूल नै भन्ने गर* "। والإطراء अल्इतराः प्रशंसा गर्नुमा अत्युक्ति र बढोत्तरी गर्नु ।

**३२- के अह्लेकिताब (याहुद र क्रिश्चियन) मोमिन हुन् ?** याहुद,क्रिश्चियन र इस्लाम बाहेक अरू धर्मावलम्बीहरू सबैका सबै काफिर छन,यद्यपि यस्तो धर्मलाई मान्नेवाला किन न होस जस्को आधार सत्य हो,नबी मुहम्मद सल्लल्लाहो अलैहेवसल्लमको दूतत्व पश्चात सबैमाथि आ-आफ्नो धर्मलाई छाड्नु र इस्लाम स्वीकार गर्नु जरूरी छ किनकि इस्लामको अलावा अन्य धर्म ﴿ وَمَن يَبْتَغِ غَيْرَ ٱلْإِسْلَٰمِ دِينًا فَلَن يُقْبَلَ مِنْهُ وَهُوَ فِى ٱلْءَاخِرَةِ مِنَ ٱلْخَٰسِرِينَ ﴾ "*स्वीकार गरिने छैन र उसले परलोकमा घाटामा पर्नेहरू मध्ये हुनेछ* "। र यदि कुनै मुस्लिमले तिनीहरूको काफिर हुनमा विश्वास गर्दैन वा तिनीहरूको धर्म मिथ्या हुनमा शंका गर्छ भने त्यो स्वंयम् काफिर भइहाल्छ,किनकि उल्ले अल्लाह र उसका रसूलको आदेशको विपरित कार्य गऱ्यो, किनभने अल्लाह र उसका रसूलले तिनीहरूलाई काफिर भनेकाछन् । अल्लाह भन्नुहुन्छ : ﴿ وَمَن يَكْفُرْ بِهِۦ مِنَ ٱلْأَحْزَابِ فَٱلنَّارُ مَوْعِدُهُۥ ﴾ " *र समुदायहरू मध्ये जो यस्को इन्कार गर्दछ उसको अन्तिम बासस्थान (नरकको) आगो हो* "। (समुदायहरू अर्थात इस्लाम बाहेक अन्य धर्मावलीहरू) । नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभयो : "*उस हस्तीको कसम जस्को हातमा मेरो ज्यान हो! यस अनुयायी मध्ये कुनै व्यक्तिले, यहूदी र क्रिश्चियनले मेरो बारेमा सुने पछि पनि ममाथि ईमान ल्याएन र ईमान नल्याएर उसको मृत्यु भइसक्यो भने ऊ नरकबासीहरू मध्ये हुनेछ*"।

**३३- के काफिरमाथि अन्याय गर्नु जायज छ ?** न्याय र इन्साफ गर्नु अनिवार्य हो,अल्लाहको भनाई छ : ﴿ إِنَّ ٱللَّهَ يَأْمُرُ بِٱلْعَدْلِ وَٱلْإِحْسَٰنِ ﴾ " *अल्लाहले तिमीलाई न्याय र भलाई गर्नको आदेश गर्नुहुन्छ* "। र अन्याय हराम अथवा बर्जित छ । अल्लाह भन्नुहुन्छः " *मैले आफु माथि अन्यायलाई बर्जित गरेको छु र तिमीहरूमाथि पनि हराम अर्थात बर्जित गरेको छु,तसर्थ तिमीहरू एक अर्कामाथि अन्याय नगर* "। अत्याचार भएको मानिस कियामतको दिन अत्याचारी सित बदला लिनेछ । नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभो : " *के तिमीहरूलाई थाहा छ कि निर्धन को हो ? सहाबाले भने : जो सँग रुपियाँ पैसा र माल सम्पत्ति छैन त्यो नै निर्धन हो, भन्नुभोः मेरो अनुयायीमा निर्धन त्यो व्यक्ति हो जो प्रलय हुने दिन नमाज, रोजा, दान आदि लिएर आउँछ तर उल्ले यसलाई गाली गरेको, उसमाथि दोष लगाएको, यसको माल नराम्रो रूपले खाएको, उसको रगत बगाएको, यसलाई हानेको हुन्छ भने उसका पूण्यहरू बाट यसलाई दिइनेछ उसलाई दिइनेछ, र यदि निधो हुनु भन्दा अघि नै उसको पूण्य समाप्त भइहाल्छ भने तिनीहरूको पाप लिएर उसमाथि हालीदिनेछ यहाँ सम्म कि उसलाई नरकमा फ्याकिदिनेछ*"। बरु बदला त जनावरमा पनि एक अर्काबाट लिइनेछ ।

**३४- बिद्अत भनेको के हो ?** धर्म गुरू इब्ने रजबले भन्नुभोः " इस्लाम धर्ममा यस्तो कुराको आविष्कार गर्नु जस्को केही प्रमाण शरियतमा छैन भन्ने कार्यलाई बिदयत भनिन्छ,तर जस कुराको प्रमाण र आधार शरियतमा पाइन्छ त्यसलाई बिदयत भन्दैन यद्यपि त्यसलाई शाब्दिक रूपले बिदयत किन नभनोस् "।

**३५- के इस्लाम धर्ममा राम्रो बिदअत र नराम्रो बिदअत पाइन्छ ?** कुरआन र हदीसहरूमा शरई (धार्मिक) अर्थको दृष्टिकोणले बिदअतको निन्दा गरिएको छ, त्यो होः जस कुराको केही आधार र वास्तविक्ता शरियतमा छैन भने बिदअत हो, नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभो : " *जस्ले यस्तो कर्म गऱ्यो जो हाम्रो आदेशको बिरुद्ध हो भने त्यो कार्य अस्वीकार्य छ* "। (बुखारी र मुस्लिम) र एक अर्को हदीसमा भन्नुहुन्छ : " *धर्ममा हरेक नयाँ कुरा आविष्कार गर्नु बिदअत हो र प्रत्येक बिदअत पथभ्रष्टता हो* "। (अबुदाऊद) र इमाम मालिकले बिदअतको परिभाषा सम्बन्धमा भन्नुहुन्छः " जस्ले इस्लाममा कुनै नया कुराको आविष्कार गऱ्यो र त्यसलाई उल्ले राम्रो पनि सम्झना गरिरहे छ भने उसले यो ठान्यो कि नबी मुहम्मद सल्लल्लाहो अलैहेवसल्लमले राम्रो सँग दूतत्वलाई पुगाउनु भएको होइन बरु त्यसमा उहाँले कमी गर्नुभो "। किनकि अल्लाह तआला भन्नुहुन्छ : ﴿ ٱلْيَوْمَ أَكْمَلْتُ لَكُمْ دِينَكُمْ وَأَتْمَمْتُ عَلَيْكُمْ نِعْمَتِى ﴾ " *आज मैले तिम्रो निम्ति तिम्रो धर्मलाई पूर्ण गरिसकेको छु र तिम्रा लागि आपना अनुकम्पाहरू पूरा गरिसकेको छु*"। र केही हदीसहरूमा शाब्दिक रूपले बिदअतको प्रशंसा गरिएको छ : त्यो होः यस्तो कार्य जसलाई गर्ने हेतु शरियतले आदेश दिएको थियो तर त्यो कार्य बिर्सी गयो, फेरि त्यसलाई मानिसमा चर्चित गर्नको निम्ति नबीले प्रेरित गर्नुभएको छ,उहाँले भन्नुहुन्छ : " *जसले इस्लाममा कुनै राम्रो सुन्नत (तरीका) लाई जीउँदो*

*गऱ्यो भने त्यसको पूण्य उसलाई हुनेछ, र पछि त्यसको अनुसरण गर्नेहरूको पूण्यबाट पनि उसलाई पूण्य पुग्नेछ र तिनीहरूको पूण्यमा केही कमी गरिनेछैन* " (मुस्लिम) र यसै अर्थमा सामुहिक रूपले तरावीहको नमाज पढनु बारेमा आदरणीय उमर रजियल्लाहोअन्होको भनाई छ : " **कति राम्रो बिदअत हो यो** "। किनभने तरावीहको नमाज पढने चलन नबीको जमानामा नै थियो र यसलाई पढनुमाथि उहाँले प्रेरित पनि गर्नुभो र तीन रात्रीमा सामुहिक रूपले पनि पढनु भएको थियो, अनि अनिवार्य हुनको डरले सामुहिक रूपले पढन छाड्नुभयो, आदरणीय उमरले त्यस सुन्नतलाई आफ्नो कालमा जीउँदो गरेर मानिसलाई सामुहिक रूपले तरावीहको नमाज पढनको लागि आदेश दिनुभो।

**३६- निफाक (छलकपट) कति प्रकारको हुन्छ ?** दुई प्रकारको हुन्छः **१) निफाक एतिकादी (ठूलो)** यस्को अर्थ हो कि व्यक्ति कुफ्र (अवज्ञा) लाई लुकाएर ईमानलाई प्रकट गरोस्, यस कुराबाट मान्छे इस्लाम धर्मबाट बाहिर भइहाल्छ, र यदि यसै अवस्थामा उसको मृत्यु पनि भयो भने उसको मृत्यु कुफ्रमाथि हुन्छ। अल्लाहले भन्नुभएको छः ﴿ إِنَّ ٱلْمُنَٰفِقِينَ فِى ٱلدَّرْكِ ٱلْأَسْفَلِ مِنَ ٱلنَّارِ ﴾ " *यसमा केही सन्देह छैन कि मुनाफिकहरू नरकको सबै भन्दा तल्लो भागमा ठाउँ पाउनेछन* "। तिनीहरूको पहिचान छ : अल्लाह र मोमिनहरूलाई धोका दिनेगर्छन, र मोमिनहरू सित उपहास गरेर खिल्ली उडाउने गर्छन, र मोमिनहरूको विरुद्धमा काफिरहरूलाई सहायता गर्दछन, र आफ्ना सुकर्महरू द्वारा सांसारिक लाभ प्राप्त गर्नको इच्छा राख्दैछन। **२) निफाक अमली (सानो)** यस्तो खालको कर्म गर्ने व्यक्ति इस्लाम बाट बाहिर त हुँदैन तर यदि बिना तौबा (प्रायश्चित) गरेर मऱ्यो भने ठूलो निफाक सम्म पुग्ने भय कायम रहन्छ। यस्तो व्यक्तिको चिन्ह यो छ कि : जब कुराकानी गर्छ त झूठ भन्छ, जहिले वाचा गर्छ त पूरा गर्दैन, झगडा गर्दा खेरि गाली गर्छ, प्रतिज्ञा गरेर पूर्ण गर्दैन, र नासोलाई सुरक्षा न गरी त्यसमा बेइमानी गर्छ। यसैले गर्दा सहाबा किरामहरू यस निफाक अमलीबाट धेरै डराउँदै थिए। इब्ने अबी मोलैका रहेमहुल्लाहको भ नाई छः " नबी सल्लल्लाहो अलैहेवसल्लमका सहाबाहरू मध्ये ३० जना सँग मैले भेला गरेको थिएं सबै आफ्नो जीवमाथि निफाकबाट डराउनु हुन्थे "। र इब्राहीम तैमी रहेमहुल्लाहको भनाई हो : " मैले जहिले पनि आफ्नो वचनलाई आफ्नो कर्ममाथि राखें त मलाई झूठो हुनको धेरै भय लाग्यो "। र हसन बसरी रहेमहुल्लाहको वाणी छ : " निफाक बाट त मोमिन नै डराउने गर्छ मोनाफिक त निर्भय हुन्छ"। र आदरणीय उमर रजियल्लाहो अन्होले होजैफा रजियल्लाहो अन्हो सँग सोध्नुभो : " हे होजैफा! म तिमीलाई अल्लाहको दोहाई दिन्छु के मलाई पनि नबी सल्लल्लाहो अलैहेवसल्लमले मोफिकहरूमा संखित गर्नुभएको छ ? होजैफाले भन्नुभोः होइन, तर तपाईं पश्चात म कसैको बारेमा सफाई प्रस्तुत गर्न सक्दिन "।

**३७- अल्लाह समक्ष सब भन्दा ठूलो र महापाप के हो ?** अल्लाह तआला सँग अरू कसैलाई साझेदार ठान्नु सब भन्दा ठूलो पाप हो। अल्लाह भन्नुहुन्छः ﴿ إِنَّ ٱلشِّرْكَ لَظُلْمٌ عَظِيمٌ ﴾ " निश्चय नै शिर्क (बहुदेववाद) ठूलो अत्याचार हो "। र जब कसैले नबी सल्लल्लाहो अलैहेवसल्लम सँग सोध्यो कि सब भन्दा ठूलो पाप के हो ? त उहाँले उत्तर दिनुभो : " *तिमीले अल्लाह सँग अरू कसैलाई साझेदार बनाऔ जबकि उहाँले तिमीलाई जन्म दिनुभो* "। (बुखारी र मुस्लिम)

**३८- शिर्क कति प्रकारको हुन्छ ?** दुई किसिम छनः **१) ठूलो शिर्क**, यो शिर्क व्यक्तिलाई इस्लामबाट बाहिर निकालि दिन्छ, र यसलाई अल्लाह तआला कहिल्यै क्षमा गर्नुहुन्न, अल्लाह भन्नुहुन्छः ﴿ إِنَّ ٱللَّهَ لَا يَغْفِرُ أَن يُشْرَكَ بِهِۦ وَيَغْفِرُ مَا دُونَ ذَٰلِكَ لِمَن يَشَآءُ ﴾ " *निस्सन्देह अल्लाह आफ्नो साझेदार बनाउनेलाई (शिर्क गर्नेलाई)क्षमा गर्ने छैनन् र उस बाहेक अन्य जसलाई चाहनुहुन्छ माफ गरिदिनुहुन्छ* "। र ठूलो शिर्कका चारवटा किसिमहरू छनः **क)** प्रार्थना गर्नु र गुहार्नुमा शिर्क गर्नु। **ख)** नियत, इरादा र इच्छालाई शुद्ध पार्नुमा शिर्क गर्नु, अर्थात सुकर्महरू अल्लाह बाहेक अन्यको लागि गर्नु। **ग)** आदेश पालन गर्नुमा शिर्क गर्नु, अर्थात अल्लाहले वैध गर्नुभएको कुरालाई बर्जित गर्नु र अवैध गर्नुभएको कुरालाई वैध गर्नुमा गुरूहरूको शिक्षाको पालन गर्नु। **घ)** प्रेम गर्नुमा शिर्क गर्नु, अर्थात अल्लाह सित प्रेम गर्नु जस्तो अरू सित प्रेम गर्नु। **२) सानो शिर्क,** यसको कारण व्यक्ति इस्लामबाट बाहिर हुँदैन। र यो दुई प्रकारको हुन्छः **क) प्रष्ट**, चाहे त्यसको सम्बन्ध वचन सँग होस् जस्तो अल्लाह बाहेक अरूको शपथ लिनु, र यो भन्नु कि अल्लाहले र तपाईंले चाहेमा (मेरो काम पुरा भइहाल्छ) र यो भन्नु अल्लाह र तपाईंले नभएमा (मेरो फलानो काम सफल हुँदैन थियो)। वा त्यसको सम्बन्ध कर्म सँग होस् जस्तो दुःख दूर गर्ने वा दुःखबाट

जोगाउने हेतु डोरो र बलिया पहिर्नु, बुरो नजरबाट जोगाउनको लागि जन्तर झुँड्याउनु, र चरो चुरुँगो, केही नाम, शब्द र ठाउँहरू आदि सित अपशकुन विचार्नु । **ख)** लुप्त, यो शिर्क खास गरी नियत,इरादा,चाहना र मकसदमा हुन्छ जस्तो देखावा र सुनामको लागि कुनै सुकर्म गर्नु ।

**३९- ठूलो र सानो शिर्कमा के फर्क छ ?** दुबैमा अन्तर यो हो कि ठूलो शिर्क गर्नेवाला यस संसारमा इस्लाम बाट बिल्कुलै बाहिर छ र परलोकमा सधैंको लागि नरकमा रहनेछ । र सानो शिर्क गर्नेवाला माथि यस संसारमा इस्लामबाट बाहिर हुनको हुकुम लाग्दैन र न त ऊ सधैंको लागि नरकमा नै रहनेछ । यसै गरी ठूलो शिर्कले सबै प्रकारका सुकर्महरूलाई नष्ट गरिदिन्छ, तर सानो शिर्कले मात्र त्यही कर्मलाई व्यर्थ गरिदिन्छ जसमा त्यो पाइन्छ । यस समस्यामा धर्मगुरूहरू बीच मतभेद छ कि के सानो शिर्क ठूलो शिर्क जस्तो बिना तौबा गरेर माफ हुँदैन वा त्यो पनि ठूल-ठूला पापहरू जस्तो अल्लाह तआलाको चाहनामा छ ? जे पनि होस मामिला जटिल र भयानक छ ।

**४०- के सानो शिर्कमा संलग्न हुनु भन्दा अघि त्यसबाट बच्नको केही उपाय छ वा त्यसमा संलग्न भए पछि त्यसको के जरिमाना छ ?** हो, देखावाबाट बच्नुको उपाय यो हो कि आफ्नो सुकर्मबाट मात्र अल्लाहको चाहना र प्रसन्नता चाहोस् । र यदि अलिकति देखावाको रोग पाइन्छ भने त्यो दुआ गरेर समाप्त भइहाल्छ । नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभएको छ : " ***हे मानिसहरू हो !! यस शिर्कबाट आफुलाई जोगाउ,किनकि यो कमिलोको चाल भन्दा पनि लुप्त हो । मानिसले भनेः हे अल्लाहका दूत! हामी कसरी आफुलाई यसबाट जगाऔं जबकि कमिलोको हिंडाई भन्दा पनि लुप्त यो हो ? भन्नुभो : तिमी यस्तो दुआ गर : हे अल्लाह हामी तपाईंको शरण चाहन्छौं यस कुराबाट कि जानीजानीकन हामी तपाईंसँग कसैलाई साझी ठानौं, र तपाईं सित त्यस कुराबाट क्षमायाचना गर्दैछौं जसलाई हामी जान्दैनौं*** " ।(अहमद) र अल्लाह बाहेक अरूको शपथ लिनुको जरिमाना यो हो कि नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " ***जस्ले लात उज्जा बुतको शपथ लियो उसलाई चाहियो कि लाइलाह इल्लल्लाह (अल्लाह बाहेक अरू कोही सत्य पूज्य छैन) भनोस्*** " ।(बुखारी र मुस्लिम) र अपशकुन विचार्नुको जरिमाना यो हो कि नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " ***जसलाई अपशकुनले कुनै कार्यबाट रोक्यो भने उसले शिर्क गऱ्यो, मानिसले भनेः यसको जरिमाना के हो ? भन्नुभोः यसो भनः कि हे अल्लाह! तपाईंको भलाईको अलावा अरू केही भलाई छैन, तपाईंको शकुन बाहेक अरू केही शकुन होइन, र तपाईं बाहेक अरू केही सत्य पूज्य होइन*** " ।(अहमद)

**४१- कुफ्र कति प्रकारको हुन्छ ?** दुई प्रकारको हुन्छः १) ठूलो कुफ्र, इस्लामबाट खारेज गरिदिन्छ । र यो पाँच प्रकारको हुन्छः क) झुठ्ल्याउनुको कुफ्र । ख) सत्य मान्नु साथै घमण्ड र गौरव गर्नुको कुफ्र । ग) शंका गर्नुको कुफ्र । घ) अवज्ञा गर्नुको कुफ्र । ङ) निफाक (छलकपक) को कुफ्र । २) सानो कुफ्र,यो पाप गर्नुको कुफ्र हो र यसलाई गर्नेवाला इस्लामबाट खारेज हुँदैन, जस्तो मुस्लिमलाई हत्या गर्नु ।

**४२- भाकल (मन्नत) गर्नुको के आदेश हो ?** भाकल गर्नुलाई नबी सल्लल्लाहो अलैहेवसल्लमले नराम्रो कुरा ठान्नुभएको छ,र भन्नुभोः " ***यसबाट कुनै भलाई आउँदैन*** " ।(बुखारी) यो आदेश त्यस समयको हो जब भाकल मात्र अल्लाहको नाममा होस । र यदि भाकल कुनै चिहान (मजार) वा वली आदिको नाममा गरिएको होस भने त्यो हराम छ र त्यसलाई पूरा गर्नु कदापि जायज छैन ।

**४३- ज्योतिषी र साइत निकाल्नेहरूकहाँ जानुको के हुकुम हो ?** बर्जित हो, यदि उनीहरूले दाबी गरेको परोक्षको ज्ञानलाई सत्य न मानी मात्र लाभ प्राप्त गर्ने अभिलाषा राखी उ समक्ष गयो भने उसको ४० दिनको नमाज स्वीकार्य हुँदैन । नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " ***जसले ज्योतिषीकहाँ गएर केही कुराको बारेमा सोध्यो भने उसको ४० रात्री सम्म नमाज स्वीकार्य हुँदैन*** " । (मुस्लिम) र यदि उ समक्ष गएर उसले दाबी गरेको परोक्षको ज्ञानको बारेमा उसलाई सत्य मान्छ भने त्यो काफिर भइहाल्छ, किनकि नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुहुन्छः " ***जुन व्यक्ति ज्योतिषी र साइत निकाल्नेहरू कहाँ गएर उसले दाबी गरेको कुरालाई साँचो ठान्यो भने उसले मुहम्मद माथि अवतरण गरिएको कुरा (कुरआन) लाई इन्कार गऱ्यो*** " ।(अबुदाऊद)

**४४- नक्षत्रहरू सित वर्षा माग्नु कहिले ठूलो शिर्क र कहिले सानो शिर्क हुन्छ ?** जुन व्यक्ति यो आस्था राख्छ कि अल्लाह तआलाको चाहना बिना नक्षत्रहरूमा पानी वर्साउनको शक्ति पाउँछ भने उसले यो पनि ठान्यो कि नक्षत्रहरूमा वर्षालाई आविष्कार गर्नु र जन्म दिनुको सामर्थ्य पनि छ भन्ने आस्था ठूलो शिर्क हो ।

र यदि कुनै मान्छे यो आस्था राख्दछ कि अल्लाह तआलाको चाहना साथै नक्षत्रहरूमा पनि प्रभाव छ र अल्लाहले तिनलाई वर्षा हुनको कारण बनाएको छ र त्यो नक्षत्र (तारा) उदय भए पछि नै वर्षा हुनेछ भने यस्तो आस्था राख्नु हराम र सानो शिर्क हो । किनकि उल्ले यस्तो वस्तुलाई कारण बनाएको छ जसमाथि कुरआन र हदीसबाट केही प्रमाण छैन र न त सही बुद्धि तथा महसूस हुने कुराबाट केही प्रमाण छ । अँ,यदि मौसम र वर्षा हुने समयको जानकारी प्राप्त गर्ने हेतु नक्षत्र द्वारा अनुमान लगाउने होस भने जायज छ ।

**४५- मुस्लिम शासक वर्ग प्रति हाम्रो माथि के अनिवार्य हो ?** खुशी र शोक दुबै अवस्थामा उनीहरूको कुरा सुन्नु र मान्नु अनिवार्य छ,र यदि उनीहरू अत्याचार पनि गर्दछन भने उनको विरुद्धमा निकल्नु जायज छैन, उनलाई शराप्नु जायज छैन, र न त उनको आदेश पालनाबाट मुख फर्काउनु वैध छ,बरु उनको सुधार,र सुपथमा हिंड्नु तथा सुस्वास्थको लागि हामी दुआ गरौं,र जब सम्म कुकर्म एवं पाप गर्नको आदेश दिंदैनन् भने उनको आज्ञा पालनलाई हामी अल्लाहको आज्ञा पालनको भाग मान्छौं । र यदि पापको आदेश दिन्छन् भने आज्ञा पालन गर्नु हराम छ, र यस बाहेक अरू कुरामा भलाई सित आज्ञा पालन गर्नु पर्छ । नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभएको छ : " *हाकिमको आज्ञा सुन्दै गर र पालन गर्दै गर यद्यपि तिम्रो पिठ्युँलाई हानोस् वा तिम्रो माललाई खोसोस् ता पनि उनको कुरा सुनेर पालन गर* "। (मुस्लिम)

**४६- गर्ने र नगर्ने कार्यहरूमा अल्लाहको के रहस्य हो त्यस सम्बन्धमा प्रश्न गर्नु जायज छ ?** हो,जायज छ, तर साथै यो शर्त पनि छ कि रहस्यको जानकारी माथि ईमान ल्याउनु र कर्म गर्नु निर्भर न होस्, बरु त्यसको जानकारी मोमिनलाई सत्यमाथि अरू दृढ हुनको कारण बन्छ,तर बिना प्रश्न गरी पूर्ण रूपले स्वीकार गर्नु भक्त हुनको परिपूर्णता र अल्लाह तथा उनको परिपूर्ण बुद्धिमतामाथि ईमान ल्याउनुको ठोस प्रमाण हो जसरी सहाबा किरामहरूको अवस्था थियो ।

**४७- अल्लाह तआलाको यस भनाईः ﴿ مَّآ أَصَابَكَ مِنْ حَسَنَةٍ فَمِنَ ٱللَّهِ وَمَآ أَصَابَكَ مِن سَيِّئَةٍ فَمِن نَّفْسِكَ ﴾ " तिमीलाई जुन भलाई प्राप्त हुन्छ त्यो अल्लाहबाटै हो र जे नराम्रो कुरा प्राप्त हुन्छ त्यो तिम्रै आफ्नै कारणले आउँछ "। को अभिप्राय के छ ?** ﴿حسنة﴾ बाट अनुकम्पा अभिप्राय छ, र ﴿سيئة﴾ बाट कष्ट र अप्ठ्यारो अभिप्राय छ । र दुबै अल्लाहको तर्फ बाटै हुन्,तर भलाईको सम्बन्ध अल्लाहसँग गरिएको छ किनकि अल्लाह नै भलाईकर्ता र अनुकम्पा दिने वाला हुन, र कुनै खास रहस्य तथा बुद्धिमताको कारणले कष्ट र बुराईलाई जन्म दिनुभएको हो,त यस दृष्टिकोणले यो बुराई पनि अल्लाहको अनुकम्पा मध्ये नै हो,किनभने अल्लाहका सबै कामहरू राम्रै हुन् । अल्लाहका नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " *सबै प्रकारको भलाई तपाईं बाट नै हो, र बुराईको सम्बन्ध तपाईं ओर गर्न मिल्दैन* "। दासहरूको कर्मको जन्मदाता वास्तविकमा अल्लाह नै हुन् र साथै स्वयम दासहरूको आफ्नो कमाई पनि हो । अल्लाह तआला भन्नुहुन्छः ﴿ فَأَمَّا مَنْ أَعْطَىٰ وَٱتَّقَىٰ ۝٥ وَصَدَّقَ بِٱلْحُسْنَىٰ ۝٦ فَسَنُيَسِّرُهُۥ لِلْيُسْرَىٰ ﴾ " *तसर्थ जस्ले (अल्लाहको मार्गमा धनमाल) दियो र डर मान्यो / र राम्रो कुराको पुष्टि गर्दै गऱ्यो / त हामीले पनि उसलाई सजिलो बाटोको सुविधा प्रदान गर्नेछौं* "।

**४८- के यस्तो भन्नु जायज छ कि फलानो व्यक्ति शहीद हो ?** कुनै व्यक्तिलाई शहीद भन्नु त्यस्तै हो जस्तो कसैलाई हामी स्वर्गवासी छ भनौं,यस विषयमा अह्ले सुन्नत वल जमाअतको मजहब (विचार) यो हो कि नबी सल्लल्लाहो अलैहेवसल्लमले जसको बारेमा स्वर्गवासी र नरकवासी छ भन्ने खबर दिनुभएको छ त्यसको सिवाय अरू कुनै पनि मुस्लिमलाई स्वर्गवासी वा नरकवासी छ न भनियोस्,किनकि वास्तविकता लुप्त छ,र कुन स्थितिमा उस व्यक्तिको मृत्यु भएको छ हामीलाई थाहा छैन,र अन्तिम कर्मलाई नै महत्व छ,र नियत तथा हृदयको कुराको ज्ञान मात्र अल्लाहलाई नै हो,तर सुकर्मीको लागि पुण्यको आशा गर्दैछौं र कुकर्मीमाथि सजायबाट डराउँछौं ।

**४९- के कुनै खास मुस्लिममाथि काफिर हुनको हुकुम लगाउनु जायज छ ?** कुनै खास मुस्लिममाथि कुफ्र, शिर्क र निफाकको हुकुम लगाउनु जायज छैन यहाँ सम्म कि उसबाट यस्तो कर्म स्पष्ट रूपमा प्रकट न भइहालोस् । र हुकुम लगाउनुमा कुनै कुरा रोकावट नबनोस । र उसको हृदयको कुरालाई अल्लाह तिर फर्काई दिनु पर्छ ।

**५०- के काबाको अलावा अरू कुनै ठाउँको तवाफ (परिक्रमा) गर्नु जायज छ ?** सम्मानित काबाको अलावा पूरै धरतीमा अरू कुनै ठाउँको तवाफ गर्नु जायज छैन, र न त कुनै ठाउँको बराबरी काबासँग गर्नु जायज छ चाहे त्यसको महत्व र महानता ठूलो किन नहोस्,र यदि कसैले कुनै अन्य ठाउँको आदर गर्नको लागि तवाफ गऱ्यो भने उल्ले अल्लाहको अवज्ञा गऱ्यो ।

# हृदयका कर्महरू

अल्लाह तआलाले हृदयलाई जन्म दिएर राजा बनाउनुभो र अंगहरूलाई उसका सेना,त जब राजा राम्रो हुन्छ त उसको सेना पनि राम्रो हुन्छ । नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभो :" *निःसन्देह शरीरमा मासुको एउटा यस्तो डल्लो छ जब त्यो सही हुन्छ भने पूरै शरीर सही रहन्छ, र जब त्यो खराब हुन्छ भने पूरै शरीर खराब भइहाल्छ, सावधान रहोस्! त्यो हृदय हो* "। (बुखारी र मुस्लिम) त मुटु नै ईमान र तक्वा (अल्लाह सित डराउनु) को ठाउँ हो वा कुफ्र (अवज्ञा) निफाक (छलकपट) र शिर्कको ठाउँ हो, नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभो : " *तीन पटक छाती तिर संकेत गरेर भन्नुभो कि तक्वा यहाँ हो* "। (मुस्लिम)

● **र ईमानः आस्था,वचन र कर्मलाई भनिन्छ,** आस्था मुटुमा हुन्छ र वचन मुखले हुन्छ, र कर्म मुटु तथा अंगहरूले हुन्छ । अतः मुटुले ईमान ल्याएर सत्य मान्छ र त्यसको कारणले जिभ्रोबाट लाइलाह इल्लल्लाह मुहम्मदुर्रसूलुल्लाहको गवाही वचनको रूपमा प्रकट हुन्छ अनि दिलले आफ्नो कार्य प्रेम,भय र आशाको रूपमा गर्छ । तसर्थ जिभ्रो अल्लाहको स्तुती र कुरआनको पाठमा लीन रहन्छ त अवयवहरू सज्दा (ढोग) गर्नु र निहुर्नुमा व्यस्त अनि ती सबै सुकर्महरूमा जो अल्लाहको समीपता सम्म पुगाउनेछन लीन रहन्छन ।

● **हृदयका कर्महरूबाट अभिप्राय छः** यस्ता कर्महरू जसको ठाउँ मुटु होस र उसै सँग सम्बन्धि पनि होस्,ती मध्ये सब भन्दा महान अल्लाहमाथि ईमान ल्याउनु हो जो दिलमा नै हुन्छ,त्यसैबाट सत्य मान्नु र स्वीकार गर्नु आउँछ,फेरि मोमिनको मुटुमा आफ्नो प्रभु प्रति जुन कार्य उत्पन्न हुन्छ जस्तो उ सित प्रेम गर्नु,भय गर्नु,उनीमाथि आशा र भरोसा गर्नु,उनै तिर फर्कनु, र उनीमाथि संतोष र यकीन गर्नु र उनैको निम्ति नम्रता अपनाउनु ।

● **हृदयका कर्महरू मध्ये प्रत्येक कर्मको विपरित नराम्रो कर्म पनि छ जसलाई हृदयका रोग भनिन्छः** अतः शुद्धताको विपरित देखावा हो, विश्वासको उल्टो सन्देह हो, र प्रेमको उल्टो घृणा हो .... यसै गरी अरू कर्महरूलाई मान्नुहोस । र यदि हामी आफ्नो हृदयलाई सुधार्नुमा लापरवाही गर्छौं भने त्यसमाथि पापहरूको यत्रो बोझ भइहाल्छ कि त्यसलाई नाश गरिदिन्छ । नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः

" *भक्त जब केही पाप गर्दछ भने उसको मुटुमा एउटा बुंदा भइहाल्छ, फेरि यदि तौबा र क्षमायाचाना गरेर त्यसलाई निष्कासित गरिदिन्छ भने त्यो बुंदा समाप्त भइहाल्छ, यदि फेरि पाप गर्छ भने त्यस बुंदामा बृद्धि हुन्छ र यदि फेरि पाप गर्छ भने अरू विषेश बृद्धि हुन्छ यहाँ सम्म कि मुटुलाई ढाकिलिन्छ र यही त्यो खिया हो जसलाई अल्लाहले यस आयतमा वर्णन गर्नुभएकोछ : " यो होइन, अपितु जसले नराम्रो कर्महरू गर्दछन् त्यस कारण उसका हृदयहरूमा खिया लागिसकेको हुन्छ* "। (तिर्मिजी)

र एउटा अन्य हदीसमा नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " *सुकुल बनाउँदा खेरि जसरी एक एक गरी पराल लगाएर बुन्छ त्यसरी नै हृदयमाथि उपद्र र परीक्षाहरू आउनेगर्छन्, र यदि हृदयले त्यसलाई स्वीकार गर्दछ भने एउटा कालो बुंदा त्यसमा भइहाल्छ र यदि त्यसलाई अस्वीकार गरी रद्द गरिदिन्छ भने एउटा सेतो बुंदा हृदयमा भइहाल्छ, यहाँ सम्म कि दिल दुई प्रकारको भइहाल्छ एउटा बिल्कुलै सेतो रंगको ढुंगो जस्तो सेतो, त्यसलाई आकाश र धरती बाँची रहने सम्म कुनै उपद्र हानि पुऱ्याउने सक्दैन, र अर्को बिल्कुलै कालो, त्यो उल्टो कचौरा जस्तो हुन्छ, जो न त कुनै भलाईलाई चिन्दछ र न त कुनै बराई, मात्र त्यही कुअभिलाषालाई चिन्दैछ जो उसको मुटुमा प्रवेश भएको छ* "। (मुस्लिम)

● दासमाथि हृदयका पूजाहरू (इबादतहरू) को बारेमा ज्ञान प्राप्त गर्नु अंगहरूका कार्यको बारेमा जानकारी प्राप्त गर्नु भन्दा अधिक अनिवार्य र जरूरी छ । किनकि हृदयका पूजाहरू नै जग र आधार छन र अंगहरूका पूजाहरू त्यसको शाखा,परिणाम,र त्यसलाई पूरा गर्नेवाला हुन् । नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " *निःसन्देह अल्लाह तआलाले तिम्रो रूप र माल सम्पत्तिलाई हेर्दैनन् बरू तिम्रा हृदय र कर्महरूलाई हेर्नुहुन्छ " अतः हृदय नै ज्ञान, चिन्तन मनन र सोच विचारको ठाउँ हो, यसैले गर्दा दिलमा स्थिर रहने ईमान, विश्वास र शुद्धता आदि पाउने दृष्टिकोणले मानिसहरूको माझ अल्लाह*

*समक्ष एक अर्कामाथि महानता र प्रधानता हुँदै गर्छ । हसन बसरी रहमतुल्लाहे अलैहेले भन्नुभोः" अल्लाहको कसम! आदरणीय अबुबक्र रजियल्लाहो अन्होले नमाज र रोजाको कारणले सहाबाहरूमा श्रेष्ठ भएनन् बरू उनको हृदयमा ईमान दृढ र बलियो हुनको कारणले उत्तम हुनुभएको थियो*"।

● **हृदयका कर्महरू अंगका कर्महरूमाथि केही दृष्टिकोणले श्रेष्ठता राख्दैछन्ः १)** कहिले हृदयको पूजामा आउने विकारले अवयवको पूजालाई नष्ट गरिदिन्छ,जस्तो कि कुनै कर्मलाई देखावाको निम्ति गर्नु । २) हृदयका कर्महरू जग र आधार छन,त यदि कुनै शब्द वा गतिविधि बिना दिलको इरादाले घट्यो भने त्यसमाथि केही पाप हुँदैन । ३) हृदयका कर्महरू स्वर्गमा ठूल-ठूला दर्जा पाउनको कारण बन्छन,जस्तो संयमता । ४) ती कर्महरू अंगका कर्महरू भन्दा जटिल र गाह्रो हुन्छन, इब्नुल मुन्कदिर रहेमहुल्लाहले भन्छन :" ४० वर्ष सम्म मैले धेरै परिश्रम गरें तब मेरो हृदय सत्यमाथि दृढ भयो "। ५) ती राम्रो र सुन्दर प्रभाव पार्छन्,जस्तो कसै सित अल्लाहकै लागि प्रेम गर्नु । ६) ती कर्महरूमा पूण्य धेरै छ, आदरणीय अबुदर्दा रजियल्लाहो अन्होले भन्छनः "एक घण्टा अल्लाहको बारेमा चिन्तन मनन गर्नु रात भरी नमाज पढनु भन्दा वेश छ "। ७) हृदयका कर्महरू अंगहरूलाई कर्ममा लगाउनेवाला छन् । ८) ती कर्महरूले अंगका इबादतहरूको पूण्यमा बृद्धि गर्छ वा कमी गर्छ वा बिल्कुलै नष्ट गरिदिन्छ,जस्तो नमाजमा शान्ति र नम्रता अपनाउनु । ९) कहिले काँही हृदयका कर्महरू अंगका कर्महरूको साटामा हुन्छन जस्तो धन माल न भई दान गर्नुको इच्छा गर्नु । १०) हृदयको कर्मको पूण्य असीमित छ, जस्तो सन्तोष (सब्र) । ११) अंगहरूले काम गर्नु छाडे पछि पनि हृदयको पूण्य जारी रहन्छ । १२) हृदयको कर्म अंगहरूको कर्म भन्दा अघि हुन्छ र साथमा पनि हुन्छ ।

**अंगहरूले कर्म गर्नु भन्दा अघि हृदयले केही अवस्था सँग गुज्रन्छः** १) अल्हाजिसः (ख्याल) यो पहिलो सोच छ जो हृदयमा उत्पन्न हुन्छ । २) **अल्खातिरः** त्यो सोचले दिलमा स्थिर हुनु । ३) **हदीसुन्नफ्स्** (दिलको कुराकानी)ः यो त्यो सन्देह हो जो दिलमा उत्पन्न हुन्छ कि यो काम गरोस् वा न गरोस् । ४) **अल्हम्म** (इरादा)ः कार्म गर्नु माथि इरादा गर्नु । ५) अल्अज्म् (ठोस इरादा)ः काम गर्नुमाथि ठोस इरादा गर्नु र तयार हुनु । पहिला तीन यदि भलाईको काममा हुन्छ त त्यसमा केही पूण्य छैन र यदि बुराईको काममा हुन्छ भने त्यसमा केही पाप छैन । तर अल्हम्म (इरादा) यदि भलाईको काममा हुन्छ भने त्यसमा एक पूण्य मिल्छ र यदि कुकर्म गर्नुको इरादा हुन्छ भने त्यसमा केही पाप मिल्दैन । फेरि जब त्यो इरादा ठोस र बलियो भई कुनै राम्रो काममाथि हुन्छ त त्यसमा पूण्य मिल्छ र यदि कुनै कुकर्ममाथि हुन्छ भने त्यसलाई न गरेकन पनि पाप लाग्छ । किनकि सामर्थ्य राखेर ठोस इरादा गर्नु त्यो कर्मलाई गर्नुको सामान छ । अल्लाह तआला भन्नुहुन्छः﴿ إِنَّ ٱلَّذِينَ يُحِبُّونَ أَن تَشِيعَ ٱلْفَٰحِشَةُ فِى ٱلَّذِينَ ءَامَنُوا۟ لَهُمْ عَذَابٌ أَلِيمٌ ﴾" *जुन मानिसहरूले मुस्लिमहरूमा अश्लीलता (निर्लज्जता)फैलाउन चाहन्छन उनीहरूको निम्ति दुखद यातना छ* "। र नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " *जब दुई मुसलमान तरवार सँग आपसमा लडाई गर्छ त हत्यारा र मारिएको दुबै नरकमा जानेछन,मैले सोधें,हे अल्लाहका रसूल! हत्याराको कुरा त बुझें तर मारिएको मान्छेको के दोष ? उत्तर दिनुभोः त्यो आफ्नो साथीलाई मार्नेमाथि इच्छुक थियो* "। **(बुखारी)**

**र यदि कुकर्ममाथि ठोस इरादा गरेर छाड्यो,** त यसको चार प्रकार छन् : १) अल्लाहको भयको कारणले छाड्यो, त यसमाथि उसलाई पूण्य मिल्छ । २) मानिसको भयको कारणले छाड्यो, त यसमाथि उसलाई पाप हुन्छ, किनकि कुकर्मलाई छाड्नु इबादत हो र इबादत मात्र अल्लाहको लागि हुनु पर्छ । ३) कुकर्म सम्म पुगाउने माध्यमहरूको प्रबन्ध न गरेर निर्बल्लताको कारणले छाड्यो, त यसमा पनि उसलाई पाप हुन्छ किनकि उसले ठोस इरादा गरी राखेको थियो । ४) कुकर्म सम्म पुगाउने माध्यमहरूको प्रबन्ध गरे पछि दुर्बलताको कारणले छाड्यो, र उल्ले सोची राखेको योजना पूरा भएन, त उसमाथि कुकर्म गर्ने जस्तो पूरा पाप लेखिन्छ, किनकि ठोस इरादा सँगै उसले सकभर प्रयास पनि गऱ्यो त यसको हुकुम पूर्ण रूपले कर्ता जस्तो हुनु पर्छ । जसरी माथि उल्लेखित हदीसमा बिति सकेको छ । र जहिले पनि कर्म सित इरादाको मिलाप हुन्छ त यसमाथि सजाय मिल्छ चाहे कर्म चांडै होस वा ढीलो, त जस्ले एक पटक बर्जित कार्य गऱ्यो र सामर्थ्य पाए पछि फेरि गर्नको ठोस इरादा पनि राखेको छ, त उ कुकर्म गर्नु माथि अडिग भयो, यसैले गर्दा यस नियतमाथि उसलाई सजाय मिल्छ यद्यपि उसले त्यस कामलाई पनि नगरोस् ।

## केही हृदयका कर्महरू

**नीयतः** यसको अर्थ इरादा र चाहना हो,र कुनै कर्म बिना नियतको सही र स्वीकार्य हुँदैन, नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभो : " ***सम्पूर्ण सुकर्महरू नियत माथि आधारित छन् तसर्थ जसको नियत जस्तो हुन्छ त्यस्तै नै पाउनेछ*** "। (बुखारी र मुस्लिम) इब्ने मुबारक रहेमहुल्लाहले भनेका छनः " कतिपय सानो कर्म शुद्ध नियतले धेरै भइहाल्छ र कतिपय ठूलो कर्म अशुद्ध नीयतको कारणले सानो भइहाल्छ "। फोजैलले भनेका छनः " अल्लाह तआलाले तिम्रो तर्फबाट तिम्रो नियत र इरादा चाहनुहुन्छ, यदि कर्म मात्र अल्लाहको लागि हुन्छ भने त्यो नै शुद्धता हो,अर्थात कर्म मात्र अल्लाहको निम्ति होस कुनै अर्को त्यसमा भागेदार नहोस् । र यदि कर्म अल्लाह बाहेक अरूको लागि हुन्छ भने त्यसलाई देखावा, निफाक आदि भनिन्छ "।

**फायदाः** ज्ञानीहरू बाकेह सबै मानिसको लागि बरबादी र सर्वनाश छ,र ज्ञानीहरू मध्ये सुकर्म गर्नेवाला बाहेक सबैको लागि बरबादी र सर्वनाश छ, र सुकर्मीहरू मध्ये शुद्धता सँग सुकर्म गर्ने बाहेक सबैको निम्ति बरबादी र सर्वनाश छ । त प्रत्येक यस्तो भक्त जुन अल्लाहको आदेश पालन गर्न चाहन्छ उसमाथि सब भन्दा पहिलो नियतको बारेमा जानकारी प्राप्त गर्नु जरूरी छ, अनि शुद्धता र सत्यताको वास्तविकता जाने पछि नियतलाई कर्म गरेर सही पार्नु पर्छ, किनकि बिना नियतको कर्म गर्नु मात्र थकावट हो, र बिना शुद्धताको नियत देखावा हो, र बिना शुद्ध ईमानको इख्लास (शुद्धता) व्यर्थ हो ।

**कर्म तीन प्राकरको हुन्छ : १) पापहरूः** पाप गर्दा खेरि नियत राम्रो हुनाले त्यसलाई आज्ञापालनमा बदल्न सक्दैन,र यदि त्यसमा बुरो नियत मिलाइयोस भने त्यसको पाप दुईगुणा भइहाल्छ । **२) जायज कुराहरूः** यीलाई गर्दा खेरि यदि नियत राम्रो छ भने इबादत भइहाल्छन् र यदि राम्रो छैन भने जस्तो नियत हुन्छ त्यस्तो नै त्यसको हुकुम पनि हुन्छ । **३) आज्ञापालन (इबादत)ः** यीलाई सही हुनका लागि र यिनको पूण्य दुईगुणा[1] हुनको निम्ति नीयतलाई ध्यानमा राख्नु एकदमै अनिवार्य हो, यदि नीयत देखावाको हुन्छ त त्यो कर्म पाप र सानो शिर्क भइहाल्छ र कहिलेकाँही ठूलो शिर्क सम्म पनि पुग्न सक्छ । यसलाई तीन कुराहरूमा बाँडिदिएको छ : **१)** वास्तविकमा मानिसलाई देखाउने हेतु इबादत गरियोस्,त यो शिर्क हो र यस्तो इबादत व्यर्थ छ । **२)** पूजा त आरम्भ गऱ्यो अल्लाहको लागि तर बीचमा देखावाको नीयत उसमा प्रवेश भयो, त्यो यदि यस्तो पूजा होस् जस्को अन्तिम भाग पहिलो भागमाथि सही हुनको लागि आधारित न होस् जस्तो दान,त यस्को पहिलो भाग सही हो र अन्तिम व्यर्थ । र यदि त्यसको अन्तिम भाग पहिलो भागमाथि सही हुने हेतु आधारित होस् जस्तो कि नमाज त यस्को दुई अवस्था छ : **क)** देखावाको नीयतलाई आफुबाट हटाउनको प्रयास गर्नु त यस अवस्थामा त्यो सुकर्मलाई प्रभावित गर्दैन । **ख)** देखावाको नीयतलाई राम्रो जानी हृदयमा शान्ति हुनु,त यस अवस्थामा पूरै सुकर्म व्यर्थ भइहाल्छ । **३)** देखावाको ख्याल कर्म गरे पछि होस्, त यो मात्र भ्रम र शंका हो, यस्को प्रभाव न त कर्ममाथि पर्छ र न त कर्मीमाथि । देखावाको अध्यायमा धेरै कुराहरू लुप्त छन जुनको जानकारी प्राप्त गर्नु एक्दमै जरूरी छ ।

**यदि सांसारिक लाभ प्राप्त गर्ने कामना राखी सुकर्म गर्छ भने कामनाको मात्रा अनुसार पूण्य वा पाप हुन्छ, र यस्को तीन अवस्था हो : १)** मात्र सांसारिक लाभ प्राप्त गर्ने हेतु सुकर्म गरियोस्,जस्तो कि कुनै

---

[1] नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभो : " *जस्ले भलो कार्य नगरेर मात्र गर्नको इरादा गऱ्यो त अल्लाह आफ्नो नजीक उसको लागि एउटा पूण्य लेख्छन,र यदि गऱ्यो भने उसको निम्ति दश पूण्य लेख्छन बरू त्यसमा बृद्धि गरेर सात सय गुणा बरू त्यस भन्दा अत्याधिक गुणामा बढाएर दिनुहुन्छ । र जस्ले बुरो कार्य नगरेर मात्र इरादा गऱ्यो भने उसको लागि अल्लाह आफ्नो पास एउटा नेकी लेख्नुहुन्छ,र जस्ले इरादा गरेर त्यसलाई गऱ्यो पनि त उसको लागि मात्र एउटा पाप लेख्नुहुन्छ* "। (बुराखी र मुस्लिम) एक अर्को हदीसमा नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " *यस अनुयायीको उदाहरण चार जना मानिस जस्तो छः एक यस्तो मान्छे जसलाई अल्लाहले माल र ज्ञान दुबै दिनुभो,त ऊ आफ्नो ज्ञान अनुसार माललाई सत्य बाटोमा खर्च गर्छ । र अर्को यस्तो मान्छे जसलाई ज्ञान त दिनुभो तर माल दिनुभएको होइन, त ऊ मनैमनमा भन्दैछ कि यदि यस जस्तो म सँग पनि माल हुन्थ्यो भने म पनि उ जस्तो खर्च गर्दथिएं!! नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः कि यी दुबै पूण्यमा बराबर छन् । र एक अर्को मान्छे जसलाई अल्लाहले माल त दिनुभो तर ज्ञान दिनु भएको होइन त ऊ आफ्नो माललाई बरबाद गरेर असत्य र कुबाटोमा खर्च गर्छ । र एक अर्को मान्छे छ जसलाई अल्लाहले न त ज्ञान दिनुभो र न त मालै दिनुभो, त त्यो मनैमनमा भन्दैछ यदि म सँग पनि माल हुन्थ्यो भने म पनि यस जस्तो आफ्नो मालमा गर्दथें । नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नु हुन्छ कि यी दुबै पापमा बराबर छन " । त यस हदीसमा दोस्रो र चौथो मान्छेको भनाई मात्र नीयत र कामनामाथि आधारित छ ता पनि दुबैलाई पूण्य वा पापमा बराबरको भागेदार मानीएको छ । धर्म गुरू इब्ने रजबले भन्नुभो : " हदीसमा अल्लाहका नबीको भनाई कि यी दुबै पूण्यमा बराबर छन, यो मात्र कर्मको पूण्यमा हो, कर्म गर्नुको दोब्बर पूण्य हुनमा बराबरी छैन, र यदि प्रत्येक दृष्टिकोणले बराबरी हुनको सम्भावना भएको भए त यस्को अर्थ यो भयो कि कर्म नगरेर मात्र कामना गर्नाले नै त्यसमाथि दश पूण्य हुन्थ्यो तर यो कहीं प्रमाणित छैन* "। (तिर्मीजी)

व्यक्ति मात्र तलब र माल पाउनको लागि मानिसहरूको नमाजमा इमामत गराउँछ (अगुवा बन्छ),त यसलाई पाप लाग्छ, नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " *अल्लाह तआलाको प्रसन्नता प्राप्त गर्ने हेतु सिकिने शिक्षालाई यदि कुनै व्यक्ति मात्र सांसारिक लाभ प्राप्त गर्नको लागि सिक्छ भने त्योलाई प्रलय हुने दिन स्वर्गको सुगन्ध पनि प्राप्त हुँदैन* "। **(अबुदऊद)**
२) अल्लाहको प्रसन्नता र दुनिया प्राप्त गर्नको निम्ति कार्य गर्छ, त यस्तोको ईमान र शुद्धतामा कमी छ, जस्तो कि व्यवसायको लागि हज गर्छ,त उसलाई शुद्धता अथवा इख्लासको मात्रा अनुसार पूण्य मिल्छ । ३) कार्य त गर्छ मात्र अल्लाहको लागि तर त्यसमाथि तलब लिन्छ ताकि त्यस कार्यलाई राम्रो सँग गरोस्, त उसलाई पूरा पूण्य मिल्छ र तलब लिनको कारणले पूण्यमा केही कमी हुँदैन । नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " *सब भन्दा राम्रो मजदूरी जस कार्यमाथि तिमी लिन्छौ त्यो अल्लाहको किताब (कुरआन) लाई सिकाउनु हो* "। **(बुखारी)**

**र शुद्धताको साथ कर्म गर्ने विशिष्ट कर्मीहरूको केही श्रेणीहरू छनः** १) सब भन्दा तल श्रेणी र त्यो हो : पूण्यको आशा लिएर वा यातनाबाट डराएर सुकर्म गर्दछ । २) माध्यम श्रेणीः अल्लाहको आभार व्यक्त गर्दै र उनको आदेशलाई स्वीकार गर्दै सुकर्म गर्दछ । ३) सब भन्दा उच्च श्रेणीः अल्लाह सित प्रेम, उनलाई आदर, सत्कार गरी, उनको महानता र गरिमामयलाई स्वीकार गरी, उनी सित भय गरी सुकर्म गर्दछ, र यो श्रेणी साँचो र अल्लाह समीप मानिसहरूको हो ।[1]

**◗ तौबा (प्रायश्चित)ः** सधैं तौबा गर्नु जरूरी छ, किनकि पापमा संलग्न रहनु मनुष्यको प्राकृतिमा हो, नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभयो : " *आदमको प्रत्येक सन्तान (मनुष्य) पाप गर्नेवाला हो र पाप गर्नेहरू मध्ये सब भन्दा बेश त्यो हो जो तौबा गर्छ* " । **(तिर्मीजी)** एक अर्को हदीसमा उहाँले भन्नुभो : " *यदि तिमी पाप गर्दैनौ भने अल्लाह तिमीहरूको सट्टामा अर्को समुदायलाई जन्म दिनेछन् अनि ती पाप गर्छन फेरि अल्लाह सित क्षमा याचना गर्दछन अनि अल्लाह तआला तिनीहरूलाई क्षमा गर्नेछन* "। तौबामा ढीलो गर्नु र पापमाथि अडान लिनु गलत हो । र शैतान मनुष्यलाई सातवटा नराम्रो कुराहरू मध्ये एउटामा संलग्न हेर्न चाहन्छ, र यदि एउटामा हाल्नमा सफल हुँदैन भने दोस्रोमा प्रयास गर्छ,ती सातवटा कुराहरू छनः १) शिर्क र कुफ्रमा संलग्न गर्नु । २) यसमा सफलता मिल्दैन भने आस्थाको बिदअतमा,र नबी तथा उनका साथीहरूको अनूकरण न गर्नुमा संलग्न गरि दिन चाहन्छ । ३) र यदि यसमा पनि सफल हुँदैन भने ठूल-ठूला पापहरू उस बाट गराउन चाहन्छ । ४) र यदि यसमा पनि सफलता मिल्दै भने सा-सानो पापहरूमा संलग्न गरिदिन चाहन्छ । ५) र यदि यस कार्यमा पनि सफल हुँदैन भने जायज कुराहरूलाई अत्याधिक रूपमा गर्नुमा संलग्न गरिदिन्छ । ६) र यदि यसमा सफलता पाउँदैन भने उत्तम र श्रेष्ठ सुकर्महरू बाहेक नराम्रो र कमती पूण्य पाउने कार्यमा व्यस्त गरिदिन्छ । ७) र यदि यसमा पनि सफलता मिल्दैन भने जिन्न वा मनुष्य मध्ये एउटा शैतानलाई बिगार्नको लागि उसमाथि नियुक्त गरिदिन्छ ।

**पाप दुई प्रकारको हुन्छ : १) ठूलो पाप :** त्यो हो जसमाथि अल्लाहको तर्फबाट नियुक्त सजाय यस संसारमा लागु होस,वा परलोकमा यातना दिने धम्की होस,वा अल्लाहको रिस र धिक्कार जसमाथि होस,वा जसमा ईमान न पाइने कुरा गरिएको होस् । **२) सानो पापः** जो उपर्युक्त कुराहरू बाहेक होस् । र कहिले काँही सानो पाप पनि ठूलो भइहाल्छ,त्यसको महत्वपूर्ण कारणहरू यी छनः सानो पापमाथि अडान लिनु, वा त्यसलाई बारम्बार गर्नु, वा त्यसलाई सानो बुझीकन महत्व न दिनु, वा त्यसलाई गरे पछि गौरव गर्नु, वा त्यसलाई खुल्लमखुल्ला गर्नु र मानिसमा चर्चा गर्नु । र प्रत्येक पापबाट तौबा गर्न

---

[1] आदरणीय मूसा अलैहिस्सलामको बारेमा चर्चा गर्दै अल्लाह तआला भन्नु हुन्छः ﴿ وَعَجِلۡتُ إِلَيۡكَ رَبِّ لِتَرۡضَىٰ ﴾ " हे मेरो पालनकर्ता मैले तपाईं तिर आउनमा शीघ्रता यस कारणले गरें ताकि तपाईं प्रसन्न भइहाल्नुस् " । आदरणीय मूसा अलैहिस्सलामले मात्र आदेशलाई स्वीकार गर्दै अल्लाह सँग भेट गर्नमा शीघ्रता गर्नुभएन, बरू यस कारणले साक्षात्कार गर्नुमा हतार गर्नुभो ताकि अल्लाह उनी सित प्रसन्न होऊन् । र यसको उदाहरण आमा बुबाको सेवा सत्कार गर्नुबाट पनि लिनु सकिन्छ,यस सुकर्ममा सब भन्दा तल्लो दर्जा यो हो कि तिमी आमा बुबामाथि उपकार उनको अवज्ञामा पाइने यातना बाट भय गरेर यस कर्ममा मिल्ने पूण्यको चाहना राखेर गर्दैछ । माध्यम श्रेणी यो हो कि तिमी अल्लाहको आज्ञा पालन गर्दै र आमा बुबाले तिमीमाथि गरेको उपकारलाई स्वीकार गर्दै उनको सेवा सत्कार गर्दैछौ किनभने उनी दुबैले तिमीलाई बाल्यकालमा लालण-पोषण गरेका थिए र तिमीले संसारमा जन्म लिनको कारण पनि उनी दुबै नै हुन् । र सब भन्दा इस्त्रीय दर्जा यो हो कि अल्लाहले यस्तो गर भने आदेशलाई आदर गरी, र अल्लाह सित प्रेम तथा उनको महानता र प्रधानतालाई महत्व एवं सम्मान दिइ तिमी दुबैमाथि उपकार गर्दैछौ ।

मिल्छ,र तौबाको समय पश्चिमबाट सूर्योदय हुन्जेल बाँकी रहनेछ,र मर्ने बेलामा प्राण घाँटीमा गर्गरा (कुल्ला आचमन गर्दा घाँटीबाट निस्कने स्वर) हुन सम्म तौबा स्वीकार्य हुन्छ । र यदि तौबा गर्नेवाला आफ्नो तौबामा साँचो छ भने त्यसको प्रतिफल यो हो कि उसका पापहरूलाई पूण्यमा परिवर्तण गरिदिन्छ यद्यपि पापहरू आकाशको बराबर किन न होस् ।

**तौबा स्वीकार्य हुनका शर्तहरूः १)** पापलाई एक्दमै छाडनु । **२)** गरेको पापमाथि लज्जित हुनु । **३)** भविष्यमा पापलाई फेरि न गर्नेमाथि दृढ इरादा गर्नु, र यदि त्यो पाप कसैको हक अधिकार सँग सम्बन्धित छ भने त्यसलाई सम्बन्धित व्यक्ति सम्म पुगाउनु ।[1]

**तौबा गर्नुमा मनुष्यका चारवटा श्रेणीहरू छनः १)** यस्तो तौबा गर्नेवाला जो जीवनको अन्तिम समय सम्म तौबामाथि दृढ रूपले कायम र स्थिर रहनेछ,र छाडेको पाप तर्फ फर्केर फेरि जाने बारेमा केही सोचविचार गर्दैन । अँ,सा-साना भूलचूक भइहाल्छ जसबाट कुनै मनुष्य चोखो हुन सक्दैन । त यसैलाई तौबामा दृढ स्थिरता हुनु भनिन्छ, र यसलाई गर्ने व्यक्ति भलो कार्यहरूमा अगाडि रहनेवाला हो । यसलाई तौबा नसूह (साँचो तौबा) भनिन्छ । र यसैलाई सन्तुष्ट आत्मा भन्नसकिन्छ । **२)** यस्तो तौबा गर्ने व्यक्ति जो तौबा गरे पछि ठूल-ठूला सुकर्महरूमाथि कायम रहनेछ, तर पापहरू बाट बाँच्न सक्दैन, र यो जानीजानी होइन बरु त्यो परीक्षा र चाँचमा पऱ्या छ, बिना ठोस इरादा गरेर उस सित पाप भइहाल्छ, र जहिले उस सित पाप हुन्छ आफ्नो जीउलाई बुराभला भन्छ,र लज्जित हुन्छ,अनि त्यस पाप सम्म पुऱ्याउने सबै साधनहरूबाट बाँच्दै टाढा रहनको प्रयास गर्छ, त यसैलाई निन्दा गर्नेवाला आत्मा भनिन्छ । **३)** तौबा गर्छ र तौबामाथि केही अवधि सम्म बाँकी रहन्छ, अनि कामवासनाले प्रेरित गरे पछि केही पाप गरी हाल्छ,र यसको साथै सुकर्महरू पनि गर्दछ,र सामर्थ्य तथा कामवासना भए पनि अधिकांश पापहरूबाट टाढा पनि बस्छ,अनि केही नराम्रो कामनाको कारण पापको कार्यमा फसी हाल्छ फेरि समाप्त भए त्यसमाथि लज्जित पनि हुन्छ,अनि त्यस पाप बाट तौबा गर्नको आफ्नो जीउ सँग वाचा पनि गर्छ त यसलाई जिम्मेवार आत्मा भन्नसकिन्छ । तौबा गर्नुमा ढीलो एवं आल्छी गर्नाले यसको अन्तिम परिणाम खतरनाक पनि हुन सक्छ,किनभने तौबा गर्नु भन्दा पहिले पनि मर्न सक्छ,र अन्तिम समयमा गरेका कर्महरूलाई नै महत्व हुन्छ । ४) तौबा गर्छ र केही समय सम्म त्यसमाथि कायम पनि रहन्छ,र बिना तौबाको कामना गरी फेरि पापहरूमा लीन भइहाल्छ,र आफ्नो यस कार्यमाथि अफसोच एवं केही पश्चात्ताप पनि गर्दैन,त यसलाई पापलाई अत्याधिक रूपमा आदेश दिनेवाला आत्मा भनिन्छ, र यसको बुरो अन्त हुन सक्छ ।

**सत्यताः** यो हृदयका सम्पूर्ण कार्यहरूको जरो हो,र सत्यताको प्रयोग ६ अर्थमा हुन्छ : १) वचन र भनाईमा सत्यता । २) इरादा,नीयत र कामनामा सत्यता (यसलाई शुद्धता भनिन्छ) । ३) ठोस इरादा गर्नुमा सत्यता । ४) ठोस इरादालाई पूरा गर्नुमा सत्यता । ५) सुकर्म गर्नुमा सत्यता,कि प्रष्ट लुप्तको माफिक होस,जस्तो नमाजलाई नम्रता र शान्ति सँग पढ्नु । ६) दीन धर्मका जति दर्जा र कार्यहरू छन सबैमा सत्यता सिद्ध हुनु, र यो सत्यताको सब भन्दा महान र उच्चतम दर्जा हो । जस्तो अल्लाह सित भय गर्नुमा, उनैमाथि आशा गर्नुमा, र उनलाई आदर गर्नुमा सत्यता गर्नु । यसै गरी गलत कार्यहरूलाई छाड्नुमा, अल्लाहले दिनुभएको कुरा सित प्रसन्न हुनुमा, उनैमाथि भरोसा गर्नुमा अनि उनै सित प्रेम गर्नुमा बरु हृदयका सम्पूर्ण कार्यहरूमा सत्यता गर्नु । वर्णन गरिएका सबै कुराहरूमा यदि कुनै व्यक्ति सत्यता गर्छ भने त्यसलाई नै सिद्दीक (सत्य- निष्ठ) भनिन्छ । किनकि उसले सत्यमा धेरै अगाडि बढिसकेको छ ।नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " *तिमी सत्यतालाई आफुमाथि अनिवार्य गरिलेऊ,किनकि सत्य भलो र सुकर्म तिर बाटो देखाउँछ र सुकर्म स्वर्ग सम्म लिएर जान्छ, र मान्छे सधैं सत्य कुरा गर्छ र सत्यताको*

---

[1] नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " प्रलय हुने दिन अल्लाह समक्ष ३ वटा मुद्दा पेश हुनेछनः एउटा यस्तो मुद्दा जसलाई अल्लाह केही परवाह गर्नुहुन्न,अर्को यस्तो मुद्दा जसमा उनी केही कुरा छाडनु हुन्न, र तेस्रो यस्तो मुद्दा जसलाई उनी क्षमा गर्नुहुन्न । जस मुद्दालाई अल्लाह क्षमा गर्नुहुन्न त्यो अल्लाह सँग शिर्क गर्नु हो,उँहाको भनाई हो, ﴿إِنَّهُۥ مَن يُشْرِكْ بِٱللَّهِ فَقَدْ حَرَّمَ ٱللَّهُ عَلَيْهِ ٱلْجَنَّةَ وَمَأْوَىٰهُ ٱلنَّارُ﴾ " जसले अल्लाह सँग साझेदार ठहराउँछ अल्लाहले उसको लागि स्वर्गमा प्रवेश हराम गरिदिनेछन,र उसको वासस्थान नरक हुनेछ" र जसलाई केही परवाह गर्नुहुन्न त्यो हो भक्तले आफ्नो जीउमाथि पाप गरेर अन्याय गर्नु र उसको तथा अल्लाहको बीचमा छ यदि उनी चाहनुहुन्छ भने क्षमा गरिदिनु हुन्छ, र तेस्रो मुद्दा जसमा केही कुरा छाडनु हुन्न बरू सबैको बदला लिनेछन त्यो हो दासहरूले एक अर्कामाथि अन्याय गर्नु,यसमा अल्लाह अनिवार्य रूपमा एक अर्काबाट बदला दिलाउनेछन "। (अह्मद, यो हदीस जईफ छ) ।

*प्रयास पनि गर्दछ यहाँ सम्म कि उसलाई अल्लाह समीप सत्य-निष्ठ लेखिन्छ*"। (बुखारी र मुस्लिम) र जसमाथि सत्य लुप्त भइहाल्छ त बिना कुनै नराम्रो कामनाले यदि शुद्धता सँग त्यसलाई खोजी गर्छ भने अल्लाह तआला त्यस सम्म पुग्नमा साहस दिन्छन, र यदि सत्यलाई पाएन त अल्लाह तअला माफ गरिदिनेछन्।
र सत्यको विपरित झूठ हो,हृदयबाट सब भन्दा पहिलो झूठ जिभ्रामा आउँछ र त्यसलाई बरबाद गरिदिन्छ अनि अंगहरू सम्म पुग्छ र अंगहरूका कार्यहरूलाई नष्ट गरिदिन्छ,जसरी कि जिभ्रोलाई नष्ट गरी सम्पूर्ण वचन र भनाईलाई नाश गरिदियो, त झूठ उसको वचन, कर्म र अवस्थाहरूमा व्यापक रूपले सिम्मिलित भइहाल्छ, फेरि उसको बरबादी पक्कै छ।

**प्रेमः** अल्लाह सँग र उसका रसूल सँग र मोमिनहरू सँग प्रेम गर्नाले ईमानको मिठास मिल्छ, नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभो : " *जस व्यक्तिमा तीन कुराहरू पाइन्छन त्यसले ईमानको मिठास पायोः पूरै संसारमा सब भन्दा बढी प्रेम अल्लाह र उसका रसूल सित गरोस्, कसै सँग यदि प्रेम गर्छ भने मात्र अल्लाहको निम्ति प्रेम गरोस, इस्लाम ल्याए पछि फेरि कुफ्र तिर फर्केर जानुलाई यस्तो नापसन्द मानोस जसरी कि आगोमा फ्याक्नुलाई नराम्रो मान्छ* "। (बुखारी र मुस्लिम) जब प्रेमको बोट हृदयमा रोपी हालियोस् र शुद्धता एवम नबीको अनूकरणबाट त्यसमा पानी पटाइयोस् त अल्लाहको दया तथा आदेशले राम्रा राम्रा फलहरू र खाने कुरा आउँनेछन, र ती फलहरू चार प्रकारका छन : १) अल्लाह सित प्रेम गर्नु। २) अल्लाहको निम्ति प्रेम गर्नु र घृणा गर्नु, र यो वाजिब (अनिवार्य) हो।[1] ३) अल्लाहको साथै अरू सँग प्रेम गर्नु, र यस अनिवार्य प्रेममा अल्लाह बाहेक अरूलाई साझी ठान्नु हो, जस्तो कि मुशिरकहरूले (बहुदेववादीहरू) आफ्ना देवी देवताहरू सँग गर्दैथिए र यही शिर्कको जरो हो। ४) प्राकृतिक प्रेम,जस्तो आमा बुबा, सन्तान,भोजन आदि सँग प्रेम गर्नु,र यो जायज छ। सांसारिक माया मोहलाई छाड अल्लाह तिमी सँग प्रेम गर्नेछन,जसरी कि एउटा हदीसमा छ, नबी सल्लल्लाहो अलैहेव सल्लमले भन्नुभो : " *सांसारिक मज्जा र मायामोहलाई छाड अल्लाह तिमी सँग प्रेम गर्नेछन* "। (इब्ने माजा)

**तवक्कुल (भरोसा)ः** चाहिने कुरालाई प्राप्त गर्ने र नचाहिने कुरालाई टाढा गर्ने हेतु अल्लाहमाथि भरोसा गर्नु उनै तिर हृदयलाई सुम्पनु साथै त्यस कुरा सम्म पुगाउने जायज माध्यम र कारणहरूलाई व्यवहारमा ल्याई अल्लाह माथि पूर्ण विश्वास राख्नु पर्छ। अल्लाह तिर हृदयलाई न सुम्पनु तौहीदमा दोष लगउनु हो, र माध्यम तथा कारणलाई छाड्नु बुद्धिमा कमी र निर्बलताको प्रतीक हो। र यो (भरोसा) कार्य आरम्भ गर्नु भन्दा अघि आउँछ र त्यो विश्वास अथवा यकीनको प्रतिफल हो। भरोसाको तीन प्रकार छन्ः १) अनिवार्यः अल्लाह माथि यस्तो कार्यमा भरोसा गर्नु जसलाई पूरा गर्नुमाथि अल्लाह बाहेक अरू कोही सामर्थ्यवान छैन, जस्तो रोगीलाई निको पार्नु। २) हराम,र यस्को दुई किसिम छः क) ठूलो शिर्क,र यो माध्यम तथा कारणहरू माथि पूर्ण भरोसा गर्नु र यो विश्वास गर्नु यी नै वास्तवमा लाभ र हानि

[1] प्रेम र घृणा(मित्रता र शत्रुता) गर्नुको दृष्टिकोणले मानिसहरूको तीन प्रकार छनः क) जुन सँग शुद्ध प्रेम गरियोस् र त्यसमा घृणाको केही अंश पनि न पाओस्, यो शुद्ध मोमिनहरूको लागि हो,जस्तो नबी रसूलहरू,र सत्य-निष्ठहरू,र यस सूचिमा सब भन्दा माथि हाम्रा सरदार मोहम्मद सल्लल्लाहो अलैहेवसल्लम हुनुहुन्छ,र उनका पत्नीहरू,उनका छोरीहरू एवम साथीहरू हुन्। ख) जुन सँग मात्र घृणा र शत्रुता गरियोस्,र यी काफिर,मुश्रिक तथा मोनाफिकहरू हुन्। ग) यस्तो मानिस जसमा पाइने गुणको कारणले उ सित प्रेम गरिइनेछ र अवगुणको कारणले उ सित घृणा तथा शत्रुता गरिइनेछ। र यी कुकर्मी मोमिनहरू छन,त उनमा पाइने ईमानको बराबर उनी सँग प्रेम गरिइनेछ र पापहरू पाइनेको कारण घृणा गरिइनेछ। र काफिरहरू सँग प्रेम तथा मित्रता गर्नु दुई किसिमको छ : १) यस्तो प्रेम र मित्रता जस्को कारणले मुस्लिम इस्लामबाट बाहिर भइहाल्छ र यो तिनीहरू सँग प्रेम तिनको धर्ममाथि हुनको कारणले गरियोस्। २) यस्तो प्रेम र मित्रता जो हराम छ र त्यसको कारणले इस्लामबाट बाहिर हुँदैन,र यो उनी सँग सांसारिक मामला र व्यवहारको कारणले होस्,र कहिले राम्रो व्यवहार पनि हुन सक्छ (र यो मुस्लिम सँग युद्ध न गर्ने काफिरहरू हुन्) र कहिले उनी सित घृणा र शत्रुता पनि हुन सक्छ,र यी दुबैमा फर्क बुझ्नु जरूरी हो,हृदयमा बिना प्रेम राखी उनीमाथि न्याय गर्नु र उनी सित राम्रो व्यवहार गर्नु पर्छ, जस्तो उनी मध्ये निर्बल सँग नम्रता बर्तनु र दया र प्रेमलाई प्रकट गर्ने हेतु राम्रो र मीठो कुराकानी गर्नु जायज छ, यस विषयमा अल्लाह तआला भन्नुहुन्छ : ﴿ لَّا يَنْهَىٰكُمُ ٱللَّهُ عَنِ ٱلَّذِينَ لَمْ يُقَٰتِلُوكُمْ فِى ٱلدِّينِ وَلَمْ يُخْرِجُوكُم مِّن دِيَٰرِكُمْ أَن تَبَرُّوهُمْ وَتُقْسِطُوٓا۟ إِلَيْهِمْ ﴾ " *जुन मानिसहरूले तिमी सित धर्मको बारेमा युद्ध गरेनन् र न तिमीलाई तिम्रा घरहरूबाट निष्कासित गरे,उनीहरू सँग राम्रो र न्यायपूर्ण व्यवहार गर्नबाट अल्लाह तिमीलाई मनाही गर्नुहुन्न* "। तर उनीहरू सित घृणा र शत्रुता गर्नु त यो बेग्लै कुरा हो,यस संदर्भमा अल्लाह तआला भन्नुहुन्छः ﴿ يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوا۟ لَا تَتَّخِذُوا۟ عَدُوِّى وَعَدُوَّكُمْ أَوْلِيَآءَ تُلْقُونَ إِلَيْهِم بِٱلْمَوَدَّةِ ﴾ " *हे मोमिनहरू हो! मेरो र आफ्नो शत्रुहरूलाई मित्र न बनाऊ, तिमी त मित्रतासँग उनीहरू कहाँ सन्देश पठाउँछौ* "। त उनीहरू सित घृणा र शत्रुता गर्दै न्यायपूर्ण व्यवहार गर्नु सम्भव छ जसरी कि नबी सल्लल्लाहो अलैहेवसल्लमले मदीनामा बस्ने यहूदीहरू सँग गर्नुभएको थियो।

पुऱ्याउनमा प्रभावित हुन्छ ।[1] **ख) सानो शिर्कः** जस्तो रोजी आर्जन गर्नुमा कुनै व्यक्तिमाथि भरोसा गर्नु, बिना यो आस्था राखी कि उ नै वास्तवमा रोजी पुऱ्याउनमा प्रभावित हुन्छ, तर उ सँग सम्बन्धित हुनु मात्र रोजी प्राप्त गर्नको कारण हो । **३) जायजः** कुनै व्यक्तिले अरूलाई सामर्थ्य राख्ने कार्य गर्नुमाथि प्रतिनिधि नियुक्त गर्छ र त्यसमाथि भरोसा पनि गर्छ जस्तो व्यवसाय (किन बेच) गर्नु । तर यो भन्नु जायज छैन कि मैले अल्लाह माथि अनि तिम्रोमाथि भरोसा गरें बरू मात्र यो भन्नु मिल्छ कि मैले तिमीलाई प्रतिनिधि बनाएको छु ।

**◗ आभार (शुक्रिया)ः** र यो भक्तले आफ्नो हृदयमा ईमान ल्याउँदै र जिभ्रोबाट प्रशंसा गर्दै तथा अंगहरूबाट पूजा गर्दै आफुमाथि ईश्वरीय अनुकम्पाहरूको प्रभाव प्रकट गर्छ । र यही असल अभिप्राय छ । र कृतज्ञता ज्ञापन हृदयले,जिभ्रोले तथा अंगहरूले हुन्छ । शुक्रिराको अर्थ हो अनुकम्पालाई अल्लाहको आज्ञापालनमा खर्च गर्नु ।

**◗ धैर्य (सब्र)ः** कुनै दुविधा र दुःखको उजुरी अल्लाह बाहेक अरू कसै सित न गर्नु र यो ठान्नु कि त्यो अल्लाह बाट नै हो । अल्लाह भन्नुहुन्छः ﴿ إِنَّمَا يُوَفَّى ٱلصَّٰبِرُونَ أَجۡرَهُم بِغَيۡرِ حِسَابٖ ﴾ " ***धैर्यवानहरूकै निम्ति पूरा पूरा अनगिन्ती पुरस्कार दिइन्छ*** "। र नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभो : " ***जो व्यक्ति धैर्य गर्न चाहन्छ अल्लाह उसलाई धैर्य र सन्तोष गर्नको साहस प्रदान गर्नुहुन्छ, र धैर्य भन्दा राम्रो एवं ठूलो वरदान कसैलाई दिइएको होइन*** "।(बुखारी र मुस्लिम) र उमर रजियल्लाहो अन्होले भन्नुभो : " कुनै दुविधा र दुःख जहिले पनि ममाथि आयो त त्यसमा अल्लाहका चारवटा अनुकम्पाहरू ममाथि थिएः मेरो धर्ममा त यो दुःख तथा परीक्षा छैन, यस भन्दा ठूलो त होइन, यस सित प्रसन्न हुनुबाट म बंचित त छैन, र त्यस माथि म पूण्यको आशा राख्दछु "।

**र धैर्यका केही श्रेणीहरू छनः तल्लो श्रेणीः** (दुःखबाट) अप्रसन्नता साथ उजुरी न गर्नु । **माझिल्लो श्रेणीः** (दुःखबाट) प्रसन्न भएर उजुरी न गर्नु । **माथिल्लो श्रेणीः** दुःखमाथि अल्लाहको प्रशंसाको वर्णन गर्नु । र जसले आफुमाथि गर्ने अन्यायकारीलाई श्राप दियो उल्ले आफ्नो सहयोग आफैं गऱ्यो र आफ्नो अधिकार प्राप्त गऱ्यो र अन्याय माथि धैर्य गरेन ।

**र धैर्य दुई प्रकारको हुन्छः** १) शारिरिकः यस अध्यायमा यो अभिप्राय छैन । २) आन्तिरिकः जीउका कुअभिलाषा, नराम्रो चाहना र कामवासनामाथि धैर्य गर्नु ।[2]

---

[1] **के माध्यम र कारणलाई व्यवहारमा ल्याउनु भरोसाको विपरित हो ?** यसमा केही कुराहरू छनः **१)** अप्रत्यक्ष लाभलाई पाउनुका कारणहरू,र यसलाई तीन थरीमा बाँडिएको छः **क)** विश्वासिलो कारण,जस्तो सन्तान पाउने हेतु बिहे गर्नु,त यो अप्रत्येक्ष लाभ लाई पाउनको लागि यस कारणलाई प्रयोग न गर्नु पागलपनी छ र यसलाई भरोसा भन्न सक्दैन । **ख)** अविश्वासिय कारणहरू,र त्यसलाई प्रयोग न गरेकन अधिकांश रूपमा लाभ प्राप्त हुन सक्दैन,जस्तो कि बिना बाटोखर्च लिएर जंगल तथा चौरमा यात्रा गर्न थाल्छ त यो अल्लाह माथि भरोसा होइन,बरू बाटोखर्च साथमा लिनुको आदेश दिइएको छ,किनभने नबी सल्लल्लाहो अलैहेवसल्लमले बाटोखर्च साथमा लिएर यात्र गर्नुभो र मदीना सम्म पुगाउनको लागि बाटो देखाउने मान्छे किरायामा राख्नुभो । **ग)** बिना प्रष्ट विश्वास गरेर कारणहरूले लाभ सम्म पुऱ्याउनको भ्रम उत्पन्न गर्छ,जस्तो कि त्यो मान्छे जो रोजी आर्जन गर्न र तसय सम्म पुऱ्याउने बाटोहरूलाई धेरै सोच विचार गरेर प्रबन्ध गर्छ,त यो भरोसाको परिधिबाट बाहिर हुँदैन,बरु रोजी आर्जन न गर्नु नै भरोसाको विपरित छ । आदरणीय उमर रजियल्लाहो अन्होले भन्नुभो : " भरोसा गर्ने त्यो हो जो बीउलाई धरती भित्र राखे पछि अल्लाहमाथि भरोसा गर्छ "। **२)** उपस्थित वस्तुहरूलाई सुरक्षित राख्नु, त जुन व्यक्ति हलाल (वैध) आनाजहरूलाई आइन्दा खानको निम्ति सुरक्षित राख्छ भने यो भरोसाको विपरित छैन, खास गरी जब उ व्यक्ति परिवार वाला होस्, किनकि नबी सल्लल्लाहो अलैहेवसल्लमले बनु नजीरका खजूरहरू बेच्नु हुन्थ्यो र आफ्नो परिवारको लागि एक वर्ष सम्मको आनाज जम्मा गरेर सुरक्षित राख्नु हुन्थ्यो । (बुखारी र मुस्लिम) **३)** यस्तो हानिलाई टाढा गर्नु जो अहिले सम्म आएको छैन, त यो भरोसाको बिरूद्ध छैन कि न आएको हानिलाई टाल्ने माध्यमहरू अपनाइओस, जस्तो युद्धमा कवच पहिर्नु र ऊँटलाई डोरीमा बाँधी राख्नु । र यी सबै कुराहरूमा अल्लाह माथि नै भरोसा गर्नु र अल्लाहले गर्नुभएको फैसलाबाट प्रसन्न हुनु पर्छ । **४)** अवतरित भएको हानिलाई टाढा गर्नु, र यो तीन प्रकारको हुन्छः **क)** जसलाई अपनाए पछि लाभ हुनु अनिवार्य छ,जस्तो तिर्खा बुझाउने पानीलाई प्रयोग गर्नु,त यस्तो गर्नु भरोसाको बिरूद्ध छैन । **ख)** लाभ हुनु सम्भव हो, जस्तो उपचार आदि गराउनु, त यो भरोसाको विरूद्ध होइन, किनकि नबी सल्लल्लाहो अलैहेवसल्लमले पनि उपचार गराउनुभो र उपचार गराउनुको आदेश पनि दिनुभो । **ग)** लाभ पुऱ्याउने कारणको मात्र भ्रम होस्, जस्तो स्वास्थ्य र आरोगीको समयमा उपचार गराउनु ताकि रोगी बेरामी न होस् त यस्तो गर्नु पूर्ण भरोसाको विरूद्ध छ ।

[2] यस किसिममा ध्यान दिनु पर्ने कुरा के छ भने यदि पेट र गुप्ताँगको कामवासनामाथि सन्तोष गर्छ भने त्यसलाई पवित्रता र सतीत्व भनिन्छ । र यदि युद्धस्थलमा यो सन्तोष प्रकट हुन्छ भने त्यसलाई बहादुरी र वीरता भनिन्छ । र यदि रिसलाई निल्नुमाथि सन्तोष हुन्छ भने त्यसलाई सहनशीलता भनिन्छ । र यदि कुनै मामलालाई लुप्त पार्नुमा यस सन्तोषलाई प्रयोग गरिन्छ भने

**र भक्तलाई जे-जति कुरा यस संसारमा मिल्छ त्यो दुई खण्डको हुन्छ :** क) कामना अनुसार होस, यस कुरामाथि अल्लाहको आभार व्यक्त गर्दै अल्लाहको हकलाई पूर्ति गर्नुमा सन्तोष गर्नु र ती कुराहरू (धन आदि) मध्ये कुनै कुरा अल्लाहको अवज्ञामा खर्च न गर्नु अथवा न लगाउनु । ख) कामनाको विपरित होस्, र यो तीन प्रकारको हुन्छः १) अल्लाहको आज्ञा पालनमाथि सब्र (सन्तोष) गर्नु : र यस मध्ये अनिवार्य कार्यहरूलाई गर्नु जरूरी छ, र अनिवार्य बाहेक अरू कार्यहरू गर्नु राम्रो हो । २) अल्लाहको अवज्ञामाथि सब्र गर्नु : र यस मध्ये हराम (बर्जित) कार्यहरूलाई छाडनु जरूरी हो, मन नपराएको (मक्रूह) कुरालाई छाडनु राम्रो हो । ३) अल्लाहले लेख्नु भएको भाग्यमाथि सब्र गर्नुः यसमा अनिवार्य कुरो के छ भने जिभ ोलाई भाग्य बारेमा परिवाद गर्नुबाट रोक्नु, र अल्लाहले नियुक्त गर्नुभएको भाग्यमाथि हृदयलाई रिसाउनु र अपत्ति गर्नुबाट रोक्नु, र अंगहरूलाई अल्लाहले न रोजाएको कार्यहरूमा व्यस्त गर्नुबाट रोक्नु जस्तो कुनै विपत्ति भएमा हल्ला गर्नु ठूलो स्वरमा रुनु कराउनु, लुगालाई च्यात्नु र गाला तथा छातीलाई कुटनु आदि । र यसमा राम्रो कुरो के छ भने अल्लाहले नियुक्त गर्नुभएको भाग्यबाट हृदयले प्रसन्न हुनु ।

**दुबै मध्ये कुन राम्रो हो आभार व्यक्त गर्ने धनवान वा सन्तोष गर्ने निर्धन ?** यदि धनवान व्यक्तिले आफ्नो धन सम्पत्तिलाई अल्लाहको आज्ञा पालनमा खर्च गर्दैछ र त्यसको लागि जम्मा गरेर राख्दैछ त यो निर्धन भन्दा राम्रो छ, र यदि त्यो जायज कुराहरू (जस्तो मात्र खान,पिन,पोशाक आदि) मा खर्च गर्छ भने यस भन्दा राम्रो र बेश निर्धन हो । नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " ***सुखी सम्पन्न आभारी सन्तोष गर्ने बर्तालुको दर्जामा हो***" ।(अहमद)

**◗ प्रसन्नताः पाएको कुरामा सन्तुष्ठि गर्नु र त्यसलाई पर्याप्त सम्झनु,** कुरा प्राप्ति पछि यस्को अवसर आउँछ, र अल्लाहले नियुक्त गर्नुभएको भाग्यलाई प्रसन्नतापूर्वक स्वीकार गर्नु विशिष्टहरूका दर्जाहरू मध्ये सब भन्दा उच्च दर्जा हो, र यो प्रेम तथा भरोसाको महत्वपूर्ण फल हो, र अल्लाह सित कुनै दुविधालाई टाढा गर्ने हेतु दुआ (प्रार्थना) गर्नु त्यसबाट प्रसन्न हुनको विपरित छैन ।

**◗ विनम्रताः** यो आदर गर्नु, विनम्रता बरत्नु र आफुलाई सानो मान्नु हो । आदरणीय होजैफा रजियल्लाहो अन्होले भन्नुभोः " तिमी आफुलाई मोनाफिकको विनम्रताबाट जोगाऊ, मानिसले सोधेः मोनाफिकको विनम्रता के हो ? उत्तर दिनुभोः शारारिक रूपले त विनम्रता दिखाउँछ तर हृदय विनम्रताबाट खाली हुन्छ "। उहाँले विषेश कुरा गर्दै भन्नुभोः " तिमीहरूले आफ्नो धर्ममा सब भन्दा पहिलो विनम्रता र शान्तिलाई छाडने छौ,र जुन सुकै इबादत (पूजा) होस् जसमा विनम्रता गर्नु पर्छ त्यसमाथि पूण्य पनि विनम्रता पाइने मात्रा अनुसार नै मिल्छ, जस्तो कि नमाज । किनकि नबी सल्लल्लाहो अलैहेवसल्लमले नमाजीको बारेमा भन्नुभो कि कति
नमाजी यस्तो छ जसलाई आधा नमाजको पूण्य मिल्छ र कतिलाई चौथो भागको पूण्य र कतिलाई पाचौं भागको पूण्य यहाँ सम्म कि कतिपयलाई दशौं भागको पूण्य प्राप्त हुन्छ, बरु कतिपय यस्तो नमाजी पनि छ जसको नमाजमा विनम्रता र शान्ति नपाएको कारणले नमाजमाथि केही पूण्य मिल्दैन "।

**◗ आशाः र यो अल्लाहको दया तिर हेर्नु हो,** यसको उल्टो निराश हुनु हो,र अल्लाहको पूण्यमाथि आशा गरेर सुकर्म गर्नु उनको सजायको डर र भयले सुकर्म गर्नु भन्दा बेश छ,किनकि यो अल्लाह सित भ्रम न राखी राम्रो विचार राख्नुमाथि प्रेरित गर्छ । र अल्लाह तआला भन्नुहुन्छः " ***म आफ्नो दासको मसँग अनुमान र कल्पना गर्नु साथै हुन्छु*** " । (मुस्लिम) **र आशाका दुईवटा दर्जा छनः उच्चः** सुकर्म गर्छ र त्यसमाथि अल्लाहको पूण्यको आशा राख्दैछ । आमा आइशा रजियल्लाहो अन्हाले सोध्नुभोः " हे अल्लाहका रसूल ! यस आयत : ﴿ وَٱلَّذِينَ يُؤْتُونَ مَآ ءَاتَوا۟ وَّقُلُوبُهُمْ وَجِلَةٌ ﴾ " *र जे दिन सक्दछन् दिन्छन् र उनीहरूका हृदय यस कुराबाट भयभित रहन्छन्* " को अर्थ यो हो कि मान्छे चोरी गर्छ,बलात्कारी गर्छ र रक्सी खान्छ अनि अल्लाह सित डराउँछ ? नबीले उत्तर दिनुभोः " यस्तो होइन हे अबुबक्र सिद्दीककी छोरी ! बरु यस्को अर्थ यो हो कि जुन मानिसहरू नमाज पढछन,रोजा बास्छन र दान दिन्छन फेरि अल्लाह सित डराउँछन कि यी सुकर्महरू स्वीकार्य हुन्छन कि हुँदैनन् " ﴿ أُو۟لَٰٓئِكَ يُسَٰرِعُونَ فِى ٱلْخَيْرَٰتِ ﴾ " *यी नै ती मानिसहरू हुन् जसले भ*

---

त्यसलाई रहस्य लुकाउनु भनिन्छ । र यदि जिन्दगानीको नराम्रो कामनामाथि धैर्य गर्छ भने त्यसलाई सांसारिक वासना र मज्जालाई छाडनु संज्ञा दिइन्छ । र यदि सांसारिक वस्तुहरूबाट आवश्यकता बमोजिम लाभ प्राप्त गर्छ भने त्यसलाई सन्तुष्टि संज्ञा दिइन्छ ।

*लोको काममा शिघ्रता गर्दछन्* "। (तिर्मीजी) **तल्ल दर्जाः** पाप गरेर पश्चाताप गर्नेवाला अल्लाहको क्षमाको आशा गर्दैछ। तर पाप गरेर अडान लिइ तौबा न गर्नेवाला यदि अल्लाहको दया र क्षमाको आशा गर्छ भने यो मात्र कामना हो आशा होइन, र यो दर्जा निन्दनीय छ र पहिलो दर्जा प्रशंसित। त मोमिनले भलो तथा सुकर्म लगायत अल्लाहको भयलाई एकत्रित गऱ्यो र मोनाफिक (कपटी) ले बुरो र कुकर्म लगायत अल्लाह सित न डराउनुलाई एकत्रित गऱ्यो।

**भयः यो यस्तो चिन्ता हो जो कुनै मन नपराएको कुरा घटित हुने सम्भावनाले हृदयमा हुन्छ,** र यदि त्यो कुरा अवश्य नै घट्ने छ भने त्यसबाट चिन्तित हुनुलाई डराउनु भनिन्छ। र यस्को उल्टो शान्ति तथा अमन हो, र यो (शान्ति) आशाको विपरित छैन बरु त्यो डरलाग्दो बाटोमा हिंड्दै मनमा उब्जने भावना हो, र आशा चाहनाको बाटोमा हिंड्दै मुटुमा उब्जने भावनाको नाम हो, र भक्तको मुटुमा प्रेम,भय र आशाले एकत्रित हुनु एक्दमै जरूरी छ। इब्नुलकैय्यीम रहेमहुल्लाहले भन्नुभयोः "अल्लाह तिर हिंड्दा हिंडदै हृदय एउटा चरो जस्तो भइहाल्छ जस्को टाउको प्रेम छ र भय एवं आशा उसका दुबै पखेटा, र यदि भयले मुटुमा प्रवेश गरेर ठाउँ भनाइहाल्यो भने त्यसमा स्थित कामवासनाका ठाउँहरूलाई त्यसले पोलिहाल्छ र सांसारिक कुअभिलाषाहरूलाई समाप्त गरिदिन्छ"। **अनिवार्य भयः** यो त्यो हो जो वाजिब कार्यहरू गर्नुमाथि र हराम कार्यहरूलाई छाड्नु माथि प्रेरित गर्छ। **राम्रो भयः** र यो त्यो हो जो राम्रा कार्यहरू गर्नुमाथि र मन नपराएका कार्यहरूलाई छोड्नुमाथि प्रेरित गर्छ। र यस्का केही प्रकारहरू छनः **१) ईश्वरीय र आन्तिरक भयः** यो भय मात्र एक अल्लाह सित हुनु अनिवार्य छ, र यस मध्ये कुनै अंश पनि अल्लाह बाहेक अरू सित गर्नु ठूलो शिर्क हो, जस्तो बहुदेववादीहरूले देवी देवता र मूर्तिहरूले हानि पुऱ्याउनुबाट डराउनु। **२) हराम भयः** त्यो हो मानिसहरूको भयले कुनै अनिवार्य कार्य छोड्नु वा कुनै हराम कार्य गर्नु। **३) जायज भयः** भेडिया, बाघ र साँप आदि सित डराउनु त यो प्राकृति डर हो।

**जोह्दः अर्थात कुनै वस्तुबाट चाहनालाई फर्काएर त्यस भन्दा राम्रो वस्तुमा लगाउनु,**(अर्को अर्थ दुनियादारी लाई छोड्नु) सांसारिक मोहमायालाई छाड्नुले हृदय र शरीर दुबैलाई आराम दिन्छ र तसयमा अधिक चाहना गर्नाले चिन्ता एवं सोचमा बढोत्तरी गर्छ। र सांसारिक प्रेम प्रत्येक पापको जरो हो र संसारबाट घृणा गर्नु प्रत्येक सुकर्मको कारण छ। र दुनियादारीलाई छाड्नुको अर्थ यो हो कि दुनियाँको प्रेम आफ्नो हृदयबाट बाहिर निकालियोस्, यस्को अर्थ यो होइन कि आफ्नो हात माल आर्जन गर्नुबाट टाढा राख्नु र दिलमा त्यसको प्रेम पनि होस्,यो अशिक्षित र मुर्ख व्यक्तिहरूको जोहद हो,नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः "*राम्रो माल सम्पत्ति राम्रो मान्छे सँग हुन्छ*"। (अहमद) निर्धनको माल सँग पाँच अवस्था हुनः १) माल सम्पत्ति सित घृणा गरी तथा त्यसको बुराईमा व्यस्त गर्ने कुराबाट डराई त्यसलाई लिनुबाट भाग्दै छ, त यस्तो अवस्थामा रहने मान्छेलाई जाहिद (दुन्यादारीलाई छोड्नेवाला) भनिन्छ। २) धन माल प्राप्त गरेर प्रसन्न हुँदैन,र न त उ सित घृणा पनि गर्छ, त यस अवस्थामा रहने मान्छेलाई प्रसन्न हुनेवाला भनिन्छ। ३) धन सम्पत्ति न हुनु भन्दा हुनु राम्रो छ त्यसमा चाहना हुनको कारणले, तर यत्रो चाहना होइन कि त्यसको खोजीमा ब्याकुल भइहालोस्, बरु उस्तै यदि मिल्छ भने खुशी भई लिन्छ र यदि त्यसलाई पाउने हेतु परिश्रमको आवश्यकता पर्छ भने त्यसमा व्यस्त हुँदैन, यस्तो अवस्थावालालाई सन्तुष्ठ भनिन्छ। ४) धन सम्पत्तिको चाहना राखी असामर्थ्य हुनको कारणले त्यसलाई खोजी गर्दैन, र यदि त्यसलाई खोजी गर्नको लागि केही बाटो हेर्छ भने परिश्रम गरेर खोजी गर्छ, यस्तो अवस्थावालालाई लोभी भनिन्छ। ५) जस धन-माल पाउनको लागि उसले चाहना गरेको छ त्यसलाई पाउनु उसको निम्ति एक्दमै अनिवार्य हो, जस्तो भोको र नाँगो जस्ले खाने र पहिरिने कुरा पाउँदैन, त यस्तो अवस्थामा रहनेलाई जरूरतवाला भनिन्छ।




# एउटा गंभीर कुराकानी

**अब्दुल्लाह** नामक एक जना मान्छेले **अब्दुन्नबी** भन्ने व्यक्ति सँग भेट गऱ्यो, उसले आफ्नो दिलमा यस नाम (अब्दुन्नबी) लाई नकाऱ्यो र भन्यो कि कसरी एउटा मुस्लिम अल्लाह बाहेक अरूको पूजा गर्न सक्छ ? फेरि **अब्दुन्नबी**लाई सम्बोधित गर्दै भन्योः के तपाईं अल्लाह बाहेक अरूलाई पूजा गर्दै हुनुहुन्छ ?
**अब्दुन्नबीले** भन्योः होइन, म त अल्लाहको अलावा अरू कसैलाई पूजा गर्दिन, म मुस्लिम हुँ र मात्र एक अल्लाहलाई नै पूज्दछु ।
**अब्दुल्लाहले** भन्यो : अनि यो नाम के हो जो क्रिश्चियनको नाम जस्तो मिल्छ किनकि तिनीहरू पनि आफ्नो नाम अब्दुल् मसीह (ईसु मसीहको दास) राख्दैछन्,र यो कुनै अचम्मको कुरो होइन, किनकि क्रिश्चियनहरूले ईसु मसीहलाई पूज्दछन,र तपाईंको नाम कुनै पनि व्यक्तिले सुने बित्तिकै यो सम्झना गर्छ कि तपाईं नबी सल्लल्लाहो अलैहेवसल्लमलाई पूज्नुहुन्छ, र कुनै पनि मुसलमानको आस्था आफ्नो नबीको बारेमा यस्तो होइन,बरु प्रत्येक मुसलमान माथि यो आस्था राख्नु जरूरी छ कि मुहम्मद सल्लल्लाहो अलैहेवसल्लम अल्लाहका दास र रसूल हुन् ।
**अब्दुन्नबीले** भन्योः तर नबी मुहम्मद मनुष्यमा सब भन्दा श्रेष्ठ र सम्पूर्ण दूतहरूका मुखिया हुनुहुन्छ,र हामी अल्लाह सित उनका नबीको शान र आदर सत्कारको माध्यमले बर्कत (बृद्धि) र नजीकी प्राप्त गर्ने हेतु यस्तो खालको नाम राख्दछौं । र हामी यस्तो गरेर नबी सल्लल्लाहो अलैहेवसल्लम सित सिफारिश माग्दछौं, र यो कुनै आश्चर्यजनक कुरो होइन बरु मेरो भाईको नाम अब्दुलहूसैन (हूसैनको दास) हो,र उ भन्दा अघि मेरो पिताको नाम अब्दुर्रसूल (रसूलको दास) थियो,र यस्तो प्रकारको नाम पुरानो र मानिसहरूमा प्रचलित छ,र हामीले यसैमाथि आफ्नो पुर्खालाई पाएका छौं,र यस समस्यामा सख्ती न गर्नुस किनभने मामिला सरल र धर्म सजिलो छ ।
**अब्दुल्लाहले** भन्योः पहिलो गलत कुरो भन्दा यो अति नै ठूलो गलत कुरो हो,र त्यो हो अल्लाह बाहेक अरू सित यस्तो कुरा माग्नु जसलाई दिने माथि मात्र अल्लाह नै सामर्थ्यवान हुनुहुन्छ,उनी बाहेक अरू कोही त्यसलाई पूर्ति गर्न माथि शक्ति राख्दैन,जसलाई गुहार्छ त्यो नबी मुहम्मद सल्लल्लाहो अलैहेवसल्लम किन न हुन्,वा उनी बाहेक अरू सत्यकर्मीहरू किन न हुन जस्तो आदरणीय हुसैन आदि । र यो तौहीदको विपरित कुरो हो जस तौहीदमाथि हामीलाई आस्था राख्ने आदेश दिइएको छ,र लाइलाह इल्लल्लाहको पनि विरूद्ध हो।

र म तपाईं समक्ष केही प्रश्नहरू राख्दछु जसको माध्यमले यस कुराको महानता स्पष्ट भइहाल्नेछ र यस्तो खालको नाम राख्नुको परिणाम के छ भने त्यो पनि प्रष्ट भइहाल्नेछ,र यसमा मेरो उद्देश्य सत्य सम्म पुग्नु र त्यसलाई स्वीकार गर्नु,र असत्यलाई प्रष्ट पार्नु अनि त्यसबाट बंचित बस्नु हो, र भलो कार्यको आदेश दिनु तथा नराम्रो कार्यबाट रोक्नु हो । र अल्लाह तआला नै सहयोग पुऱ्याउनेवाला हुन, तथा उनैमाथि भरोसा हो, र प्रत्येक प्रकारको शक्ति मात्र एक महान र उच्चतम अल्लाहमा नै निहित छ । तर त्यस भन्दा पहिलो म तपाईंलाई अल्लाह तआलाको यो भनाई स्मरण गराउन चाहन्छुः
﴿إِنَّمَا كَانَ قَوْلَ الْمُؤْمِنِينَ إِذَا دُعُوا إِلَى اللَّهِ وَرَسُولِهِ لِيَحْكُمَ بَيْنَهُمْ أَنْ يَقُولُوا سَمِعْنَا وَأَطَعْنَا﴾ " ***मोमिनहरूको कुरा त यो हुन्छ कि जब तिनलाई अल्लाह र उनको रसूल तिर बोलाइन्छ कि अल्लाह र उनको रसूलले उनीहरूको बीचमा फैसला गरिदिउन त भन्छनः कि हामीले सुनिहाल्यौं र मानिहाल्यौं*** "। र अल्लाहको यो भनाई पनि सुन्नुसः ﴿فَإِنْ تَنَازَعْتُمْ فِي شَيْءٍ فَرُدُّوهُ إِلَى اللَّهِ وَالرَّسُولِ إِنْ كُنْتُمْ تُؤْمِنُونَ بِاللَّهِ وَالْيَوْمِ الْآخِرِ﴾" फेरि यदि तिमीहरूमा आपसी मतभेद भएको अवस्थामा यदि तिमी अल्लाह र आखिरत (अन्तिम दिन) माथि ईमान राख्दछौ भने त्यस कुरालाई अल्लाह र उनका रसूल तिर फर्काई देऊ "।
**अब्दुल्लाह** : तपाईंको यो भनाई अनुसार तपाईंले अल्लाहलाई एक मान्नुहुन्छ र यो पनि गवाही दिनुहुन्छ कि अल्लाह बाहेक सत्य पूज्य कोही होइन त के तपाईं यस्को अर्थ प्रष्ट पार्न सक्नुहुन्छ ?
**अब्दुन्नबी** : तौहीद भनेको यो हो कि तपाईं यो आस्था राख्नु कि अल्लाह विद्यमान हुन,उनी आकाश र धरतीका स्रष्टा हुन,उनी जीवनदाता,मृत्युदाता र सम्पूर्ण प्रकारको अख्तियार उनैको लागि हुन,र उनी नै अन्नदाता, सर्वज्ञाता, एवम शक्तिशाली हुन...
**अब्दुल्लाह** : तपाईंको भनाई बमोजिम यदि तौहीद मात्र यही हो भने फिर्औन र उसका समूदाय तथा अबुजहल आदि मान्छेहरू मोमिन हुन्थे,किनकि अरु बहुदेववादीहरू झैं यिनीहरूलाई यो कुरा थाहा

थियो,फिर्औनले त प्रभुत्वको पनि दावी गरेको थियो ता पनि उसको मुटुमा यो विश्वास र आस्था थियो कि अल्लाह विद्यमान छन र उनैको हातमा सम्पूर्ण शक्ति छन् । यस्को प्रमाण अल्लाह तआलाको यो भनाई हो : ﴿ وَجَحَدُوا۟ بِهَا وَٱسْتَيْقَنَتْهَآ أَنفُسُهُمْ ظُلْمًا وَعُلُوًّا ﴾ " ***उनीहरूले अत्याचार र घमण्डको कारण इन्कार गरे जबकि उनीका हृदयले विश्वास गरीसकेका थिए*** "। र यो विश्वास उल्ले समुद्रमा डुब्दा खेरि अस्पष्ट रूपले प्रकट गरेको थियो ।

तर वास्तविक तौहीद जसलाई स्थापित गर्नै हेतु दूतहरू (रसूलहरू) लाई पठाईयो,आकाशिय ग्रन्थहरूलाई अवतरण गरीयो,र जस कारण कुरैश (दूत मुहम्मदको कूल) सँग युद्ध गरीयो.त्यो थियो मात्र एक अल्लाहलाई पूज्नु । र पूजा (इबादत) भनिन्छः प्रत्येक यस्तो वचन र कर्म जसलाई अल्लाहले रोज्नुहुन्छ र त्यसबाट खुशी हुनुहुन्छ चाहे त्यो प्रत्यक्ष होस वा अप्रत्यक्ष । र लाइलाह इल्लल्लाहमा जो इलाह शब्द हो यस्को वास्तविक अर्थ हो यस्तो पूजनीय जस्को लागि सबै प्रकारको पूजा गर्नु पर्छ र उनी बाहेक अरुको लागि पूजा गर्नु अवैध हो ।

**अब्दुल्लाह :** के तपाईंलाई थाहा छ कि धरतीमा रसूलहरू किन पठाइएका थिए,जुन मध्ये सब भन्दा पहिला रसूल नूह अलैहिस्सलाम हुन ?

**अब्दुन्नबी :** ताकि उनीहरू बहुदेववादीहरूलाई एक अल्लाहको इबादत तिर निम्तो देउन्,र अल्लाहको पूजामा अरूलाई साझेदार बानाउनुबाट रोकुन ।

**अब्दुल्लाह :** नूह अलैहिस्सलामको समूदायमा शिर्क उत्पन्न हुनको के कारण हो, के तपाईंलाई थाहा छ ?

**अब्दुन्नबी :** मलाई थाहा छैन !

**अब्दुल्लाह :** जब नूह अलैहिस्सलामको समूदायले वद,सोवाअ,यगूस,यऊक र नस्र यी पाँचौं सदाचारीहरूको आदर गर्नुमा सीमा उल्लंघन गरेका थिए तब अल्लाहले उनीहरूलाई सुधार्नका लागि नूहलाई रसूल बनाएर पठाउनु भयो ।

**अब्दुन्नबी :** के तपाईंको भनाईको यो तात्पर्य हो कि वद र सोवाअ आदि नेक,असल र सदाचारीहरूका नाम छन, न कि ठूल-ठूला काफिरहरूका नाम ?

**अब्दुल्लाह :** हो र, यी पाँचौं वास्तवमा असल र सुकर्मीहरूका नाम हुन जसलाई नूह अलैहिस्सलामको समूदायले पूजनीय बनाएका थिए, र अरबवासीले जसको देखासिकीमा यस्तो नै गरिरहेका थिए । यस्को प्रमाण यो हो कि आदरणीय अब्दुल्लाह बिन अब्बासले भन्नुभयो : " नूह अलैहिस्सलामको समूदायमा पाइने मूर्तिहरू, पछि अरबवासीमा पनि प्रचलित भए,वदको मूर्ति दौमतुल् जन्दल ठाउँमा कल्ब भन्ने कूलमा थियो,र सोवाअ होजैल भन्ने कूलको भगवान थियो, र यगूस पहिला मूराद कूलको भगवान थियो अनि सबा नजीकै अल् जौफमा बस्ने बनु गतीफ समूदायको भगवान बनी हालेको थियो,र यऊक,त यो हम्दान कूलको देवता थियो,र नस्र, त यो जुल् केलाअ भन्ने समूदायको हिम्यर गोत्रको देवता प्रचलित भएको थियो । तर वास्तवमा यी सबै नूह अलैहिस्सलामको समूदायका असल र सुकर्मीहरूका नाम छन, यिनीहरू बितीसके पछि शैतनले तिनको नाममा मूर्ति बनाएर आफ्नो बैठकमा राख्ने सल्लाह समूदायलाई दियो,उनीहरूले सल्लाह बमोजिम नै कार्य गरे, र त्येस बेला तिनीहरूको पूजा पाठको चर्चा पनि थिएन,जब यी समूदायहरूको मृत्यु भइसक्यो र ज्ञानमा कमी आउँदै गयो त पछि तिनीहरूको पूजा आरम्भ भयो "। (बुखारी)

**अब्दुन्नबी :** यो त अचम्मको कुरो हो !!

**अब्दुल्लाहः** आउनुस् म तपाईंलाई यस भन्दा बढी अचम्म र गजबको कुरो बताउँछु, तपाईंलाई त थाहा होला कि अन्तिम दूत सरदार मुहम्मद सल्लल्लाहो अलैहेवसल्लमलाई अल्लाहले यस्तो समुदायमा पठाउनुभो जुन अल्लाह सित क्षमा याचना गर्दथे,पूजा गर्दथे,काबाको तवाफ (परिक्रमा) गर्दै सफा मर्वाको चक्कर पनि लगाउँदैथे,यसै गरी हज पनि गर्दथे र दान पनि दिंदथे, यसको बावजुद तिनीहरू केही सुकर्मीहरूलाई आफ्नो र अल्लाह बीच माध्यम बनाउँदथे र भन्दथे कि हामी यी माध्यम सित यो मात्र चाहना राख्दैछु कि यिनीहरू हामीलाई अल्लाह नजीक गरिदिउन् र हाम्रो सिफारिश उनी समक्ष गरुन्, जस्तो फरिश्ताहरू, ईसुमसीह अलैहिस्सलाम र अरू सुकर्मी एवं सदाचारीहरू । त्यस पछि अल्लाह तआलाले आदरणीय इब्राहीम अलैहिस्सलामको बिर्सिएको दीन धर्मलाई नवीन पार्ने एवम प्रचार प्रसार गर्ने हेतु मुहम्मद

सल्लल्लाहो अलैहेवसल्लमलाई पठाउनुभो । दूत मुहम्मदले उनीहरूलाई बताउनुभो कि अल्लाहको समीपता प्राप्त गर्नको यो तरीका र यस्तो खालको आस्था राख्नु मात्र एक अल्लाहको हक हो र उनी बाहेक अरू कसैको लागि यस्तो आस्था राख्नु राम्रो होइन, ऊ एक्लै जन्मदाता छन त्यसमा उनको कोही साझी छैन, र ऊ एक्लै अन्नदाता छन, सातौं आकाश र जे-जति तीमा छन, सातौं धरती र जे-जति तीमा छन सबै अल्लाहका दास हुन र उनको अख्तियार एवम प्रभुत्वको अधीनमा हुन । बरु मक्का वासी जुन देवी देवता तथा मूर्ति र मिथ्या भगवानहरूलाई पूज्दथे तिनको बारेमा पनि उनीहरूमा विश्वास थियो कि तिनीहरू अल्लाहको अख्तियार र प्रभुत्त्वको अधीनमा नै हुन ।

**अब्दुन्नबी :** यो त अति महत्वपूर्ण र गजबको कुरा हो! के यसमाथि केही प्रमाण पनि छ ?

**अब्दुन्नबी :** हो र, यसमाथि धेरै प्रमाणहरू छन जस मध्ये अल्लाहको यो भनाईलाई सुन्नुस :

﴿ قُلْ مَن يَرْزُقُكُم مِّنَ السَّمَاءِ وَالْأَرْضِ أَمَّن يَمْلِكُ السَّمْعَ وَالْأَبْصَارَ وَمَن يُخْرِجُ الْحَيَّ مِنَ الْمَيِّتِ وَيُخْرِجُ الْمَيِّتَ مِنَ الْحَيِّ وَمَن يُدَبِّرُ الْأَمْرَ فَسَيَقُولُونَ اللَّهُ فَقُلْ أَفَلَا تَتَّقُونَ ﴾

" *(तिनीहरू सँग) तपाईं भन्नुस कि तिमीलाई आकाश र धरतीबाट जीविका कस्ले प्रदान गर्दछ ? वा तिम्रो कान र आँखामाथि कस्को अख्तियारी छ ? र मृतकबाट जीवित कस्ले निकाल्छ र जीवितबाट मृतक कस्ले बनाउँछ ? र त्यो को हो जसले सबै कामको योजना बनाउँछ ? त तिनीहरूले अवश्य भन्नेछनः अल्लाह, तसर्थ भन्नुस त्यसो भए तिमी (अल्लाह सँग) किन डर मान्दैनौ ?* "। र यस भनाईमा ध्यान दिनुस्:

﴿ قُل لِّمَنِ الْأَرْضُ وَمَن فِيهَا إِن كُنتُمْ تَعْلَمُونَ ﴿٨٤﴾ سَيَقُولُونَ لِلَّهِ قُلْ أَفَلَا تَذَكَّرُونَ ﴿٨٥﴾ قُلْ مَن رَّبُّ السَّمَاوَاتِ السَّبْعِ وَرَبُّ الْعَرْشِ الْعَظِيمِ ﴿٨٦﴾ سَيَقُولُونَ لِلَّهِ قُلْ أَفَلَا تَتَّقُونَ ﴿٨٧﴾ قُلْ مَن بِيَدِهِ مَلَكُوتُ كُلِّ شَيْءٍ وَهُوَ يُجِيرُ وَلَا يُجَارُ عَلَيْهِ إِن كُنتُمْ تَعْلَمُونَ ﴿٨٨﴾ سَيَقُولُونَ لِلَّهِ قُلْ فَأَنَّىٰ تُسْحَرُونَ ﴾

" *सोध्नुस त, धरती र जे-जति त्यस भित्रमा छन सबै कस्का सम्पत्ति हुन ? बताउ यदि तिमीलाई थाहा छ । तुरुन्त जवाफ दिनेछनः कि अल्लाहको, भन्नुस त्यसो भए तिमी किन नसीहत मान्दैनौ ? सोध्नुस कि सात आकाशहरूको स्वामी को हो ? महान सत्तासनको मालिक को हो ? उनीहरूले जवाफ दिनेछन कि अल्लाह नै हुन, भन्नुस कि त्यसो भए किन डर मान्दैनौ ? सोध्नुस कि यदि तिमी जान्दैछौ भने भन कि त्यो को हो जसको हातमा हरेक कुराको आधिपत्य छ र उसले शरण दिन्छ र उसको दाँजोमा कसैले कसैलाई शरण दिन सक्दैन* "।

## र मक्काका बहुदेववादीहरूले हज गर्दा खेरि यो दुआ भन्दैथिए:

**لبيك اللهم لبيك،لبيك لا شريك لك، إلا شريكاً هو لك تملكه و ما ملك** " म उपस्थित भएको छु, म हाजिर छु हे अल्लाह! म हाजिर छु तपाईंको केही साझेदार छैन, अँ, केही साझेदार छन जसका स्वामी वास्तवमा तपाईं नै हुनुहुन्छ र जस कुराको ती मालिक हुन वास्तवमा तपाईं नै त्यसको पनि मालिक हुनुहुन्छ "। (ध्यान दिनु पर्ने कुरा यहाँ के छ भने) कुरैश कूलका बहुदेववादीहरूले आफ्नो यो आस्थाको कारणले कि मात्र अल्लाह नै सम्पूर्ण कुराहरूका मालिक र तीमाथि अख्तियार राख्दैछन जसलाई तौहीदे रोबुबियत भनिन्छ इस्लाममा प्रवेश भएनन् । र उनीहरूले फरिश्ता,दूत तथा संयमी व्यक्तिहरू सित सिफारिश चाहे ताकि तिनीहरूले उनलाई अल्लाहको नजीक गरिदिउन्,यसो गर्नाले नै उनीहरू सँग युद्ध गर्नु जायज भयो र उनीहरूको रगत एवं धन माललाई अल्लाहले वैध गर्नुभो । यसै कारणले सम्पूर्ण प्रकारका दुआ (गुहार) मात्र अल्लाह सित गर्नु जरूरी हो, र भाकल मात्र अल्लाहको नाममा हुनु जरूरी हो,र अल्लाहको नाममा नै जनावरलाई जबह (हलाल) गर्नु अनिवार्य छ,यसै गरी अल्लाह सितै मद्दत माग्नु पर्छ । बरू सम्पूर्ण प्रकारका इबादत (पूजाहरू) मात्र अल्लाहकै लागि हुनु जरूरी छन् ।

**अब्दुन्नबी :** तपाईंको भनाई अनुसार यदि अल्लाहको अस्तित्वमाथि विश्वास राख्नु र यो कुरामाथि राख्नु कि सम्पूर्ण अख्तियार र शक्ति मात्र अल्लाहकै लागि हुन भन्ने तौहीद छैन भने अरू तौहीद के हो ?

**अब्दुल्लाहः** त्यो तौहीद जसलाई स्थापित गर्ने हेतु रसूलहरूलाई पठाइयो र जसलाई मुश्रिकहरू (बहुदेववादीहरू) ले इन्कार गरे त्यो थियो मात्र एक अल्लाहको लागि नै इबादत (पूजा) गर्नु र पूजा पाठका जति प्रकारहरू छन मात्र एक अल्लाहकै लागि गर्नु र उनी बाहेक अरू कसैको लागि न गर्नु, जस्तो दुआ, भाकल,जबह गर्नु,गुहार्नु र मदत माग्नु आदि । र यही लाइलाह इल्लल्लाहको अर्थ पनि हो,किनकि कूरैशको नजीक إله पूज्य त्यो हो जसका लागि यी सबै पूजा अर्चना गरीयोस चाहे त्यो

फरिश्ता होस वा नबी, वली होस वा रूख, चिहान होस वा जिन्न भुत प्रेत । र उनीहरूले الله पूज्यको अर्थ जन्मदाता,अन्नदाता र प्रबन्धक गरेनन किनभने उनीहरूलाई यो थाहा थियो कि यी गुणहरू मात्र अल्लाहका हुन,जसरी कि माथि यस्को चर्चा अइसकेको छ । अनि नबी सल्लल्लाहो अलैहेवसल्लमले आएर उनीहरूलाई तौहीदको मूल आधार लाइलाह इल्लल्लाहको तर्फ निम्तो दिनुभो,र मात्र मुखले न भनी यस्को अर्थलाई व्यवहारमा ल्याउनु तिर मानिसलाई बोलाउनुभो ।

**अब्दुन्नबी :** तपाईं यो भन्न चाहनुहुन्छ कि कूरैशका बहुदेववादीहरूले यस जमानाका अधिकांश मुसलमानहरू भन्दा बढी लाइलाह इल्लल्लाहको बारेमा ज्ञान राख्दैथे ?

**अब्दुल्लाहः** हो, यही त धेरै दुःखत वास्तविकता हो !! किनभने अनपढ काफिरहरू पनि जान्दैथिए कि नबी सल्लल्लाहो अलैहेवसल्लमको अभिप्राय यस कल्मा (लाइलाह इल्लल्लाह) बाट यो हो कि मात्र एक अल्लाहको लागि पूजा अर्चना गर्नु र उनी बाहेक जे-जति पूजनीय छन सबैलाई नकार्नु र तिनीबाट आफुलाई टाढा मान्नु पर्छ, यसैले गर्दा जब नबी सल्लल्लाहो अलैहेवसल्लमले तिनीहरू सँग भन्नुभो कि लाइलाह इल्लल्लाह भन त तिनीहरूले भने ﴿ أَجَعَلَ ٱلْأَلِهَةَ إِلَٰهًا وَٰحِدًا إِنَّ هَٰذَا لَشَىْءٌ عُجَابٌ ﴾ " ***के उसले यति धेरै पूज्य उपास्यहरूलाई एक्लो एउटै उपास्य बनाइदियो ? यो त ठूलै आश्चर्यजनक कुरा हो*** "। यस्को बावजुद उनीहरूको यस माथि ईमान थियो कि अल्लाह नै सम्पूर्ण संसारका प्रबन्धक हुन् र उनैको हातमा सबै प्रकारको अख्तियार छन् । त जब अनपढ् र मुर्ख काफिरहरूलाई पनि यो कुरा थाहा थियो त कति आश्चर्यको कुरो हो कि जुन मानिस मुस्लिम हुनको दाबी गर्छ उसलाई यस मूल आधार कल्मा (लाइलाह इल्लल्लाह) को बारेमा ज्ञान छैन जसरी मुर्ख काफिरहरूलाई ज्ञान थियो । बरु त्यो यो कल्पना गर्छ कि यस कल्माको अर्थ र मतलबको सम्बन्धमा हृदयमा कुनै आस्था न राखीकन मात्र मुखले त्यसको शब्द भन्नु नै पर्याप्त छ, र तिनीहरू मध्ये जुन आफुलाई अधिक सिपालु ठान्छ त्यो यस कल्माको यसरी अर्थ निकाल्छः कि अल्लाह बाहेक अरू कोही जन्मदाता,अन्नदाता र संसारको प्रबंधक होइन । त यस्तो इस्लामको दाबी गर्नेहरूमा केही भलाई पाउँदैन जुन भन्दा बढी कूरैशका काफिरहरूलाई लाइलाह इल्लल्लाहको बारेमा ज्ञान थियो ।

**अब्दुन्नबीः** तर म त शिर्क गर्दिन, बरु म गवाही दिन्छु कि एक अल्लाह बाहेक अरू कोही जन्म दिनेवाला, भोजन दिनेवाला, लाभ र हानि पुऱ्याउनेवाला छैन,र यो पनि साक्षी दिन्छु कि मुहम्मद सल्लल्लाहो अलैहेव सल्लमले आफ्नो जीउको लागि लाभ र हानि पुऱ्याउने शक्ति राख्दैनथिए, त आदरणीय अली, हूसैन र अब्दुल्कादिर आदिको कुरै बेग्लै छ । तर म पापी छु र सुकर्मीहरूको अल्लाह कहाँ सम्मान र शान छ,र म उनीहरू सित यो माग्दछु कि उनीहरू आफ्नो सम्मान र शानको कारण अल्लाह कहाँ मेरो सिफाशि गरुन् ।

**अब्दुल्लाहः** यस्को जवाफमा म त्यही कुरा भन्न चाहन्छु जो मैले अघिनै भनेको थिएं कि नबी सल्लल्लाहो अलैहेवसल्लमले जुन मानिसहरू सँग युद्ध गर्नुभो तिनीहरू पनि तपाईंले वर्णन गर्नुभएको कुराहरूमाथि आस्था राख्दथे,र यो पनि विश्वास गर्दथे कि उनका देवी देवता र मुर्तिहरू केही गर्न सक्दैनन,बरु तिनीहरूले मात्र ती देवी देवता आदिको मान सम्मान र सिफारिश नै मात्र चाहदथे, र यस कुरालाई म अघि नै कुरआन बाट प्रमाणित गरिसकेको छु ।

**अब्दुन्नबीः** तर ती आयतहरू मूर्तिका पूजारीहरूको बारेमा अवतरण भएका थिए, तपाईं कसरी नबी र सुकर्मीहरूलाई मूर्ति जस्तो बनाउन सक्नु हुन्छ ?

**अब्दुल्लाहः** यस कुरामाथि हामी एक मत भइसकेका छौं कि मूर्तिहरूको नाम असल र सदाचारीको नामामा राखिएको थियो जस्तो कि नूह अलैहिस्सलामको समयमा भएको थियो । र काफिरहरूले उनीहरू सित अल्लाह कहाँ सिफारिश गरिदिनुहोस भन्ने बाहेक अरू केही कुराको चाहना गरेका थिनन् किनभने उनीहरूको उच्च स्थान अल्लाहकहाँ छ । यस्को प्रमाण अल्लाह तआलाको यस भनाईमा हो :

﴿ وَٱلَّذِينَ ٱتَّخَذُواْ مِن دُونِهِۦٓ أَوْلِيَآءَ مَا نَعْبُدُهُمْ إِلَّا لِيُقَرِّبُونَآ إِلَى ٱللَّهِ زُلْفَىٰٓ ﴾ " ***र जसले उस बाहेक अरू मित्र (उपास्य) बनाएका छन भन्दछन् कि : हामीले यिनीहरूलाई यस कारणले पूज्दछौं कि हामीलाई अल्लाहको समिप्यता प्राप्त गराइ दिउन्*** "।

र तपाईंको यो भनाई कि कसरी तपाईंहरूले नबी र सुकर्मीहरूलाई मूर्ति जस्तो बनाउनुभएको ? त यसको उत्तरमा म भन्न चाहन्छु कि जस समुदाय तिर नबी सल्लल्लाहो अलैहेवसल्लम आउनुभो तिनीहरू

मध्ये कोही सुकर्मीहरूलाई नै गुहार्दथे जस बारेमा अल्लाह भन्नुहुन्छः
﴿ أُولَٰئِكَ الَّذِينَ يَدْعُونَ يَبْتَغُونَ إِلَىٰ رَبِّهِمُ الْوَسِيلَةَ أَيُّهُمْ أَقْرَبُ وَيَرْجُونَ رَحْمَتَهُ وَيَخَافُونَ عَذَابَهُ ۚ إِنَّ عَذَابَ رَبِّكَ كَانَ مَحْذُورًا ﴾" *उनीहरू जसलाई पुकार्दछन तिनीहरू स्वयं आफ्ना पालनकर्ता कहाँ पहुँचको माध्यम खोज्दछन् कि तिनीहरू मध्ये कुन धेरै नजीक हुन सक्छ । उनीहरू स्वय उसको दयाको आशामा रहन्छ, र उसको दण्ड सित भयभित रहन्छन ? निःसन्देह तिम्रो पालनकर्ताको सजाय डर्नु पर्ने कुरा नै हो* "। र उनीहरू मध्ये कोही ईसु मसीह र उनका आमालाई पुकार्दथे, जस सम्बन्धमा अल्लाह तआला भन्नुहुन्छ :
﴿ وَإِذْ قَالَ اللَّهُ يَا عِيسَى ابْنَ مَرْيَمَ أَأَنتَ قُلْتَ لِلنَّاسِ اتَّخِذُونِي وَأُمِّيَ إِلَٰهَيْنِ مِن دُونِ اللَّهِ ﴾ " *र त्यो समय पनि वर्णन योग्य छ जब अल्लाह भन्ने छन् : हे मरयमका छौरा ईसा! के तिमीले मानिसहरू सित भनेका थियौ कि अल्लाह बाहेक मलाई र मेरी आमालाई पूज्य बनाई हाल* "। र उनीहरू मध्ये कोही फरिश्ताहरूलाई पुकार्दथे यस सन्द्रभमा अल्लाह तआला भन्नुहुन्छ : ﴿ وَيَوْمَ يَحْشُرُهُمْ جَمِيعًا ثُمَّ يَقُولُ لِلْمَلَائِكَةِ أَهَٰؤُلَاءِ إِيَّاكُمْ كَانُوا يَعْبُدُونَ ﴾ " *र जुन दिन उनले सबैलाई एकत्रित गर्नेछन अनि फरिश्ताहरू सित भन्नेछन कि के यी मानिसहरूले तिमीलाई पूजा गर्दथे* "? ।
यी आयतहरूमा चिन्तन मनन गर्नुस कि अल्लाह तआलाले मूर्ति र देवी देवताहरूलाई पुकार्नेहरूलाई काफिर भन्नुभएको हो र नबी, फरिश्ता तथा वली र सुकर्मीहरूलाई पुकार्नेहरूलाई पनि बराबर रूपमा काफिर भन्नुभएको छ, र उनीहरू सँग नबी सल्लल्लाहो अलैहेवसल्लमले युद्ध गर्नुभो र उनी बीच यस प्रकारको अन्तर पार्नुभएन ।

**अब्दुन्नबीः** तर म त मात्र एक अल्लाहलाई नै पूज्दैछु,र सुकर्मीहरूलाई गुहार्नु एवम उनलाई पुकार्नु इबादत (पूजा) त छैन !

**अब्दुल्लाहः** तर म तपाईं सित एउटा कुरा सोध्न चाहन्छु के तपाईं यो मान्नुहुन्छ कि अल्लाह तआलाले तपाईं माथि उनैको लागि शुद्ध इबादत गर्नु अनिवार्य गर्नुभएको हो र यो तपाईंमाथि उनको हक छ, जसरी कि उहाँले भन्नुभएको छः ﴿ وَمَا أُمِرُوا إِلَّا لِيَعْبُدُوا اللَّهَ مُخْلِصِينَ لَهُ الدِّينَ حُنَفَاءَ ﴾ " *उनीहरूलाई मात्र यही आदेश दिइएको थियो कि निष्ठापूर्वक अल्लाहको उपासना गरुन् र एकाग्र भएर उसैको लागि धर्मलाई शुद्ध राखुन्* "।

**अब्दुन्नबीः** हो, अल्लाहले ममाथि त्यो कुरा त अनिवार्य गर्नुभएको हो ।

**अब्दुल्लाहः** म तपाईं सित यो चाहना गर्दछु कि तपाईं म समक्ष तपाईंमाथि अल्लाहले अनिवार्य गर्नुभएको कुरालाई स्पष्ट पार्नुहोस जुन कि शुद्ध अल्लाहको लागि पूजा गर्नु हो ।

**अब्दुन्नबीः** तपाईंले सोध्नु भएको प्रश्न मैले बुझेन, एक पटक फेरि भन्नुहोस् ।

**अब्दुल्लाह :** मेरो कुरा ध्यान पूर्वक सुन्नुस्, अल्लाह तआला भन्नुहुन्छः
﴿ ادْعُوا رَبَّكُمْ تَضَرُّعًا وَخُفْيَةً ۚ إِنَّهُ لَا يُحِبُّ الْمُعْتَدِينَ ﴾ " *तिमीहरू आफ्नो पालनकर्तालाई बिलौना गर्दै र गोप्य रूपमा पुकार्ने गर । निःसन्देह उनी सीमोल्लंघनकारीहरूलाई मन पराउँदैनन्* "। त के दुआ र प्रार्थना गर्नु पूजा हो वा पूजा होइन ?

**अब्दुन्नबीः** हो. दुआ र प्रार्थना गर्नु नै असल पूजा हो जसरी कि हदीसमा आएको छ : " *दुआ नै अलस इबादत र पूजा हो* "।

**अब्दुल्लाह :** जब तपाईंले यो स्वीकार गर्नुभो कि दुआ गर्नु नै अल्लाहको खास इबादत हो अनि तपाईंले अल्लाहलाई रातौं दिन आशा र भय गरी कुनै आवशयकतालाई पूर्ति गर्ने हेतु पुकार्नु हुन्छ, र फेरि त्यही आवश्यकतालाई पूर्ति गर्नका लागि चिहानमा रही केही नबी वा वली वा सत्कर्मीलाई पुकार्नु हुन्छ त के तपाईंले यस पूजामा शिर्क गर्नुभो वा भएन ?

**अब्दुन्नबीः** हो, यस्तो गरेमा मैले त शिर्क गरें, र यो कुरा त एक्दमै स्पष्ट र सत्य हो ।

**अब्दुल्लाहः** एउटा अरू उदाहरण प्रस्तुत गर्दछु र त्यो होः जब तपाईंले अल्लाहको यो भनाईलाई जान्नुभोः
﴿ فَصَلِّ لِرَبِّكَ وَانْحَرْ ﴾ " *अतः आफ्ना पालनकर्ताकै निम्ति नमाज पढने गर र बलिदान दिने गर* "। र अल्लाहको यस आदेशलाई स्वीकार गर्नुभो अनि उनैको नाममा जनावरलाई जबह अथवा हलाल गर्नुभो, त के तपाईंले जबह गर्नुभएको कार्य अल्लाहको इबादत हो वा होइन ?

**अब्दुन्नबी :** हो, त्यो त इबादत नै हो ।

**अब्दुल्लाह :** तपाईंले यदि अल्लाह संगै अरूको नाममा पनि जबह गर्नुभो चाहे त्यो नबी होस वा जिन्न भुत प्रेत आदि होस त के तपाईंले यस इबादतमा अल्लाह सित अरूलाई साझेदार बनाउनुभो वा वनाउनु भएन ?

**अब्दुन्नबी :** हो, निस्सन्देह यो शिर्क हो ।

**अब्दुल्लाह :** तपाईं समक्ष मैले दुआ र जबहलाई उदाहरणमा प्रस्तुत गरेको छु किनकि दुआ (पुकार्नु) वचनका इबादतहरू मध्ये सब भन्दा महत्वपूर्ण पूजा हो, र जबह गर्नु कार्यका इबादतहरू मध्ये सब भन्दा उच्चतम इबादत हो । र इबादत अर्थात पूजा यी दुबैलाई मात्र भन्दिन बरु इबादत त थुप्रै छन् जसमा भाक्नु,शपथ लिनु,शरण चाहिनु,गुहार्नु आदि सबै पूजा नै हुन् । र के ती बहुदेववादीहरू जसको बारेमा कुरआन अवतरण भएको हो के तिनीहरू फरिश्ता,सुकर्मीहरू र लात (अरब स्थित एक देवताको नाम) आदिको पूजा गर्दथे ?

**अब्दुन्नबी :** हो, तिनीहरू यस्तो गर्दथे ।

**अब्दुल्लाह :** र तिनीहरूले उनीहरूको लागि गरेको पूजा-आजामा दुआ,जबह,शरण माग्नु,मदत चाहिनु र गुहार्नु आदि नै थिए,र तिनीहरूले स्वीकार गर्दथे कि तिनीहरू अल्लाहका दास नै हुन् र उनैको प्रभुत्वमा छन्, र अल्लाह नै सम्पूर्ण कार्यका प्रबन्धक हुन्,तर तिनीहरूले उनीहरूलाई अल्लाहकहाँ पाइने आदर-सम्मानको कारणले र उनी सित सिफारिश चाहनको निम्ति नै पुकारे र गुहारेका थिए, र यो कुरा एक्दमै स्पष्ट छ ।

**अब्दुन्नबी :** ए अब्दुल्लाह के तपाईं अल्लाहका रसूल मुहम्मद सल्लल्लाहो अलैहेवसल्लमको सिफारिशलाई इन्कार गर्नु हुन्छ र त्यसबाट आफुलाई टाढा मान्नुहुन्छ ?

**अब्दुल्लाह :** होइन,म सिफारिशलाई इन्कार गर्नको साहस गर्दिन,र न त म त्यसबाट टाढा बस्न सक्छु,बरु अल्लाहका रसूल (उनीमाथि मेरा आमा-बुबा अर्पित) सिफारिश गर्नेवाला र उनको सिफारिश स्वीकार्य पनि हुनेछ, र म उनको सिफाशिको आशा पनि गर्दैछु । तर सम्पूर्ण प्रकारका सिफारिश अल्लाहकै निम्ति हुन, जसरी कि अल्लाहले भन्नुहुन्छः ﴿ قُل لِّلَّهِ ٱلشَّفَٰعَةُ ﴾ "*भनिदेऊः सिफारिशको पूर्णतः अल्लाहमा नै निहित छ*"। र सिफारिश अल्लाहले अनुमति प्रदान गरे पछि नै हुनेछ,जसरी कि अल्लाह तआलाले भन्नुभएको छः ﴿ مَن ذَا ٱلَّذِى يَشْفَعُ عِندَهُۥٓ إِلَّا بِإِذْنِهِۦ ﴾ "*को छ जसले उनीकहाँ उनको अनुमति बिना सिफारिश गर्न सकोस्*" । र कुनै व्यक्तिले अल्लाहको अनुमति बिना कसैको लागि सिफारिश गर्न सक्दैन, जसरी कि अल्लाहको भनाई छः ﴿ وَلَا يَشْفَعُونَ إِلَّا لِمَنِ ٱرْتَضَىٰ ﴾ "*र ती फरिश्ताहरू कसैको सिफारिश गर्ने छैनन् ती व्यक्तिहरू बाहेक जस बाट अल्लाह प्रसन्न हुन्छन्*"। र अल्लाह तआला एकेश्वरवाद (तौहीद) बाट नै प्रसन्न हुन्छन्,जसरी कि अल्लाह तआलाले भन्नुहुन्छः ﴿ وَمَن يَبْتَغِ غَيْرَ ٱلْإِسْلَٰمِ دِينًا فَلَن يُقْبَلَ مِنْهُ وَهُوَ فِى ٱلْءَاخِرَةِ مِنَ ٱلْخَٰسِرِينَ ﴾ "*र जसले इस्लाम बाहेक अन्य कुनै धर्म ग्रहण गर्न खोज्छ उसको धर्म कदापि स्वीकार्य हुनेछैन र ऊ परलोकमा घाटा बेहोर्ने मध्ये हुनेछ*"। त जब सम्पूर्ण प्रकारका सिफारिश अल्लाहकै लागि छन् र अल्लाहको अनुमति पश्चातै कुनै व्यक्ति कसैको लागि सिफारिश गर्न सक्छ, र न त नबी सल्लल्लाहो अलैहेवसल्लमले वा अरू कुनै सुकर्मी बिना अल्लाहको अनुमतिको कसैको लागि सिफारिश गर्न सक्दैनन्, र अल्लाह तआला मात्र तौहीदवालाको हकमा नै सिफारिश गर्ने हेतु अनुमति दिनेछन् । त जब यो स्पष्ट भइसक्यो कि सम्पूर्ण प्रकारका सिफारिश अल्लाहकै लागि हुन् भने म उनी सितै सिफारिश माग्दछु र यो दुआ गर्दछु कि हे अल्लाह ! आफ्नो नबीको सिफारिश बाट मलाई बंचित न राख्नुहोस र म सम्बन्धमा आफ्नो रसूलको सिफारिश स्वीकार गर्नुहोस् ईत्यादी ।

**अब्दुन्नबी :** हामी यस कुरामाथि एक मत भएका छौं कि कसै सित यस्तो वस्तु माग्नु जायज छैन जस्को त्यो सामर्थ्य राख्दैन, र नबी सल्लल्लाहो अलैहेवसल्लमलाई अल्लाहले शफाअत (सिफारिश) दिनु भएको छ त यस कारणले नबी सल्लल्लाहो अलैहेवसल्लमले त्यसको सामर्थ्य राख्नुभो,र सामर्थ्य एवं शक्ति राखिएको कुरालाई माग्नु जायज हुन्छ र त्यो शिर्क भएन ।

**अब्दुल्लाहः** हो, यो कुरो त सही छ तर अल्लाहले यसबाट मनाही गर्नुभएको हो,जसरी कि अल्लाहले भन्नुभोः ﴿ فَلَا تَدْعُوا۟ مَعَ ٱللَّهِ أَحَدًا ﴾ "*अतः अल्लाहका साथ अरू कसैलाई नपुकार*"। र सिफारिशलाई माग्नु दुआ (पुकार्नु) हो,र नबी सल्लल्लाहो अलैहेवसल्लमलाई जसले सिफारिश दिनुभएको हो त्यो अल्लाह नै हुनुहुन्छ,र उनी अल्लाहले नै त्यसलाई कुनै अरू सित माग्नु मनाही गर्नुभएको छ चाहे त्यो व्यक्ति महान भन्दा महान किन नहोस । र यो कुरा पनि प्रमाणित छ कि नबी सल्लल्लाहो अलैहेवसल्लम बाहेक अरूलाई पनि सिफारिश गर्नुको अख्तियार अल्लाहले दिनुहुनेछन जस्तो कि फरिश्ताहरू कि यिनीहरूले पनि सिफारिश गर्नेछन,यसै गरी ती बालकहरू जुनको मृत्यु बयस्क हुनु भन्दा अघि नै भइसकेको हो तिनीहरूले पनि सिफारिश गर्नेछन, यसै गरी अवलिया र सुकर्मीहरूले पनि सिफारिश गर्नेछन । त के तपाईं यो भन्न सक्नुहुन्छ कि अल्लाह तआलाले तिनीहरूलाई सिफारिश गर्नु जस्तो उच्च कोटी प्रदान

गर्नुभएको हो त उनीहरू सित पनि सिफारिश माग्नुस् ? यदि तपाईंको उत्तर सकारात्मक हुन्छ भने तपाईंले सदाचारीहरूको इबादत तिर फर्कनुभो जस्को चर्चा अल्लाहले आफ्नो पुस्तक पवित्र कुरआनमा गर्नुभएको छ । र यदि तपाईंको उत्तर नकारात्मक हुन्छ भने तपाईंको यो भनाई व्यर्थ भयो कि अल्लाहले नबीलाई सफिारिश प्रदान गर्नुभएको हो त अल्लाहले दिएको कुरा म नबी सित माग्न सक्छु ।

**अब्दुन्नबीः** तर म अल्लाह साथ कसैलाई साझेदारी गर्दिन,र सुकर्मीहरू सित फिराद गर्नु (गुहार्नु) शिर्क होइन।

**अब्दुल्लाहः** के तपाईं स्वीकार गर्नुहुन्छ कि अल्लाहले शिर्कलाई बर्जित गर्नुभो र यो व्यभिचार भन्दा पनि ठूलो हराम (बर्जित) कार्य हो, र अल्लाहले त्यसलाई क्षमा गर्नेछैनन् ?

**अब्दुन्नबीः** हो. म यस कुरालाई स्वीकार ग्र्दछु, र यो अल्लाहको किताबमा बिल्कुलै स्पष्ट छ ।

**अब्दुल्लाहः** तपाईंले अहिले आफ्नो जीउको तर्फबाट शिर्कलाई नकार्नुभएको छ जसलाई आल्लाहले बर्जित गर्नुभो, तपाईंमाथि अल्लाहको शपथ! के तपाईंले म समक्ष अल्लाह सित शिर्क भनेको के हो स्पष्ट पार्नुस जसमा तपाईं संलग्न हुनुहुन्न र जसलाई आफ्नो जीउबाट तपाईंले नकार्नुभएको हो ।

**अब्दुन्नबी :** मूर्तिहरूको उपासना गर्नुलाई शिर्क भनिन्छ र उनी तिर ध्यान गर्नु, उनी सित माग्नु र उनी सित डराउनुलाई शिर्क भनिन्छ ।

**अब्दुल्लाहः** मूर्तिहरूको उपासना गर्नुको अर्थ के हो ? के तपाईं यो ठान्नु हुन्छ कि कूरैशका काफिरहरूले रूख,काठ र ढुंगा आदिका मूर्तिहरूले जन्म दिन्छन,अन्न दिन्छन र उन्लाई गुहार्नेहरूको आवश्यकतालाई पूर्ति गर्छन जस्तो आस्था राख्दथे ? तिनीहरूले यो आस्था राख्दैनथे जस्तो कि मैले अघि नै वर्णन गरेको छु ।

**अब्दुन्नबीः** म पनि यो आस्था राख्दिन,बरु जस्ले कुनै बुट,काठ,ढुंगो वा मजार आदिकहाँ गएर त्यसलाई गुहार्छ र त्यसको नाउमा जनावर जबह गर्छ र यो भन्छ कि यिनीहरू हामीलाई अल्लाहको समीप गरिदिन्छन र अल्लाह तआलाले यिनीहरूको कारणले दुःख र कष्ट टाढा गर्नेछन । त यो नै मूर्तिहरू पूजा भयो जो मेरो भन्नुको तात्पर्य थियो ।

**अब्दुल्लाहः** तपाईंले सत्य कुरा गर्नुभो,तर यी कार्यहरू नै तपाईंहरू द्वारा चिहानमाथि बनिएका ढुंगा,मजार र कोठा आदि समक्ष भइरहेछन । र तपाईंको यो भनाई कि मूर्तिहरूको पूजालाई नै मात्र शिर्क भनिन्छ! के तपाईंको भनाईको तात्पर्य यो छ कि जुन व्यक्ति यस्तो कार्य गर्छ त्यो नै मात्र शिर्क गर्दछ ? र सुकर्मीहरू माथि भरोसा गर्नु र उनलाई पुकार्नु शिर्क हुन सक्दैन ?

**अब्दुन्नबीः** हो, मेरो भनाईको आशय यो नै हो ।

**अब्दुल्लाहः** कुरआनका ती धेरै आयतहरू तपाईंको नजरमा छैनन जसमा अल्लाहले नबी, सुकर्मीहरूमाथि भरोसा गर्नु र फरिश्ताहरू वा अन्य कुनै वस्तु सित आफुलाई सम्बन्ध जोडनुलाई हराम गर्नुभो,र यस्तो गर्नेलाई काफिर भन्नुभो, र अघि नै यी सबै कुरा तपाईं समक्ष प्रमाण सँग वर्णन गरिदिएको छु ।

**अब्दुन्नबीः** तर जुन मानिसले फरिश्ता एवम् सुकर्मीहरूलाई पुकारे त यस कारणले उनीहरू काफिर भ एनन् बरु उनीहरूको काफिर हुनको कारण यो थियो कि उनीहरूले फरिश्तालाई अल्लाहकी छोरी र ईसु मसीहलाई अल्लाहको छोरा भनेका थिए । र हामी त यो भन्दैनौं कि अब्दुल्कादिर अल्लाहको छोरा हुन् वा जैनब अल्लाहकी छोरी हुन ।

**अब्दुल्लाहः** जहाँ सम्म अल्लाह सित कसैलाई उनको छोरो हुनको सम्बन्ध जोडनुको कुरो हो त यो एउटा खास कुफ्र हो, जसरी कि अल्लाहले भन्नुभो : ﴿ قُلْ هُوَ ٱللَّهُ أَحَدٌ ۝١ ٱللَّهُ ٱلصَّمَدُ ۝٢ لَمْ يَلِدْ وَلَمْ يُولَدْ ﴾ " *(हे नबी!) भनिदेऊ उनी अल्लाह एक्ला छन । अल्लाह निरपेक्ष छन । उनको कोही सन्तान छैन, न उनी कसैका सन्तान हुन्* " । (**الأحد** : जस्को केही समान होइन । **الصمد** : आवश्यकताको पूर्तिलाई जस तिर ध्यान दिइन्छ) । त जस्ले यो इन्कार गऱ्यो उसले कुफ्र गऱ्यो यद्यपि यस सूरहको अन्तिम पंक्तिलाई इन्कार नगरोस् । र अल्लाह तआलाले भन्नुभएको छ : ﴿ مَا ٱتَّخَذَ ٱللَّهُ مِن وَلَدٍ وَمَا كَانَ مَعَهُۥ مِنْ إِلَٰهٍ ۚ إِذًا لَّذَهَبَ كُلُّ إِلَٰهٍۭ بِمَا خَلَقَ وَلَعَلَا بَعْضُهُمْ عَلَىٰ بَعْضٍ ﴾ " *अल्लाहले न कसैलाई पुत्र बनाएकाछन न उनका साथ अन्य कोही पूज्य नै रहेको छ, यस्तो भएको भए,प्रत्येक पूज्य आफ्नो सृष्टिलाई लिएर अलग्गिने थियो र तिनीहरू एक अर्कामाथि जाइलाग्ने थिए* " । त अल्लाहले यहाँ दुबै कुफ्र बीच फर्क पार्नुभएको छ । र यस कुरामाथि प्रमाण यो छ कि जुन मानिसले लातलाई (अरब स्थित एउटा देवताको नाम) गुहारेर काफिर भएका थिए जबकि लात एउटा सुकर्मी थियो त उनीहरूले उसलाई अल्लाहको पुत्र बनाएका थिएनन्, यसै गरी जुन

मानिसले जिन्न भुत प्रेतलाई पुकारेर काफिर भए उनीहरूले पनि यस्तो कार्य गरेरका थिएनन् । र चारौं मज्हबले इस्लामबाट फिर्ता हुनको अध्यायमा यो कुरा बयान गरेको छ कि यदि कुनै मुस्लिम यो ठान्छ कि अल्लाहको छोरो छ भने काफिर भइहाल्छ र जुन व्यक्ति अल्लाह सित कुनै अरूलाई शिर्क गर्छ भने त्यो पनि काफिर भइहाल्छ, त उनीहरूले (चारौं मज्हबवाला) दुबै किसिक बीच फर्क पार्नुभएको छ ।

**अब्दुन्नबीः** तर अल्लाह तआलाले भन्नुहुन्छ : ﴿أَلَآ إِنَّ أَوۡلِيَآءَ ٱللَّهِ لَا خَوۡفٌ عَلَيۡهِمۡ وَلَا هُمۡ يَحۡزَنُونَ﴾ " *जानिराख, अल्लाहका मित्रहरू न डराउँछन न शोकग्रस्त हुनेछन्* "।

**अब्दुल्लाहः** र हामी पनि यस कुरामाथि ईमान राख्दैछौं र यो कुरा हामीहरूले भन्दैछौं,तर उनीहरू (अल्लाहका मित्रहरू) लाई पूज्नु कदापि जायज छैन । र हामी अल्लाहसँग उनीहरूको उपासना गर्नु र साझेदार ठान्नुलाई नकार्दछौं । अपितु तपाईं माथि उनीहरू सित प्रेम गर्नु र उनको अनुसरण गर्नु तथा उनीबाट प्रकट भएका चमत्कारलाई स्वीकार गर्नु अनिवार्य हो,र पथभ्रष्ट एवम धर्ममा नविन कुरा आविष्कार गर्नेहरू बाहेक प्रत्येक व्यक्ति उनका चमत्कारमाथि ईमान राख्दैछन ।

**अब्दुन्नबीः** जुन मानिसहरूको सम्बन्धमा कुरआन अवतरण भयो तिनीहरू लाइलाह इल्लल्लाहको गवाही दिंदैनथे,र रसूलुल्लाह सल्लल्लाहो अलैहेवसल्लमलाई असत्य ठान्दथे,यसै गरी प्रलय हुने दिनलाई पनि झूठा मान्दथे,र कुरआनलाई पनि असत्य मान्दथे,जादूको कार्यमा संलग्न रह्दथे । र हामी त लाइलाह इल्लल्लाह मुहम्मदुर्रसूलुल्लाहको गवाही पनि दिन्छौं,र कुरआनलाई सत्य पनि मान्दैछौं,र प्रलय हुने दिन सत्यतालाई मान्दैछौं,र नमाज पढ्दैछौं र रोजा पनि राख्दैछौं त कसरी तपाई हामीलाई तिनीहरू जस्तो बनाउनुहुन्छ ?

**अब्दुल्लाहः** तर सम्पूर्ण धर्मगुरूहरू यस कुरामाथि एकमत छन् कि जस व्यक्तिले रसूलुल्लाहलाई कुनै एक कुरामा साँचो मान्यो र कुनै अर्को कुरामा साँचो मानेन त त्यो काफिर छ र इस्लाममा प्रवेश गरेको छैन । यसै गरी जस्ले कुरआनको एक भागमाथि ईमान ल्यायो र अर्को भागलाई इन्कार गऱ्यो । जसरी कसैले तौहीदलाई त स्वीकार गऱ्यो तर नमाजलाई इन्कार गऱ्यो वा तौहीद र नमाजलाई स्वीकार्यो र जकात (धार्मिक दान) को अनिवार्यतालाई नकाऱ्यो वा यी सबै कुराहरूलाई मान्यो र रोजाको अनिवार्यतालाई नकाऱ्यो वा यी सबैलाई त स्वीकाऱ्यो र हजको अनिवार्यतालाई नकाऱ्यो । र जब नबी सल्लल्लाहो अलैहेवसल्लमको कालमा केही मानिसहरू हज गर्ने हेतु निस्केनन त अल्लाह तआलाले तिनीहरूको बारेमा यो श्लोक अवतरण गर्नुभयो : ﴿وَلِلَّهِ عَلَى ٱلنَّاسِ حِجُّ ٱلۡبَيۡتِ مَنِ ٱسۡتَطَاعَ إِلَيۡهِ سَبِيلٗاۚ وَمَن كَفَرَ فَإِنَّ ٱللَّهَ غَنِيٌّ عَنِ ٱلۡعَٰلَمِينَ﴾ " *मानवजाति माथि अल्लाहको यो हक रहेको छ कि जो त्यहाँ सम्म पुग्न समर्थ छ उसले त्यस घरको हज (तीर्थ) गरोस्, र जसले अस्वीकार गर्छ (उसले जानोस् कि अल्लाह) संसारबासीहरू बाट निस्पृह छन* "। र यदि पुनर्जन्म (प्रलय) हुने दिनलाई इन्कार गऱ्यो भने त्यो सम्पूर्ण धर्मगुरूहरूको मत अनुसार काफिर भ इहाल्छ, यसैले गर्दा अल्लाह तआलाले आफ्नो पुनित ग्रन्थमा यो कुरालाई स्पष्ट पार्नुभएको छ कि जुन व्यक्तिले कुरआनको केही भागमाथि ईमान ल्याउँछ र केही अर्को भागलाई नकार्छ भने त्यो वास्तविक काफिर हो,र उहाँले मानिसलाई आदेश दिनुभो कि इस्लाम धर्मका सम्पूर्ण कुराहरूलाई व्यवहारमा ल्याउन्, र जस्ले केही कुरालाई व्यवहारमा ल्यायो र केही अर्को कुरालाई छाड्यो भने त्यो काफिर भ इहाल्छ, त के तपाईं यस कुरालाई स्वीकार्नु हुन्छ वा नकार्नु हुन्छ ?

**अब्दुन्नबी :** हो, म यस कुरालाई स्वीकार गर्दैछु र यो पावन कुरआनमा एक्दमै स्पष्ट हो ।

**अब्दुल्लाह :** जब तपाईंले यो स्वीकार्नुभो कि जस्ले रसूललाई केही कुरामा सत्य मान्यो र नमाजको अनिवार्यतालाई नकाऱ्यो वा प्रत्येक कुरालाई स्वीकाऱ्यो तर प्रलय हुनेलाई नकार्यो त हरेक धार्मिक टोली समक्ष त्यो काफिर भइहाल्यो, र पावन कुरआनले पनि यसै कुरालाई सिद्ध गरेको हो जसरी के माथि यसको चर्चा भ इसकेको छ । जानी राख्नुस! कि निस्सन्देह नबी सल्लल्लाहो अलैहेवसल्लमले ल्याएका कुराहरूमा सब भन्दा महान र उत्तम अनिवार्य कुरा तौहीद (एकेश्वरवाद) नै हो र यो नमाज,जकात (दान) र हज भन्दा पनि महान कार्य हो । र के जब मानिस यी कुराहरू मध्ये कुनै कुरालाई इन्कार गरेर काफिर भइहाल्छ यद्यपि त्यो नबी सल्लल्लाहो अलैहेवसल्लमले ल्याएका कुराहरूलाई व्यवहारमा किन न ल्याओस् त के सम्पूर्ण दूतहरू (रसूल) का धर्म र मूलाधार तौहीदलाई इन्कार गरेर काफिर हुँदैन ? !! सुब्हानल्लाह !! यो कति ठूलो मुर्खता हो !!

र यस कुरामा पनि ध्यान दिनुस कि अल्लाहका रसूल सल्लल्लाहो अलैहेवसल्लमका मित्रहरू (सहाबाहरू) ले यमामा भन्ने ठाउँमा बनु हनीफा कूल सँग धर्मयुद्ध गरेका थिए जबकि तिनीहरूले नबी

सल्लल्लाहो अलैहेवसल्लममाथि ईमान पनि ल्याएका थिए,र लाइलाह इल्लल्लाह मुहम्मदुर्रसूलुल्लाहको साक्षी पनि दिंदैथे र नमाज पनि पढ्दैथे र आजान पनि दिँदैथे ।

**अब्दुन्नबी :** तिनीहरूले त मुसैलमा नबी छ भन्ने गवाही दिन्थे तर हामी भन्छौं कि मुहम्मद सल्लल्लाहो अलैहेवसल्लम पछि कोही नबी आउन सक्दैन ।

**अब्दुल्लाह :** तर तपाईंहरूले नबी,फरिश्ता र सहाबाहरू मध्ये केहीलाई आकाश र धरतीका मालिक ईश्वरको दर्जा सम्म पुगाउनुभएको छ । त जब कसैले कुनै व्यक्तिलाई नबीको दर्जा सम्म पुगाएमा काफिर भइहाल्छ र त्यसको माल सम्पत्ति खोस्नु र रगत बगाउनु हलाल भइहाल्छ र उसले बकेका दुबै गवाही (लाइलाह इल्लल्लाह मुहम्मदुर्रसूलुल्लाह) र पढेरको नमाज केही काम दिंदैन त जुन व्यक्ति कसैलाई अल्लाहको दर्जा सम्म पुगाउँछ भने त्यो त अरू ठूलो काफिर भइहाल्छ । यसै गरी जुन मानिसहरूलाई आदरणीय अली रजियल्लाहो अन्होले आगोले पोल्नुभएको थियो सबैका सबै इस्लामको दाबी गर्नेहरू थिए,र तिनीहरू आदरणीय अलीका साथी र मित्रहरू थिए र नबीका मित्रहरू सित शिक्षा प्राप्त गरेका थिए, तर तिनीहरूको आस्था आदरणीय अलीको बारेमा त्यस्तो नै थियो जस्तो तपाईंहरूको आस्था अब्दुल्कादिर आदिको बारेमा छ । त कसरी नबी सल्लल्लाहो अलैहेवसल्लमका साथीहरूले तिनीहरू सित युद्ध गर्ने र तिनीहरू काफिर छन भन्ने कुरामाथि एकमत भएका थिए ? के तपाईं यो सोच्नुहुन्छ कि सहाबाहरू मुसलमानहरूलाई काफिर ठान्दछन् ? र के तपाईं यो धारणा राख्नुहुन्छ कि सय्यिद बदवी आदिको बारेमा यस्तो खालको आस्था राख्नु केही हानिकारक छैन र अलीको बारेमा यस्तो धारणा राख्नाले मान्छे काफिर भइहाल्छ ?

**यो पनि भन्न सकिन्छः** कि जब अघिका मानिसहरूले शिर्क,अल्लाहका रसूल र कुरआनलाई झूठा ठान्नु तथा प्रलय हुने दिनलाई इन्कार गर्नुको कारणले मात्र काफिर भएका थिए त त्यस अध्यायको के अर्थ हुन सक्छ जस्को चर्चा प्रत्येक मजहबका धर्मगुरूहरूले (باب حكم المرتد) इस्लामबाट मुर्तद हुनको अध्यायमा गरेका छन ? र मुर्तद त्यस मुस्लिमलाई भनिन्छ जो इस्लाम ल्याए पछि काफिर भइहाल्छ । फेरि धर्मगुरूहरूले यस अध्यायमा धेरै कुराहरूको वर्णन गरेका छन जस मध्ये कुनै एक कुरालाई गरेर व्यक्ति काफिर हुन सक्छ, यहाँ सम्म कि तिनीहरूले सानो तिनो कुराको पनि चर्चा यस सम्बन्धमा गरेका छन जस्तो अल्लाहलाई रिसाउने कुरालाई मुखबाट भन्नु चाहे त्यसमा आस्था पनि किन न होस, र चाहे त्यो हँसी र खिल्ली उडाउने रूपमा किन न भनिओस । यसै खालका मानिसहरूको बारेमा अल्लाहले भन्नुभो : ﴿ قُلْ أَبِاللَّهِ وَءَايَٰتِهِۦ وَرَسُولِهِۦ كُنتُمْ تَسْتَهْزِءُونَ ﴿٦٥﴾ لَا تَعْتَذِرُوا۟ قَدْ كَفَرْتُم بَعْدَ إِيمَٰنِكُمْ ﴾ " *भनिदेऊः के तिमीहरू अल्लाह, उनका आयतहरू र उनका रसूल (ईश्दूत) को ठट्टा गर्दैथियौ, अब बहाना न गर, तिमीहरूले ईमान पछि कुफ्र गरिसकेकाछौ* "। हेर्नुस! यिनीहरूको बारेमा कसरी अल्लाह तआलाले स्पष्ट रूपमा भन्नुभो कि यिनीहरूले ईमान ल्याए पश्चात काफिर भइहाले,हालाँकि यिनीहरू अल्लाहका नबी सल्लल्लाहो अलैहेवसल्लम संगै तोबुक युद्धमा थिए र एउटा यस्तो शब्द भनेका थिए जस्को बारेमा तिनीहरूको भनाई थियो यो शब्द हामीले हँसी र दिल्लगीको रूपमा भनियाथियौं ।

**यहाँ त्यो कुराको वर्णन गर्नु पनि लाभदायक छ :** जस्को चर्चा अल्लाहले इस्राईलका सन्तानहरू(यहुदी) को बारेमा गर्नुभो कि उनीहरूले मुस्लिम,ज्ञानी र सदाचारी हुनको साथै आदरणीय मूसा सँग भनेकाथिए ﴿ ٱجْعَل لَّنَآ إِلَٰهًا ﴾ " *हे मूसा हाम्रा निमित्त पनि एउटा मूर्ति बनाइदेऊ* "। र नबी सल्लल्लाहो अलैहेवसल्लमका केही साथीहरूले माग गरे कि हाम्रा लागि पनि जात अन्वात (बैरको रूख) बनाइदिनु होस्, त अल्लाहका नबीले कसम लिएर भन्नुभो यो भनाई त इस्राईलका सन्तानहरूको भनाई झैं छ कि ﴿ ٱجْعَل لَّنَآ إِلَٰهًا كَمَا لَهُمْ ءَالِهَةٌ ﴾ " *हे मूसा यिनीहरूका मूर्तिहरू झैं हाम्रा निम्ति पनि एउटा मूर्ति बनाइदेऊ* "।

**अब्दुन्नबी :** तर इस्राईलका सन्तानहरू र जुन मानिसहरूले नबी सल्लल्लाहो अलैहेवसल्लम समक्ष जात अन्वात नियुक्त गर्ने हेतु प्रस्ताव राखेका थिए तिनीहरू त यस कारणले काफिर भएनन् ।

**अब्दुल्लाह :** यस्को उत्तर यो हो कि इस्राईलका पुत्रहरू र जस्ले नबी सल्लल्लाहो अलैहेवसल्लम सित माग राखेका थिए उनीहरूले त्यो कार्य गरेनन्, र यदि त्यसलाई गर्थे भने काफिर भइहाल्थे । र यस सम्बन्धमा नबी सल्लल्लाहो अलैहेवसल्लमको आज्ञा पालन न गरीकन जात अन्वात बनाउदथे भने काफिर भैहाल्थे ।

**अब्दुन्नबी :** तर यहाँ एउटा कठिनताको कुरा के छ भने आदरणीय ओसामा बिन जैदले जब एक जना व्यक्तिलाई लाइलाह इल्लल्लाह भने पछि पनि हत्या गरेका थिए, त्यस घटनामाथि खण्डन गर्दै नबी सल्लल्लाहो

अलैहेवसल्लमले भन्नुभएको थियो : " *ए ओसामा! उसले लाइलाह इल्लल्लाह पढे पछि पनि तिमीले उसलाई हत्या गरेका थियौ ?* "। र एक अर्को हदीसमा भन्नुभो : " *मानिसहरूले लाइलाह इल्लल्लाह भने सम्म मलाई तिनीहरू सँग युद्ध गर्नको आदेश दिइएको छ* "। त तपाईंले भन्नुभएको कुरा र यी दुबै हदीसहरूको बीच कसरी अनुकूलता हुन सक्छ ? यस सम्बन्धमा मलाई ज्ञान दिनुहोस अल्लाहले तपाईंलाई ज्ञान दिनेछन् ।

**अब्दुल्लाह :** यो कुरा सबैलाई थाहा छ कि नबी सल्लल्लाहो अलैहेवसल्लमले यहुदी सँग धामिर्क युद्ध गर्नुभो र तिनीहरूलाई गाली गर्नुभो हालाँकि तिनीहरू लाइलाह इल्लल्लाह पनि भन्दथे । र नबीका साथीहरूले बनु हनीफा कूल सँग युद्ध गरेका थिए हालाँकि तिनीहरू पनि लाइलाह इल्लल्लाह मुहम्मदुर्रसूलुल्लाह भन्दै र नमाज पढदै थिए । यसै गरी आदरणीय अलीले जुन मानिसलाई आगोमा पोल्नुभएको थियो । र तपाईं यो कुरा सधैं पढ्नुहुन्छ कि जसले प्रलय हुने दिनलाई इन्कार गऱ्यो त्यो काफिर भयो र उसलाई हत्या गर्नु जायज भयो यद्यपि त्यो लाइलाह इल्लल्लाह किन न पढोस् । र यो कुरा पनि तपाईंको ज्ञानमा होला कि जस्ले इस्लामका आधारहरू मध्ये कुनै आधारलाई इन्कार गऱ्यो भने त्यो काफिर भयो र उसलाई लाइलाह इल्लल्लाह पढे पछि पनि हत्या गर्नु जायज छ । त जब इस्लामका शाखा र अमहत्वपूर्ण कुरालाई नकार्नेलाई लाइलाह इल्लल्लाह केही लाभ पुऱ्याउन सक्दैन भने जसले तौहीद र इस्लामको आधारभूत कुरालाई जो सम्पूर्ण रसूलहरूको धर्म हो नकाऱ्यो भने उसलाई कसरी लाइलाह इल्लल्लाह लाभ पुऱ्याउन सक्छ ? र शायद कि तपाईंले यी हदीसहरूको अर्थ बुझ्नुभएको होइन ।

**ओसामाको हदीसको अर्थ यो हो किः** ओसामाले एक जना मान्छेलाई इस्लामको दाबी गरे पछि पनि हत्या गर्नुभएको थियो किनकि उहाँलाई यो भ्रम भयो कि उसले आफ्नो ज्यान र सम्पत्तिलाई सुरक्षित राख्ने हेतु लाइलाह इल्लल्लाह पढेको थियो । र कुनै यस्तो व्यक्ति जुन इस्लामलाई प्रकट गर्छ त्यसबाट इस्लाम बिरुद्ध केही कुरा स्पष्ट नभए सम्म त्यसलाई सुरक्षा दिनु अनिवार्य हो । अल्लाह तआला भन्नुहुन्छ : ﴿ يَٰٓأَيُّهَا ٱلَّذِينَ ءَامَنُوٓاْ إِذَا ضَرَبۡتُمۡ فِي سَبِيلِ ٱللَّهِ فَتَبَيَّنُواْ ﴾ " *हे ईमानवालाहरू हो! जब तिमी अल्लाहको मार्गमा गइराखेका हुन्छौ त राम्ररी जानकारी प्राप्त गर* "। अर्थात जाँच-बुझ गरिलेऊ । त यो आयत यस कुरामाथि प्रमाण छ कि जाँच-बुझ र अनुसन्धान गर्नु तथा हातलाई रोके राख्नु अनिवार्य छ । र यदि इस्लामको विरुद्ध केही कुरा पाइन्छ भने त्यसलाई अल्लाहको यस भनाई ﴿ فَتَبَيَّنُوٓاْ ﴾ को प्रकाशमा हत्या गरिदिनु पर्छ । र यदि लाइलाह इल्लल्लाह भने पछि हत्या गर्नु जायज छैन भने अनुसन्धान गर्ने आदेशको केही फायदा हुँदैन ।

**र दोस्रो हदीसको अर्थ पनि त्यही हो जसलाई मैले वर्णन गरेको छु,** र जसले तौहीद र इस्लामलाई प्रकट गर्छ र प्रष्ट रूपमा त्यसको विरुद्ध कार्य गर्दैन भने उ सित हात रोक्नु जरूरी छ । यस माथि प्रमाण अल्लाहका नबी सल्लल्लाहो अलैहेवसल्लमको यही भनाई हो : " *ए ओसामा! उसले लाइलाह इल्लल्लाह पढे पछि पनि तिमीले उसलाई हत्या गरेका थियौ ?* "। र यो पनि भनाई यस्को प्रमाण होः " *मानिसहरूले लाइलाह इल्लल्लाह भने सम्म मलाई तिनीहरू सँग युद्ध गर्नको आदेश दिइएको छ* "। र नबी सल्लल्लाहो अलैहेवसल्लमले नै खवारिज (एउटा पथभ्रष्ट समूह) को बारेमा भन्नुभो : " *तिनीहरूलाई जहाँ पनि पाऔ समातेर हत्या गरिदेऊ* "। हालाँकि तिनीहरू मानिसहरू मध्ये सब भन्दा अधिक अल्लाहको उपासना र स्तुति गर्नेवाला थिए, यहाँ सम्म कि सहाबाहरू (नबीका मित्रहरू) ले तिनीहरूको उपासन हेरे पछि आफ्नो उपासना अर्चनालाई तुच्छ ठान्दथे,र तिनीहरूले सहाबाको छाया क्षेत्रमा रही शिक्षा प्राप्त गरेका थिए । र जब तिनीहरू बाट इस्लामको विरुद्ध कार्य प्रकट भयो भने तिनलाई तिनीहरूले भनेको लाइलाह इल्लल्लाह, गरेको अधिक पूजा-पाठ र दाबी गरेको इस्लामले हत्या गर्नुबाट जोगाएको थिएन ।

**अब्दुन्नबी :** नबी सल्लल्लाहो अलैहेवसल्लमको यस वाणीको बारेमा तपाईं के भन्नुहुन्छः कि प्रलयको दिन मानिसहरू आदरणीय आदम सित मद्दत र सहयोग माग्नेछन,अनि आदरणीय नूह सित,अनि आदरणीय इब्राहीम सित, फेरि मूसा,फेरि ईसा सित, र यीनीहरू सबैका सबै इन्कार गरिदिनेछन्,यहाँ सम्म सबै मानिस मिलेर नबी सल्लल्लाहो अलैहेवसल्लम समक्ष आउनेछन । यो यसमाथि प्रमाण छ कि अल्लाह बाहेक अरू सित सहयोग माग्नु शिर्क छैन ।

**अब्दुल्लाह :** तपाईं वास्तविक समस्या सँग मिश्रण गर्नुहुन्छ,जीउँदो,उपस्थित प्राणी सित जसमाथि त्यो सामर्थ्य राख्दछ माग्नु हामी पनि जायज ठान्दैछौं, जस्तो कि अल्लाह तआलाले भन्नुहुन्छः ﴿ فَٱسۡتَغَٰثَهُ ٱلَّذِي مِن شِيعَتِهِۦ عَلَى ٱلَّذِي مِنۡ عَدُوِّهِۦ ﴾ " *अनि उनको समुदायको व्यक्तिले शत्रु पक्षको व्यक्ति विरुद्ध*

*मद्दतको लागि पुकार्यौ*"। र जसरी मान्छे आफ्नो साथी सित युद्ध आदि र सामर्थ्य भएको कुरामा सहयोग माग्दैछ। र हामी त्यस सहयोग माग्नुलाई इन्कार गर्दैछौं जुन कि इबादत हो र यस्तो वस्तुमा अरूलाई गुहार्नु जस माथि अल्लाह बाहेक अरू कोही समर्थ हुँदैन र जसलाई तपाईंहरूले सदाचारीहरूको चिहान समक्ष वा उनको अउपस्थितीमा गर्दै आइरहेछौ। र प्रलय हुने दिन मानिसहरूले नबीहरूलाई मद्दतको निम्ति गुहार्नेछन त यस्को तात्पर्य यो छ कि तिनीहरूले उनीहरू सित चाहनेछन कि उनी चाडैं हिसाब किताब लिने हेतु अल्लाह सित दुआ गरुन ताकि स्वर्गमा जाने मानिसहरू प्रलयको चौरको कष्टबाट आफुलाई जोगाउन्। र यस्तो खालको सहयोग तथा मद्दत माग्नु लोक परलोक दुबैमा जायज छ कि तपाईं कुनै राम्रो र सदाचारी कहाँ जुन तपाईं सँग उठ-बस गर्छ गएर भन्नुस कि तपाईं अल्लाह सित मेरो हकमा दुआ गरिदिनुहोस्, जस्तो कि नबी सल्लल्लाहो अलैहेवसल्लमका मित्रहरूले उनको जीवन कालमा यस प्रकारको सहयोग माग्दैथे,तर उनको मृत्यु पश्चात कसैले कहिल्यै यस्तो गरेका थिएन। सहाबाहरूले नबीको चिहान सित केही कुरा माग्नु भएका थिएनन्, बरु सलफ (सहाबा,ताबईन र तब्अताबईन आदि) ले चिहान नजीक यस्तो गर्ने व्यक्तिमाथि धेरै खण्डन गरेका छन्।

**अब्दुन्नबी :** तपाईं के भन्नुहुन्छ इब्राहीम अलैहिस्सलामको कहानीको बारेमा जब उहाँलाई आगोमा फ्याक्नको पूरै कारवाही भइसकेको थियो तब जिब्रईल भन्ने फरिश्ता हावामा प्रकट भएर सोध्नुभो कि हे इब्राहीम ! के तपाईं सँग केही आवश्यकता र माग्ने कुरा छ ? आदरणीय इब्राहीम अलैहिस्सलामले भनेः तपाईं सित माग्ने त केही कुरा छैन (म त मात्र अल्लाह सितै माग्नेछु)। त यदि जिब्रईल सित मद्दत माग्नु शिर्क हुन्थ्यो त उहाँले इब्राहीम समक्ष किन यस्तो प्रस्ताव राख्नुभएको थियो ?

**अब्दुल्लाह :** यो पहिलो भ्रम जस्तो नै एउटा भ्रम हो,र यो हदीस सहीह छैन,र यदि यस हदीसलाई सहीह पनि मन्छौं भने आदरणीय जिब्रईलले यस्तो कुरा आदरणीय इब्राहीम माथि पेश गर्नुभो जस माथि उनी समर्थ थिए, जस्तो कि अल्लाह तआलाले उनको सम्बन्धमा भन्नभएको छः ﴿ عَلَّمَهُۥ شَدِيدُ ٱلْقُوَىٰ ﴾ "उनलाई सिकाए अत्यन्त शक्तिशाली "। त यदि जिब्रईल अलैहिस्सलामले अल्लाहको अनुमति बाट आदरणीय इब्राहीमलाई तयार पारीएको आगो र त्यस वरि परिको धरती तथा पहाडहरूलाई पूर्व वा पश्चिममा फ्याँक्न चाहन्थे भने त्यस माथि सामर्थ्य राख्दैथे। यस्को उदाहरण त्यस धनवानको भाँति हो जस्ले कुनै दीन दुःखी मान्छेमाथि उसबाट पैंचो लिएर आफ्नो आवश्यकता पूरा गर्ने प्रस्ताव राखेको छ,तर उस गरीबले अल्लाहले नै रोजी र अन्न दिने छन भनी त्यो सापट लिनबाट इन्कार गर्‍यो र सन्तोष गर्‍यो ताकि उसमाथि कसैको उपकार न होस्। त तपाईंले कसरी यस कार्यलाई र गुहार्नु तथा सहयोग माग्नुलाई जो कि एउटा इबादत हो र शिर्कलाई बराबर गर्नुभएको हो ?

**हे दाय ! यो कुरा जानी राख कि जुन मानिसमा नबी सल्लल्लाहो अलैहेवसल्लमलाई अल्लाहले पठाउनुभो ती मानिसहरूको शिर्क यस आधुनिक कालका मानिसहरूको शिर्क भन्दा धेरै कम थियो र यस्को तीनवटा कारण छन :**

**पहिलोः** अघिका मानिसहरू अल्लाह सँग शिर्क मात्र सुख र सहकालमा गर्दथे,तर दुःख र कष्टको बेलामा शुद्ध आत्माले मात्र अल्लाहको पूजा गर्दथे,जस्तो कि अल्लाह तअला भन्नुहुन्छः

﴿ فَإِذَا رَكِبُوا۟ فِى ٱلْفُلْكِ دَعَوُا۟ ٱللَّهَ مُخْلِصِينَ لَهُ ٱلدِّينَ فَلَمَّا نَجَّىٰهُمْ إِلَى ٱلْبَرِّ إِذَا هُمْ يُشْرِكُونَ ﴾ "*अनि जब यिनीहरू डुंगामा सवार हुन्छन तब आस्थालाई विशिष्ट गरी उनलाई नै पुकार्दछन्, जब उनले तिनीहरूलाई बचाएर जमीनसम्म पुर्‍याइदिन्छन तब तत्कालै तिनीहरू शिर्क गर्न थाल्छन्*"। र अल्लाहको यो वाणी पनि यस्को प्रमाण छ :

"﴿ وَإِذَا غَشِيَهُم مَّوْجٌ كَٱلظُّلَلِ دَعَوُا۟ ٱللَّهَ مُخْلِصِينَ لَهُ ٱلدِّينَ فَلَمَّا نَجَّىٰهُمْ إِلَى ٱلْبَرِّ فَمِنْهُم مُّقْتَصِدٌ ۚ وَمَا يَجْحَدُ بِـَٔايَـٰتِنَآ إِلَّا كُلُّ خَتَّارٍ كَفُورٍ ﴾ *र जब (समुद्रमा) लहरले तिनीहरूलाई छाताहरूझैं ढपक्क ढाक्छन् तब तिनीहरू आफ्नो धर्मलाई अल्लाहकै लागि विशुद्ध पारेर उनलाई पुकार्दछन् तर जब हामी तिनीहरूलाई बचाएर जमीन तिर पुर्‍याउँछौं तब तिनीहरू मध्ये केही मध्यमार्गी हुन्छन, र हाम्रा आयतहरूलाई केवल विश्वासघाती र कृतघ्न व्यक्तिले नै अस्वीकार गर्छ*"। ती मुश्रिकहरू (बहुदेववादीहरू) जस सँग अल्लाहका रसूलले युद्ध गर्नुभएको थियो सुखको अवस्थामा अल्लाहलाई र अरूलाई पनि पुकार्दथे,तर दुविधाको बेलामा जम्मै मिथ्या भग्वानहरूलाई बिर्सीकन मात्र एक अल्लाहलाई गुहार्दथे। तर यस आधुनिक कालका मुश्रिकहरू सुख र दुःख दुबै अवस्थामा अल्लाह र उनी सँग अरूलाई गुहार्दछन्,र यदि दुख तथा कष्ट अधिक बढछ भने अल्लाहलाई बिर्सी या रसूलल्लाह,या हुसैन इत्यादि शब्दले अरूलाई गुहार्दछन्। तर यस वास्तविक्ताको समझना गर्नेवाला को हो ?

**दोस्रोः** अधिका मानिसहरू अल्लाह सँग सदाचारी र अल्लाहका मित्रहरूलाई गुहार्दथे जस्तो नबी वा वली वा फरिश्ता ईत्यादि वा कम्तीमा ढुंगा र रूखलाई पुकार्दथे जुन अल्लाहको आज्ञापालनमा लीन रहनेछन र कहिल्यै अवज्ञा गर्दैनन् । तर यस जमानामा मानिस सब भन्दा ठूलो पापीलाई पनि अल्लाहको साझेदार बनाई पुकार्दछन । र जुन व्यक्ति सदाचारीमा र ढुंगा तथा रूखमा जुन कहिल्यै अल्लाहको अवज्ञा गर्दैनन् आस्था राख्दछ त्यो अलिकति सरल छ त्यस बाट जुन पापी र अपराधीलाई पूज्य बनाई पुकार्दछ ।

**तेस्रोः** नबी सल्लल्लाहो अलैहेवसल्लमको जमानाका सम्पूर्ण मुश्रिकहरूको शिर्क तौहीदुल्ओलुहियत (मात्र एक अल्लाहको इबादत गर्नु) मा थियो,तौहीदे रबुबियत (अल्लाहलाई जन्मदाता,अन्नदाता आदि मान्नु) मा थिएन । तर पछिका मुश्रिकहरूको शिर्कको यो बिल्कुलै विरुद्ध हो किनकि यिनीहरूको शिर्क प्रशस्त तौहीदे रबुबियतमा पाइन्छ जसरी कि तौहीदे ओलुहियतमा पाउँदैछ । किनभने यिनीहरूले चाहिं प्रकृति (नेचर) लाई संसारको प्रबन्धक तथा त्यसमा हेरफेर गर्नेवाला हो र जीउँदो गर्नु एवम् मृत्यु दिनु इत्यादि प्रकृतिको शक्तिमा ठानेका छन ।

**म आफ्नो यो कुराकानी एउटा ठूलो समस्याको वर्णन गरेर टुंग्याउन चाहन्छु जो उपरोक्त कुराबाट नै सम्झना गर्न सकिन्छ,यसमा केही मतभेद छैन कि तौहीदलाई हृदयमा आस्था राखेर,मुखले वचन दिएर तथा अंगहरूले व्यवहार गरेर स्वीकार गर्नुपर्छ,यदि यी तीनौं कुराहरू मध्ये एउटा कुरा पनि पछि भयो भने मान्छे मुस्लिम रहन सक्तैन,र यदि कसैले तौहीदलाई चिने पछि त्यसलाई व्यवहारमा ल्याएन त्यो खुल्ला विरोधी र काफिर भइहाल्छ जस्तो कि फिर्औन र इब्लीस आदि ।**

यस कुरामा अधिकांश मानिसहरूले गल्ती गरेर भन्ने गर्छन् कि यो कुरा त सत्य हो तर यसलाई व्यवहारमा ल्याउनु गाह्रो छ, र हाम्रो देश एवम समुदायमा यस्तो गर्नु राम्रो मान्दैनन् र उनको उपद्रव तथा फसादबाट आफुलाई जोगाउने हेतु उनीहरूको व्यवहारको अनूसरण गरी चाटुकारी तथा सरलताले कार्य गर्नु पर्छ । तर यस मुर्खलाई थाहा छैन कि अधिकतर कुफ्रका अगुवाहरूलाई सत्यको ज्ञान थियो र केही न केही बहाना र निहुँ बनाएर त्यस सत्यलाई छाडे, जस्तो कि अल्लाह तआलाले भन्नुभो :

﴿ اشْتَرَوْا بِآيَاتِ اللَّهِ ثَمَنًا قَلِيلًا فَصَدُّوا عَن سَبِيلِهِ ۚ إِنَّهُمْ سَاءَ مَا كَانُوا يَعْمَلُونَ ﴾ " *उनीहरूले अल्लाहका आयतहरूलाई अति कम मूल्यमा बेचिदिए तथा उनको मार्गबाट रोके, अत्याधिक नराम्रो छ जुन कुरा यिनीहरूले गरिराखेका छन* "। र जुन व्यक्ति तौहीदलाई न सम्झेर हृदयमा आस्था नराखीकन मात्र प्रत्यक्ष रूपमा तौहीदलाई व्यवहारमा ल्याउँछ भने ऊ पक्कै मोनाफिक हो र त्यो वास्तविक र असल काफिर भन्दा तुच्छ र छट्या हो,जसरी कि अल्लाह तआला भन्नुहुन्छः ﴿ إِنَّ الْمُنَافِقِينَ فِي الدَّرْكِ الْأَسْفَلِ مِنَ النَّارِ ﴾ " *निःसन्देह मुनाफिकहरू नरकको सब भन्दा तल्लो खण्डमा जानेछन* "।

र यो समस्या राम्ररी स्पष्ट भइहाल्छ जब तपाईं मानिसहरूको अवस्थाको बारेमा चिन्तन मनन गर्नुहुन्छ त हेर्नुहुन्छ कि कतिपयले सत्यलाई चिनेर सांसारिक लाभमा कमी आउनको भयले त्यसलाई व्यवहारमा ल्याएन जस्तो कि कारून, वा आदर सत्कारमा कमी आउनको भयले जस्तो कि हामान, वा आफ्नो अधिराज्य समाप्त हुनको डरले सत्यलाई चिनेर छाडेका थिए । र कतिपयलाई हेर्नुहोला कि मुखले सत्यतालाई व्यवहारमा त ल्याउँछ तर मुटुले होइन जस्तो कि मोनाफिकहरू, हृदयमा के आस्था हुन्छ भने उ सित सोधे पछि मलाई ज्ञान छैन भनी उत्तर दिन्छ ।

**तर तपाईं माथि अल्लाहको किताबमा वर्णन भएका दुई आयतहरूको सम्बन्धमा सम्झना गर्नु अत्यन्त आवश्यक छ :**

**पहिलो आयतः** माथि यस्को चर्चा आइसकेको हो, र त्यो अल्लाहको यो वाणी होः ﴿ لَا تَعْتَذِرُوا قَدْ كَفَرْتُم بَعْدَ إِيمَانِكُمْ ﴾ " *तिमी बहाना नबनाउ निस्सन्देह तिमी आफ्नो ईमान ल्याए पश्चात बेईमान भयौं* "। जब तपाईंले यो जान्नुभो कि नबी सल्लल्लाहो अलैहेवसल्लम सँग जुन मानिसहरूले रोम (इटली) को विरुद्ध युद्ध गरेका थिए ती मध्ये केही मानिसले ठट्टा र हँस्सीको रूपमा त्यो कुरा भन्नाले काफिर भएका थिए, तपाईं समक्ष यो कुरा प्रष्ट भइहाल्छ कि यदि कुनै व्यक्तिले धन सम्पत्ति वा आदर सत्कारमा कमी हुनको डरले वा कसैको हृदयमा प्रसन्नता हाल्नको लागि कुफ्र (अवज्ञा) सित कुराकानी गर्छ वा त्यसलाई व्यवहारमा ल्याउँछ भने यो कुरा महाठूला हो हँस्सी र उपहासको रूपमा कुनै कुरा गर्नु भन्दा, किनकि अधिकांश ठट्टा र दिल्लगी गर्नेवाला मानिसलाई हँसाउने हेतु मुखले जुन कुरा भन्दैछ त्यसको आस्था हृदयमा राख्दैन । तर जुन मान्छे सांसारिक लाभ वा हानिको कारणले कुफ्रको कुरा गर्छ वा त्यसलाई व्यवहारमा ल्याउँछ त उसले शैतानको

वाचालाई पूरा गऱ्यो ﴿ ٱلشَّيۡطَٰنُ يَعِدُكُمُ ٱلۡفَقۡرَ وَيَأۡمُرُكُم بِٱلۡفَحۡشَآءِ ﴾ " *शैतानले तिमीहरूलाई निर्धनताबाट तर्साउँछ र निर्लज्जताका कामहरू गर्नका लागि आदेश दिन्छ* " र अल्लाहले दिनुभएको वाचालाई सत्य मान्दैन ﴿ وَٱللَّهُ يَعِدُكُم مَّغۡفِرَةٗ مِّنۡهُ وَفَضۡلٗاۗ ﴾ " *र अल्लाहले आफ्नो तर्फबाट तिमीहरूलाई क्षमा एवम कृपाको वचन दिन्छन* " | र अल्लाहले दिने यातना बाट डराउँदैन ﴿ فَلَا تَخَافُوهُمۡ وَخَافُونِ إِن كُنتُم مُّؤۡمِنِينَ ﴾ " *अतः तिमीहरू आस्थावान हौ भने तिनीहरू सँग नडराऊ, केवल म सँग डराऊ* " | त के जुन व्यक्तिको यो अवस्था हुन्छ भने त्यो अल्लाहका मित्रहरू मध्ये हुन्छ वा शैतानका मित्रहरू मध्ये |

**दोस्रो आयतः** ﴿ مَن كَفَرَ بِٱللَّهِ مِنۢ بَعۡدِ إِيمَٰنِهِۦٓ إِلَّا مَنۡ أُكۡرِهَ وَقَلۡبُهُۥ مُطۡمَئِنُّۢ بِٱلۡإِيمَٰنِ وَلَٰكِن مَّن شَرَحَ بِٱلۡكُفۡرِ صَدۡرٗا فَعَلَيۡهِمۡ غَضَبٞ مِّنَ ٱللَّهِ وَلَهُمۡ عَذَابٌ عَظِيمٞ ﴾ " *जो व्यक्ति आफ्नो ईमान पछि अल्लाह प्रति अनास्था प्रकट गर्छ त्यो व्यक्ति बाहेक जसलाई बाध्य तुल्याइयो र उसको हृदय ईमान प्रति दृढ छ, तर जसले स्पष्ट रूपमा अनास्था प्रकट गर्छ तिनीहरूमाथि अल्लाहको क्रोध रहेको छ, र तिनीहरू लागि ठूलो यातना पनि रहेको छ* " |

हृदय ईमानबाट संतुष्ट भई विवश भइएको मान्छे बाहेक अल्लाहले कसैको मिष र निहुँलाई स्वीकार गर्नुभएको होइन,यस्को अतिरिक्त अरू मानिसहरू त तिनीहरूले कुफ्र गरे चाहे त्यसलाई कुनै डरले गरोस् वा लालसाले, वा कसैको आदर सत्कारको लागि गरोस् आफ्नो देश,जहान परिवार र कूल तथा धन सम्पत्तिको लागि गरोस्, वा चाहे हँस्सी ठट्टाको रूपमा गरोस् | विवश भएको व्यक्तिको अलावा यदि कसैले कुनै कारण पनि कुफ्र गऱ्यो भने त्यो काफिर भइहाल्छ | किनकि माथि वर्णन गरिएको आयत बाट यही कुरा प्रकट हुन्छ कि मानिस वचन र कार्य माथि मात्र विवश हुन सक्छ, तर हृदयमा रहेको आस्थामाथि कसैले कसैलाई विवश गर्न सक्तैन | अल्लहा तआलाको वाणी छ : ﴿ ذَٰلِكَ بِأَنَّهُمُ ٱسۡتَحَبُّواْ ٱلۡحَيَوٰةَ ٱلدُّنۡيَا عَلَى ٱلۡأٓخِرَةِ وَأَنَّ ٱللَّهَ لَا يَهۡدِي ٱلۡقَوۡمَ ٱلۡكَٰفِرِينَ ﴾ " *किनभने तिनीहरूले सांसारिक जीवनलाई परलोकमाथि प्राथमिकता दिए, र अल्लाह कृतघ्न व्यक्तिलाई सुबाटो देखाउँदैनन्* " | अल्लाह तआलाले यहाँ स्पष्ट गर्नुभो कि हृदयमा रहेको आस्था वा धर्मबाट अज्ञानता र कपट तथा कुफ्र सित प्रेम गर्नाले यातना हुने छैन,बरु सांसारिक वस्तुहरूलाई धार्मिक वस्तुहरूमाथि प्राथमिकता दिनुको कारणले यातना हुनेछ | (र सर्वज्ञाता त मात्र अल्लाह नै हुनुहुन्छ) |

अल्लाह तपाईंलाई सुबाटो देखाउन् कि अहिले पनि यत्रो प्रमाणहरू हेरे पछि त्यो समय आएको होइन कि तपाईं अल्लाह तिर फर्केर आउनुस र अतीतका मिथ्या आस्थालाई छाडी अल्लाह सित तौबा (प्रायश्चित) गर्नुस्, किनकि तपाईंले सुन्नुभो कि यो समस्या धेरै ठूलो,भयंकर र डरलाग्दो हो |

**अब्दुन्नबी :** म अल्लाह सित आफ्नो पापको लागि क्षमा याचना गर्दछु र अल्लाह समक्ष तौबा गर्दछु र गवाही दिन्छु कि अल्लाह बाहेक कोही सत्य पूज्य होइन अनि मुहम्मद अल्लाहका रसूल हुन | र अल्लाह बाहेक जस जसको पूजा म अघि गरिरहेकोथिएं सबैलाई इन्कार गर्दछु, हे अल्लाह मेरा सम्पूर्ण पापलाई क्षमा गरिदिनुहोस र मलाई दया,नम्रता र क्षमाको दृष्टिले हेर्नुहोस भनी म अल्लाह सित दुआ गर्दछु | हे अल्लाह! मृत्यु हुने सम्म मलाई सत्य आस्थामाथि दृढ राख्नुहोस् | र यो पनि अल्लाह सित दुआ गर्दछु कि अल्लाह तपाईंलाई पनि हे मेरो दाय अब्दुल्लाह ! यस शुभउपदेश माथि भलाई देऊन्, किनकि धर्म उपदेश गर्नुको नाम नै हो | र तपाईंले म र मेरो नाम अब्दुन्नबीमाथि जो खण्डन गर्नुभो त्यसमाथि पनि अल्लाह तपाईंलाई सुख शान्ति देऊन् | र तपाईंलाई म शुभसूचना दिन चाहन्छु कि मैले आफ्नो नाम अब्दुन्नबीको सट्टामा अब्दुर्रहमान राखेको छु | तपाईंले मेरो आन्तरिक मिथ्या आस्थामाथि इन्कार गर्नुभो तपाईंको लागि धन्यवाद! यस मिथ्या र पथभ्रष्टता माथि यदि मेरो मृत्यु भएको थियो भने म कहिल्यै सफलता र मुक्ति प्राप्त गर्ने थिएन |

तर म अन्तमा एउटा जिज्ञासा राख्न चाहन्छु कि तपाईं म समक्ष केही यस्ता कुराहरूको वर्णन गर्नुस जुन कुरामा मानिसहरूले अत्याधिक रूपमा चूक गर्दछन् |

**अब्दुल्लाहः** ठीकै छ, ध्यान पूर्वक मेरो कुरा सुन्नुस |

❁ किताबो सुन्नत (कुरआन र हदीस) को जुन प्रमाणमा मतभेद भएको छ त्यसलाई फित्ना र फसाद तथा उपद्रव गर्ने हेतु अनुसरण गर्नुबाट आफुलाई जोगाउनुस्, किनभने त्यसको वास्तविक विश्लेषण अल्लाह बाहेक अरू कसैलाई थाहा छैन | तर तपाईंको आचरण बुद्धि र ज्ञानमा दृढता धर्मगुरूहरू जस्तो हुनु पऱ्यो जुन यस्तो खालका प्रमाणयरूको सम्बन्धमा भन्ने गर्छन् : ﴿ ءَامَنَّا بِهِۦ كُلّٞ مِّنۡ عِندِ رَبِّنَاۗ ﴾ " *हामीले यिनीमाथि ईमान ल्यायौं, यी सबै हाम्रा पालनकर्ताको तर्फबाट हुन्* " | मतभेत एवं भ्रम भएको प्रमाणको बारेमा रसूलुल्लाह सल्लल्लाहो अलैहेवसल्लमको वाणी हो : " *शंकास्दप कुरालाई छाडी बिना शंकाको कुरालाई*

व्यवहारमा ल्याऊ "। र नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभो : " जुन व्यक्ति भ्रमात्मक र सन्देहास्पद कुराबाट आफुलाई जोगाउछ त उसले आफ्नो धर्म र इज्जतलाई जोगाउछ, र जुन व्यक्ति भ्रम तथा शंकामा पर्छ सो हराम र बर्जित गरिएको कुरामा फसीं हाल्छ "। एउटा अरू हदीसमा नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " बुराई त्यो हो जो तिम्रो छातीमा खट्कोस् र तिमीले कुनै व्यक्तिलाई त्यसको थाहा होस् भनी मनपराउँदैन "। र नबी सल्लल्लाहो अलैहेवसल्लमको यो वाणी पनि ध्यान दिएर सुन्नुसः " आफ्नो हृदय सँग सोध, आफ्नो जीउ सँग सोध्-तीन पटक यो कुरा भन्नुभो- नेकी र पूण्यको कार्य त्यो हो जसमाथि हृदय संतुष्ट होस् र पापको कार्य त्यो हो जो जीउमा खट्कोस् र छातीमा भ्रम उत्पन्न गरोस्, यद्यपि मानिसले तिमीलाई फत्वा (धार्मिक सुझाउ) किन न दिऊन् अनि तिमीलाई फत्वा किन न दिऊन् "।

❁ आफुलाई मनको कुअभिलाषाबाट जोगाउ, किनकि अल्लाह तआलाले आफ्नो यस वाणीमा यसबाट मनाही गर्नुभएको हो : ﴿ أَرَأَيْتَ مَنِ اتَّخَذَ إِلَٰهَهُ هَوَاهُ ﴾ " के तिमीले त्यस व्यक्तिलाई देख्यौ जसले आफ्नै मनोकामनालाई आफ्नो उपास्य बनाएको छ "।

❁ कुनै खास मानिसको राय-सल्लाह र विचार तथा पुर्खाले गरेको परम्पराको बारेमा हठी एवं कट्टर हुनबाट आफुलाई जोगाऊ, किनभने यो कुरा व्यक्तिले सत्यलाई स्वीकार्ने बीच बाधा हाल्छ। किनकि सत्यता मोमिनको गुमाइएको वस्तु हो जहाँ पनि त्यो पाइयोस् मोमिन त्यसको अधिक हकदार हुन्छ। अल्लाह भन्नुहुन्छः ﴿ وَإِذَا قِيلَ لَهُمُ اتَّبِعُوا مَا أَنزَلَ اللَّهُ قَالُوا بَلْ نَتَّبِعُ مَا أَلْفَيْنَا عَلَيْهِ آبَاءَنَا ۗ أَوَلَوْ كَانَ آبَاؤُهُمْ لَا يَعْقِلُونَ شَيْئًا وَلَا يَهْتَدُونَ ﴾ " र जब तिनीहरूलाई अल्लाह द्वारा अवतरित धर्मको अनुसरण गर्न भनिन्छ तब तिनीहरू भन्छनः हामी त त्यसैको अनुसरण गर्नेछौं जसमाथि आफ्नो पूर्वजहरूलाई पाएका छौं, के तिनीहरू आफ्ना पुर्खाहरूकै अनुसरण गर्नेछन् चाहे तिनीहरूले कत्ति पनि बुद्धि नपुऱ्याएका होऊन् र न सत्मार्ग नै प्राप्त गरेका होऊन् "।

❁ काफिरहरू जस्तो स्वरूप बनाउनु बाट आफुलाई जोगाऊ, किनभने त्यो प्रत्येक कष्टको जरो हो, नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " जो जस समुदाय जस्तो सरूपता अख्तियार गर्छ त्यो ती मध्ये नै भइहाल्छ "।

❁ अल्लाह बाहेक अरूमाथि भरोसा गर्नुबाट आफुलाई टाढा राख, किनकि अल्लाह तआला भन्नुहुन्छ : ﴿ وَمَن يَتَوَكَّلْ عَلَى اللَّهِ فَهُوَ حَسْبُهُ ﴾ " र जस्ले अल्लाहमाथि भरोसा गर्नेछ उनी त्यसको लागि पर्याप्त हुनेछन "।

❁ अल्लाहको अवज्ञामा कुनै प्राणीको आज्ञापालन न गर, नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभो : " जन्मकर्ताको अवज्ञामा कुनै प्राणीको आज्ञापालन गर्नु उपयुक्त हुँदैन "।

❁ अल्लाह सँग खराब धारणा राख्नुबाट आफुलाई जोगाऊ, किनभने अल्लाह तआलाले हदीस कुद्सीमा भन्नुहुन्छ : " म आफ्नो दासको अनुमान एवम कल्पना समीप नै हुँदैछु "।

❁ कुनै दुःख र कष्टलाई घटित हुनु भन्दा अघि टाढा गर्ने हेतु बाला, डोरो इत्यादि पहिर्नुबाट आफुलाई जोगाऊ, वा दुःख तथा कष्टलाई घट्नु पश्चात टाढा गर्नको लागि न पहिर।

❁ बुरो नजरबाट बच्नको निमित्त यन्त्र र जन्तर लाउनुबाट पनि आफुलाई जोगाऊ, किनकि यो शिर्क हो, नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभो : " जसले कुनै वस्तु झुन्ड्यायो त त्यसलाई त्यस तिर फर्काइदिनेछ "।

❁ ढुंगो, रूख, चिन्ह र प्रसादहरूबाट बर्कत प्राप्त (बृद्धिको आकांक्षा) न गर, किनभने त्यो शिर्क हो।

❁ कुनै वस्तुबाट अपशकुन लिनुबाट पनि आफुलाई टाढा राख, किनभने यो पनि शिर्क हो, नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभो : " अपशकुन लिनु शिर्क हो, अपशकुन लिनु शिर्क हो, (३ पटक यो कुरा भन्नुभो) "।

❁ जादूगर (चटकी) र ज्योतिषीहरूको कुरालाई सत्य न मान, जुन अन्तरयामी हुनको दाबी गर्दछन, र राशिफललाई प्रकट गर्दछन्, र मानिसको भलाई र बुराईको कुरा गर्दछन, माथिका कुराहरूमा उनलाई सत्य मान्नु शिर्क हो, किनकि ईश्वर (अल्लाह) बाहेक अरू कोही अन्तरयामी छैन।

❁ वर्षा हुनको सम्बन्ध कुनै नक्षत्रहरू र मौसमहरू तिर न गर, किनकि यो पनि शिर्क हो, र यस्को सम्बन्ध मात्र अल्लाह सित जोडन मिल्छ।

❁ अल्लाह बाहेक अरू कसैको शपथ न लेऊ चाहे त्यो ठूलो भन्दा ठूलो किन न होस्, किनकि यो पनि शिर्क हो, र हदीस (दूतवाणी) मा आएको छ : " जस्ले अल्लाहको अलावा अरू कसैको कसम लियो भने उल्ले कुफ्र वा शिर्क गऱ्यो "। जस्तो नबी वा नासो वा इज्जत वा जेम्मेवारी वा जिन्दगानी (वा विद्या) आदिको कसम लिनु।

❁ जमाना वा हावा वा सूर्य वा जाडो वा गर्मी आदिलाई गाली न गर,किनकि यसलाई वास्तवमा गर्नेवाला र हेरफेर गर्नेवाला अल्लाह नै हुन् ।

❁ कुनै कष्ट र दुःख पुगे पछि यदि/तर भन्नुबाट आफुलाई जोगाऊ,किनकि यो शैतानको कार्य खोलिदिन्छ, र यसमा अल्लाहले नियुक्त गर्नुभएको भाग्यमाथि आपत्ति गर्नु हो,तर यो भन्ने गर कि अल्लाहले भाग्यमा लेख्नुभएको थियो र उ जो चाहनुहुन्छ सो नै गर्नेछन् ।

❁ चिहानलाई मस्जिद (सज्दा अर्थात ढोग गर्ने ठाउँ) बनाउनुबाट आफुलाई जोगाऊ,किनकि जस मस्जिदमा चिहान हुन्छ भने त्यसमा नमाज पढ्नु जायज छैन,आदरणीय आइशाबाट वर्णन आएको छ कि नबी सल्लल्लाहो अलैहेवसल्लमले मृत्युको नजीक भन्नुभोः " *याहुद र ईसाईहरूमाथि अल्लाहको धिक्कार होस्, तिनीहरूले आफ्ना दूतहरूका चिहानलाई मस्जिद बनाएका थिए, तपाईंले (नबीले) तिनीहरूले गरेका कर्तव्यबाट मनाही गर्नुभो । आदरणीय आइशाको भनाई छः कि यदि यस्को भय थिएन भने नबीको चिहान खुल्ला हुन्थ्यो* " । र एक अर्को हदीसमा नबी सल्लल्लाहो अलैहे वसल्लमले भन्नुभोः " *तिमी भन्दा पहिलाका मानिसहरूले आफ्ना दूत र सदाचारीहरूका चिहानलाई मस्जिद बनाएका थिए,त तिमी चिहानहरूलाई मस्जिद नबनाऊ,किनभने म तिमीलाई यसबाट मनाही गर्दैछु* " ।

❁ झूठाहरूले नबी सित वा उनको अनुयायी मध्ये सदाचारीहरूलाई अल्लाह र आफ्नो माझ माध्यम बनाउने हेतु केही हदीसहरूलाई गढेर नबी सल्लल्लाहो अलैहेवसल्लम सित सम्बन्ध जोडेका छन्, ती सबैका सबै झूठ र असत्य हुन्,ती असत्य हदीसहरूलाई सत्य मान्नुबाट टाढा बस । जस मध्ये तल बमोजिम आएका हदीसहरू छन्: **((توسلوا بجاهي،فإن جاهي عند الله عظيم))** " मेरो आदर सत्कारलाई माध्यम बनाऊ, किनभने मेरो आदर सत्कार अल्लाह कहाँ ठूलो हो " । र यो हदीस पनि होः **((إذا اعيتكم الأمور فعليكم بأهل القبور))** " जब तिमी माथि कष्ट र अप्ठ्यारो आओस् भने चिहानमा सुतेका मानिस (मृतक) लाई गुहार " । र एउटा यो हदीस पनि हो : **((إن الله يوكل ملكاً على قبر كل ولي يقضي حوائج الناس))** " निःसन्देह अल्लाह तआलाले प्रत्येक वली (सदाचारी)को चिहान निर एउटा फरिश्तालाई नियुक्त गर्नुभएको छ जुन मानिसको आवश्यकतालाई पूर्ति गर्छ " । र यसै खालको एउटा यो हदीस पनि छ : **((لو أحسن الظن أحدكم بحجر نفعه))** " तिमी मध्ये यदि कसैले ढुंगो सँग राम्रो कल्पना राख्यो भने त्यसले त्यसलाई लाभ पुऱ्याउनेछ " इत्यादि ।

❁ धार्मिक अवसरहरूलाई मनाउनुबाट आफुलाई जगाऊ जस्तो नबीको जन्मदिन,इस्रा र मेराज (नबी सल्लल्लाहो अलैहेवसल्लमले गर्नुभएको आकाश्य भ्रमण) को दिन मनाउनु आदि,किनभने यो स्पष्ट बिदअत (इस्लाम धर्ममा आविष्कार गरिएको नया कुरा) हो, जसमाथि रसुलुल्लाह र उहाँका साथीहरूबाट केही प्रमाण पाउँदैन,हालाँकि उनका साथी र मित्रहरूले उहाँ सँग धेरै भन्दा धेरै स्नेह गर्दथे र भलो कार्यहरूलाई गर्नुमाथि व्याकुल रहन्थे,यदि यी धार्मिक अवसरहरूलाई मनाउनुमा केही लाभ र भलाई हुन्थ्यो त तिनीहरू त्यसमा हामी भन्दा अगाडि हुन्थे ।

# लाइलाह इल्लल्लाहको गवाही

यो मूलमन्त्र दूइ जग माथि आधारित छः **पहिलोः (लाइलाह)** र त्यो अल्लाह बाहेक अरूको लागि वास्तविक रूपले सम्पूर्ण प्रकारको पूजा अर्चनालाई इन्कार गर्नु हो। **दोस्रोः** र त्यो वास्तविक रूपले सम्पूर्ण प्रकारको पूजा अर्चना मात्र एक अल्लाहको लागि सिद्ध गर्नु हो। अल्लाह तआला भन्नुहुन्छः

﴿ وَإِذْ قَالَ إِبْرَٰهِيمُ لِأَبِيهِ وَقَوْمِهِۦٓ إِنَّنِى بَرَآءٌ مِّمَّا تَعْبُدُونَ ﴿٢٦﴾ إِلَّا ٱلَّذِى فَطَرَنِى فَإِنَّهُۥ سَيَهْدِينِ ﴾ "*र स्मरण गर जब इब्राहीमले आफ्ना बुबालाई र जातिबन्धुहरूलाई भने : तिमीहरू जसको उपासना गर्छौ तिनीहरू सित मेरो केही सरोकार छैन / सिवाय त्यस पालनकर्ताको जसले मेरो सृष्टि गरे, अनि मलाई सोझोमार्ग देखाउनेछन्*"। मात्र अल्लाहको पूजा पर्याप्त छैन बरु मात्र एक अल्लाहकै लागि गर्नु पर्छ। अनि तौहीदको दाबी त्यस बेला सत्य हुन सक्छ जब कि मात्र एक अल्लाहको पूजा गरियोस्,र शिर्क तथा शिर्क गर्नेहरूबाट टाढा बसियोस्।

एउटा हदीसमा आएको छ कि लाइलाह इल्लल्लाह स्वर्गको साँचो हो। त के जल्ले पनि लाइलाह इल्लल्लाह भन्यो उस्को लागि स्वर्गको ढोका खोलिन्छ ?

कसैले धर्मगुरू वहब बिन मोनब्बह रहेमहुल्लाह सित सोध्योः " के लाइलाह इल्लल्लाह स्वर्गको ढोका होइन "? उहाँले भन्नुभो : " हो र, तर के यस्तो साँचो बन्याछ जसमा दाँतहरू होइनन्, त दाँत सहित साँचो भएमा ढोका खुलिहाल्ने छ, र दाँत न भएमा ढोका खोलिने छैन "।

र हाम्रा दूत मुहम्मद सल्लल्लाहो अलैहेवसल्लम बाट धेरै हदीसहरू (दूतवाणीहरू) आएका छन जुन त्यस साँचोका दाँतहरूको वर्णन गर्दछन्, जस्तो कि उहाँका यी वाणीहरू : *अर्थात जस्ले शुद्ध आत्माले,हृदयमा यकीन र विश्वास गरेर हृदयमा त्यसलाई सत्य मानेर लाइलाह इल्लल्लाह भन्यो / उप्रयुक्त हदीसहरू तथा ती बाहेक अरूमा स्वर्गमा प्रवेश हुनु यस कुरामाथि निर्भर छ कि लाइलाह इल्लल्लाह भन्ने व्यक्ति माथि त्यसको अर्थलाई जान्नु,र त्यसमाथि मृत्यु हुने सम्म दृढ रहनु र त्यसबाट सिद्ध हुने कुराहरूलाई व्यवहारमा ल्याउनु अत्यन्त जरूरी छ*।

प्रमाणहरूको प्रकाशमा धर्मगुरूहरूले लाइलाह इल्लल्लाहका केही शर्तहरूको वर्णन गरेका छन जो प्रत्येक व्यक्तिमा पाइनु र त्यसको विरोधी कार्यहरू बाट बंचित बस्नु एकदम अनिवार्य हो, यस पश्चात नै त्यसलाई भन्नेलाई त्यो लाभ पुऱ्याउन सक्छ, र ती शर्तहरू नै साँचोका दाँतहरू हुन्। र ती तल बमोजिम आएका छनः

**1 ज्ञान** प्रत्येक शब्दको एउटा अर्थ छ, यसैले गर्दा लाइलाह इल्लल्लाहको बारेमा यस्तो ज्ञान प्राप्त गर्नु जरूरी हो जस्ले अज्ञानता टाढा भइहालोस्। त यो मूलमन्त्र अल्लाह बाहेक अन्य सबैको पूजालाई नकार्छ र सम्पूर्ण प्रकारको पूजा उपासना मात्र एक अल्लाहको लागि सिद्ध गर्छ। अल्लाह भन्नुहुन्छः

﴿ إِلَّا مَن شَهِدَ بِٱلْحَقِّ وَهُمْ يَعْلَمُونَ ﴾ " *यस्को सिवाय कि कसैले ज्ञानको आधारमा नितान्त सत्यको साक्षी देओस्* " र नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " *जस्को मृत्यु यो जाने पछि भयो कि वास्तवमा अल्लाह बाहेक अरू कोही पूज्य होइन त्यो स्वर्गमा प्रवेश गर्ने छ*"।

**2 यकीन (विश्वास)** तपाईं यसको अर्थ माथि दृढ विश्वास राख्नुहोस्,किनभने यो शंका,कल्पना र अस्मंजस सँग स्वीकार्य हुँदैन,बरु ठोस र दृढ यकीन अथवा विश्वासमाथि कायम रहनु अनिवार्य छ। मोमिनहरू (आस्थावानहरू) को विशेषताको वर्णन गर्दै अल्लाह भन्नुहुन्छः

﴿ إِنَّمَا ٱلْمُؤْمِنُونَ ٱلَّذِينَ ءَامَنُوا۟ بِٱللَّهِ وَرَسُولِهِۦ ثُمَّ لَمْ يَرْتَابُوا۟ وَجَٰهَدُوا۟ بِأَمْوَٰلِهِمْ وَأَنفُسِهِمْ فِى سَبِيلِ ٱللَّهِ ۚ أُو۟لَٰٓئِكَ هُمُ ٱلصَّٰدِقُونَ ﴾

" *वास्तवमा आस्थावान त ती व्यक्तिहरू हुन् जसले अल्लाह तथा उनका रसूल माथि ईमान ल्याए, अनि उनीहरूले कुनै शंका गरेनन् र आफ्नो जीउज्यान तथा धन-सम्पत्तिबाट अल्लाहको मार्गमा धर्मयुद्ध गरे, उनीहरू नै सच्चा हुन्*"।

**3 स्वीकार** जब तिमीलाई ज्ञान भइसक्यो र विश्वास पनि भैसक्यो भने यस विश्वासनिय ज्ञानको प्रभाव प्रकट गर्नु जरूरी हो र त्यो यस मूलमन्त्रले चाहिने कुराहरूलाई हृदय र जिभ्रोले स्वीकार्नु हो,त जस्ले तौहीदको निमन्त्रणालाई नकारेर अस्वीकार गऱ्यो त्यो काफिर (अवज्ञाकार) भइसक्यो,चाहे त्यो नकार्नु घमण्डले होस वा शत्रुता तथा ईर्ष्याले होस्। र अल्लाह तआलाले ती काफिरहरूको बारेमा भन्नुहुन्छ जसले घमण्डको कारण यस मूलमन्त्रलाई नकारेका थिएः ﴿ إِنَّهُمْ كَانُوٓا۟ إِذَا قِيلَ لَهُمْ لَآ إِلَٰهَ إِلَّا ٱللَّهُ يَسْتَكْبِرُونَ ﴾ " *जब तिनीहरूलाई भनिन्थ्यो कि अल्लाह बाहेक अन्य कोही सत्य उपास्य छैन तब तिनीहरू घमण्ड गर्ने गर्थे*"।

**4 आज्ञापालन** तौहीदलाई पूर्ण रूपले पालन गर्नु पर्छ,र यो नै वास्तविक कसौटी तथा ईमानको

व्यवहारिक प्रदर्शन हो । र यो अल्लाहले आदेश दिनुभएका कुराहरूलाई व्यवहारमा ल्याउनु र मनाही गर्नुभएका कुराहरूलाई छाडनुबाट सिद्ध हुन्छ । जस्तो कि अल्लाह तआलाले भन्नुहुन्छः ﴿ وَمَن يُسۡلِمۡ وَجۡهَهُۥٓ إِلَى ٱللَّهِ وَهُوَ مُحۡسِنٞ فَقَدِ ٱسۡتَمۡسَكَ بِٱلۡعُرۡوَةِ ٱلۡوُثۡقَىٰۗ وَإِلَى ٱللَّهِ عَٰقِبَةُ ٱلۡأُمُورِ ﴾ " *जसले आफ्नो अनुहार पूर्ण रूपले अल्लाह तर्फ फर्काउँछ र परोपकारी पनि छ भने वास्तवमा उसले भरोसायोग्य सहारालाई समात्यो र सम्पूर्ण मामिलाहरूको अन्तिम निर्णय अल्लाहकै हातमा छ* "। र यही नै वास्तविक पूर्ण रूपले आज्ञापालन गर्नु हो ।

**5 सत्यता** लाइलाह इल्लल्लाह भन्नुमा सत्य हुनु पर्छ जो झुट र असत्यताको विरुद्ध होस्,त जसले मात्र जिभ्रोले भन्यो र हृदयमा त्यसलाई झुटा ठान्यो भने त्यो मोनाफिक हो,मोनाफिकहरूको निन्दामा अल्लाह तआलाको यो वाणी नै प्रमाण छ : ﴿ يَقُولُونَ بِأَلۡسِنَتِهِم مَّا لَيۡسَ فِي قُلُوبِهِمۡ ﴾ " *तिनीहरू मुखले त्यो भन्छन् जुन तिनीहरूका हृदयमा छैन* "।

**6 प्रेम** अर्थात मोमिन यस मूलमन्त्र सँग प्रेम गरोस्,र त्यसले चाहेको कुराहरूलाई व्यवहारमा ल्याउनु मनपरोस् र त्यसको अनुसार व्यवहार गर्नेहरू सित प्रेम गरोस् । दासले आफ्नो पालन कर्ता सित प्रेम गर्छ कि गर्दैन त्यसको पहिचान हो अल्लाहले रोजाएको कुरालाई आफ्नो व्यवहारमा अगाडि राख्नु यद्यपि उस्को चाहनाको विरुद्ध किन न होस्,र अल्लाह तथा उनका रसूलले जस सँग प्रेम गर्छन त्यस सँग प्रेम गर्नु र जसलाई शत्रु मान्छ त्यसलाई शत्रु ठान्नु,र अल्लाहका रसूलको अनुसरण गर्नु,उन्को वाणी माफिक व्यवहार गर्नु र उनको तरीका एवम विधिलाई स्वीकार गर्नु ।

**7 शुद्धता** लाइलाह इल्लल्लाह भन्नुमा मात्र अल्लाहको खुशी चाहियोस्,अल्लाह तआला भन्नुहुन्छः ﴿ وَمَآ أُمِرُوٓاْ إِلَّا لِيَعۡبُدُواْ ٱللَّهَ مُخۡلِصِينَ لَهُ ٱلدِّينَ حُنَفَآءَ ﴾ " *आदेश त तिनीहरूलाई यही थियो कि आफ्नो धर्मलाई अल्लाहको लागि शुद्ध पारेर एकाग्र भई उनको उपासना गरुन्* "। र नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभयोः " *जसले लाइलाह इल्लल्लाह अल्लाहको प्रसन्नता प्राप्त गर्ने निमित्त भन्यो उसमाथि अल्लाह तआला नरकलाई बर्जित गरिदिनेछन* "।

## मुहम्मदुर्रसूलुल्लाहको गवाही

चिहानमा मृतकलाई परीक्षा भएर तीन प्रश्न सोधिनेछन्, यदि त्यसको उत्तर ठीक ठीक दियो भने सफल हुनेछ र उत्तर न दिएमा बरबाद भइहाल्नेछ । ती प्रश्नहरू मध्ये यो प्रश्न पनि हुनेछः तिम्रो नबी को हो ? यस्को उत्तर त्यो व्यक्ति नै दिनेछ जो अल्लाहले दिएको साहस तथा शक्तिले यस्को शर्तहरूको अनुसार व्यवहार गरेको हुन्छ । उसलाई अल्लाह तआला यस संसारमा पनि सत्यतामाथि कायम राख्नेछन र चिहानमा पनि त्यो कुरा उस्को हृदयमा हालिदिनेछन् । त यो गवाही उसलाई परलोकमा पनि लाभ पुऱ्याउनेछ जहाँ न त केही धन काम दिनेछ न त संताहरू नै । र ती शर्तहरू छन :

**1 नबीले आदेश दिनुभएको कुरालाई पालन गर्नु** अल्लाह तआलाले हामीलाई नबीको आज्ञापालन गर्नुको आदेश दिनुभएको छ,भन्नुभोः ﴿ مَّن يُطِعِ ٱلرَّسُولَ فَقَدۡ أَطَاعَ ٱللَّهَۖ ﴾ " *जसले ईश्दूतको आज्ञापालन गऱ्यो निश्चय नै त्यसले अल्लाहको आज्ञापालन गऱ्यो* "। र यो पनि भन्नुभोः ﴿ قُلۡ إِن كُنتُمۡ تُحِبُّونَ ٱللَّهَ فَٱتَّبِعُونِي يُحۡبِبۡكُمُ ٱللَّهُ ﴾ " *(हे दन्देष्टा!) भनिदेऊ यदि तिमीहरू अल्लाह सँग प्रेम गर्छौ भने मेरो अनुसरण गर अल्लाह तिमीहरू सँग प्रेम गर्नेछन्* "। र स्वर्गमा प्रवेश हुनु नबीको आज्ञापालनमाथि निर्भर छ । नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " *मेरो अनुयायी मध्य सबै व्यक्ति स्वर्गमा जानेछन् तर जसले इन्कार गऱ्यो,मानिसले सोधे हे अल्लाहका रसूल! स्वर्गमा प्रवेश हुनेलाई को इन्कार गर्छ ? उत्तर दिनुभोः जसले मेरो आज्ञापालन गऱ्यो ऊ स्वर्गमा प्रवेश हुनेछ,र जसले अवज्ञा गऱ्यो त्यसले इन्कार गऱ्यो* "। त जसले नबी सँग प्रेम गर्दछ त्यो अवश्य नै उनको आज्ञापालन गर्नेछ किनभने आज्ञापालन गर्नु प्रेमको फल हुन्छ,र त्यो प्रेमको व्यवहारिक प्रमाण हुन्छ ।

**2 नबीले जुन खबर दिनुभो त्यसलाई सत्य मान्नु** जसले नबी सल्लल्लाहो अलैहेवसल्लमबाट सही रूपले सिद्ध भएको कुरालाई आफ्नो मनकामना र मनको भ्रमको कारणले झूठ ठान्यो उसले अल्लाह र उनका रसूललाई झूठा ठान्यो,किनकि भने नबी चूक र झूठ बाट सुरक्षित हुनुहुन्छ । अल्लाहको वाणी छ : ﴿ وَمَا يَنطِقُ عَنِ ٱلۡهَوَىٰٓ ﴾ " *उनी आफ्नो इच्छाले बोल्दैनन्* "।

**❸ उहाँले मनाही गर्नुभएको कुरा बाट टाढा बस्नु** पहिलो सब भन्दा ठूलो पाप शिर्कलाई छाडनु अनि ठूल-ठूला र सर्वनाश गर्ने पापहरूबाट बंचित रहनु,अनि अन्तमा स-साना तथा मक्रूह (इस्लामको नजरमा नराम्रा कुराहरू) लाई छाडनु। एउटा मुस्लिमको प्रेमको मात्रा नबी सल्लल्लाहो अलैहेवसल्लम सित जति हुन्छ त्यत्ति नै उस्को ईमानमा बृद्धि हुन्छ। र जब उसको ईमान बढी हुन्छ त अल्लाह तआलाले उसको मुटुमा सुकर्महरूलाई राम्रो गरिदिनेछन्,र कुफ्र,पाप र अवज्ञालाई नराम्रो गरिदिनेछन।

**❹ अल्लाहको पूजा नबीको तरीका अनुसार गर्नु** किनकि इबादतमा असल कुरो प्रतिबंध हो,यसैले गर्दा अल्लाहको पूजा अर्चना नबीको तरीका बाहेक गर्नु कदापि जायज छैन। नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " *जसले यस्तो व्यवहार गऱ्यो जो हाम्रो तरीका अनुसार होइन त त्यो रद्द र व्यर्थ छ* "। अर्थात त्यो स्वीकार्य न भएर उसै तिर फर्काइदिइनेछ।

**फाइदाः-** स्मरण रहोस्! नबी सल्लल्लाहो अलैहेवसल्लम सित र उहाँले ल्याएको धर्म सित प्रेम गर्नु एकदमै अनिवार्य हो। र यदि कसैले नबीले ल्याएका कुराहरू मध्ये कुनै कुरा सित घृणा गऱ्यो त्यो काफिर भइहाल्छ चाहे ऊ त्यसलाई व्यवहारमा किन न लिओस्। र मात्र प्रेम गर्ने दाबी गर्नाले केही फायदा हुँदैन,बरू अल्लाहका नबी सित तिमी प्रत्येक कुरा भन्दा प्रेम गरौ यहाँ सम्म कि आफ्नो जीउ भन्दा पनि बढी। किनभने कुनै व्यक्ति यदि कसै सित प्रेम गर्छ त ऊ त्यसको अनुसरणलाई अधिमान दिन्छ। त जुन व्यक्ति नबी सँग प्रेम गर्नुमा यदि सत्य छ भने उहाँको आज्ञापालन गरी र उनका तरीकालाई अनूकरण गर्दै उसमाथि त्यसको चिनारी कर्म र वचनमा प्रकट हुन्छ,उहाँले आदेश दिनुभएका कुराहरूलाई पालन गर्दै र मनाही गर्नुभएका कुराहरूबाट बंचित रहदै। र धनी तथा गरीबी,प्रसन्नता एवम शोकको अवस्थामा उहाँले दर्शाउनुभएको आदाब अथवा व्यवहार गर्नु पर्छ। किनभने आज्ञापालन र अनूकरण गर्नु प्रेमको परिणाम हो यी दुबै बाहेक प्रेमको दाबी सत्य हुन सक्दैन।

**नबी सल्लल्लाहो अलैहेवसल्लम सित प्रेम गर्नुका धेरै चिन्हहरू छन्,ती मध्येः** अत्याधिक रूपमा उहाँको चर्चा गर्नु एवम उहाँमाथि अल्लाहको सलाम र शान्ति पठाउनु, किनकि जुन व्यक्ति जसलाई माया गर्छ उस्को चर्चा धेरै भन्दा धेरै गर्छ। **एउटा चिन्ह यो पनि छः** उहाँ सित साक्षात गर्ने कामना गर्नु,किनकि प्रत्येक प्रेमी आफ्नो प्रियतम् सँग साक्षातको आकांक्षा गर्छ। **एउटा चिन्ह यो पनि होः** उहाँको चर्चा गरेर उहाँको आदर सत्कार गर्नु। आदरणीय इस्हाक रहेमहुल्लाहले भन्नुभोः नबीका मित्रहरू जहिले पनि उहाँको चर्चा गर्दथे त उनीहरू विनम्र भई उनका आड़ जिरिंग भएर उनी कराउँदथे। **एउटा यो चिनारी पनि होः** जुन व्यक्ति नबी सँग घृणा गर्छ उ सँग घृणा गर्नु र जसले शत्रुता गर्छ छ सित शत्रुता गर्नु,र जुन मानिस उहाँको तरीकाको विरुद्ध गर्छ र उहाँले ल्याएको दीन-धर्ममा नया कुराको आविष्कार गर्छ उ बाट टाढा हुनु किनकि त्यो बिद्‌यती र मोनाफिकहरू छन। **एउटा यो पनि त्यसको चिनारी छः** जससँग नबीले प्रेम गर्नुभएको थियो उ सँग प्रेम गर्नु चाहे त्यो उहाँको जहान परिवार मध्य होस् वा उहाँका पत्नीहरू मध्ये,वा चाहे मोहाजिर (मक्काबाट प्रवास गरेर मदीना आउनेहरू) र अन्सार (मदीना वासी) सहाबाहरू हुन्। र जस सँग नबीले शत्रुता गर्नुभएको हो उ सँग शत्रुता गर्नु र जस सँग घृणा गर्नुभएको हो वा गाली गर्नुभएको हो उ सित घृणा गर्नु र गाली गर्नु। **एउटा यो पहिचान पनि होः** सदव्यवहार र राम्रो आचरणमा उहाँको अनुसरण गर्नु किनकि उहाँ सब भन्दा बेश सदव्यवहार वाला हुनुहुन्थ्यो,यहाँ सम्म कि आदरणीय आइशाले भन्नुभोः रसूलुल्लाहको व्यवहार कुरआन जस्तो थियो अर्थात उहाँले आफ्नो माथि यो अनिवार्य गर्नुभएको थियो कि कुरआनमा आएको आदेशानुसार नै जीवन व्यतीत गर्नेछन।

**नबी सल्लल्लाहो अलैहेवसल्लमका गुण र विशेषताहरूः** उहाँ सब भन्दा ठूलो वीर र बहादुर हुनुहुन्थ्यो र खास गरी घमासान युद्धको बेलामा। र उहाँ सब भन्दा महान दानी हुनुहुन्थ्यो र खास गरी रमजानको महीनामा। उहाँ प्राणीहरूका लागि सब भन्दा ठूलो शुभउपदेशक हुनुहुन्थ्यो,र सब भन्दा ठूलो सहनशील हुनुहुन्थ्यो र कहिले पनि कसै सित आफ्नो जीउको लागि बदला लिनुभएको थिएन,तर अल्लाहको मामिलामा धेरै कठोर हुनुहुन्थ्यो,यसै गरी उहाँ सुशील र मर्यादा-पुरुषोत्तम हुनुहुन्थ्यो,आवरणमा बस्ने कुमारी कन्या भन्दा ठूला लज्जालु हुनुहुन्थ्यो,र आफ्नो जहान परिवारको लागि सब भन्दा राम्रो,र प्राणीहरूका लागि सब भन्दा ठूला दयावान आदि।





# पवित्रता

नमाज इस्लामका आधारहरू मध्ये दोस्रो आधार छ,र पवित्रता बिना नमाज सही हुँदैन, पवित्रता चाहीं पानीले वा माटोले प्राप्त हुन्छ ।

**पानीका प्रकारहरूः १) पवित्र,**जो स्वयंम पवित्र होस र अरूलाई पवित्र पार्ने क्षमता पनि राखोस् । र यो पवित्र पानी अपवित्रता तथा फोहोरलाई सफा पार्छ । **२) अपवित्र,** त्यो थोरै पानी हो जसमा फोहोर खसेको हो,वा पानी अधिक होस तर फोहोर खस्नाले त्यसको मज्जा वा रंग वा गंधमा परिवर्तन भइसकेको होस् ।

**नोटः** धेरै मात्रामा यदि पानी छ भने त्यो अपवित्र हुँदैन, अँ, अदि त्यसमा फोहोर खसेर त्यसको रंग वा मज्जा वा गंध मध्ये एउटा पनि विशेषतालाई बदल्यो भने पानी अपवित्र भइहाल्छ । र थोरै मात्रामा भएको पानी मात्र फोहोर (गन्दगी) खस्नाले नै अपवित्र भइहाल्छ । र पानीलाई धेरै कहिले भनिन्छ जब त्यो कुल्लतैन भन्दा बढी मात्रामा होस,र कुल्लतैन २१० लिटरको लगभग हुन्छ ।

**भाँडोः** सुन र चाँदीको अलावा प्रत्येक भाँडो पवित्र छ र त्यसलाई प्रयोगमा ल्याउनु जायज हो,र सुन चाँदीको भाँडोमा रहेको पानीबाट पवित्रता प्राप्त हुनसक्छ तर त्यसो गरेमा पाप लाग्छ । काफिरहरूको भ ाँडो र लुगा मध्ये जसको अपवित्रता हामीलाई थाहा भइसक्यो त्यस बाहेक अरू लुगा र भाँडोलाई प्रयोगमा ल्याउनु जायज हो ।

**मृत जनावरको छालाः** पूर्ण रूपले अपवित्र हो,र मृत जनावरका दुई प्रकार छनः १) यस्तो जनावर जस्को मासु खानु बिल्कुलै जायज छैन । २) यस्तो जनावर जस्को मासु खानु त जायज छ तर त्यसलाई हलाल (जबह) गरिएको होइन । खाने जनावरलाई यदि हलाल गरिएन भने त्यसको छालालाई दबागत (केमिकल आदिले छालालाई प्रयोगशील बनाउनु) दिइ तरल पदार्थको अलावा सुखा पदार्थमा प्रयोग गर्नु जायज छ ।

**इस्तिन्जा :** अगिल्लो वा पछिल्लो गुप्तांगबाट निस्केको फोहोरलाई सफा पार्नु । र यदि यो सफाई पानीले प्राप्त हुन्छ भने त्यसलाई इस्तिन्जा भनिन्छ र यदि ढुंगो वा पन्ना आदिले हुन्छ भने त्यसलाई इस्तिज्मार भ निन्छ । र इस्तिन्जामा प्रार्याप्त हुनको लागि ढुंगो आदिमा पवित्र र जायज हुनु र सफाई गर्नेवाला हुनु र खाने कुरो न हुनु भन्ने शर्तहरू लागु हुन्छन् । गुप्तांगबाट कुनै पनि फोहोर निस्के पछि इस्तिन्जा वा इस्तिज्मार गर्नु जरूरी हुन्छ ।

**दिसा पिशाब गर्ने व्यक्ति** माथि आवश्यक समय भन्दा बढी समय सम्म दिसा-पिशाब गर्ने (अपवित्रता र नाँगो) अवस्थामा रहुन हराम (बर्जित) हो । र पानी लिने ठाउँ वा आम बाटो वा छाया दिने रूख मुनि वा फल भएको रूख मुनि **दिसा-पिशाब गर्नु** हराम हो । यसै गरी चौरमा दिसा-पिशाब गर्दा खेरि किब्ला (नमाज पढिने दिशा अथवा पश्चिम) तिर मुख वा पिठ्युँ गर्नु मनाही छ ।

**दिसा-पिशाब गर्ने व्यक्ति माथि** राम्रो छैन कि ऊ शोचालयमा त्यो वस्तु लिएर जाओस् जसमा अल्लाहको नाम हो,यसै गरी त्यस अवस्थामा कुराकानी गर्नु राम्रो छैन,प्वालमा पिशाब गर्नु राम्रो छैन,यसै गरी दायाँ हातले गुप्तांगलाई छुनु र शौचालयमा किब्ला तिर मुख गर्नु राम्रो कुरा छैन । र यी सबै कुराहरू आवश्यकताको बेलामा गर्नु जायज हुन् ।

**दिसा-पिशाब गर्ने व्यक्तिमाथि** यो राम्रो हो कि पानी प्रयोग गर्नुमा वा ढुंगोले सफाई गर्नुमा बेजोड संख्या (जस्तो ३ वा ५ आदि) प्रयोग गरोस्,र यदि ढुंगो आदिले सफाई गरे पछि पानीले सफा गऱ्यो भने त्यो अति नै उत्तम हुन्छ ।

**दतिवनः** कोमल काठले जस्तो पीलु,नीम इत्यादि दतिवन गर्नु सुन्नत (राम्रो) हो,र नमाजको बेलामा, कुरआन पढ्दा खेरि,कुल्ला गर्नु भन्दा अघि वजु गर्दा खेरि,निद्राबाट बिउँझेर,मस्जिद र घरमा प्रवेश हुँदा,मुखको मज्जामा बदलाउ आए पछि दतिवन गर्नु अति नै बेस हो । दतिवन गर्नुमा र पवित्रता प्राप्त गर्नुमा दायाँ तिरबाट आरम्भ गर्नु राम्रो हो,यसै गरी गन्दगी र फोहोरलाई सफा गर्नुमा देब्रे हातलाई प्रयोग गर्नु बेस छ ।

**वजुः** वजुका आधारहरूः १) अनुहार धुनु,र यसैमा कुल्ला गर्नु र नाकमा पानी हालेर सफा गर्नु पनि सामेल छ, २) दुबै हातलाई औंलाहरूको किनारा देखि दुबै कुहिना समेत पखाल्नु, ३) दुबै कान लगायत पूरै टाउकोको मसह गर्नु (हात भिजाएर टाउकोलाई घस्नु) ४) गोलीगाँठो समेत दुबै खुट्टालाई धुनु, ५) अनुक्रम (तर्तीब अर्थात पहिलो अनुहार धुनु अनि हात अनि टाउको घस्नु अनि खुट्टा) गर्नु,६) लगातार (निरन्तर) गर्नु।

**वजुमा अनिवार्य कुराहरूः** वजु आरम्भ गर्दा खेरि बिस्मिल्लाह भन्नु,रात्रीको निद्राबाट बिउँझनु भन्दा पछि तीन पटक दुबै हत्केलालाई भाँडोमा रहेको पानीमा हाल्नु भन्दा अघि धुनु ।

**वजुमा सुन्नत (बेस) कार्यहरूः** दतिवन गर्नु, वजुको आरम्भमा दुबै हत्केलालाई पखाल्नु, अनुहार पखाल्नु भन्दा अघि कुल्ला गर्नु र नाकमा पानी हालेर सफा गर्नु, ब्रत बस्ने अवस्थाको अलावा अरू समयमा वजु गर्दा राम्ररी कुल्ला गर्नु र नाकमा पानी हालेर सफा गर्नु । बाक्लो दाढीमा भिजाएका औंलाहरू घुसाएर खिलाल (सफा) गर्नु, यसै गरी औंलाहरूमा औंला भिजाएर खिलाल गर्नु । अंगहरूलाई धुनुमा दायाँ तिरबाट आरम्भ गर्नु, अंगहरूलाई तीन-तीन चोटि पखाल्नु, दायाँ हातले नाकमा पानी हाल्नु अनि देब्रे हातले सफा गर्नु, अंगहरूलाई रगडेर पखाल्नु, पूर्ण रूपले वजु गर्नु, वजु पछि हदीसमा आएको दुआ गर्नु ।

**वजुमा नराम्रा कुराहरूः** चिसो वा ताँतो पानीले वजु गर्नु, एक अंगलाई तीन पटक भन्दा बढी मात्रामा धुनु, अंगहरूबाट पानीलाई छर्कनु, आँखाको आन्तरिक भागलाई धुनु । तर वजु पछि लुगा आदिले अंगहरूलाई सफा गर्नु (पोछ्नु) जायज छ ।

**नोटः** कुल्ला गर्दा मुख भित्र पानीलाई हल्लाउनु र यता उता गर्नु अनिवार्य छ,र नाकमा पानी हाल्दा स्वाँसले पानीलाई तान्नु पर्छ मात्र हातले हाल्नु पर्याप्त हुँदैन, र यसै गरी नाकबाट पानीलाई सफा गर्नु । र यी दुबै कार्य यस पद्धतिको अलावा अरू तरीकाले पूर्ण हुँदैनन् ।

**वजुको विधिः** हृदयमा नियत गरेर बिस्मिल्लाह पढेर दुबै हत्केलालाई धुनु पर्छ,अनि कुल्ला गरी नाकमा पानी हालेर सफा गर्नु,अनि अनुहार पखाल्नु, (अनुहारको सीमाः लम्बाईमा कपाल उमर्ने ठाउँ देखि दाढी मुनि सम्म, र चौडाईमा एक कानबाट अर्को कान सम्म) । फेरि कुहिना समेत पूरै हातलाई धुनु,अनि अनुहारको माथिल्लो सीमा देखि पूरै टाउकोको मसह गर्नु (हात भिजाएर घस्नु) । र कानको मसह गर्दै दुबै चोर औंलालाई कान भित्र हालेर दुबै बुढी औंलाले कानको माथिल्लो भागमा मसह गर्नुपर्छ । फेरि दुबै खुट्टालाई गोली गाँठो लगायत धुनु पर्छ ।

**नोटः** दाढी थोरै भएमा त्यस मुनिको छालालाई धुनु अनिवार्य छ,र यदि बाक्लो छ भने त्यसको माथिल्लो भाग धुनु पर्छ ।

**मोजामाथि मसहः** मोजा छाला आदिले बनिएको पाइलाको पोशाक हो,र यदि ऊनबाट बनिएको हो भने त्यसलाई अरबीमा जौरब भनिन्छ । मोजामाथि मसह गर्नु मात्र सानो अपवित्रतामा जायज छ । मोजामाथि मसह गर्नुका केही शर्तहरू छनः १) पूर्ण रूपले पवित्रता प्राप्त गरेर दुबै मोजा लाउनु (अर्थात वजु गरे पछि र दुबै खुट्टा पखाले पछि) । २) पानीले पवित्रता प्राप्त गरिएको हो । ३) ती दुबै मोजाले गोलीगाँठो भन्दा माथिल्लो अंगलाई छोपेको हो । ४) दुबै मोजा जायज हुनु पर्छ (अर्थात हराम तरीकाले प्राप्त गरिएको न होस्) । ५) र दुबै मोजा पवित्र वस्तुबाट बनाइएको हो ।

**फेटा (पगरी) माथि मसह गर्नका शर्तहरूः** १) फेटा लोग्ने मान्छेको टाउको माथि होस । २) साधारण समयमा छोपिने टाउकोको भागलाई त्यो छोपोस् । ३) मसह सानो अपवित्रतामा हुनु पर्छ । ४) पवित्रता पानीले प्राप्त गरिएको हो ।

**दुपट्टा ः** दुपट्टामाथि मसह गर्नुका पनि केही शर्तहरू छनः १) दुपट्टा स्वास्नी मान्छेको लागि होस् । २) त्यसलाई घांटी मुनिबाट घुमाइएको हो । ३) सानो अपवित्रतामा मसह गरिएको हो । ४) पवित्रता पानीले गरिएको हो। ५) साधारण समयमा छोपिने टाउकोको भागलाई त्यो छोपोस ।

**मसह गर्ने अवधिः** घरमा बस्ने मान्छेको लागि एक दिन र एक राती सम्म । र ८५ किलो मीटर वा त्यस भन्दा बढी दूरी सम्म यात्रा गर्ने यात्रीको लागि तीन दिन र तीन रात्री सम्म मसह गर्न मिल्छ ।

**मसह आरम्भ गर्ने समयः** दुबै मोजालाई लाउने पछि पहिलो पटक वजु भंग भई आरम्भ हुन्छ,र भोलि त्यही समय सम्म बाँकी रहनेछ अर्थात घरमा बस्ने मान्छेको लागि २४ घंटा (र यात्रीको लागि ७२ घंटा) सम्म ।

**मोजाको कुन भागलाई मसह गर्नु पर्छः** पाइलाका औंलाहरू देखि आरम्भ गरी पिँडौलो सम्म मोजाको अधिकांश माथिल्लो भागलाई मसह गर्नु पर्छ । र दुबै हातका औंलाहरूलाई खुल्ला राखी मसह गर्नु पर्छ ।

**फाइदाः** जस्ले यात्रामा मसह आरम्भ गर्‍यो फेरि घरमा निवास गर्‍यो वा घरैमा थियो अनि यात्रा गर्‍यो वा मसह गर्ने समयमा शंका भयो त घरमा बस्ने मान्छे जस्तो मसह गर्छ ।

**पट्टीः** हाड आदि भंग भए पछि त्यसको उपचारको लागि बांधिने कपडा आदिलाई पट्टी भनिन्छ । यस माथि मसह गर्नको लागि केही शर्तहरू छनः १) पट्टीको आवश्यकता होस । २) आवश्यक ठाउँ बाहेक अरू ठाउँमा पट्टी न होस् । ३) वजु गर्दा खेरि बाँकी अंगहरूलाई धुनु सँगै पट्टीमाथि पनि महस गरियोस् ।

(अर्थात दुबै कार्यको समयमा अन्तर न होस्) । आवश्यक ठाउँ भन्दा बढी अंगमा पट्टी बांधिएको छ भने त्यसलाई फुकाल्नु अनिवार्य छ, र यदि हानिको भय होस भने त्यसमाथि मसह गर्नु नै पर्याप्त हुन्छ ।

**फाइदाहरूः** ❁ दायाँ खुट्टामाथि पहिले न गरीकन दुबै मोजामाथि सँगै मसह गर्नु बेस छ । ❁ मोजाको तल्ल भाग र दुबै तिर (किनारामा) महस गर्नु जायज छैन । ❁ मसहको साटामा मोजालाई पखाल्नु राम्रो छैन यसै गरी पटक पटक मसह गर्नु पनि बेस छैन । ❁ फेटा र दुपट्टाको अधिकांश भागमाथि मसह गर्नु अनिवार्य छ।

**वजु भंग गर्ने कुराहरूः** १) अगिल्लो वा पछिल्लो गुप्तांगबाट केही कुरा निस्कनाले वजु समाप्त भइहाल्छ चाहे त्यो कुरा पवित्र होस जस्तो हावा वा वीर्य वा अपवित्र होस् जस्तो पिशाव र मजी (पत्नी सँग अंकमाल, लसपस वा चुम्बन गरे पछि निस्कने लस्सादार पदार्थलाई मजी भनिन्छ) । २) निद्रा वा अचेत हुनको कारण बुद्धि समाप्त हुनाले वजु भंग भइहाल्छ । तर बसेर वा उभेर अलिकति निद्राले वजु भंग हुँदैन । ३) दुबै गुप्तांग बाहेक अरू द्वार बाट दिसा र पिशाब निस्कनाले वजु समाप्त भइहाल्छ । ४) शरीरबाट (दिसा-पिशाब बाहेक) अरू कुनै अपवित्र कुरा निस्कनु,जस्तो अधिक मात्रामा रगत निकल्नु । ५) ऊँटको मासु खानु । ६) बिना कुनै ओटको गुप्ताँगलाई छुनु । ७) स्त्री वा पुरुष एक अर्कालाई बिना कुनै ओटको काम-वासनाले छुनु। ८) इस्लाम धर्मबाट फिर्ता हुनाले पनि वजु भंग भइहाल्छ ।

र जस्ले पवित्र हुनुमाथि विश्वास राख्छ र अपवित्र हुनुमा (अर्थात वजु भंग हुनुमा) शंका गर्छ वा यसको बिल्कुलै उल्टो त यस्तो अवस्थामा यकीन हुने कुराको अनुसार कार्य गर्नु पर्नेछ ।

**स्नानः** स्नानलाई अनिवार्य गर्ने कुराहरूः १) बिँउझनुको अवस्थामा मज्जाले वीर्य निस्कनाले स्नान गर्नु अनिवार्य हुन्छ । र सुत्नुको हालतमा चाहे मज्जाले निक्लोस वा बिना मज्जाले मात्र वीर्य निस्कनाले नै स्नान भंग भइहाल्छ अर्थात स्नान गर्नु पर्छ । २) पुरुषको लिंग स्त्रीको योनि भित्र प्रवेश हुनाले नै स्नान समाप्त भइहाल्छ वीर्य निस्कनु अनिवार्य छैन । ३) काफिरले इस्लाम स्वीकार गर्दा स्नान गर्नु पर्छ चाहे त्यो पहिला मुस्लिम थियो फेरि इस्लाम स्वीकार गर्‍यो जस्तो किन न होस । ४) मासिक धर्म आउनु । ५) प्रसव रगत आउनु । ६) मुस्लिमको मृत्यु हुनाले (उसलाई स्नान गराउनु जरूरी हो) ।

**स्नानमा अनिवार्य कुराहरूः** पूरै शरीरमाथि स्नान गर्नुको नियतले पानी बगाउनु र मुख तथा नाकमा पानी हाल्नु पर्याप्त हुन्छ । तर पूर्ण रूपले स्नान गर्नुमा ९ वटा कुराहरूलाई ध्यानमा राख्नु पर्छ : १) पवित्रता प्राप्त गर्नुको नियत गर्नु (नियत हृदयमा हुन्छ मुखले गर्नु जायज छैन) ।२) बिल्मिल्लाह पढनु । ३) दुबै हातलाई भाँडोमा रहेको पानीमा हाल्नु भन्दा अघि धुनु । ४) गुप्ताँगलाई पखाल्नु अनि सहवास गरेर लागेको फोहोरलाई धुनु । ५) वजु गर्नु । ६) तीन पटक अँजुली भरी पानी टाउको माथि हाल्नु । ७) अनि पूरै शरीरमाथि पानी बगाउनु । ८) पूरै शरीरलाई दुबै हातले रगड्नु । ९) दाहिना तिर बाट स्नान थाल्नु ।

**सानो अपवित्रमा (वजु भंग भए पछि) के कार्य गर्न मिल्दैन :** १) कुरआनलाई छोएर पढन मिल्दैन । २) नमाज पढन मिल्दैन । ३) काबाको तवाफ (परिक्रमा) गर्न मिल्दैन ।

**ठूलो अपिवित्रतामा (स्नान भंग भए पछि) के गर्न मिल्दैन :** १) माथिका तीनै कुराहरू । ४) कण्ठस्थ रहेको कुरआनलाई पढ्न जायज छैन । ५) बिना वजु गरेर मस्जिद भित्र रहनु मिल्दैन ।

**नराम्रा कुराहरूः** सहवास गरेर बिना वजु गरी सुत्नु । स्नान गर्दा पानी प्रयोग गर्नुमा फिजुल खर्ची गर्नु ।

**तयम्मुम : शर्तहरू :** १) पानी न पाउनु । २) यस्तो माटोले तयम्मुम गरियोस जो पवित्र,जायज,धुलो वाला र पोलिएको न होस् ।

**तयम्मुमका अधारहरूः** पूरै अनुहारलाई मसह गर्नु अनि दुबै हातलाई नाडी सम्म मसह गर्नु । सिलसिलेवार तथा बिना ढीलो गरी तयम्मुम गर्नु ।

**तयम्मुमलाई भंग गर्ने कुराहरू :** १) प्रत्येक त्यो कुरा जस्ले वजुलाई भंग गर्दछ । २) पानी नपाएकन तयम्मुम गरेमा पानी पाए पछि तयम्मुम आफै समाप्त भइहाल्छ । ३) तयम्मुम गर्ने कारणलाई समाप्त हुनु,जस्तो यदि रोगको कारणले तयम्मुम गर्‍यो भने निको भए पछि तयम्मुम आफै समाप्त भैहाल्छ ।

**तयम्मुममा सुन्नत (राम्रा) कार्यहरूः** १) ठूलो अपवित्रतामा सिलसिलावार र बिना ढीलो गरी तयम्मुम गर्नु । २) नमाजको अन्तिम समयमा गर्नु । ३) तयम्मुम पछि वजु पछिको दुआ पढनु ।

**तयम्मुममा नराम्रा कार्यहरूः** एक भन्दा ज्यादै पटक माटोमाथि हात हान्नु ।

**तयम्मुम गर्ने विधिः** पहिलो नियत गर्नु अनि बिस्मिल्लाह पढ्नु,र एक पटक माटोमाथि दुबै हत्केलालाई हान्नु अनि पहिलो दुबै हत्केलाको आन्तरिक भागले आफ्नो अनुहार तथा दाढीलाई मसह गर्नु अनि दुबै हत्केलालाई, दाहिना हत्केलाले देब्रे हत्केलामाथि गरी देब्रे हत्केलाले दाहिना हत्केलामाथि मसह गर्नु ।

**गन्दगीलाई सफा गर्नु :** गन्दगी दुई प्रकारको हुन्छ : **१) प्रत्यक्ष** जो कहिले पनि पवित्र हुन सक्दैन,जस्तो सुँगुर, यसलाई जति पनि धोइयोस् पवित्र हुन सक्दैन । **२) अप्रत्यक्ष** जो पवित्र ठाउँ वा वस्तुमा पहिला नभए र पछि लागेको होस् । यसको विवरण तल बमोजिम आइरहेछ :

| प्रत्येक | आदेश (हुकुम) | |
|---|---|---|
| जनावरहरू | अपवित्र | कुकुर,सुँगुर र न खाइने चरा तथा जनावरहरू जुन आकारमा बिरालो भन्दा ठूलो हुन् । **आदेशः** यस्तो खालको जनावर तथा चराहरूको शरीर र सम्पूर्ण अंगहरू र त्यसबाट निस्कने वस्तुहरू जस्तो पिशाब,गोबर,थुक,पसीना,वीर्य, दुध,नाकको फोहोर र बान्ता आदि सबै अपवित्र छन् । |
| | पवित्र | १) मनुष्य,**आदेशः** शरीरबाट निस्कने सबै पदार्थहरू पवित्र छन्,जस्तो वीर्य, पसीना,थुक,दुध,नाकको फोहोर र महिलाको योनिबाट निस्कने तरल पदार्थ, तर पिशाब,दिसा,मजी,वदी (पिशाब गर्नु भन्दा अघि वा पछि निस्कने सेतो पदार्थ) र रक्त अपवित्र छन् । |
| | | २) मासु खाइने जनावहरू,**आदेशः** शरीरबाट निस्कने सबै पदार्थहरू पवित्र छन,जस्तोः पिशाब,गोबर,वीर्य,दुध,थुक,बान्ता र मजी । |
| | | ३) यस्तो जनावर जसबाट बंचित रहनु अप्ठ्यारो होस जस्तो गधो,बिरालो, र बिरालो भन्दा मुनिका स-साना जनावरहरू जस्तो मुसा आदि, **आदेशः** यस्तो खालको जनावरहरूको थुक र पसीना मात्र पवित्र हुन् । |
| मृतकहरू | मनुष्य,माछा र सलह र यस्तो कीरो जस्को शरीर भित्र बग्ने रक्त न होस जस्तो : बिच्छी,कमिलो,लामखुट्टे आदि बाहेक सम्पूर्ण प्रकारका मृतकहरू अपवित्र छन् । | |
| अचल निर्जीव वस्तुहरू | जस्तो धरती,ढुंगो इत्यादि । **आदेशः** पवित्र छन् । (माथि वर्णन भएका प्रत्येक्ष अचल वस्तुहरू बाहेक) | |

**पाइदाहरूः** ❁ रगत,पीप र घाउबाट पीप र रगत मिसिएर निस्कने पदार्थ अपवित्र छन्,यी वस्तुहरू मध्ये कुनै वस्तु थोरै मात्रामा लगेमा चाहे नमाज पढ्ने अवस्थामा होस् वा नमाज भन्दा बाहिर त्यसलाई धुनु अनिवार्य छैन,तर यस्को लागि यो शर्त हो कि त्यो पदार्थ पवित्र जनावरको होस् । ❁ रगत दुई अवस्थामा पवित्र छः १) माछाको रगत । २) हलाल गरिएको जनावरको मासु वा नसाहरूमा बाँकी बचिएको रक्त । ❁ जीउँदो भएको अवस्थामा खाइने जनावरबाट काटिएको मासु र जमाइएको रगतको डलो तथ मासुको टुक्रो सबैका सबै अपवित्र छन । ❁ अपवित्रता र फोहोर टाढा गर्नको लागि नियतको आवश्यकता छैन,र यदि वर्षा हुँदा फोहोर सफा भयो भने पवित्र भइहाल्छ । ❁ हातले फोहोर छोएमा वा त्यसमाथि हिंडेमा वजु भंग हुँदैन,तर शरीर वा लुगामा लागेको फोहोर तथा अपवित्रतालाई सफा गर्नु अनिवार्य छ । ❁ अपवित्रताबाट पवित्र पार्नका केही शर्तहरू छन : १) त्यसलाई पवित्र पानीले धुनु । २) धोएको लुगा आदिलाई पानी बाहेक किचियोस् यदि त्यो किच्नको योग्य होस् । ३) रगडेर वा अरू कुनै प्रकारले फोहोरलाई सफा गर्नु यदि पानीले धुनु पर्याप्त न होस् । ४) कुकुरले फोहोर गरेमा वा कुनै वस्तुमा मुख हालेमा सफा गर्दा त्यसलाई ७ पटक धुनु पर्छ र आठौं पटक माटो वा साबूनले पखाल्नु अनिवार्य छ ।

**नोटः** ❁ धरतीमा लागेको फोहोर यदि बग्नेवाला होस् जस्तो पिशाब त त्यसमाथि पानी बगाउनु पर्याप्त हुन्छ यहाँ सम्म कि त्यो फोहोर र त्यसको रंग र गंध समाप्त भइहालोस् । र यदि त्यो फोहोर प्रत्यक्ष होस् जस्तो दिसा त त्यसलाई र त्यसले गर्दा भएको चिन्हलाई समाप्त गर्नु अनिवार्य छ । ❁ यदि पानीको अलावा अरू कुनै वस्तुले फोहोर सफा न होस् भने पानीले सफा पार्नु अनिवार्य छ । ❁ फोहोर लागेको ठाउँको जानकारी न भएमा पूरै ठाउँलाई धुनु अनिवार्य छ यहाँ सम्म कि फोहोर लागेको ठाउँ पखालीएको छ भने विश्वास भइहालोस् । ❁ जस्ले नफल (अनिवार्य बाहेक) नमाज पढने हेतु वजु गऱ्यो भने उसको लागि त्यस वजु बाट अनिवार्य नमाज पढनु उपयुक्त छ । ❁ निद्राएको व्यक्ति माथि,र हावा निस्किए पछि इस्तिन्जा गर्नु (गुप्तांगलाई धुनु) पर्दैन, किनकि हावा पवित्र छ । अँ,यदि ऊ नमाज पढन चाहन्छ भने त्यसको लागि वजु गर्नु पर्छ ।





# महिलाका समस्याहरू
# महिलाका प्राकृतिक रगतहरूका समस्याहरू

## पहिलोः मासिक धर्क र इस्तेहाजा

| समस्या | आदेश |
|---|---|
| महिलालाई मासिक धर्म आरम्भ हुने उमेर | सब भन्दा कम उमेर ९ वर्ष हो,र यदि यस भन्दा अघि योनिबाट रगत निस्कन्छ भने त्यो रोगको कारणले निस्कन्छ र मासिक धर्म समाप्त हुने उमेरको केही सीमा र हदबन्दी छैन। |
| मासिक धर्म बाँकी रहने सब भन्दा कम समय | एक दिन र एक रात्री अर्थात २४ घण्टा। र यदि यस भन्दा पनि कम्ती समय सम्म बाँकी रहन्छ भने त्यो इस्तेहाजा (रोगको रगत) हो। |
| मासिक धर्म बाँकी रहने सब भन्दा बढी समय | १५ दिन हो। र यदि यस अवधि भन्दा अधिक समय सम्म रगत बग्न बाँकी हुन्छ भने त्यो इस्तेहाजाको रगत हुन्छ। |
| दुबै मासिक धर्म आउने अवधिको बीचको पवित्रता | १३ दिन हुन्छ। यो अवधि पूरा हुनु भन्दा अघि यदि रक्त आउनु थाल्यो भने त्यो इस्तेहाजा [1] हुन्छ। |
| अधिकांश महिलाहरूको बानी मासिकधर्ममा | ६ दिन वा ७ दिन। |
| अधिकांश महिलाहरूको बानी पवित्रतामा | २३ दिन वा २४ दिन। |
| के गर्भको अवस्थामा आउने रगत महिनावारीमा अंकित हुन्छ ? | गर्भवती महिलाको योनिबाट निस्कने रक्त होस वा मटिलो (अल्-कुद्रः) [2] वा पहैंलो (अस्सुफारः) [3] रँगको तरल पदार्थ होस सबैका सबै इस्तेहाजा हुन। |
| महिनावारीमा बसेकी महिलालाई पवित्रताको थाहा कहिले हुनेछ ? | महिला दुई प्रकारकी हुन्छेः १) सेतो र लेसिलो तरल पदार्थ [4] निस्कदा हेरे पश्चात २) र यदि त्यस पदार्थलाई हेर्न नसकेमा योनिले रक्त,मटिलो एवम पहैंलो रँग जस्तो तरल पदार्थबाट सुखा भए पश्चात पवित्रता प्राप्त हुन्छ। |
| पवित्रताको अवस्थामा महिलाको योनिबाट निस्कने तरल पदार्थ | यदि त्यो पातलो वा लेसाइलो सेतो पदार्थ होस् भने पवित्र छ,र यदि त्यो रक्त होस वा मट्यौलो वा पहैंलो रँगको तरल पदार्थ होस् भने त्यो अपवित्र छ। र यी सबै वस्तु निस्के पछि वजु भंग भइहाल्छ,र यदि निरन्तर बगिरहेछ भने त्यो इस्तेहाजा हो। |
| योनिबाट निस्कने मट्यौलो र पहैंलो रँगको तरल पदार्थ | यदि त्यो महिनावारीको साथै हुन्छ अर्थात त्यस भन्दा पहिला वा पछि हुन्छ भने त्यसको आदेश माहवारी जस्तो हुन्छ,र यदि महिनावारीको समय बाहेक बेग्लै समयमा आउँछ भने त्यो इस्तेहाजा हो। |
| प्रत्येक महीनामा हैज आउने निर्धारित समय पूरा हुनु भन्दा अघि पवित्रता प्राप्त भयो | यदि महिलाले पवित्रता हेर्यो र रक्त बग्नु पनि समाप्त भयो भने उसको लागि पवित्रताको आदेश छ, यद्यपि उसको हैजको रगत आउने निर्धारित समय किन न समाप्त भइहालोस्। |
| निर्धारित समय भन्दा अघि वा पछि आउने रक्तको आदेश | जसमा हैजका चिन्हहरू पाइन्छन भने त्यो हैज हो चाहे कुनै पनि समयमा आओस्, तर यसको यो शर्त छ कि दुबै रक्तको बीच १३ दिनको अवधि होस्,(जुन कि पवित्रताको सब भन्दा कम म्याद छ) नत्र त्यो रगत इस्तेहाजाको रगत हुन्छ। |
| ामो समय सम्म जस्तो पूरै एक महीना वा त्यस भन्दा पनि बढी रगत बगोस् त | यस्को केही अवस्थाहरू छनः १) जुन महिला महिनावारीको समय र रगत आउने दिनको संख्यालाई जानकारी राख्छे भने ऊ त्यही निर्धारित समय र दिनलाई महिनावारी मान्छे चाहे त्यो रगतको चिनारी होस् वा न होस्। २) जुन महिलाले प्रत्येक महीनामा महिनावारी आउने समयको ज्ञान त राख्छे तर दिनको संख्या थाहा छैन भने ऊ ६ वा ७ दिन लाई (अधिकांश माहवारीको समय श्रेणी) महिनावारीको रगत मान्ने गर्छे। ३) जुन महिलालाई दिनको संख्या थाहा छ तर आउने समयको ज्ञान छैन ऊ प्रत्येक चन्द्रमाको महीनाको पहिलो तारीख देखि जानिने संख्या अनुसार हैज मान्ने गर्छे। |

[1] **मासिक धर्म (हैज)**ः सुत अर्थात बालक जन्मिने कारण बिना र बिना कुनै रोगको प्राकृतिक रूपले निस्कने रक्तलाई भनिन्छ। **इस्तेहाजाः** बिना कुनै निर्धारित समयमा कुनै रोग वा बिगारको कारणले गर्भाशयबाट निस्कन्छ। **हैज र इस्तेहाजामा फर्कः** १) हैजको रक्त रातो कालो जस्तो हुन्छ र इस्तेहाजाको रक्त एकदम रातो हुन्छ जस्तो कि नाकबाट (नकसीर रोगमा) निस्कने रक्त। २) हैजको रक्त बाक्लो हुन्छ र कहिले कांही टुक्रा-टुक्र भएर निस्कन्छ। तर इस्तेहाजाको रगत पात्लो हुन्छ जस्तो कि घाउ खटिरोबाट रक्त निस्कन्छ। ३) अधिकांश समयमा हैजको रक्तबाट नराम्रो गन्ध आउँछ। तर इस्तेहाजामा निस्कने रक्तको गन्ध आम रक्तको गन्ध जस्तो हुन्छ।
**हैजको अवस्थामा केही कार्यहरू गर्नु बर्जित छ :** योनिमा सहवास गर्नु (गुद द्वारमा सहवास गर्नु अत्यन्त हराम छ)। तलाक दिनु अर्थात विवाह विच्छेद गर्नु। नमाज पढ्नु,रोजा बास्नु,काबाको तवाफ (परिक्रमा) गर्नु। कुरआनको पाठ गर्नु,कुरआनलाई छुनु र मस्जिदमा बस्नु।

[2] **अल-कुद्रः** यो महिलाको योनिबाट एक प्रकारको बग्ने रक्त हो जस्को रँग कालो गद्लो हुन्छ।

[3] **सुफ्राः** यो पनि महिलाको योनिबाट एक प्रकारको बग्ने रक्त हो जस्को रँग अलिकति पहैंलो हुन्छ।

[4] **कस्सतुल् बैजाः** पवित्रता हुँदा योनि बाट निस्कने सेतो रँगको तरल पदार्थ। यो तरल पदार्थ पवित्र छ तर यो निस्कनाले वजु भंग भइहाल्छ।

# दोस्रोः सुत्केरीको रगत

| समस्या | आदेश |
|---|---|
| रक्तलाई न हेरे गरी बालकलाई जन्मनु | सुत्केरीहरूको आदेश उसमाथि लाग्दैन,र उसमाथि स्नान गर्नु पनि अनिवार्य छैन, र न त उसको रोजा (ब्रत) पनि भंग हुन्छ । |
| जब शिशु जन्मने चिन्हहरू देखा परुन् | शिशु जन्मनु भन्दा केही समय अघि पानी वा रक्त देखा परेमा सुत्केरीको आदेश उसमाथि लाग्दैन बरु त्यो इस्तेहाजा हो । |
| शिशु जन्मदा महिलाको योनिबाट निस्कने रगत | यो नै सुत्केरी (निफास) को रगत हो यद्यपि शिशु पनि न निक्लोस् वा त्यसको केही भागै निक्लोस् त यस अवस्थामा महिलाले छोडेको नमाज पुनः पढनु अनिवार्य छैन । |
| निफास (सुत्केरी) को रगतको आरम्भ कहिले देखि हुन्छ ? | आमाको गर्भबाट पूर्ण रूपले शिशु धरतीमा निस्के पछि नै आरम्भ हुन्छ । |
| निफासको सब भन्दा कम अवधि | यस्को लागि सब भन्दा कम अवधि केही छैन,यदि बच्चा जन्मनु बित्तिकै रगत बग्नु बन्द भयो भने अनिवार्य रूपमा स्नान गर्नु पर्छ र नमाज पढनु पर्छ र ४० दिन सम्म पख्नुको आवश्यकता छैन । |
| निफासको अत्याधिक अवधि | ४० दिन सम्म,यस अवधि भन्दा बढी भएमा निफासमा गन्ती हुँदैन,त त्यस पछि स्नान गरेर नमाज पढनु अनिवार्य छ । अँ,यदि हैज (महिनावारी) को जमाना गर्भवती हुनु भन्दा अघि आयो भने त्यो महिनावारीमा गन्ती हुन्छ नकि निफासमा । |
| जुम्ल्याहा वा दुई भन्दा बढी एकै साथ जन्मेमा | पहिलो बच्चा जन्मनु पश्चात नै निफासको रक्तको गन्ती आरम्भ भइहाल्छ । |
| गर्भपात भए पछिको रगत | जब ८० दिन वा त्यस भन्दा कममा गर्भपात भयो भने त्यस पछि निस्कने रगत इस्तेहाजाको रगत हुन्छ । र ९० दिन पश्चात गर्भपात भए पछि आउने रगत निफासको रगत हुन्छ । र यदि ८० तथा ९० को बीचमा गर्भपात भयो भने त्यसको आदेश बच्चाको आकार बन्नु सँग सम्बन्धित हुन्छ,यदि मनुष्य जस्तो आकार बनी सके पछि गर्भपात भयो भने त्यस पछि बग्ने रगत निफासको रगतमा गन्ती हुन्छ र यदि मानव जस्तो आकार बनेको छैन भने इस्तेहाजाको रगतको आदेश सित सम्बन्धित हुन्छ । |
| ४० दिन भित्रै पवित्रता प्राप्त भयो अनि ४० दिन पुरा हुनु भन्दा अगि नै पुनः रगत आउनु शुरु भयो | ४० दिन भित्रै यदि महिला पवित्रता प्राप्त गर्छे भने त्यस पवित्रताको अवधिमा स्नान गरेर नमाज पढ्छे,र यदि पुनः ४० दिन भित्रै रगत आउनु आरम्भ भयो त निफासमा नै गन्ती हुन्छ यहाँ सम्म कि ४० दिन पूरा भइहालोस् । |

**नोटः** ❁ इस्तेहाजामा बस्ने महिला अनिवार्य रूपमा नमाज पढ्छे तर प्रत्येक नमाजको लागि बेग्ला-बेग्लै वजु गर्नु पर्छ । ❁ यदि महिला सूर्यास्त हुनु भन्दा अघि हैज वा निफासबाट पवित्र हुन्छे त त्यस दिनको जोहर र अस्रको नमाज पढ्छे, र यदि फज्र उदय (प्रातःकालको नमाजको समय) हुनु भन्दा अघि पवित्र भइ भने उसले त्यस रातीको मग्रिब र इशाको नमाज पढ्नु पर्छ । ❁ नमाजको समय भयो र बिना नमाज पढेर महिलालाई माहवारी आरम्भ भयो वा सुत्केरीको रक्त बग्नु थाल्यो भने पवित्रता प्राप्त गरे पछि पुनः त्यस नमाजलाई पढ्नु पर्दैन (अर्थात कजा गर्नु पर्दैन) । ❁ माहवारी वा सुत्केरी पछि स्नान गर्दा महिलाले चुल्ठो फुकाल्नु अनिवार्य छ,तर सहवास गरे पछिको स्नानमा चुल्ठोलाई फुकाल्नु अनिवार्य छैन । ❁ इस्तेहाजाको रक्त बग्ने महिला सित योनिमा सहवास गर्नु नराम्रो कुरा हो,र यदि पतिलाई त्यसको आवश्यकता छ भने त्यस बेला जायज छ । ❁ इस्तेहाजाको रक्तमा बसेकी महिलामाथि महिनावारीको स्नान गरे पछि प्रत्येक नमाजको लागि रगत बन्द नहुञ्जेल वजु गर्नु जरूरी छ । ❁ हज र उम्राका प्रक्रिया पूरा गर्ने तथा रमजानको रोजा बस्ने हेतु हानि न भएमा महिनावारीको रगत बन्द गर्नको लागि औषधि प्रयोग गर्नु जायज छ ।

**महिला इस्लामको नजरमा :** ईमान र व्यवहारको अनुसार अल्लाह कहाँ पूण्य र प्रधानतामा महिला पुरुष जस्तो नै हो । नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभएको छ : " *स्त्रीहरू पुरुषहरूका संगिनी छिन्* "। आफ्नो हक अधिकारको माग राख्नु तथा तिनीहरूमाथि भइरहेको अन्यायको विरुद्ध सम्बन्धित निकायमा आवाज उठाउनु उनको मौलिक अधिकार हो । किनभने धार्मिक सम्बोधनमा पुरुष र स्त्री दुबै बराबर छन,तर जुन समस्यामा प्रमाणको अनुकूल भिन्नता पाउँछ त्यसमा दुबैको लागि बेग्ला- बेग्लै आदेश पउँछ तर ती समस्याहरू धर्मका अरू समस्याहरूको तुलनामा धेरै कम छन । किनकि इस्लामी शरियत (कानून) ले पुरुष र स्त्रीमा पाइने प्राकृतिक गुण तथा सामर्थ्यहरूलाई धेरै महत्व दिएको छ । अल्लाह तआला भन्नुहुन्छः ﴿ أَلَا يَعْلَمُ مَنْ خَلَقَ وَهُوَ اللَّطِيفُ الْخَبِيرُ ﴾ " *के जसले सृष्टि गरेका छन् उनैले जान्ने छैनन् त ? उनी त सुक्ष्मदर्शी एवम सुसूचित छन्* "। त महिलाका लागि केही खास कार्य र कर्तव्यहरू छन र पुरुषका लागि पनि खास तथा निर्धारित कर्तव्यहरू छन्,र एक अर्कोको निजी कर्तव्यमा हस्तछेप गर्नाले जीवनको

सन्तुलनमा हानि पुऱ्याउँन सक्छ । बरु महिलालाई घरैमा बसेर पुरुष जस्तो पूण्य मिल्छ । यजीदकी छोरी अस्मा नबी सल्लल्लाहो अलैहेवसल्लम कहाँ आएर भन्नुभो जबकि उहाँ आफ्ना मित्रहरूको बीचमा उपस्थित हुनुहुन्थ्यो : हे अल्लाहका दूत तपाईंमाथि मेरा बुबा-आमा अर्पित हुन,म तपाईं तर्फ महिलाहरूकी प्रतिनिधि हुँ,म तपाईं सित ज्ञान प्राप्त गर्न चाहन्छु -तपाईंमाथि म अर्पण हुँ- सर्वत्र जहाँ कहींकी पनि महिला होस् मेरो यो कुरा सुनेर मेरो समर्थन गर्दछे,निःसन्देह अल्लाहले तपाईंलाई सत्यता सँग स्त्री र पुरुष दुबै तिर नबी बनाएर पठाउनु भएको हो,हामीले तपाईं माथि र तपाईंको पूजनीयमाथि जुनले तपाईंलाई नबी बनाएको छ ईमान ल्याएका छौं,हामी महिला समूहको कार्य भित्र बस्नु र तपाईंहरूको घरमा रहनु,तपाईंहरूको कामवासनाको पूर्ति गर्नु, तपाईंहरूको सन्तानलाई ९ महीना सम्म गर्भमा राख्नु हो । पुरुषहरूलाई हामी माथि केही कार्यमा प्रधानता प्राप्त छ जस्तो जुमा र सामूहिक नमाज पढ्नु,विरामीको सुसार गर्नु,शवयात्रामा शामेल हुनु,हज गर्नु,र यी सबै भन्दा उत्तम कार्य अल्लाहको बाटोमा जिहाद (धार्मिक युद्ध) गर्नु,र तपाईं मध्ये कुनै पुरुष जब हजको लागि वा उम्राको लागि वा सीमा सुरक्षाको लागि निस्कन्छ भने तपाईंको धनमालको सुरक्षा,लुगालाई हेरचाह गरी सिलाई बुनाई गर्नु,बाल-बच्चाको स्यहार गर्नु हामीले गर्नु पर्छ,त हामी तपाईंहरू (पुरुष) को पूण्यमा हे अल्लाहका रसूल शामेल हुन सक्दैनौं ? आफ्नो पूर्ण अनुहारलाई सहाबाहरू (मित्रहरू) तिर गरेर भन्नुभयो : " ***के तिमीहरूले यस महिला भन्दा राम्रो तर्क कहिले पनि अरू कुनै सित सुनी राखेका छौ ?*** " साथीहरूले उत्तर दिएः हे अल्लाहका रसूल! हाम्रो ख्यालमा कुनै स्त्री यस्तो राम्रो तर्क दिन र राम्रो कुराकानी गर्न सक्दैन । फेरि उस महिला तिर अनुहार गरेर भन्नुभो : " ***हे नारी ! फर्केर जाऊ र महिलाको समूहलाई अवगत गराइ देऊ कि आफ्नो पति सँग राम्रो व्यवहार गर्नु र उसको प्रसन्नताको कुरालाई खोज्ने गर्नु र उसको आज्ञापालन गर्नु ती सबैको पूण्यमा बराबर छ । त्यो नारी (अस्मा) यो कुरा सुनेर खुशीले अल्लाहो अक्बर र लाइलाइ इल्लल्लाह भन्दै फर्केर गइन*** " **(बैहेकी)** । एक पटक केही महिलाहरू नबी सल्लल्लाहो अलैहेवसल्लम कहाँ पुगेर भनिन कि हे अल्लाहका रसूल ! पुरुषहरूले अल्लाहको बाटोमा जिहाद गरेर हामीमाथि प्रधानता प्राप्त गरिसकेका छन्,त के हामीहरूका लागि पनि यस्तो सुकार्य छ जसलाई गरेर हामी पनि अल्लाहको बाटोमा जिहाद गर्नेहरूको पूण्य सम्म पुग्न सकौं ? नबीले उत्तर दिनुभोः " ***तिमीहरूले आफ्नो घरैमा घरका कार्य गरेर अल्लाहको बाटोमा जिहाद गर्नेहरूको प्रधानता प्राप्त गर्न सक्छौ*** " बरु आफ्नो नातेदार महिलामाथि खर्च गर्नुमा धेरै पूण्य नियुक्त गरिएको छ,नबी सल्लल्लाहो अलैहेवसल्लम भन्नुहुन्छः " ***जस्ले दुई छोरीमाथि वा दुई बहिनी माथि वा दुई नातेदार माथि ती दुबैले धनी हुन सम्म पूण्यको आशयले खर्च गऱ्यो त दुबै उसको लागि नरकको आगोबाट ढाल हुने छन*** "।

## महिलाका केही समस्याहरू

❁ कुनै पुरुषले पर स्त्री सँग एकत्रित हुनु जबकि ऊ सँग कुनै(महरम) नातेदार [1] न होस् हराम छ,नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " ***साथमा नातेदार नभएमा कुनै लोग्ने मानिसको लागि पर स्त्री सँग खाली ठाउँमा एकत्रित हुनु जायज छैन*** "।

❁ महिलाको लागि मस्जिदमा गएर नमाज पढ्नु जायज छ,र यदि उपद्रव तथा फसादको भय होस् भने मस्जिदमा नमाज नढ्ने हेतु जानु नराम्रो कार्य हो,आमा आइशा रजियल्लाहो अन्हाले भन्नुभोः " आजभोलि महिलाहरूले जुन मन नपराएका कार्यहरू उत्पन्न गरेका छिन् तीलाई यदि नबी सल्लल्लाहो अलैहेवसल्लमले हेर्नुहुन्थ्यो भने महिलाहरूलाई मस्जिदमा जानुबाट मनाही गर्नुहुन्थ्यो,जसरी कि बनुइस्राईलमा महिलाको लागि मस्जिदमा जानु मनाही थियो " (बुखारी र मुस्लिम) । एउटी महिला नबी कहाँ आएर भनी : हे अल्लाहका दूत! म तपाईं सँग नमाज पढ्नुलाई मन पराउँछु,नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " मलाई थाहा छ कि तिमी म सँग नमाज पढ्नुलाई बेस ठान्छौ,तर यो कुरा पनि स्मरण राख! कि तिमीले आफ्नो कोठा भित्र नमाज पढनु बेस छ कोठाको किनारामा पढ्नु भन्दा,र कोठाको किनारामा नमाज पढ्नु राम्रो छ कोठाको बाहिरी भागमा नमाज पढनु भन्दा,र कोठाको बाहिरी

---

[1] महिलाको नातेदारबाट ती पुरुषहरू अभिप्राय छन जुन सँग महिलाले बिहे गर्नु कहिल्यै जायज हुँदैन,जस्तो बुबा,बाजे,छोरो,नाती, दाजु-भाई,भतिजो,भान्जो,काका,फुपाजु,मामा,ससुरो,पतिको छोरो (अर्की पत्नीबाट),दुधे बुबा,छोरो,दाजु-भाई,जुवाइँ र सौतेलो बाबु ।

भागमा नमाज पढनु राम्रो छ टोलको मस्जिदमा नमाज पढनु भन्दा,र टोलको मस्जिदमा नमाज पढनु राम्रो छ मेरो यस मस्जिदमा नमाज पढनु भन्दा " (अहमद) | र नबी सल्लल्लाहो अलैहेवसल्लमले यो पनि भन्नुभोः " *स्त्रीगनको लागि सब भन्दा राम्रो मस्जिद उनको घर नै हो* "|

❁ महरम नातेदार नपाइएमा महिला माथि हज र उम्रा गर्नु अनिवार्य छैन, यसै गरी उसको लागि बिना महरम नातेदारको यात्रा गर्नु पनि जायज छैन, नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " *कुनै महिलाको लागि बिना महरम नातेदारको तीन दिन भन्दा बढी अवधि सम्म यात्रा गर्नु जायज छैन* "|

❁ महिलाको लागि कब्रिस्तानको दर्शन गर्नु र शवयात्रा (जनाजा) मा जानु बर्जित छ,नबी सल्लल्लाहो अलैहेवसल्लम भन्नुहुन्छः " *अल्लाहको धिक्कार होस चिहानहरूको दर्शन गर्ने महिलाहरूमाथि* "| आदरणीय उम्मे अतीयाको भनाई छ कि हामीलाई शवयात्रामा जानुबाट मनाही गरिएको छ र यस माथि ठोस् इरादा गरीएको होइन (मुस्लिम) |

❁ महिलाको लागि कुनै पनि रँगले कपाललाई रँगनु जायज छ तर कालो रँगले रँगनु नराम्रो कार्य हो,र यदि बिहे गर्ने इच्छुक व्यक्तिलाई धोका दिने हेतु कालो रँगले कपाल रँगछे भने त्यो कार्य हराम भइहाल्छ |

❁ दायमा महिलाको लागि अल्लाहले जुन भाग नियुक्त गर्नुभएको छ भने त्यसलाई महिलालाई दिनु अनिवार्य छ,र त्यसबाट उसलाई बंचित गर्नु हराम हो | यस विषयमा नबी सल्लल्लाहो अलैहेवसल्लम बाट यो वर्णन आएको छ : " *जसले कुनै उत्तराधिकारीको दायमा नियुक्त भागबाट बंचित गऱ्यो अल्लाह उसलाई प्रलय हुने दिन स्वर्गको दायबाट बंचित गर्नेछन्* " |

❁ पतिमाथि पत्नीको खर्च-बर्च दिनु अनिवार्य छ जसमा प्रत्येक यस्तो कुरा शामेल छ जो जीवन व्यतीत गर्नको लागि अनिवार्य छ जस्तो बास,गाँस र कपास यी सबैलाई राम्ररी दिनु अनिवार्य हो | अल्लाह तआला भन्नुहुन्छः ﴿لِيُنفِقْ ذُو سَعَةٍ مِّن سَعَتِهِۦ وَمَن قُدِرَ عَلَيْهِ رِزْقُهُۥ فَلْيُنفِقْ مِمَّآ ءَاتَىٰهُ ٱللَّهُ﴾ " *सम्पन्न व्यक्तिले आफ्नो सम्पन्नता अनुसार नै खर्च गरोस् र जसलाई कम जीविका दिइएको छ त्यसले त्यसै धनबाट खर्च गरोस् जुन अल्लाहले उसलाई प्रदान गरेका छन्* "| र यदि अविवाहिता वा पति न भएकी महिला होस भने उसको बुबा वा उसको दाजु-भाई वा उसको छोरामाथि उसको खर्च-बर्च दिनु पर्छ,र यदि कुनै नातेदार छैन भने सबै मानिसमथि उसको खर्च-बर्च दिनु पर्छ | जसरी कि हदीसमा आएको छ : " *विधवा र दीन-दुखीको सुसार गर्नेवाला अल्लाहको बाटोमा जिहाद(धर्म युद्ध)गर्ने जस्तो हो वा रात्रीमा नमाज पढ्ने तथा दिनमा ब्रत बस्ने जस्तो हो* " |

❁ महिला आफ्नो सानो छोरा-छोरीको लालन-पालनको ज्यादै अधिकार राख्दैछे जब सम्म कि उसको विहे न होस्,र जब सम्म बालक आमाको लालन-पालनमा रहोस् त्यस अवधिको खर्च-बर्च बुबामाथि दिनु अनिवार्य छ |

❁ जब महिला तरुणी होस वा फसादको भय होस् भने महिलालाई सलाम गर्नुमा आरम्भ गर्नु न राम्रो कुरा हो |

❁ प्रत्येक शुक्रबार नाभिमुनिको रौं कोर्नु,कांख मुनिको रौंलाई उखेल्नु र नँङलाई काट्नु राम्रो हो र ४० दिन बढी सम्म त्यसलाई छोड्नु नराम्रो कुरा हो |

❁ अनुहारमा उमर्ने रौंलाई उखेल्नु वा भौंलाई उखेल्नु हराम छ,नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " *आफ्नो अनुहारको रौं आफैं उखेल्ने वाली र अरूलाई उखेल्नुको आदेश दिएर यो कार्य गर्नेवाली दुबै माथि अल्लाहको धिक्कार होस्* "|

❁ **शोकः** पति बाहेक अरू कुनै मृतकमाथि महिलाको लागि तीन दिन भन्दा बढी समय सम्म शोक गर्नु जायज छैन,जस्तो कि नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " *अल्लाह र प्रलय हुने दिनमाथि ईमान राख्ने कुनै महिलाको लागि आफ्नो पति बाहेक अरू मृतकमाथि तीन दिन भन्दा बढी शोक गर्नु हराम छ* "| पति मरे पछि महिला माथि चार महिना दश दिन सम्म शोक मनाउनु अनिवार्य छ | शोक मनाउने अवधिमा महिलाले बनाउ सिंगा र इत्तर (सुगन्ध) प्रयोग गर्नु अनिवार्य रूपले छाडनु पर्छ, यसै गरी गहना पहिर्नु चाहे त्यो औंठी किन न होस्,र सुन्दरता बढाउने रंगको लुगा लाउनु जस्तो रातो र पहैंलो रंग,र मेहदीले सुन्दर बन्नु वा मेकअप गर्नु वा सुर्मा प्रयोग गर्नु वा सुगन्धित वस्तुबाट सुगन्ध प्राप्त गर्नु यी सबै कुराहरूलाई शोकको अवस्थामा छोडनु पर्छ, र यस अवस्थामा महिलाको लागि नँङ काट्नु,कपाल उखेल्नु

र स्नान गर्नु जायज छ। र शोकको अवस्थामा कुनै खास रंगको लुगा लगाउनु अनिवार्य छैन जस्तो कालो रंगको। महिलाले बसेको घरमा पतिले मृत्यु पायो भने त्यसै घरमा नै महिला शोक मनाउँछे,र बिना कुनै खास आवश्यकताको त्यस घरको साटामा अरूमा सर्नु जायज छैन। यसै गरी बिना कुनै अवश्यकताको घरबाट बाहिर निस्कनु जायज छैन र यदि अवश्यकता छ भने दिनैमा निस्केर पूरा गर्नु पर्छ।

❁ बिना कुनै आवश्यकताको टाउकोको कपाल महिलाले कोर्नु बर्जित छ,र पुरुषको अनुरूपता तथा समानता न गरीकन टाउकोको कपाल सानो गराउनुमा केही आपत्ति छैन। किनकि एउटा हदीसमा आएको छः " ***महिला मध्ये पुरुषको समानता र अनुरूपता गर्ने महिलामाथि रसूलुल्लाह सल्लल्लाहो अलैहेवसल्लमले धिक्कार गर्नु भएको छ*** "। र काफिर महिला सँग समानता गर्नु पनि मनाही छ जस्तो यस हदीसमा छ : " ***जस्ले जुन समुदायको समानता अख्तियार गर्छ त्यो त्यही समुदाय मध्ये भइहाल्छ*** "।

❁ घरबाट निस्कदा खेरि महिला आफ्नो पूरै शरीरलाई च्यादर वा बुर्कीले छोप्नु अनिवार्य छ,र त्यस च्यादर वा बुर्कामा पाइने केही शर्तहरू छनः १) पूरै शरीरलाई छोप्ने गर्छ। २) त्यो आफै सिंगार न होस। ३) त्यो यस्तो बाक्लो हुनु पर्छ जसबाट शरीरको अंग स्पष्ट न होस्। ४) खुकुलो होस साँगुरो न होस्। ५) त्यो सुगन्धित न होस्। ६) पुरुषको पोशाक जस्तो न होस्। ७) काफिर महिलाहरूको पहिरन जस्तो न होस्। ८) त्यो ख्याती पोशाक न होस्। र जस लुगामा मनुष्य वा जनावरको चित्र होस त्यसलाई लाउनु वा लट्काउनु, वा त्यसबाट प्रखाललाई सजाउनु वा त्यलाई किन बेच गर्नु हराम हो।

**महिला पर-पुरुष सँग पर्दा गर्नुमा तीन प्रकारकी हुन्छे : १) पतिः** पतिको लागि पत्नीको प्रत्येक अंग हेर्नु जायज छ। **२)** यस्तो नातेदार जस सँग बिहे गर्नु कहिल्यै जायज हुँदैनः महिलाका यस्तो अंग जुन अधिकतर समयमा खुल्ला हुन्छ त्यसलाई यिनीहरूको लागि हेर्नु जायज छ जस्तो अनुहार,कपाल,घाँटी,हात,बाहीं,पाइला आदि। **३)** यिनी बाहेक अरू पुरुषहरूको लागि महिलाका कुनै पनि अंग बिना आवश्यकताको हेर्नु जायज छैन जस्तो बिहे गर्ने हेतु हेर्नु वा उपचार आदिको लागि हेर्नु। किनभने फसाद र बिगारको जरो महिलाको अनुहार नै हो। फातिमा बिन्ते मुन्जिर रजियल्लाहो अन्हाले भन्नुभोः " हामीहरू पर-पुरुषको अगाडि आफ्ना अनुहारलाई छोप्ने गर्थ्यौं " (हाकिम)। र यस विषयमा आदरणीय आइशा रजियल्लाहो अन्हाको भनाई छ : " हामी नबी सल्लल्लाहो अलैहेवसल्लम सँगै थियौं र यात्रीहरू पनि हिंडदथे जब उनीहरू हाम्रो नजीक हुन्थे तब हामीहरू आफ्नो टाउकोबाट पछेउरोलाई तानेर अनुहारलाई छोप्ने गर्थ्यौं र उनीहरूले टाढा भए पछि फेरि हामी अनुहारलाई खोल्दथ्यौं " (अबुदाऊद)।

❁ **इद्दत (शोक मनाउने वा विवाह बिच्छेद पछि पर्खने अवधि) : १) गर्भवती :** विवाह बिच्छेद पछिको पर्खने अवधि र पतिको मृत्यु पश्चात शोकको अवधि शिशुलाई जन्म दिनु हो। **२)** पतिको मृत्यु पश्चात शोकको अवधि (गर्भवती बाहेक अरू महिलाको लागि) ४ महीना १० दिन हो। **३)** महिनावारी आउने महिलालाई तलाक (विवाह विच्छेद) भयो त त्यसको अवधि तीन पटक महिनावारीको रगत आउनु हो र तेस्रो पटक रगत आए पश्चात पवित्रता प्राप्त गरेर पर्खनुको अवधि पूरा भइहाल्छ। **४)** माहवारी न आउने महिला (जस्तो बूढ़ी, बालिका) त यसको पर्खने समय तीन महीना हो।

# नमाज

**आजान र इकामत** घरैमा बस्ने (अर्थात यात्रामा नभए) पुरुषहरूमाथि फर्ज किफाया छन् (अर्थात एकले गरेर सबै बाट त्यसको अनिवार्यता समाप्त भइहाल्छ) | र एक्लै नमाज पढ्ने र यात्रीको लागि सुन्नत (राम्रो) र महिलाहरूको लागि नराम्रो हुन् | समय हुनु भन्दा अघि आजान र इकामत भन्नु जायज छैन,अँ,यदि फज्र (बिहान) को आजान होस् भने आधी रात्री पश्चात आजान भन्नु जायज छ |

**नमाजका शर्तहरूः** **१)** इस्लाम (अर्थात मुसलमान हुनु) **२)** बुद्धि **३)** वस्तुहरूमा फर्क पार्ने विवेक हुनु **४)**सामर्थ्य भएर पवित्रता प्राप्त गर्नु **५)** समय हुनु | **जोहरको समयः** सूर्य ढले पछि आरम्भ भइ प्रत्येक वस्तुको छाया त्यसको बराबर हुन सम्म बाँकी रहनेछ | अनि **अस्रको समयः** जोहरको समय समाप्त भइ आरम्भ हुन्छ र प्रत्येक वस्तुको छाया त्यसको दुगुना भएर समाप्त भइहाल्छ र यो राम्रो समय हो,र आवश्यकता परेमा सूर्यास्त सम्म बाँकी रहनेछ | अनि **मग्रिबको समयः** सूर्यास्त भएर प्रारम्भ हुन्छ र साँझको लालिमा समाप्त हुने बित्तिकै समाप्त भैहाल्छ | अनि **इशाको समयः** साँझको लालिमा समाप्त भए पछि आधा राति सम्म बाँकी रहनेछ यो राम्रो समय हो,र आवश्यकता परेमा फज्र उदय (उषा काल) सम्म बाँकी रहनेछ | अनि **फज्रको समयः** बिहान भए पछि प्रारम्भ भइ सूर्योदय नहुन्जेल बाँकी रहनेछ | **६)** गुप्तांगलाई छोप्नु [1] **७)** सामर्थ्य भई शरीर,लुगा र नमाज पढिने ठाउँबाट अपवित्रतालाई टाढा गर्नु **८)** सामर्थ्य भएर किब्ला तिर मुख गर्नु **९)** नियत गर्नु |

**नमाजका आधारहरू :** ती १४ वटा छन : **१)** फर्ज नमाजहरूमा तागत रही उभ्नु (कयाम गर्नु) **२)** तक्बीरे एहराम (पहिलो पटक अल्होअक्बर भन्नु) **३)** सुरह फातिहालाई पढनु **४)** प्रत्येक रकातमा रुकु गर्नु (निहुर्नु), **५)** रुकु पछि उभ्नु **६)** रुकु पछि राम्ररी र शान्तिपूर्वक उभ्नु **७)** सातवटा अंगहरू माथि सज्दा गर्नु (टाउको टेक्नु अर्थात ढोग गर्नु) **८)** दुबै सज्दा बीच बस्नु **९)** अन्तिम तशह्हुद (अत्तहियात) पढनु **१०)** अन्तिम तशह्हुदको लागि बस्नु ११) अन्तिम तशह्हुदमा नबी माथि दरूद पढनु **१२)** एक तिर सलाम फेर्नु **१३)** नमाजका सम्पूर्ण कार्यहरू शान्तिपूर्वक पूरा गर्नु **१४)** नमाजका आधारहरूलाई क्रमानुसार पूरा गर्नु |

**यी आधारहरूलाई बिना पूरा गरी नमाज सही हुँदैन,जानीबुझीकन वा भुलचूकले यी कुराहरू मध्ये कुनै एउटा कुरालाई पनि छाडियो भने नमाज सही हुँदैन |**

**नमाजमा अनिवार्य कार्यहरू :** र ती ८ वटा छन : **१)** पहिलो तक्बीरको अलावा सबै तक्बीर **२)** इमाम र एक्लै नमाज पढ्नेले समेअल्लाहोलेमन् हमेदह भन्नु **३)** रुकु पश्चात रब्बना व लकल्हम्द भन्नु **४)** रुकुमा सुब्हान रब्बेयल्अजीम एक पटक भन्नु **५)** सज्दामा सुब्हान रब्बे यल्आला एक चोटि भन्नु **६)** दुबै सज्दा माझको दुआ रब्बिग् फिर्ली पढनु **७)** पहिलो बैठकमा अत्तहियात पढनु **८)** पहिलो तशह्हुदको लागि बस्नु |

**यी अनिवार्य कार्यहरूलाई जानाजान छाडनाले नमाज सही हुँदैन,र भुलचूकले यदि छाडियो भने सज्दा सहउ गर्नु पर्छ |**

**नमाजमा सुन्नत (राम्रा) कार्यहरूः** र यी कार्यहरू मध्ये केही भनिने कुराहरू छन् र केही गरिने कर्महरू छन् | यी कार्यहरूलाई जानीबुझीकन पनि छाडेर नमाज सही हुनेछ | **भनिने राम्रा कुराहरूः** दुआए सना पढनु,अऊजो बिल्लाह र बिस्मिल्लाह पढनु,आमीन भन्नु र ठूलो स्वरमा पढिने नमाजमा ठूलो स्वरले आमीन भन्नु, सूरह फातिहा पढे पछि कुरआनका जो सूरह पनि कण्ठस्थ होस पढनु,इमाम (नमाज पढाउने अगुवा) को लागि ठूलो स्वरमा कुरआन पाठ गर्नु,(र मुक्तदी अर्थात इमाम पछि नमाज पढने व्यक्तिहरूको लागि ठूलो स्वरमा कुरआन पढनु मनाही छ र एक्लै नमाज पढने व्यक्तिको लागि अख्तियार छ चाहे ठूलो स्वरमा पढोस वा मसिनो स्वरमा) | र रब्बना व लकल्हम्द पछि हम्दन् कसीरन् तय्येबन् मोबारकन् फीह् मिल्उस्समावाते व मिल्उल् अर्जे अन्तिम सम्म पढनु | र रुकु वा सज्दामा एक पटक भन्दा बढी मात्रामा दुआ पढनु | यसै गरी एक चोटि भन्दा बढी मात्रामा रब्बिग् फिर्ली भन्नु | र सलाम भन्दा

---

[1] **गुप्तांगः** मनुष्यको अगिल्लो र पछिल्लो गुप्तांग हो जसको कारणले लज्जा लाग्छ,७ वर्षको केटाको गुप्तांग मात्र अगिल्लो र पछिल्लो गुप्तांग छ,र १० वर्षको केटाको गुप्तांग नाभि देखि घुँडा सम्म छ | र वयस्क (बालिग) महिलाको अनुहारलाई छाडी सम्पूर्ण शरीर नै गुप्तांग हो, पर पुरुषको उपस्थितीमा अनुहार छोपेर नमाज पढनु पर्छ र यदि पर पुरुष उपस्थित छैन भने अनुहारलाई नमाज पढने बेला खुल्ला राख्नु पर्छ,र यदि नमाज पढ्दा वा काबाको तवाफ (परिक्रमा) गर्दा महिलाको शरीरको कुनै अंग खुल्यो जस्तो बाँह त उसको नमाज व्यर्थ भइहाल्छ | र ठूलो गुप्तांग अगिल्लो र पछिल्लो गुप्तांग हो यसलाई नमाज बाहेक अरू समयमा पनि छोप्नु अनिवार्य हो,र बिना आवश्यकताको दुबैलाई खोल्नु नराम्रो कार्य हो चाहे एक्लै होस वा अन्ध्यारोमा होस् |

पहिलो दुआ माग्नु । **गरिने राम्रा कार्यहरू :** तक्बीरतुलएहराम (पहिलो तक्बीर) गर्दा र रुकुमा निहुर्दा तथा रुकु बाट उभ्दा र पहिलो तशहहुदको बैठक बाट उभ्दा दुबै हात उठाउनु (रफ्उल् यदैन गर्नु) । कयाम (उभ्नु) को अवस्थामा देब्रे हात माथि दायाँ हात राखी छाती माथि याख्नु,टाउको टेक्नु (ढोग) को ठाउँमा हेर्नु,कयामको अवस्थामा दुबै पाइला बीचमा केही दूरी राख्नु,सज्दा (ढोग) गर्दा पहिला दुबै घुँड़ा अनि दुबै हात अनि निधार फेरि नाक राख्नु,दुबै बाँहलाई पार्श्वबाट टाढा राख्नु यसैगरी पेटलाई तिघ्रा बाट र तिघ्रालाई पिंडौलाबाट टाढा राख्नु,र दुबै घुँडा बीच अन्तर राख्नु,दुबै पाइलालाई खडा राखी छुट्टा छुट्टै राखेर दुबै पाइलाका औंलाहरू भूईंमाथि
राख्नु,यसै गरी सज्दाको हालतमा दुबैहात खुल्ला राखी औंलाहरूलाई मिलाएर राख्नु,र दुबै पाइलाका औंलाहरूमाथि भार दिई र हातले दुबै घुँड़ालाई समाती उभ्नु । दुबै सज्दा बीच र पहिलो तशहहुदमा पाइलालाई पसारी त्यसमाथि बस्नु,र दोस्रो तशहहुदमा दायाँ खुट्टालाई खडा राखी देब्रे खुट्टालाई त्यसको तलबाट पसारेर बाहिर निकाली भूईंमाथि बस्नु, र दुबै सज्दा बीच तथा पहिलो तशहहुको बैठकमा दुबै हातका औंलाहरूलाई खुल्ला गरी तिघ्रामाथि राख्नु र अन्तिम तशहहुदमा, र दायाँ हातको कान्छी औंलो र काँइलो औंलोलाई मुठ्ठी बनाई बुढी औंलो सँग माझी औंलोलाई परिधीको रूप बनाई चोर औंलोले अल्लाहको नाम आउँदा र दुआ गर्दा संकेत गर्नु र यो संकेत अल्लाहको एक्लै हुन तिर हो । र सलाम फेर्दा दायाँ र देब्रे दुबै तिर मुख गर्नु,र दुबै तिर सलाम फेर्नुमा दायाँ तिरलाई पहिलो गर्नु ।

**सज्दा सहवः** (भूलको सज्दा) जब कुनै सही कार्यलाई त्यसको आफ्नो ठाउँलाई छाडी अरू ठाउँमा गर्नाले यो सज्दा गर्नु सुन्नत (राम्रो) हो,जस्तो सज्दाको अवस्थामा कुरआनको पाठ गर्नु । र जब कुनै जायज कार्यलाई नमाजको अवस्थामा छाड्यो भने त्यस बेला यो सज्दा गर्नु जायज हो । र तलका कुराहरूमा सज्दा सहव गर्नु अनिवार्य छ जस्तोः रुकु वा सज्दा वा कयाम वा बस्नुमा बढोतरी गर्नु,वा नमाज सम्पन्न हुनु भन्दा अघि नै सलाम फेर्नु,वा कुरआन पाठ गर्दा यस्तो तवरले पाठ गर्नु जसले गर्दा अर्थमा हेरफेर भइहालोस्,वा कुनै अनिवार्य कार्यलाई छाडीयो,वा कुनै कार्य गर्ने समयमा बढोतरी हुनमा शंका गर्नु । र अनिवार्य (वाजिब) सज्दा सहव छाड्नाले नमाज मिथ्या भइहाल्छ । सज्दा सहव चाहे सलाम गर्नु भन्दा पहिलो गरियोस वा पछि आफ्नो चाहना अनुसार छ । र यदि सज्दा सहवलाई बिर्सियो र अधिक समय बिति सक्यो भने त्यो आफैं समाप्त भइहाल्छ ।

**नमाज पढिने विधिः** जब नमाजको लागि उभोस त किब्ला (पश्चिम) तिर मुख गरोस् र यदि इमाम (अगुवा) छ भने ठूलो स्वरले अल्लाहु अक्बर भनोस् यसै गरी सबै तक्बीर (अल्लाहु अक्बर) लाई (मुक्तदीलाई) पछि नमाज पढनेलाई सुनाउने गरी ठूलो स्वरमा भनोस्, र इमाम बाहेक अरू नमाज पढनेहरू मसिनो स्वरमा तक्बीर भनोस । र तक्बी भन्दा दुबै हातलाई काँध सम्म उठायोस् फेरि दुबै हत्केलालाई दायाँले देब्रे हत्केलालाई समाते गरी छाती मुनि बाँधोस् । र आफ्नो सज्दा गर्ने ठाउँमा देखोस्,अनि हदीसमा आएको केही दुआहरू मध्ये कुनै दुआ पढोस्,जस्तो यो दुआः " ***सुब्हानकल्लाहुम्म व बेहम्देक व तबारकस्मोक,व तआला जद्दोक,व लाइलाह गैरोक "" सुब्हानकल्लाहुम्म व बेहम्देक व तबारकस्मोक,व तआला जद्दोक,व लाइलाह गैरोक*** " (हे अल्लाह! म तपाईंको प्रशंसा र पवित्रताको वर्णन गर्दछु,तपाईंको नाम अति उन्नतिवाला, तपाईंको महिमा अपरम्पार, र तपाई बाहेक कोही सत्य पूज्य छैन) फेरि **अऊजो बिल्लाहे मिनश्शैता निर्रजीम** अनि **बिस्मिल्ला हिर्रहमा निर्रहीम** पढेर सुरह फातिहा पढोस् । र यदि ठूलो स्वरमा पढिने नमाज छ भने मुक्तदीको लागि इमामले चुप लाग्ने ठाउँमा र जुन रक्आतमा ठूलो स्वरमा कुरआन पाठ गर्दैन भने त्यसमा मसिनो स्वरमा सूरह फातिहाको पाठ गर्नु राम्रो छ,र यदि मसिनो स्वरमा पढिने नमाज छ भने मुक्तदीले सूरह फातिहा पढनु अनिवार्य छ । फेति कुरआन मध्ये जुन कुरा कण्ठ छ भने त्यसलाई पाठ गरोस् । र बिहानको नमाजमा तिवालुल् मुफस्ल र मग्रिबको नमाजमा किसारुल् मुफस्सल् र बाँकीका नमाजहरूमा औसातुल् मुफस्सल् पढोस् । तिवालुल् मुफस्सल् सूरह काफ देखि सूरह अम्म सम्मलाई भनिन्छ, र औसतुल् मुफस्सल् सूरह अम्म देखि सूरह अज्जोहा सम्म र किसारुल् मुफस्सल त्यहाँ देखि सूरह अन्नास सम्मलाई भनिन्छ । र बिहानका दुबै रक्आतमा यसै गरी मग्रिब र इशाको नमाजका पहिला दुई रक्आतमा इमामले ठूलो स्वरमा कुरआनको पाठ गर्नेछ र बाँकी सबै रक्आतमा मसिनो स्वरमा पढने छ । फेरि अल्लाहु अक्बर भनी रुकु गरोस् र रुकुको अवस्थामा

आफ्ना दुबै हातले औंलाहरूलाई खुल्ला राखी घुँडालाई समातोस् र पिठ्युँलाई सोझो राखी टाउँकोको बराबरमा राखोस् । फेरि तीन पटक *सुब्हान रब्बेयल् अजीम* (पवित्र छन् मेरा पालन्कर्ता जुन कि महान हुन्) भनोस् फेरि *समेअल्लाहोलेमन् हमिदह* भन्दै टाउको उठाओस् फेरि राम्रो सँग उभे पछि यो दुआ भनोस्: *रब्बना व लकल्हम्दो हम्दन् कसीरन् तय्येबम् मोबारकन् फीह मिल्उस्समावाते व मिल्उल् अर्जे व मिल्ओमा शेअ्त मिन् शैयैन् बाअदो* । (हे हाम्रो प्रभु!प्रत्येक प्रकारका अति भन्दा अति उत्तम आकाश र धरती भरी र त्यस पछि तपाईंले चाहेका अरू वस्तुहरू भरी प्रशंसाहरू र अभिवृद्धिपूर्ण पवित्रता मात्र तपाईंकै लागि छन) । फेरि अल्लाहु अक्बर भन्दै सज्दा गरोस् र आफ्नो बाँहलाई पार्श्वबाट टाढा राखी पेटलाई तिघ्रा बाट टाढा राखोस् । र आफ्नो हातलाई काँधको बराबरमा राखोस,र पाइलाका औंलाहरूमाथि भार दिई हात र खुट्टाका औंलाहरूलाई किब्ला तिर राखोस्, फेरि यो दुआ तीन पटक पढोस् *सुब्हान रब्बेयल्आला,* (पवित्र छन मेरा पालक जुन सर्बोच्च हुन) । र नमाज पढने व्यक्तिको लागि जायज छ कि सज्दामा यस भन्दा बढी दुआ पनि पढोस र चाहना अनुसार अल्लाह सित दुआ गरोस् । फेरि अल्लाहु अक्बर भन्दै सज्दा बाट टाउँको उठाओस्,फेरि आफ्नो देब्रे खुट्टालाई बिछ्याई त्यसमाथि बसोस् र दायाँ खुट्टालाई खडा राखी त्यसका औंलाहरूलाई किब्ला तिर राख्नु पर्छ । वा दुबै पाइलालाई खडा राखी तीका औंलाहरूलाई किब्ला तिर राखी कुर्कुच्चो माथि बसोस् र यो दुआ पढोस् **रब्बिग्फिर्ली** दुई पटक र यदि यस दुआलाई पनि बढाएर पढछ भने अति उत्तमः *वर्हम्नी वज्बुर्नी वर्फअनी वर्जुक्नी वन्सुर्नी वह्देनी वआफेनी,* (हे अल्लाह मलाई क्षमा गरिदिनुहोस्,ममाथि दया गर्नुस,मलाई पूर्ण गरिदिनुस,मलाई उच्च गरिदिनुस,र मलाई रोजी दिनुस, र मलाई सहयोग पुऱ्याउनुस, र मलाई सुमार्ग देखाउनुस, र मलाई सुस्वास्थ्य बनाइ दिनुस र मबाट क्षमा गरिदिनुस) फेरि पहिलो सज्दा जस्तो दोस्रो पटक सज्दा गरोस्,अनि अल्लाहु अक्बत भन्दै टाउँको उठाओस् र पाइलाका औंलाहरू माथि भार दिईकन दोस्रो रक्आतको लागि उभोस् र पहिलो जस्तो दोस्रो रक्आत पनि पूरा गरोस् । जब दुई रक्आत पूरा भइहालोस भने तशहहुद पहिला वर्णन भएको तरीका अनुसार बसोस्,देब्रे हातलाई देब्रे तिर्घामाथि र दायाँ हातलाई दायाँ तिर्घामाथि राख्नु पर्छ, र दायाँ हातको कान्छी औंलो र काँइलो औंलोलाई मुट्ठी बनाई बुढी औंलो सँग माझी औंलोलाई परिधीको रूप बनाई चोर औंलोले संकेत गर्नु र यो दुआ पढनु पर्छः *अत्तहियातो लिल्लाहे वस्सलवातो वत्तय्येबातो अस्सलामो अलैक अय्योहन्नबीय्यो वरहमतुल्लाहे व बरकातोहु, अस्सलामो अलैना वअला एबादिल्लाहिस्सालेहीन,अश्हदो अल्लाइलाह इल्लल्लाहो व अश्हदो अन्न मोहम्मदन् अब्दोहु व रसुलुह* (मन वचन र धनका सम्पूर्ण पूजाहरू अल्लाहकै लागि हुन्, हे नबी तिमी माथि सलाम र अल्लाहको कृपा र निगाह रहोस्, सलाम होस् हामी र अल्लाहका असल सेवकहरू माथि, म गवाही दिन्छु कि निस्सन्देह अल्लाह बाहेक कोही पूजनीय छैन, र गवाही दिन्छु कि मोहम्मद अल्लाहका सेवक र रसुल हुन्) फेरि अल्लाहु अक्बर भन्दै तेस्रो रक्आतको लागि उभोस अनि चौथो रक्आतको लागि उभोस् र पहिला अनुकूल नै गरोस् तर ठूलो स्वरमा पाठ न गरोस् र मात्र सूरह फातिहा पढोस् फेरि अन्तिम तशह्हुदको लागि बसोस् यसमा बस्ने विधि यो छ दायाँ खुट्टालाई खडा राखी देब्रे खुट्टालाई त्यसको तलबाट बाहिर निकाली भूईंमाथि बस्नु, (र यो बैठक मात्र दुई तशहहुद हुने नमाजमा हुन्छ) फेरि अत्तहियात (जो पहिलो तशहहुदमा पढिन्छ) पढे पछि यो पढोस्: *अल्लाहुम्म सल्ले अला मोहम्मद् वअला आले मोहम्मद्, कमासल्लैत अला इब्राहीम वअला आले इब्राहीम् इन्नक हमीदुम्मजीद्, अल्लाहुम्म बारिक् अला मोहम्मद् वअला आले मोहम्मद्, कमा बारक्त अला इब्राहीम् वअला आले इब्राहीम् इन्नक हमीदुम्मजीद* (हे मेरा अल्लाह! तपाईं मोहम्मद र उन्का परिवारहरू माथि दाया र निगाह गर्नुस, यसरी कि जुन रूपले तपाईंले इब्राहीम र उनका परिवारहरू माथि दया र निगाह गर्नुभएको थियो, र मोहम्मद तथा उनका परिवारहरू माथि उस्तै बरकत (बृद्धि) गर्नुस जसरी तपाईंले इब्राहीम र उनका परिवारहरू माथि गर्नुभएको थियो । निःसन्देह तपाईं प्रशंसा गर्न योग्य महान हुनुहुन्छ) (यसलाई दरूद शरीफ भनिन्छ) । फेरि यो दुआ पढनु राम्रो हुन्छ : *अऊजोबिल्लाहे मिन् अजाब्बिन्नार,व अजाबिल्कब्रे, व फित्नतिल् मह्या वल्ममात्, व फित्नतिल मसीहिद्दज्जाल* । (हे अल्लाह ! म तपाईंको शरण चाहन्छु नरकको यातना बाट, र कब्र (चिहान) को परीक्षा तथा कष्ट बाट, र दज्जालको उपद्रव बाट, र जीवन मरणको उपद्रव बाट, र पाप तथा कर्जाको उपद्रव बाट तपाईंको शरण चाहन्छु) । र यस भन्दा बढी पनि दुआ पढ्न सकिन्छ, फेरि

दुबै तिर सलाम गरोस् पहिला दायाँ तिर अस्सलामो अलैकुम व रहमतुल्लाह भन्दै अनि देब्रे तिर यसै गरी गरोस्.त्यस पछि जुन दुआहरू यस ठाउँमा आएका छन तीलाई पढ्नु राम्रो हुन्छ ।[1]

**रोगीको नमाजः** उभेर नमाज पढ्नाले यदि रोगमा बढोत्तरी हुन्छ वा उभेर नमाज पढ्ने सामर्थ्य छैन भने बसेर नमाज पढ्नु पर्छ,र यदि बसेर नमाज पढने शक्ति पनि छैन भने शरीरको बगल (करोट) माथि सुतेर नमाज पढोस् र यदि यस्तो गर्नु पनि गाह्रो पर्छ भने पिठ्युँ माथि सुतेर नमाज पढोस्,र यदि रुकु र सज्दा गर्ने सामर्थ्य छैन भने संकेतले रुकु र सज्दा गरोस् । र छुटेका नमाजहरूलाई पुनः पढनु पर्छ,र यदि प्रत्येक नमाजलाई त्यसको समयमा पढनु गाह्रो हुन्छ भने दुई नमाजलाई एकत्रित गरेर दुबै मध्ये कुनै एकको समयमा पढनु मिल्छ जस्तो जोहर र अस्रलाई एकै साथ यसै गरी मग्रिब र इशालाई एकै साथ पढ्न मिल्छ ।

**यात्रुको नमाजः** जब यात्रा ८५ किलो मिटर भन्दा बढी होस् र त्यो यात्रा जायज कार्यको लागि होस् भने चार रक्आतको नमाजलाई दुई रक्आत गरी पढनु पर्छ यसलाई कस्र भनिन्छ । र यदि कसैले ४ दिन (२० नमाज) भन्दा दिन सम्म कुनै ठाउँमा बस्नको नीयत गऱ्यो भने त्यस ठाउँमा पुग्दा नै पूरा नमाज पढनु पर्छ कस्र गर्न मिल्दैन । र यदि यात्रीले घरैमा रहने व्यक्ति सँग नमाज पढ्छ वा घरमा बिर्सेको नमाज यात्रामा याद आयो वा यात्रामा बिर्सेको नमाज घरमा याद आयो भने ती सबै अवस्थाहरूमा पूरै चार रक्आत नमाज पढनु पर्छ । र यात्रीको लागि पूरै चार रक्आत पढ्नु पनि मिल्छ तर कस्र गर्नु उत्तम हो ।

**जुमाको नमाजः** जोहरको नमाज भन्दा अति राम्रो हो,यो एउटा खास नमाज हो,जोहरको नमाजको यो कम्ती रूप छैन,यसैले गर्दा जोहरको नमाज चार रक्आत पढनु जायज छैन,र जोहरको नीयतले पनि जुमाको नमाज पूरा हुँदैन,यसै गरी अस्रको नमाज सँग जुमालाई एकत्रित गरेर पढनु जायज छैन यद्यपि यसको लागि कारण किन न होस् ।

**वित्रः** यो सुन्नत नमाज हो,र यसको समय इशाको नमाज पछि आरम्भ भई फज्रको समय भएर समाप्त हुन्छ, यसको सब भन्दा कम्ती एक रक्आत हो,र बढीमा ११ रक्आत छन् । दुई दुई रक्आत पूरा गरी सलाम गर्नु राम्रो छ,र कम्तीमा सब भन्दा राम्रो तीन रक्आत दुई सलाम सँग हो । पहिलो रक्आतमा सूरह आला (सब्बेहिस्म) र दोस्रोमा सूरह काफेरून र तेस्रो रक्आतमा सूरह इख्लास पढनु बेश छ । वित्रमा रूकु पछि दुआ गर्नु उत्तम छ र दुआको लागि हात उठाउनु पर्छ र एक्लै भएमा पनि ठूलो स्वरमा दुआ गर्नु जायज छ ।

**जनाजाको नमाजः** मुस्लिम मृतलाई स्नान गराउनु,कफन पहिराउनु, उस माथि जनाजाको नमाज पढनु, उसलाई काँधा दिई कब्रस्तानमा दफन गर्नु यी सबै कार्यहरू फर्जे किफाया छन् (अर्थात एकले गरे पछि सबैबाट त्यसको अनिवार्यता समाप्त भइहाल्छ) । तर वीर-गति प्राप्त गरेको (अर्थात शहीद भएको) मान्छेलाई स्नान दिलाउनु तथा कफन पहिराउनु पर्दैन बरु जस गतिमा उसले शहादत प्राप्त गरेको छ भने त्यही अवस्थामा दफ्नाउनु पर्छ, तर उसमाथि जनाजाको नमाज पढनु जायज छ । पुरुष मृतलाई तीन वटा सेतो चादरमा कफ्नाउनु पर्छ र महिला मृतलाई पाँचवटा लुगा पहिराउनु पर्छ अर्थात कम्मरमा पहिराउने लुंगी जस्तो र दुपट्टा र कुर्ता अनि दुईवटा चादर । जनाजाको नमाज पढाउने इमाम र एक्लै पढने व्यक्ति पुरुष मृतकको छातीको सामु उभेर नमाज पढ्छ र महिला मृतकको शरीरको बीच भागमा । फेरि चार पटक अल्लाहो अक्बर भन्नु पर्छ र प्रत्येक तक्बीर सँगै हात पनि उठाउनु पर्छ । पहिलो तक्बीरमा ***अऊजो***

---

[1] र त्यो हो ३ पटक अस्तग्फेरुल्लाह भन्नु र यो दुआ पढ्नु अल्लाहुम्म अन्तस्सलाम्, व मिन्कस्सलाम्, तबारक्त या जल्जलाले वल्इक्राम्, लाइलाह इल्लल्लाहो वह्दहु ला शरीक लहु,लहुल्मुल्को व लहुल्हम्दो व हुव अला कुल्ले शैइन् कदीर, ला हौल वला कुव्वत इल्लाबिल्लाह, लाइलाह इल्लल्लाह व ला नाअबोदो इल्लाह इय्याहो लहुन्नेअतो व लहुल् फज्लो व लहुस्सनाउल् हसन्,लाइलाह इल्लल्लाहो मुख्लेसीन लहुद्दीन व लौकरेहल् काफेरून्, अल्लाहुम्म ला मानेअ लेमा आअ्तैत व ला मोअ्तिय लेमा मनाअ्त, व लायन्फओ जल्जद्दे मिन्कल् जद्दे । र फजर तथा मग्रिब नमाज पछि माथिको दुआ सँगै तल वर्णन भएका दुआहरूलाई पढनु बेस हुन्छ : लाइलाह इल्लल्लाह वह्दहु लरीक लहु लहुल्मुल्को व लहुल्हम्दो,योह्यी व योमीत व हुव अला कुल्ले शय्यिन् कदीर १० पटक । फेरि ३३ चोटि सुब्हानल्लाह र ३३ चोटि अल्हम्दोलिल्लाह र ३३ चोटि अल्लाहो अक्बर र १ पटक पूरे सयमा लाइलाह इल्लल्लाहो वह्दहु लाशरीक लहु लहुल्मुल्को व लहुल्हम्दो व हुव अला कुल्ले शैइन्कदीर अनि आयतल् कुर्सी अनि कुल्होवल्लाहो अहद,कुल्अऊजोबेरब्बिल फलक र कुल् अऊजोबेरब्बिन्नास पढ्नु पर्छ र फजर तथा मग्रिब नमाज पछि तीन तीन चोटि यी सबै सूरहहरूलाई पढनु राम्रो छ ।

*बिल्लाहे मिनश्शैता निर्रजीम र बिस्मिल्ला हिर्रहमा निर्रहीम* पढे पछि मात्र सूरह फातिहा मसिनो स्वरमा पढोस् । फेरि दोस्रो तक्बीर पश्चात दरूद शरीफ पढोस् फेरि तेस्रो तक्बीर पछि मृतकको लागि दुआ गरोस् र चौथो तक्बीर पश्चात अलिकति चुप लागेर खडा रहोस् फेरि सलाम गरोस् । कब्र (चिहान) लाई एक बित्ता भन्दा अग्लो गर्नु हराम छ,र कब्रलाई पक्की बनाउनु त्यसलाई चुम्बन गर्नु,त्यहाँ धुप,धुवाँ र अगरबत्ति बाल्नु,र त्यसमाथि केही लेख्नु र त्यसमाथि बस्नु वा हिंड्नु यी सबै कार्यहरू हराम छन् । यसै गरी चिराक,मोमबत्ति वा बिजुली बत्तिले चिहानलाई प्रकाशित गर्नु,त्यसको परिक्रमा गर्नु,त्यसमाथि मस्जिद निर्माण गर्नु वा मस्जिद भित्र कुनै मृतकलाई दफन गर्नु यी सबै हराम छन् । र चिहान माथि बनाइएका कुब्बा मजार अथवा समाधि भवनलाई भत्काउनु वाजिब (अनिवार्य) छ ।

❈ ताअ्जीयत (मृतक प्रति उसको नातेदार सँग शोक प्रकट गर्नु) को लागि केही खास शब्दहरू छैनन्,तर यस प्रकारले ताअ्जीयत गर्न सकिन्छः आअ्जमल्लाहो अज्रक्,व अहसन अजाअक्,व गफर लेमैय्यितेक् । र काफिरको ताअ्जीयतमा यस्तो भनिन्छः आअ्जमल्लाहो अज्रक्,व अहसन अजाअक् । र काफिरको लागि कुनै मुस्लिम प्रति ताअ्जीयत गर्नु हराम छ ।

❈ कुनै व्यक्तिलाई जब यो थाहा होस् कि उसको मृत्यु पश्चात उसको घर परिवार उसमाथि रुने कराउने छन भने उसमाथि न रुनु कराउनुको लागि उपदेश गर्नु अनिवार्य छ । नत्र घर परिवारको रुनुको कारणले उसलाई यातना हुनेछ ।

❈ धर्म गुरू इमाम शाफईले भन्नुभोः ताअ्जीयतको लागि घरमा बस्नु नराम्रो कार्य हो,अर्थात मृतकको जहान परिवारले एउटा घरमा एकत्रित हुनु ताकि ताअ्जीयत गर्नेवाला त्यहाँ आएर ताअ्जीयत गरोस्, बरु ताअ्जीयत गरेर आ-आफ्नो कार्यमा संलग्न हुनु राम्रो हो चाहे त्यो पुरुषहरू हुन वा महिलाहरू ।

❈ मृतकको घर परिवारको लागि खाना तयार पार्नु अति नै राम्रो काम हो । र त्यस खाना मध्ये कुनै कुरा अरूको लागि खानु नराम्रो काम हो,यसै गरी एकत्रित हुने व्यक्तिहरूको लागि मृतकको परिवारले खाना तयार पार्नु सही कुरो होइन ।

❈ यात्राको तयारी न गरेर मुस्लिमको चिहानको दर्शन (जियारत) गर्नु सुन्नत (राम्रो) हो,बरु काफिरको कब्रको जियारत गर्नु पनि जायज छ,र काफिरको लागि पनि कुनै मुस्लिमको कब्रलाई दर्शन गर्नुमा केही आपत्ति छैन ।

❈ कब्रस्तानमा प्रवेश गर्दा यो दुआ पढनु बेस छ : अस्सलामो अलैकुम् दार कौमिन् मोमेनीन्, वा अहलद्दैयारे मिनल् मोमेनीन् व इन्ना इन्शाअल्लाहो बेकुम् लाहेकून्, यर्हमुल्लाहुल्मुस्तक्देमीन मिन्ना वल्मुस्ताअ्खेरीन्, नस्अलुल्लाह लना व लकुमुल्आफिया,अल्लाहुम्म लातह्‌रिम्ना अज्रहुम् व ला तफ्तिन्ना बाअ्दहुम्,वग्फिर्लना व लहुम् ।

**दुबै ईद (तिहार) को नमाजः** यो फर्ज किफाया हो (अर्थात एकले गर्नाले सबै माथि बाट अनिवार्यता समाप्त भइहाल्छ) यसको समय चाश्तको नमाजको समय हो (अर्थात सूर्योदय भए केही समय पछि) । र यदि सूर्य ढले (जवाल) पछि ईदको बारेमा थाहा भयो भने भोलि पल्ट नमाजलाई कजा मानी पढनु पर्छ । दुबै खुत्बा (प्रवचन) को अलावा जुमामा पाइने शर्तहरू यसमा पनि पाइन्छन् । ईदको नमाज पछि वा अघि ईदगाह (ईदको नमाज पढिने ठाउँ) मा नफल नमाफ पढनु नराम्रो कुरा छ । ईदको नमाजको विधिः दुई रक्आत नमाज हो, पहिलो रक्आतमा तक्बीरतुल्एहराम (पहिलो तक्बीर) पछि र अऊजोबिल्लाह पढनु भन्दा अघि ६ पटक थप तक्बीर पढिनेछ । र दोस्रो तक्बीरमा कुरआन पाठ गर्नु भन्दा अघि ५ पटक तक्बीर भन्नुपर्छ । र प्रत्येक तक्बीर सँग दुबै हात काँध सम्म उठाउनु पर्छ,फेरि अऊजोबिल्लाहे मिनश्शैतानिर्जीम पढेर ठूलो स्वरमा सूरह फातिहा पढोस् अनि पहिलो रक्आतमा फातिहा पश्चात सूरह सब्बेहिस्सम र दोस्रो रक्आतमा सूरह गाशिया पढोस् र सलाम गरे पछि जुमा जस्तो दुई खुत्बा (प्रवचन) दिनु पर्छ,र सुन्नतको तरीका हो कि दुबै खुत्बामा ज्यादा भन्दा ज्यादा अल्लाहुअक्बर भनोस् । र यदि ईदको नमाज नफल नमाज सरह पढ्छ भने ता पनि नमाज भइहाल्छ किनकि थप तक्बीर सुन्नत हो अनिवार्य होइन ।

**ग्रहणको नमाजः** यो सुन्नत हो,यसको समय सूर्य वा चन्द्रमामा उपराग लागे पछि आरम्भ भई समाप्त न भए सम्म बाँकी रहनेछ । उपराग समाप्त भए पछि यस नमाजको कजा गर्नु मिल्दैन । यो नमाज पनि दुई रक्आत हो, पहिलो रक्आतमा ठूलो स्वरमा सूरह फातिहा पढे पछि लामो सूरह पाठ गरिन्छ फेरि लामो

रुकु गरिन्छ अनि समेअल्लाहो लेमन् हमिदह भनी टाउको उठाओस् र रब्बना वलकल् हम्द भनेर सज्दा न गरीकन पुनः सूरह फातिहा र लामो सूरह पाठ गरियोस्, फेरि लामो रुकु गरोस् अनि टाउको उठाओस् र फेरि सज्दामा जाओस् र दुबै सज्दा लामो गरियोस् फेरि दोस्रो रक्आत पहिलो रक्आत सरह नै पढियोस् फेरि तशह्हुदका दुआहरू पढेर सलाम फेरियोस् । र यदि कुनै व्यक्ति इमामले पहिलो रुकु गरे पछि नमाजमा शामेल भयो भने उसले रक्आत पाएन ।

**वर्षाको नमाजः** खेडेरी र अकाल भएको अवस्थामा अल्लाह सित वृष्टि माग्ने हेतु यो नमाज पढिन्छ । यस्को समय,विधि र प्रक्रियाहरू ईदको नमाज जस्ता नै हुन्,तर यसमा एउटा कुरा मात्र भिन्न छ कि यो नमाज पढे पछि मात्र एक खुत्बा दिइन्छ । र नमाज पढे पछि च्यादरलाई फर्काउनु सुन्नत हो यो आशा लिएर कि तत्काल स्थितिमा हेरफेर हुनेछ ।

**नफल (बढी) नमाजः** (अर्थात अनिवार्य बाहेक अरू बढी नमाज) नबी सल्लल्लाहो अलैहेवसल्लम बाट प्रमाणित छ कि उँहा अनिवार्य नमाजहरूको अलावा प्रत्येक दिन र रातीमा १२ रक्आत नमाज पढ्नु हुन्थ्योः २ रक्आत फज्र नमाज भन्दा अगि,र ४ रक्आत जोहर भन्दा पहिलो,र २ रक्आत त्यस पछि,यसै गरी इशाको नमाज भन्दा पछि २ रक्आत । यी नफली नमाजहरू बाहेक अरू बढी नमाजहरू नबी सल्लल्लाहो अलैहेवसल्लम बाट प्रमाणित छन् ।

**मनाही समयहरू :** केही समयहरू यस्ता छनु जुनमा नफली नमाजहरू पढ्नु हराम छः जस्तो १) फज्र (प्रभ ात) उदय भए पछि सूर्योदय हुने सम्म र सूर्य एक भालाको बराबर भए सम्म । २) सूर्य जब ठीक टाउको माथि बीच आकाशमा होस् यहाँ सम्म कि त्यो ढली हालोस् । ३) अस्रको नमाज पश्चात यहाँ सम्म कि सूर्यास्त भइहालोस् । र कारणवाला नमाजहरू माथि वर्णन भएका समयहरूमा पनि पढ्नु जायज छ, जस्तो तह्यतुल् मस्जिद (मस्जिदमा प्रवेश हुने बेला पढिने नमाज) काबाको तवाफ गरे पछि दुई रक्आत पढनु, फज्रको दुई रक्आत सुन्नत,तह्यतुल् वजू (वजू गरे पश्चात दुई रक्आत नमाज) र कुरआन पाठ गर्दा सज्दा गर्नु र आभार व्यक्त गर्दा सज्दा गर्नु ।

**मस्जिदका व्यवहारहरू :** आवश्यकता अनुसार मस्जिद निर्माण गर्नु वाजिब (अनिवार्य) हो,र अल्लाह समक्ष सब भन्दा राम्रो ठाउँ मस्जिद नै हो, तलका कुराहरू मस्जिदमा गर्नु एकदमै हराम छः गाना गाउनु,ताली बजाउनु, ढोल ताशा र धुनका यन्त्रहरू बजाउनु, अश्लील र गलत किसिमको कविता पढनु र शायरी गर्नु, पुरुष र महिला एकत्रित हुनु, सहवास गर्नु र कुनै वस्तु किन बेच गर्नु । र जुन मान्छे मस्जिदमा किन बेच गर्छ भने त्यसलाई यो श्राप दिनु सुन्नत (बेस) हो कि अल्लाह तिम्रो कारोबारमा लाभ न देऊन् । यसै गरी मस्जिद भित्र बाहिरमा हराएको वस्तुलाई खोज्नु,र जुन यस्तो गर्छ उसलाई यो श्राप दिनु जायज छ कि अल्लाह तिम्रो हराएको सामानलाई फिर्ता नगराउन् । र मस्जिद भित्र फोहोर न गर्ने सानो केटा केटीहरूलाई शिक्षा दिनु जायज छ यसै गरी निकाह (विवाह) गर्नु,कुनै मामिलामा निधो गर्नु,राम्रो कविता पढनु,त्यसमा एअ्तेकाफ गर्ने व्यक्ति वा अरू व्यक्तिले सुत्नु जायज छ । यसै गरी कुनै पाहुनाले मस्जिद भित्र सुत्नु वा रोगीले सुत्नु वा भोजन गरे पछि विश्राम गर्नु जायज छ । र मस्जिदलाई हल्ला गुल्ला,झगडा लडाई,धेरै कुराकानी,नराम्रो कुरा सित स्वर ठूलो गर्नुबाट सुरक्षा गर्नु अति उत्तम हो । यसै गरी बिना जरूरतको त्यस भित्रै बाट बाटो बनाउनुबाट पनि सुरक्षित राख्नु पर्छ,मस्जिद भित्र सांसारिक कुराकानी गर्नु नराम्रो कार्य हो । यसै गरी नमाज पढिने सुकुल वा कपडा वा चिराकहरू (मोमबत्ति आदि) वा मस्जिदको बिजुली बत्तिलाई विवाहको उत्सव वा शोकको अवस्थामा प्रयोग न गरियोस् ।

# दान (जकात)

**दानका धन-मालः** दान (जकात) ४ वटा धन-मालमा अनिवार्य हुने छ : १) आफै चर्ने चौपाया र पशुहरू । २) धरतीबाट निस्कने अनाज । ३) नगदी (सुन,चाँदी र रूपयाँ पैसाहरू) । ४) व्यापारिक सर-सामानहरू ।

**दान वाजिब हुने शर्तहरू :** पाँच वटा शर्त पाए पछि नै जकात वाजिब हुने छ : पहिलोः इस्लाम । दोस्रो : आजादी (स्वतन्त्रता) । तेस्रोः निसाब सम्म धन पुग्नु (अर्थात एउटा निर्धारित मात्रा सम्म हुनु) । चौथोः पूर्ण रूपले धन सम्पत्तिको मालिक हुनु । पाँचौं: मालमाथि एक वर्ष पूरा हुनु सिवाय भुईंबाट आएको पैदावारमा ।

**जनावरहरूमा जकात :** जकात वाजिब हुने तीन प्रकारका जनावहरू छनः **ऊँट,गाई र बाखा ।** यसमा जकात अनिवार्य हुनका लागि दुईवटा शर्त लागु हुने छनः १) पूरै वर्ष वा वर्षको अधिकांश समयमा आफ्नो पेट चरेर भर्नेगर्छन । २) दुध निकाल्ने र वंशमा बढोत्तरीको लागि हुनु चाहियो, काम लिनका लागि न होस् । र यदि जनावरहरू व्यापारका लागि हुन् भने त्यसमा व्यापारिक सर-सामान जस्तो जकात लागु हुने छ ।

**ऊँटमा जकातको विवरणः**

| संख्या | १-४ | ५-९ | १०-१४ | १५-१९ | २०-२४ | २५-३५ | ३६-४५ | ४६-६० | ६१-७५ | ७६-९० | ९१-१२० |
|---|---|---|---|---|---|---|---|---|---|---|---|
| जकात | जकात छैन | १ बाखो | २ बाखा | ३ बाखा | ४बाखा | १ बिन्ते मखाज | १ बिन्ते लबून | १ हिक्का | १ जज्आ | २ बिन्ते लबून | २ हिक्का |

र जब १२० भन्दा बढी भइहालोस् भने प्रत्येक ५० मा १ हिक्का र प्रत्येक ४० मा १ बिन्ते लबून दान दिनु पर्छ ।
बिन्ते मखाजः १ वर्षको पोथी ऊँटलाई भनिन्छ । बिन्ते लबूनः २ वर्षको पोथी ऊँटलाई भनिन्छ । हिक्काः ३ वर्ष र जज्आ ४ वर्षको पोथी ऊँटलाई भनिन्छ ।

**गाईमा जकातको विवरणः**

| संख्या | १-२९ | ३०-३९ | ४०-५९ |
|---|---|---|---|
| जकात | जकात छैन | १ तबीअ् वा तबीआ | १ मोस्नि वा मोसिन्ना |

र जब गाईको संख्या ६० भन्दा बढी भइहालोस् त प्रत्येक ३० मा १ तबीअ् र प्रत्येक ४० मा १ मोसिन्ना (तबीअ्: १ वर्षको बाछोलाई भनिन्छ,र तबीआः १ वर्षको बाछीलाई । यसै गरी मोसिन्नः २ वर्षको बाछोलाई र मोसिन्नाः २ वर्षको बाछीलाई भनिन्छ)

**बाखामा जकातको विवरणः**

| संख्या | १-३९ | ४०-१२० | १२१-२०० | २०१-३९९ |
|---|---|---|---|---|
| जकात | जकात छैन | १ बाखो | २ बाखा | ३ बाखा |

र जब बाखो वा भेडोको संख्या ४०० भइहालोस त प्रत्येक १०० मा १ बाखो वा भेडो । बाखो वा भेडोको जकातमा न लिइने किसिमहरूः बोको,बुढो,कानो,र जो आफ्नो बच्चोलाई पालन गरीरहेछ,गाभिनी र नत्र महगो,यी जनावहरू जकातमा लिनु सही छैन । जज्अतुज्जानः ६ महीना पूरा भएको बाखो वा भेडोलाई तथा सनीउल्माअजः २ वर्षभएकोलाई भनिन्छ ।

**भुईंबाट निस्कने अन्नमा जकातः** तीन वटा शर्तहरूको साथ भुईंबाट निस्कने प्रत्येक अन्न र फलहरूमा जकात वाजिब छ : १) यस्तो अन्न जसलाई नापिन्छ वा तौलिन्छ र जसलाई जम्मा गरेर राख्न सकिन्छ जस्तोः अन्न मध्ये जौ,गहुँ आदि र फलहरू मध्ये अंगुर र खजूर इत्यादि । र जसलाई नाप तौल हुँदैन र जम्मा गरेर राख्न सक्दैन जस्तो सब्जी साग इत्यादि त त्यसमा जकात छैन । २) धन-मालले निसाब (निर्धारित मात्रा) सम्म पुग्नु, र त्यो ६५३ किलो ग्राम वा त्यस भन्दा बढी हो । ३) त्यो अन्न वा फल जकात वाजिब हुने बेला उस्को स्वामित्वमा होस, र फल पाकेर रातो वा पहेँलो भए पछि नै त्यसमा जकात वाजिब हुने समय हुन्छ । र अनाजमा जकात वाजिब त्यस बेला हुन्छ जब त्यो सुखेर कठोर भइहालोस् ।

बिना मेहिनत र परिश्रमको मात्र वर्षा वा नदी नालाको साधनले सिचाइ भएको खेतीबाट निस्कने उब्जनीमा (१०%) दश्वाँ भाग जकात वाजिब हुनेछ । र परिश्रम तथा मेहिनतले सिचाइ गरेर आएको

उब्जनीमा (५%) पाँचवाँ भाग जकात वाजिब हुनेछ जस्तो इनारबाट वा पम्पीसेट तथा बोरिंगले सिचाइ गरेमा। र यदि वर्षमा केही समयमा परिश्रमले सिचाइ गरिन्छ र त्यही भुईंमा अरू केही समयमा बिना परिश्रमले सिचाइ गरिन्छ यसो भएमा अत्याधिक अवस्थालाई हेरिन्छ, अर्थात परिश्रम र अपरिश्रमको दिनलाई हेरेर जकात वाजिब हुनेछ।

**मूल्य (सुन,चाँदी र रूपयाँ) मा जकातः** मूल्य दुई प्रकारको हुन्छः १) सुनः यसमा जकात वाजिब हुँदैन यहाँ सम्म कि ८५ ग्रामको तौलको भइहालोस्। २) चाँदी : यसमा पनि ५९५ ग्राम सम्म पुगे पछि नै जकात वाजिब हुने छ। नोट र रुप्या पैसामा सुन तथा चाँदीको निर्धारित मात्राको मूल्य बराबर पुगे पछि नै जकात अनिवार्य हुनेछ। मूल्यमा जकात निकाल्नेको मात्रा (२.५%) चालीसवाँ भाग हो।

र प्रयोगमा आउने वैध गहना आभुषणमा केही जकात छैन,र यदि त्यो गहना जेवर भाडामा दिइन्छ वा जम्मा गरेर राख्छ भने त्यसमा जकात वाजिब हुनेछ।

प्रचलित बानि अनुसार महिलाको लागि सुन र चाँदी बाट बनिएका सबै प्रकारका गहना लाउनु जायज छ, र भाडोंलाई जोडने हेतु अलिकति चाँदी प्रयोग गर्नु वैध छ,यसै गरी अलिकति चाँदी अँगुठी र चश्मा आदिको रूपमा पुरुषको लागि प्रयोगमा ल्याउनु जायज छ। तर सुन मध्ये कुनै अंश भाडोंमा जडनु अवैध हो, तर सुन मध्ये केही अशं पुरुषको लागि महिलाको सरूपता नगरीकन सा-सानो कुरामा प्रयोग गर्नु जायज छ जस्तो लुगाको बटन,र दाँतलाई बाँध्ने हेतु।

र कुनै व्यक्ति सँग धम-माल छ जसमा कमी बेशी हुँदै रहेछ र समयमा जकात निकाल्नु उसको निमित्त गाह्रो भइरहेछ भने ऊ वर्षमा एक दिन खास गरी त्यही दिनमा जकात निकाल्न सक्छ,र त्यस दिन जम्मा भएको माल सम्पत्तिलाई गेरेर त्यस मध्ये (२.५%) जकात निकाल्नेछ यद्यपि केही मालमाथि एक वर्ष किन न पुगेको होस। र जस सँग तलब वा घर र जमीनको भाडाको रकम होस र त्यसलाई जम्मा गरेर राख्दैन भने त्यो अधिक भए पनि त्यसमा केही जकात छैन। र यदि त्यसलाई जम्मा गरेर राख्छ भने त्यसमाथि एक वर्ष पुगे पछि त्यस बाट जकात निकाल्नु पर्छ,र यदि जकात निकाल्नुमा अप्ठ्यारो आउँछ त वर्षमा एक दिन नियुक्त गरेर त्यही दिनमा निकाल्नु पर्छ।

**कर्जाको जकातः** यदि कुनै व्यक्तिको कर्जा कुनै धनवान मान्छेमाथि होस वा यस्तो ठाउँमा माल जम्मा छ जहाँबाट झिक्नु सम्भव होस भने माल आफ्नो स्वामित्वमा आए पछि त्यसमा जकात निकाल्नु अनिवार्य हुन्छ, चाहे अधिक भन्दा अधिक वर्ष किन न बितिसकोस्। र यदि कुनै गरीब निर्धनमाथि कर्जा होस जहाँ बाट झिक्नु अथवा प्राप्त गर्नु सम्भव न होस् भने त्यस कर्जावाला माल माथि जकात छैन,किनकि त्यसबाट खर्च गर्नु सम्भव छैन।

**व्यापारिक सर-सामानमा जकातः** यसमा बिना चारवटा शर्तहरू पाए जकात छैनः १) सर-सामानको मालिक हुनु। २) त्यो सर-सामान व्यापार गर्ने हेतु होस। ३) त्यस सर-सामानको मूल्य निसाब (निर्धारित मात्रा) सम्म पुग्या होस, र त्यो सुन चाँदीको न्युनतम निसाब हो। ४) त्यस सर-सामान माथि एक वर्ष बितिसक्या होस। यी चारौं शर्तहरू पाए पछि सर-सामानको मूल्याँकन गरी मूल्यबाट जकात निकाल्नु पर्छ,र यदि ऊ सँग अरू सुन चाँदी र रूपयाँ पैसा होस भने त्यसलाई व्यापारिक सर-सामान सँग मिसाएर निसाबलाई पूरा गर्नु पर्छ। र यदि व्यापारिक सर-सामानलाई प्रयोग गर्ने हेतु राखेको छ जस्तो लुगा,घर र गाडी आदि त त्यसमा केही जकात छैन,र यदि त्यसलाई किन बेच गर्ने नियत गऱ्यो भने त्यसमा वर्षको गन्ती आरम्भ गरी जकात निकाल्नु पर्छ।[1]

**जकातुल् फित्र (फित्रा) :** फित्रा प्रत्येक यस्तो मुसलमान माथि वाजिब छ जो ईद (तिहार) को दिन र रात्रीमा आफ्नो तथा आफ्नो जहान परिवारको खाना बाहेक बढी धन-मालको मालिक होस। यस्को मात्रा गाउँ घरमा प्रचलित खाने कुरा मध्ये सवा दुई किलो (२.२५) हो,जो प्रत्येक व्यक्तिको तर्फबाट निकाल्नु पर्छ चाहे त्यो पुरुष होस वा महिला। र जस माथि यो निकाल्नु अनिवार्य भइसकेको हो र ईदको दिन परिवार मध्ये जुन जुन व्यक्तिको खर्च बर्च उसमाथि लागु हुन्छ त्यस व्यक्तिको तर्फ बाट पनि धनको

[1] व्यापारिक सर-सामानको निसाबः ८५ ग्राम सुनको मूल्य (अर्थात सुनको निसाब), वा ५९५ ग्राम चाँदीको मूल्य (चाँदीको निसाब)। (र उस्को लागि यस भन्दा कम सर-सामानमा पनि जकात निकाल्दा जकात निकाल्नु जायज छ)।

मालिक भई फित्रा निकाल्नु पर्छ । ईदको दिन ईदको नमाज पढ्नु भन्दा अघि यसलाई निकाल्नु अति उत्तम हो तर ईदको नमाज पढे पछि निकाल्नु जायज छैन । र ईदको दिन भन्दा पहिला एक वा दुई दिन अगाडि पनि निकाल्नु जायज छ। एक भन्दा बढी व्यक्तिहरूको फित्रा मात्र एक फकीर गरीबलाई दिनु पनि जायज छ र एक व्यक्तिको फित्रा पनि एक भन्दा बढी गरीब फकीरमा वित्रण गर्नु जायज छ ।

**जकात निकाल्नुको समय :** जकात तत्कालै निकाल्नु वाजिब हो । र बच्चा तथा बहुलाको तर्फबाट उसको अभिभावकमाथि जकात निकाल्नु अनिवार्य छ । मानिसलाई देखाएर प्रत्यक्ष रूपमा जकात निकाल्नु अनि त्यसलाई आफैं वितरण गर्नु अति राम्रो कार्य हो । जकात निकाल्दा जकात निकाल्ने नियत गर्नु अनिवार्य छ र यदि आम दान अनुदान गर्ने नीयत गऱ्यो भने अनिवार्य दान (दान) को लागि प्रर्याप्त हुँदैन यद्यपि पूरै माल जकातमा किन न निकालोस । र आफ्नो गाउँ घर र शहर मुलुकका दीन-दुःखी गरीब गुरुबामा जकातको माल वित्रण गर्नु उत्तम हो,र कुनै खास कारणले अर्को शहर तथा मुलुकमा पठाउनु जायज छ । निसाब (निर्धारित मात्रा) सम्म पुगे पछि अर्को वर्षको जकात पनि निकाल्नु जायज छ ।

**जकातको हकदारः** ८ प्रकार मानिसहरू यसका हकदार छनः १) फकीरहरू (भिक्षुक) । २) अभाव ग्रस्तहरू । ३) जकातको व्यवस्थापनमा नियुक्त व्यक्तिहरू । ४) ती व्यक्तिहरू जसका हृदयहरूलाई जोडनु अभिष्ट होस (अर्थात यस्तो व्यक्ति जसलाई जकातको माल दिनुमा इस्लाम वा मुसलमानको लाभ होस) । ५) दासहरूलाई मुक्तिमा । ६) ऋणीहरू (को ऋण भुक्तानीमा) । ७) अल्लाहको मार्गमा । ८) जरूरतवाला पथिकहरू । यी सबैलाई आवश्यकता अनुसार जकातको मालबाट धन दिनु पर्छ,तर जकात असूल गर्ने कर्मचारीलाई धनी भएमा पनि तलब र मजदूरीको बराबर दिनु अनिवार्य छ । उग्रवादी र विद्रोहीले यदि शहरमाथि कब्जा गरेको छ र उसले जकात लिन्छ भने पर्याप्त भइहाल्छ । सरकारले यदि बल जबरजस्ती वा सहमतिले लिन्छ भने पर्याप्त भइहाल्छ चाहे त्यसमा न्याय गरोस वा अन्याय ।

काफिर,दास,धनी,र जसको खर्चको जिम्मेवारी उसमाथि हो,र बनु हाशिम (नबी मोहम्मदको कूल) लाई जकातको माल दिनु जायज छैन र पर्याप्त हुँदैन,र यदि बिना जानकारीको कुनै गैर हकदारलाई जकातको धन दियो र पछि त्यसको जानकारी भयो भने पर्याप्त हुँदैन । अँ, यदि कसैलाई गरीब फकीर ठानेर जकात दियो फेरि ज्ञान भयो कि त्यो धनी छ त पर्याप्त भइहाल्छ ।

**आम दान अनुदानः** रसूलुल्लाह सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभयोः " *मनुष्यको मृत्यु पश्चात ऊ सम्म जो कर्म र पूण्य पुग्नेछ त्यो हो यस्तो शिक्षा-दिक्षा जसलाई उसले अरूलाई सिकायो र संसारमा फैलायो,र नेक तथा सदाचारी सन्तान जसलाई उसले छाडयो,र आफ्नो जहान परिवारलाई कुरआन छाडयो, वा मस्जिदको निर्माण गऱ्यो, वा यात्री ग्रह (मोसाफिर खाना) को निर्माण गऱ्यो, वा कुनै नहर (कुलो) खनायो, वा आफ्नो स्वास्थको अवस्था र जीवनमा दान गऱ्यो त यी कुराहरूको पूण्य मृत्यु पश्चात पनि उसलाई पुग्नेछ* "।





# रोजा

**रमजान महीनाको रोजा (ब्रत)** राख्नु प्रत्येक बुद्धिमान,वयस्क र ब्रत बस्नुमाथि सामर्थ्यवान मुस्लिममाथि अनिवार्य छ,तर मासिक धर्म र सुत्केरीको रगतमा बस्ने महिला यस आदेश बाट बाहिर छे । बानी बसाउने हेतु शक्ति राखेमा बच्चाहरूलाई पनि ब्रत बस्ने आदेश दिनु पर्छ । रमजानको महीना आरम्भ भ यो त्यसको जानकारी दुई प्रकारले हुन्छ : १) रमजानको चन्द्रमा हेर्नाले,र यो एउटा बालिग समझदार ईमानदार मुस्लिमको गवाहीले सिद्ध हुन्छ चाहे त्यो महिला किन न होस् । २) शाबानको महीना ३० दिन पूरा हुनाले । ब्रत बस्नुको अनिवार्यता प्रभात काल (प्रभात कालको आजान हुनु भन्दा अलि अघि) देखि आरम्भ हुन्छ र सूर्यास्त हुन सम्म बाँकी रहन्छ । फर्ज (अनिवार्य) रोजा बस्नको लागि प्रभात हुनु भन्दा अघि नै रोजाको नीयत गर्नु अनिवार्य छ ।

**रोजा भंग गर्ने कुराहरूः** १) (रोजा राख्दा दिउँसो) अगिल्लो गुप्ताँगमा सहवास गर्नाले,यसो गरेमा त्यस दिनको कजा गर्नु पर्नेछ (अर्थात पुनः त्यस दिनको रोजा राख्नु पर्नेछ) । र साथै जरीमाना (कफ्फारा) पनि लाग्नेछ र त्यो हो : एक दासलाई स्वतन्त्र गर्नु यसको सामर्थ्य छैन भने लगातार दुई महीना सम्म रोजा राख्नु यसको पनि शक्ति छैन भने ६० गरीब फकीरलाई भोजन गराउनु पर्नेछ र यसको पनि सामर्थ्य छैन भने उसमाथि केही छैन । २) वीर्य निस्कनाले, चाहे चुम्बन लिंदा वा लसपस गर्दा वा हस्त मैथुनले । र स्वप्नदोष भएमा केही आपत्ति छैन । ३) जानीजानी खान पान गर्नाले,र यदि बिर्सेर खायो भने रोजा सही भइहाल्छ । ४) रगत निस्कनाले,चाहे सिंघी लगाउनको कारणले वा रोगीलाई दान दिनको कारणले । तर उपचार गर्दा अनुसन्धानको लागि अलि कति रगत निकाल्नाले रोजामा केही फरक पर्दैन । यसै गरी कुनै खटिरो र नाकबाट आफैले निस्केको रगतमा रोजा सही भइहाल्छ । ५) जानी-बुझीकन बान्ता गर्नाले ।

र यदि घाँटीमा धुलो पऱ्यो वा कुल्ला गर्दा वा नाकमा पानी हालेर सफा गर्दा घाँटीमा पानी पुग्यो, वा (सहवास) को बारेमा सोच विचार गरेमा वीर्य निस्क्यो वा स्वप्नदोष भयो वा आफैं बिना इच्छाको रगत निस्कयो वा बान्ता भयो भने यी सबै अवस्थामा रोजा भंग हुँदैन ।

र जुन व्यक्ति रात्री भएको छ भने ठानेर खाना खाए पछि स्पष्ट भयो कि दिउँसो नै थियो त उसमाथि कजा गर्नु पर्नेछ । र जसले रात्रीमा प्रभात हुनमा शंका गर्दै खाना खायो त उसको रोजा भंग हुँदैन । र यदि कसैले दिनमा खाना खायो यो शंका गर्दै कि सूर्यास्त भइसकेको हो त उसले कजा गर्नु पर्नेछ ।

**रमजानमा रोजा नराख्नेका समस्याहरूः** बिना कुनै खास कारणले रमजानमा रोजा न राख्नु अथवा खान पान गर्नु हराम छ । र मासिक धर्ममा र प्रसूति पछि आउने रगतमा बसेकी महिलामाथि रोजा राख्नु हराम छ । यसै गरी कसैलाई कुनै आपतबाट बचाउने क्रममा खान पीनको आवश्यकता पऱ्यो त यस अवस्थामा खान पान गर्नु जायज छ । यात्री यदि नमाजलाई कस्र गर्ने (चार रकातलाई दुई दुई गरी पढनेलाई कस्र भनिन्छ) दूरीको यात्रा गऱ्यो र उसमाथि रोजा कठिन भइसकेको हो त यस्तो यात्रुको लागि रमजानमा खान पीन गर्नु उत्तम हो,र यही आदेश त्यस रोगीको लागि पनि छ जो रोजा राखेमा हानि हुने सित डराउँछ । र घरमा बस्ने व्यक्ति यदि दिनको कुनै भागमा यात्रा गर्छ भने उसको लागि पनि खान पीन गर्नु जायज छ । यसै गरी गर्भवती र दुध चुसाउने महिला यदि आफ्नो जीव वा शिशुमाथि डराउँछे त उसको लागि पनि रोजालाई छाड्नु जायज छ । र यी सबैले छुटेको रोजालाई रमजान पछि पुनः राख्नु (कजा गर्नु) जरूरी छ । तर पेट बोकेकी र दुध चुसाउने महिला यदि मात्र आफ्नो शिशुमाथि डराउँछे भने यस्तो अवस्थामा रोजा राख्नु साथै प्रत्येक दिनको सट्टामा एक गरीब फकीरलाई भोजन गराउनु पर्नेछ ।

र जुन व्यक्ति उमेर अधिक हुनको कारणले वा यस्तो रोगको कारणले जसलाई निको हुनको केही आशा बाँकी रहेको छैन रोजा राख्ने सामर्थ्य राख्दैन त उसमाथि रोजाको कजा गर्नु (अर्थात पुनःराख्नु) पर्दैन,बरु मात्र प्रत्येक दिनको सट्टामा एक गरीब फकीरलाई खुवाउनु पर्छ ।

र जस्ले कुनै कारणले अर्को रमजान आउनु भन्दा अघि ब्रत बसेन त उसमाथि मात्र रोजालाई कजा गर्नु पर्नेछ,र यदि बिना कुनै कारणले ढीलो गऱ्यो त रोजा राख्नु साथै प्रत्येक दिनको सट्टामा एक गरीबलाई खुवाउनु पर्छ । र यदि कसैमाथि कुनै कारणले रोजा बाँकी थियो र उसले कजा गर्नु भन्दा अगि नै बित्यो त उसमाथि केही छैन । र यदि बिना कुनै कारणले कजा गरेन त यस्तो अवस्थामा प्रत्येक दिनको बदलामा एक दीन दुःखीलाई खुवाउनु पर्छ । छुटेका रोजालाई नजीकी नातेदारले मृतकको तर्फ बाट राख्नु बेस छ यसै गरी यदि भाकलको रोजा बाँकी छ भने त्यसलाई पनि नातेकदारले राख्नु अति

उत्तम हो । यसै गरी प्रत्येक यस्तो राम्रो कार्यको भाकल जसलाई मृतकले गरेको थियो त्यसलाई नातेदारले पूर्ति गर्नु राम्रो हुन्छ ।
र कसैले कुनै कारणले रमजानको दिनमा इफ्तार (खान पान) गऱ्यो फेरि दिन रहदा त्यो कारण समाप्त भयो भने बेलुका हुने सम्म खान पीन बाट बच्नु अनिवार्य छ । यसै गरी रमजानको दिनैमा काफिरले इस्लाम लियो,वा मासिक धर्ममा बसेकी महिला पवित्र भइ,वा रोगबाट निको भयो,वा यात्राबाट घरमा पुग्यो,बच्चा बालिग भयो वा बहुला बुद्धिमान भयो र यी सबै ब्रत बसेका थिएनन् त यिनीहरूमाथि छुटेको रोजालाई कजा गर्नु जरूरी छ यद्यपि दिउँसोको बाँकी भागमा खान पीन बाट किन न टाढा रहुन् । र जस्को लागि रमजानमा रोजा छाडनु जायज छ उसको लागि त्यस दिनमा अरू रोजा राख्नु जायज छैन ।
**नफली (अनिवार्य बाहेक) रोजाहरूः** यी रोजाहरूमा सब भन्दा उत्तम एक दिन रोजा राख्नु र एक दिन छाड्नु हो,अनि सोमबार तथा बिहिबारको ब्रत बस्नु,अनि प्रत्येक महीनामा तीन दिन बस्नु,र यसमा सब भन्दा बेस चन्द्रमाको महीनाको हिसाबले १३,१४,१५ तारीखको रोजा राख्नु हो । मुहर्रम (चन्द्रमाको हिसबले पहिलो महीना) र शाबान (चन्द्रमाको हिसाबले ८ महीना) को अधिकांश दिनमा रोजा राख्नु सुन्नत (उत्तम) हो । यसै गरी दश मुहर्रमको,अर्फाको दिन,शव्वालमा ६ वटा रोजा,यी सबै रोजाहरू सुन्नत हुन् । र खास गरी रजब महीनामा रोजा राख्नु र शुक्रबार तथा शनिबारको रोजा राख्नु नराम्रो कार्य हो, यसै गरी शंकाको दिन अर्थात ३० तारीख शाबानको रोजा राख्नु नराम्रो कार्य हो । र ईदुल फित्र (रोजा पछिको तिहार) र ईदुल् अज्हा (कुर्बानीको तिहार) र तश्रीकका तीन दिन (कुर्बानी पछिका तीन दिन) मा रोजा राख्नु हराम छ । अँ, यदि कुर्बानीवाला हज्ज गऱ्यो र कुर्बानी गर्ने रुपियाँ पैसा थिएन त यस्तोको लागि तश्रीकको तीन दिन रोजा राख्नु जायज छ ।

**आवश्यक समस्याहरूः**

❁ जुन मानिस ठूलो अपवित्रतामा होस जस्तो सहवास गरे पछिको अपवित्रता, र मासिक धर्म तथा सुत्केरीको रगतको अपवित्रता,र यी दुबैबाट प्रभात काल भन्दा अगि रगत बग्नु बन्द भयो भने यी सबैको लागि फज्रको आजान पछि सम्म स्नानलाई ढीलो गर्नु जायज छ, र स्नान गर्नु भन्दा अघि यदि सहरी (प्रभ ात कालमा खाना खानु,अर्थात सर्गी) खायो भने रोजा सही भइहाल्छ ।

❁ हानि न भएकन महिलाको लागि मासिक धर्म रोक्ने हेतु औषधि प्रयोग गर्नु यस आशयले कि ऊ मस्लिमहरू सँग पूण्य तथा पूजाहरूमा सम्मिलित हुन्छे जायज छ ।

❁ बर्तालुको लागि थुक र खकारलाई निल्नु जायज छ यदि त्यो मुख भित्र होस ।

❁ नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " *इफ्तार गर्नु (रोजा खोल्नु) मा चाँडै गर्नु र सहरी (सर्गी) खानुमा ढीलो गर्नुमा मेरा अनुयायीका लागि सधैं भलाई रहने छ* " (अहमद) । र यो पनि भन्नुभयोः " *जब सम्म मानिस इफ्तार गर्नुमा हतार गर्छ दीन (धर्म) प्रभुत्त्वशाली रहनेछ किनकि यहूद र क्रिश्चियनहरू इफ्तार गर्नुमा ढीलो गर्दछन्* " (अबुदाऊद) ।

❁ इफ्तार गर्दा खेरि दुआ गर्नु अति उत्तम हो । रसूलुल्लाह सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः إن))" *इफ्तार गर्दा खेरि बर्तालुले गरेको दुआ रद्द हुँदैन* " (इब्नेमाजा) । इफ्तार गर्ने बेला यो दुआ पढ्नु प्रमाणित छ *जहबज्जमा वब्तल्लतिल् ओरूक् व सबतल् अज्रो इन्शाअल्लाह* (अबुदाऊद) ।

❁ नबीको सुन्नत (तरीका) हो रोतब (काँचो गिलो खजूर) खाएर इफ्तार गर्नु,यदि त्यो पाउँदैन भने केही सुखा खजूरले इफ्तार गर्नु र यदि त्यो पनि पाउँदैन भने पानीले रोजा खोल्नु ।

❁ बर्तालुको लागि ब्रत बास्दा आँखामा सुर्मा पहिरिनु र आँखा तथा कानमा औषधि हाल्नुबाट टाढा बस्नु नै राम्रो हो र यो सतर्कता र मतभेद बाट बाँच्नुको कार्य हो । र यदि उपचार आदिको आवश्यकता छ भ ने यसलाई प्रयोग गर्नुमा केही आपत्ति छैन यद्यपि यस्को मज्जा धाँटीमा किन न पुगोस ता पनि रोजा सही भइहाल्छ ।

❁ ब्रत बास्दा दिनको कुनै पनि समयमा दतिवन गर्नु सुन्नत हो र यसमा केही आपत्ति छैन ।

❁ बर्तालुले चुक्ली,छुस्केरो,पिशुनता र झूठ आदि नराम्रा व्यवहारहरू बाट बच्नु एक्दमै अनिवार्य हो । र यदि कसैले बर्तालुलाई गाली गर्छ भने भनोस कि म ब्रत लिएको छु । आफ्नो जिभ्रो र अंगहरूलाई कुकर्महरू बाट सुरक्षित राखेमा नै रोजा सुरक्षित रहनेछ । किनकि एउटा हदीसमा नबी सल्लल्लाहो

अलैहेवसल्लमको भनाई हो " *जसले रोजा राख्दा झुट कुराकानी गर्नुबाट र त्यसलाई व्यवहारमा ल्याउनुबाट बंचित न बस्यो भने उसले छाडेको खान पानमा अल्लाहको केही जरूरत र चाहना छैन* " (बुखारी) ।

❁ रोजाको अवस्थामा यदि कसैले भोजन खाने निमन्त्रण दियो त उसको लागि अल्लाह सित दुआ गरोस् र यदि रोजा बसेको छैन भने निमन्त्रण कर्ता कहाँ गरेर भोजन गरोस् ।

❁ सम्मानित रात (लैलतुल् कद्र) पूरै वर्षमा सब भन्दा उत्तम र श्रेष्ठ राती हो,जो रमजानको अन्तिम दश रातीमा खोज गरेर पाउँछ । र त्यसलाई पाउने अधिक सम्भावना रमजानको २७ वाँ रातीमा हुन्छ । त्यस राती भित्र पूण्यको कार्य गर्नु एक हजार महीनामा पूण्यको कार्य गर्नु भन्दा राम्रो हुन्छ । यस रातीका केही चिन्हहरू छन्ः त्यसको बिहानमा सूय सेतो उदय हुन्छ र त्यसमा अधिक प्रकाश हुँदैन,र त्यस रातीमा वातावरण राम्रो र मनासिब हुन्छ । र कहिले काँही मुस्लिम त्यस रातीलाई पाउँछ र उसलाई थाहा पनि हुँदैन,त यी चिन्हहरूलाई न खोजी गरी रमजानमा धेरै भन्दा धेरै अल्लाहको इबादत गरोस् र खास गरी रमजानका अन्तिम दश रातीमा । र यी रातीहरू मध्ये कुनै राती बिना इबादत र नमाजको न छुटोस त्यसको ख्याल राख्नु पर्छ,र जब सामुहिक रूपले तरावीहको नमाज पढोस् त इमाम (नमाज पढाउने अगुवा) सँगै सँगै पूरा तरावीहको नमाज पढोस ताकि सम्पूर्ण रातीको इबादत उस्को लागि सिद्ध होस् ।

❁ कसैले नफली रोजा (अअनिवार्य रोजा) राख्नु आरम्भ गऱ्यो त उसको लागि त्यस रोजालाई पूरा गर्नु सुन्नत र राम्रो हो वाजिब होइन,र जानीबुझीकन त्यस रोजालाई दिनमा नै छाड्यो त केही अपत्ति छैन र त्यसलाई कजा गर्नु पनि वाजिब छैन ।

**एतेकाफः** बुद्धिमान मुस्लिमले इबादतको लागि मस्जिदमा केही दिनको लागि बस्नु । एतेकाफ गर्ने व्यक्तिमाथि ठूलो अपवित्रताबाट पवित्र हुन एकदम अनिवार्य छ । र एकदम आवश्यकता परे बिना मस्जिदबाट निस्कनु एतेकाफ गर्ने व्यक्तिको लागि जायज छैन जस्तो खाना खानु,दिसा पिशाब गर्नु र अनिवार्य स्नान गर्नु आदि । र बिना आवश्यकताको मस्जिदबाट निस्कनुले वा सहवास गर्नाले एतेकाफ भंग भइहाल्छ । र एतेकाफ प्रत्येक समयमा गर्नु सुन्नत हो र खास गरी रमजानमा गर्नु उत्तम हो र रमजानको अन्तिम दश दिनमा गर्नु अति उत्तम हो । र एतेकाफ गर्ने सब भन्दा कम अवधि १ घण्टा हो,र एक दिन र एक राती भन्दा कम न गर्नु अति उत्तम (मुस्तहब) छ । र महिला बिना पतिको अनुमतिको एतेकाफ न गरोस् । र एतेकाफ गर्ने व्यक्तिको लागि इबादत र पूण्यको कार्यमा व्यस्त रहनु (सुन्नत) धेरै राम्रो हो । र राम्रा कार्यहरूलाई अत्याधिक तवरले गरोस र नराम्रा कार्यहरूबाट बंचित रहोस् ।

# हज्ज र उम्रा

जीवनमा मात्र एक पटक हज्ज र उम्रा गर्नु वाजिब हो। यी दुबैको वाजिब हुनका केही शर्तहरू छन : १) इस्लाम, २) बुद्धि, ३) बालिग हुनु, ४) स्वतन्त्रता, ५) मक्का सम्म पुग्ने आर्थिक सामर्थ्य। र जुन व्यक्ति सामर्थ्य राखेर हज गर्नुमा टालटुल गऱ्यो र उसको मृत्यु भइ सक्यो भने उसको धन-मालबाट हज्ज र उम्रा गर्नको खर्चबर्च निकालिन्छ। काफिर र बहुलाले गरेको हज्ज सही हुँदैन। र बच्चा तथा दास बाट सही हुन्छ तर फर्ज हज्ज पूरा हुँदैन (बरु बालिग भए पछि र स्वतन्त्र भए पछि पुनः गर्नु पर्नेछ)। सामर्थ्य न राख्ने व्यक्तिले यदि ऋण लिएर हज्ज गर्छ भने उसको हज सही भइहाल्छ।

र जसले बिना आफ्नो तर्फ बाट हज्ज गरेर अर्को तर्फ बाट सट्टामा हज्ज गर्छ भने त्यो हज्ज उसको आफ्नो जीवको तर्फबाट हुन्छ।

**एहरामः** जुन व्यक्ति एहराम पहिर्न चाहन्छ उसको लागि स्नान गर्नु र सफा हुनु तथा सुगंध लगाउनु राम्रो हो अनि सिलाएको लुगालाई फुकाली दुईवटा सेतो चद्दर (पछयौरा) एकलाई लुंगी बनाई र अर्कोलाई शरीरमाथि राखी पहिरिनु पर्छ। फेरि यो भनेर हराम हुनु पर्छः लब्बैक अल्लाहुम्म उम्रतन् वा हज्जन् वा हज्जन् व उम्रतन्। र यदि बाटोमा कुनै बाधा आउने शंका होस भने यो शर्त लगाउनु बेस हुन्छः **फइन् हबसनी हाबेसुन् फमहिल्ली हैसो हबस्तनी।**

र हज्ज गर्ने व्यक्तिको लागि हज्जका तीन प्रकारहरू मध्ये एक गर्नुमा अख्तियार हुन्छः तमत्तो,इफराद र किरान,र यी तीनौ किसिमहरूमा सब भन्दा श्रेष्ठ तमत्तो छ। र त्यो होः हज्जको महीनामा उम्रा गर्नु अनि हलाल हुनु अनि त्यही वर्षमा हज्जको लागि हराम हुनु। र इफराद भनिन्छः मात्र हज्जको लागि एहराम पहिर्नु। र किरान भनिन्छः हज्ज र उम्राको लागि एकै चोटि एहराम पहिर्नु वा मात्र उम्राको एहराम पहिर्नु अनि पछि तवाफ (परिक्रमा) आरम्भ गर्नु भन्दा अघि हज्जलाई उम्रा भित्र प्रवेश गर्नु।

र जब हाजी (हज्ज गर्ने व्यक्ति) सवारी माथि एहरामको लुगा पहिरी बसोस् त यो तल्बीया (दुआ) भनोस्: **लब्बैक् अल्लाहुम्म लब्बैक,लब्बैक लाशरीक लक लब्बैक,इन्नल् हम्द वन्नेअ्मत लक वमुल्क,लाशरीक लक्,** र अत्याधिक मात्रामा यस तल्बीयालाई पढ्नु बेस छ र महिला बाहेक सबै हाजी ठूलो स्वरमा यसलाई पढुन्।

**एहरामको अवस्थामा मनाही कार्यहरूः** ती ९ वटा छन्: १) कपाल कोर्नु, २) नङ् काट्नु, ३) लोग्ने मानिसको लागि सिएको लुगा लाउनु, र यदि लुंगी न पाएमा सुरुवाल पहिर्छ भने केही आपत्ति छैन,यसै गरी चप्पल न पाएमा छालाको मोजालाई गोलीगाँठो मुनि सम्म काटेर पहिर्छ भने हज्ज सही हुन्छ र त्यसमाथि केही फिद्या (जरीमाना) छैन। ४) पुरुषको लागि टाउको छोप्नु, ५) शरीर र लुगामा सुगन्घ लगाउनु, ६) शिकार गर्नु,र त्यो वनपशु अर्थात नपालेको जनावर वा चरोलाई शिकार गर्नु हो। ७) विवाह गर्नु,यो हराम हो र यसमा केही फिद्या (जरीमाना) छैन। ८) पत्नी सँग गुप्तांगको अलावा कामवेगले लसपस (चुम्बन,अंकमाल आदि) गर्नु,यसमा एक बाखालाई फिद्याको रूपमा दान दिनु हो वा तीन दिन सम्म रोजा राख्नु पर्छ वा ६ वटा गरीबलाई खुवाउनु पर्छ। ९) गुप्तांगमा सहवास गर्नु,र यदि यो कार्य पहिलो तहल्लुल भन्दा अघि घटेको छ भने हज्ज भंग भइहाल्छ,र वर्तमान हज्जलाई पूरा पनि गर्नु पर्छ र आउँदा वर्षमा त्यसलाई पुनः (कजा) गर्नु पर्छ र साथै एक ऊँटलाई हलाल गरेर मक्काका गरीब गुरुबा तथा फकीरहरूमा वितरण गर्नु पर्छ। र यदि त्यो (सहवास) पहिलो तहल्लुल पछि घटित भएको छ भने हज्ज भंग हुँदैन र उसमाथि एउटा ऊँटलाई हलाल गरेर दान दिनु पर्छ। र यदि उम्रा गर्दा सहवास गऱ्यो भने उम्रा भंग भइहाल्छ र उसमाथि एउटा बाखालाई फिद्यामा दिनु पर्छ र उम्रालाई पुनः गर्नु पर्छ। सहवासको अलावा अरू कुनै कार्यले हज्ज तथा उम्रा भंग हुँदैन। र हज्ज तथा उम्राका समस्याहरू जस्ता पुरुषका लागि छन त्यैसरी नै महिलाका लागि पनि छन् तर महिलाका लागि सिएको लुगा पहिर्नु जायज छ। तर बुर्का वा निकाब र दस्ताना (हस्त मोजा) लाउनु मिल्दैन।

**फिद्या (जरीमाना) :** दुई प्रकारको हुन्छः १) यसमा अख्तियार हुन्छः र यो फिद्या कपाल कोर्नु,वा सुगन्ध लगाउनु, वा नङ् काट्नु,वा टाउको छोप्नु,वा लोग्ने मानिसले सिलिएको लुगा लाउनुको हो। यी

कुराहरूमा उसलाई अख्तियार प्राप्त छ चाहे तीनटा ब्रत बसोस् वा ६ जना गरीब गुरुबालाई भोजन गराओस् एक गरीबलाई आधा साअ् (साढे एक किलो) दिनु पर्छ वा एक बाखा हलाल गरेर दान गर्नु पर्छ। र शिकारको फिद्याः जस प्रकारको पशु शिकार गरेको हो यदि त्यस प्रकारको पशु चौपायामा पाइन्छ भने त्यसको फिद्या त्यही चौपाया हो,र यदि त्यस प्रकारको पाउँदैन भने त्यसको मूल्य निकाल्नु पर्छ।
**२) यसमा तर्तीबको साथ हुन्छः** तमत्तो र किरान हज्ज गर्नेको फिद्या एक बाखा हो,र मैथुन गर्नेको फिद्या एक ऊँट हो,यदि यसको सामर्थ्य छैन भने १० वटा रोजा राख्नु पर्छ तीन वटा हज्जको दिनमा र सात वटा घर फर्केर, र जनावरलाई हलाल गरेर वितरण गर्नु वा भोजन गराउनु मात्र मक्काका फकीर र गरीब गुरुबामा हुनु अनिवार्य छ।
**मक्कामा प्रवेश हुनुः** जब हाजी मस्जिदे हराम (काबा) मा प्रवेश गरोस त मस्जिदहरूमा प्रवेश गर्दा भनिने दुआ भनोस् अनि तमत्तोको हज्ज छ भने उम्रा गर्नु आरम्भ गरोस्,र यदि इफ्राद वा किरान हज गर्छ भने तवाफे कोदूम गरोस्, र तवाफ गर्दा आफ्नो चद्दरलाई इज्तेबा गरोस् यसको विधि हो चद्दरको माझको भागलाई दाँया काँध तलबाट निकालेर त्यसको दुबै किनारालाई देब्रे काँध माथि राखोस्। फेरि हज्रे अस्वद (कालो ढुंगो) देखि तवाफ आरम्भ गरोस् अनि त्यसलाई चुम्बन वा छुवाई गरोस् वा त्यस तिर संकेत गर्दा बिस्मिल्लाह वल्लाहो अक्बर भनोस् र यस्तो सम्पूर्ण तवाफमा गरोस्। फेरि काबालाई आफ्नो देब्रे तिर राखी सात पटक तवाफ गरोस् र सके बमोजिम पहिलाका तीन तवाफमा रमल गरोस् (पाइलालाई नजीक नजीक राखी अलि तीब्रगतिमा हिंड्नु)। र बाँकीका तवाफमा साधारण रूपले हिंडने गरोस्। र जहिले पनि रुक्ने यमानी (काबाको पश्चिमी र दक्षिनी कुना) को नजीक पुगोस् त सम्भव छ भने त्यसलाई स्पर्श गरोस्। र रुक्ने यमानी तथा हज्रे अस्वदको बीचमा यो दुआ पढोस्: **रब्बना आतेना फिद्दुनिया हसनतवँ व फिल् आखेरते हसनह् व किना अजाबन्नार**, र जुन दुआ गर्न चाहोस तवाफ गर्दा गरोस्। फेरि सात पटक तवाफ समाप्त भए पछि सम्भव भएमा मकामे इब्राहीमको नजीक दुई रकात नमाज पढोस, पहिलो रकातमा सूरह फातिहा पछि सूरह अल्काफेरून र दोस्रो रकातमा फातिहा पश्चात सूरह इख्लास् पढनु बेस हुन्छ। फेरि अधिक मात्रामा जमजमको पानी खाओस्,र सम्भव भएमा फेरि हज्रे अस्वद तिर फर्केर आओस र त्यसलाई स्पर्श गरेर मुल्तजमको नजीक उभेर लामो दुआ गरोस् (हज्रे अस्वद र ढोका बीचको भागलाई मुल्तजम भनिन्छ)। फेरि सफा पहाडी तिर गएर त्यसमाथि चढोस र यो दुआ भनोस्: **अब्दओ बिमा बदअल्लाहो बेही**,(फेरि कुरआनको यो आयत पढोस्) **इन्नस्सफा वल् मर्वत मिन् शआएरिल्लाहे फ मन् हज्जल्बैत अवेअ्तमर फला जोनाह अलैहे अैंय्यत्तौव्वफ बिहेमा वमन ततव्वअ खैरन् फइन्नल्लाह शाकेरुन् अलीम्।** र अल्लाहु अक्बर र लाइलाह इल्लाहो वह्दहु लाशरीक लहु लहुल्मुल्को वलहुल् हम्दो वहुव अला कुल्ले शैइन्कदीर भनोस र काबालाई सामु राखोस् फेरि हात उठाएर दुआ गरोस्,फेरि पहाडबाट झरेर हरियो चिन्ह सम्म हिंडोस र दुबै हरियो चिन्हको बीचमा सम्भव छ भने अलि तीब्रगतिमा हिंडोस्,अनि पहिलो सरह हिंडोस यहाँ सम्म कि मर्वा सम्म पुगोस् र कुरआनको आयतको अलावा सफा पहाडीमाथि गरेको प्रक्रियाहरू मर्वामाथि पनि गरोस्। फेरि मर्वामाथि बाट झरेर पहिलो चक्करमा गरेका कार्यहरू जस्तै अरू चक्करहरूमा पनि गरोस यहाँ सम्म कि सात चक्कर पुगोस्,सफा देखि मर्वा सम्म एक चक्कर र मर्वा देखि सफा सम्म दोस्रो चक्कर। यसै प्रक्रियाले सात चक्कर पुगे पछि आफ्नो कपाललाई सानो गराओस वा सफा गराओस् र सफा गराउनु (कोर्नु) नै उत्तम हो। तर तमत्तो हज्ज गर्नेको लागि सानो गराउनु नै बेस छ किनकि हज्ज पछि पुनः सफा गराउनु पर्छ। र इफ्राद तथा किरान हज्ज गर्नेहरूको लागि ईदको दिन अक्बा जम्रालाई हान्नु भन्दा अघि कपाल कोर्नु जायज छैन। र यी सबै विधिहरूमा महिला पुरुष जस्तै हो तर तवाफ गर्दा उसलाई रमल गर्न मिल्दैन यसै गरी सफा मर्वाको चक्कर लगाउँदा तीब्रगतिमा हिंडनु मिल्दैन।
**हज्ज गर्ने विधिः** र जब यौमुत्तर्वीया (८ तारीख) होस् मक्कामा आफ्नो बस्ने ठाउँमा नै यदि हलाल भएको छ भने एहराम पहिरोस् र त्यस पछि मिना तिर ९ तारीखको रात्री बिताउने हेतु जाओस्। र

जब ९ तारीखको सूर्योदय भइहालोस भने अर्फा तिर प्रस्थान गरोस्, फेरि सूर्य ढले पछि जोहर र अस्रको नमाज जम्मा र कस्र गरी पढोस् । उर्ना उपत्यका बाहेक सम्पूर्ण अर्फा बस्ने ठाउँ हो । र अर्फामा यो दुआ अत्याधिक रूपमा भनोस्ः लाइलाह इल्लाहो वह्दहु लाशरीक लहु लहुल्मुल्को वलहुल् हम्दो वहुव अला कुल्ले शैइन्कदीर । र सूर्यास्त भए सम्म त्यहाँ धेरै भन्दा धेरै दुआ गरोस र पापको प्रायश्चितको लागि तौबा गरोस् र रोएर कराएर अल्लाहको निकट्ता प्राप्त गरोस् । र सूर्यास्त भए पछि मुज्दल्फा तिर अरामै अरामै र संयमता तथा गम्भीरता पूर्वक प्रस्थान गरोस् र बाटोमा धेरै मात्रामा तल्बीया (लब्बैक अल्लाहुम्म लब्बैक) भनोस र अल्लाहको जिक्र र स्तुती गरोस् । र मुज्दल्फा पुगे पछि मग्रिब र इशाको नमाज जम्मा र कस्र गरेर पढोस् फेरि राम्ररी आराम गरेर सुतोस् । फेरि फज्रको नमाज पहिलो समयमा पढेर त्यहाँ उभेर लामो दुआ राम्रो सँग बिहान सफा भ ए सम्म गरोस् र सूर्योदय हुनु भन्दा अगि मिना तिर फर्कोस् । बाटोमा मोहस्सिर भन्ने उपत्यका आउँछ त्यहाँ पुगे पछि सके जति तीव्रगतिमा हिंडोस् । र मिना पुगे पछि सब भन्दा पहिला अक्बा भ न्ने जम्रा (जुन मक्काको नजीक छ) लाई सातवटा सानो ढुंगाले हान्नु पर्छ (जसको आकार चना र बन्दूकको गोलीको बीच बीच होस्) । र प्रत्येक ढुंगा हान्दा अल्लाहु अक्बर भनोस् । र प्रत्येक ढुंगा जम्राको वरिपरि बनाइएको परिधि भित्र खस्नु अनिवार्य छ चाहे जम्रा (बीचमा बनाइएको स्तम्भलाई लगोस वा नलगोस् । र तल्बीयालाई जम्रालाई हान्नु भन्दा अघि नै छाड्नु पर्छ । जम्रालाई हाने पछि कुर्बानी (बलिदान) गरेर कपाललाई कोर्नु पर्छ वा सानो गराउनु पर्छ र कोर्नु श्रेष्ठ हो । जम्रालाई हानेर कपाललाई कोरेर पत्नी बाहेक हराम भएका सम्पूर्ण कुराहरू हलाल भइहाल्छन् र यसैलाई पहिलो तहुल्लुल् भनिन्छ । फेरि मक्का प्रस्थान गरेर तवाफे इफाजा गर्नु पर्छ जो कि वाजिब हो र यसलाई न गरेर हज्ज सम्पन्न हुँदैन । अनि हज्ज तमत्तो गर्ने व्यक्ति सफा मर्वा बीच सात चक्कर गरोस्,र यदि इफराद तथा किरान गर्नेहरूले तवाफे कोदूम सँगै सफा मर्वाको सई (चक्कर) गरेका थिएनन् त यस तवाफ सँग चक्कर गर्नु पर्छ । जब यो कार्य गरिसक्यो भने पत्नी लगायत सबै कुराहरू हलाल भइहाल्छन्,र यसैलाई दोस्रो तहुल्लुल भनिन्छ । फेरि मिना तिर त्यहाँ रात बिताउने हेतु जाओस जो कि वाजिब हो । र सूर्य ढले पछि तीनै जम्राहरूलाई ७/७ सानो ढुंगाले हानोस् । पहिला सानो जम्रालाई हानोस् र अलि अगाडि भएर उभेर अल्लाह सित लामो दुआ गरोस्,अनि माझ जम्राको नजीक आएर त्यसलाई पनि सातवटा सानो ढुंगाले हानोस र त्यहाँ पनि दुआ गरोस् त्यस पछि अक्बा जम्रालाई हानोस र त्यहाँ न उभोस् । फेरि दोस्रो दिन (१२ तारीख) को पनि त्यसरी नै गरोस् । र यदि चाँडै निस्कनु चाहन्छ भने सूर्यास्त हुनु भन्दा अघि नै मिनाबाट निस्कनु पर्छ,र यदि १२ तारीखको दिन मिनामा नै सूर्यास्त भयो भने १३ तारीखको लागि रात बिताउनु पर्छ,अँ यदि निस्कने इरादा गरे पछि जामको कारणले निस्कनु सम्भव भएन त सूर्यास्त भए पछि पनि निकल्नुमा केही अपत्ति छैन । र किरान हज्ज गर्नेको विधि इफराद जस्तो नै हो तर किरान गर्नेमाथि तमत्तो सरह कुर्बानी गर्नु पर्छ । र जब घर फर्कनुको इच्छा गरोस् त मक्का बाट निस्कनु भन्दा अघि तवाफे विदा (अन्तिम तवाफ) गरोस् ताकि उस्को अन्तिम काम काबाको तवाफ होस् । तर मासिक धर्म र प्रसव रगतमा बसेकी महिलामाथि यो तवाफे विदा छैन, र यदि त्यस तवाफ पछि व्यापारमा व्यस्त भ यो त पुनः त्यसलाई दोहोऱ्याउनु पर्छ । र यदि कुनै हाजी बिन तवाफे विदा गरेर मक्कालाई छाड्यो त यदि नजीक छ भने फर्केर तवाफ गरोस् र यदि टाढा गइसकेको हो भने उसमाथि एउटा जनावरलाई हलाल गरेर दान गर्नु पर्छ ।

**हज्जका आधारहरूः** र ती चारवटा छनः १) एहराम,र त्यो हज्जमा प्रवेश हुनको नियत हो । २) अर्फाको चौरमा बस्नु । ३) तवाफे इफाजा गर्नु । ४) सफा मर्वाको सई (चक्कर) गर्नु ।

**हज्जका वाजिब कार्यहरूः** यी वाजिब कार्यहरू ८ वटा छनः १) मीकात (निर्धारित ठाउँ जहाँ देखि एहराम पहिरेर हज्ज वा उम्राको नीयत गर्छ) देखि एहराम पहिरिनु । २) अर्फामा राती सम्म बस्नु । ३) आधी रात्री पश्चात सम्म मुज्दल्फामा बिताउनु । ४) तश्रीकका दिनहरूको रात्री मिनामा बिताउनु । (कुर्बानीको दिन पछि १३ तारीख सम्मलाई तश्रीक भनिन्छ) । ५) जम्राहरूलाई ढुंगाले

हान्नु । ६)कपाल कोर्नु वा सानो गर्नु । ७) विदा तवाफ गर्नु । ८) तमत्तो र किरान हज्ज गर्नेको लागि कुर्बानी गर्नु ।

**उम्राका आधारहरूः** ३ वटा छनः १) एहराम पहिर्नु । २) उम्राको तवाफ गर्नु । ३) उम्राको सई गर्नु ।

**उम्राका वाजिबहरूः** २ वटा छनः १) मीकात देखि एहराम पहिर्नु । २) कपाल कोर्नु वा सानो गर्नु ।

❁ जस्ले हज्जका आधारहरू मध्ये कुनै आधारलाई छाड्यो उस्को हज्ज सही हुँदैन,र जस्ले कुनै वाजिबलाई छाड्यो भने जनावरलाई हलाल गरेर दान दिनाले पूर्ति भइहाल्छ । र जस्ले कुनै सुन्नत कार्य छाड्यो भने उसमाथि केही छैन ।

**काबाका तवाफ सही हुनका लागि १३ वटा शर्तहरू छनः** १) इस्लाम, २) बुद्धि, ३) खास नीयत गर्नु, ४) तवाफको समय हुनु, ५) शक्ति राखेर गुप्ताँगलाई छोप्नु, ६) पवित्र हुनु,र बच्चाको लागि यो शर्त छैन, ७) पूर्ण विश्वासको साथ ७ वटा तवाफ (परिक्रमा) पूरा गर्नु, ८) काबालाई परिक्रमा गर्दा आफ्नो देब्रे तिर राख्नु, र तवाफ गर्दा भुलचूक भइहालोस् भने त्यसलाई पुनः गर्नु, ९) पिठ्युँ पछाडि न फर्कनु, १०) सामर्थ्य राखेमा हिंडेर तवाफ गर्नु, ११) सातौं चक्कर (परिक्रमा) लगातार गर्नु, १२) मस्जिदे हरामको भित्रै तवाफ गर्नु, १३) हज्रे अस्वद देखि आरम्भ गर्नु ।

**तवाफका सुन्नत (राम्रा) कार्यहरूः** हज्रे अस्वदलाई छुनु वा चुम्बन गर्नु, त्यहाँ अल्लाहु अक्बर भन्नु, रुक्ने यमानीलाई स्पर्श गर्नु, आ-आफ्नो ठाउँमा इज्तेबा तथा रमल गर्नु र हिंड्नु, तवाफ गर्दा अल्लाह सित दुआ गर्नु र उन्को स्तुती गर्नु, सम्मानित काबाको नजीकै रही तवाफ गर्नु, र तवाफ पछि मकामे इब्राहीमको पछाडि दुई रकात नमाज पढ्नु ।

**सफा मर्वाको चक्कर (सई) का ९ वटा शर्तहरू छनः** १) इस्लाम, २) बुद्धि, ३) नीयत, ४) लगातार गर्नु, ५) सामर्थ्य राखेर हिंड्नु, ६) ७ चक्कर पूरा गर्नु, ७) पूर्ण रूपले सफा र मर्वाको बीच चक्कर लगाउनु, ८) सही तवाफ पश्चात सफा मर्वाको चक्कर लगाउनु, ९) पहिलो चक्कर सफा देखि आरम्भ गर्नु र सातवाँ चक्कर मर्वामाथि समाप्त हुनु ।

**सईका सुन्नत कार्यहरूः** ठूलो र सानो अपवित्रताबाट पवित्र हुनु, गुप्ताँगलाई छोप्नु, सई गर्दा दुआ र स्तुती गर्नु, हिंड्नुको ठाउँमा हिंड्नु र दुगुर्नुको ठाउँमा दुगुर्नु, सफा र मर्वामाथि चढ्नु, तवाफको तुरुन्त पश्चात सई गर्नु ।

**नोटः** प्रत्येक दिनको ढुंगा हान्नुलाई त्यही दिनमा हान्नु अति उत्तम हो, र यदि आजको ढुंगा हान्नुलाई भोलिको लागि ढीलो गऱ्यो वा सबै दिनको ढुंगालाई तश्रीकको अन्तिम दिन सम्म ढीलो गऱ्यो भने पर्याप्त भइहाल्छ ।

**कुर्बानीः** कुर्बानी गर्नु सुन्नत मोअक्कदा (ठोस् सुन्नत) हो, जुन व्यक्ति कुर्बानी गर्न चाहन्छ त जिल्हिज्जाको पहिलो तारीख देखि कर्बानी गर्ने सम्म आफ्नो कपाल, नङ, र छाला मध्ये कुनै वस्तुलाई अनिवार्य रूपले न काटोस्, बरु यस्तो गर्नु हराम छ ।

**अकीकाः** यो सुन्नत हो, केटाको तर्फ बाट दुई बाखा, र केटीको तर्फ बाट एक बाखा अकीका गर्नु पर्छ । बच्चा जन्मनुको सातौं दिनमा त्यस बाखालाई जबह (हलाल) गर्नु पर्छ । सातौं दिनमा बच्चाको टाउकोलाई कोर्नु र कपालको बराबर चाँदीलाई दान दिनु र त्यही दिन बच्चाको नाम राख्नु सुन्नत हो । अल्लाहको नजीक सब भन्दा राम्रो नाम अब्दुल्लाह र अब्दुर्रहमान हो, र अल्लाहको अलावा अरू सँग दासता जोडेर नाम राख्नु हराम छ जस्तो अब्दुन्नबी, अब्दुर्रसूल, अब्दुल् मसीह राम दास आदि । र यदि अकीका तथा कुर्बानीको दिन एकै साथ आयो त एकलाई गरेर अर्कोको लागि पूर्ति भइहाल्छ ।

**पाइदाः** जुन व्यक्ति नबी सल्लल्लाहो अलैहेवसल्लमको मस्जिदमा प्रवेश गर्छ ऊ पहिला दुई रकात तहियतुल् मस्जिद पढ्नेछ अनि नबी सल्लल्लाहो अलैहेवसल्लको सम्मानित चिहान नजीक आएर आफ्नो अनुहार चिहान तिर गरी किब्लालाई पिठ्युँ तिर गरी मुटुमा उहाँको आदर र शानलाई महसूस गरी यस्तो मानौ कि ऊ उहाँलाई हेरी राखेको छ यो भनोस्ः अस्सलामो अलैक या रसूलल्लाह व रहमतुल्लाहे व बर्कातोहु । फेरि एक हातको बराबर दायाँ तिर आएर यो भनोस्ः अस्सलामो अलैक

या अबा बक्र सिद्दीक्, अस्सलामो अलैक या उमर अल्फारूक,अल्लाहुम्म अज्जेहुमा अन् नबीय्येहुमा व अनिल् इस्लामे खैरन् । फेरि किब्ला सामु गरी र चिहान रहेको कोठालाई देब्रे तिर राखी अल्लाह सित दुआ गरोस् ।

**छोट्करीमा हज्जका कार्यहरूः**

| इफराद | किरान | तमत्तो | हज्ज |
|---|---|---|---|
| लब्बैक हज्जन् | लब्बैक उम्रतन् व हज्जन् | लब्बैक उम्रतन् मोतमत्तेअन् बेहा इलल् हज्ज | एहराम र तल्बीयाको आरम्भ |
| तवाफे कोदूम | तवाफे कोदूम | उम्राको तवाफ गर्नु | फेरि |
| हज्जको सई | हज्जको सई | उम्राको सई (चक्कर) | फेरि |
| आफ्नो एहराममा नै बस्ने छ | आफ्नो एहराममा नै बस्ने छ | कपाललाई सानो गर्नु (पूर्ण रूप ले हलाल हुनु) | फेरि |
| मिना तिर जानु | मिना तिर जानु | मक्कामा एहराम पहिर्नु र मिनातिर जानु | ८तारीख जोहर अघि |
| अर्फा तिर जानु र जोहर र अस्रको नमाज जम्मा र कस्र गरी पहिलो पढनु अनि दुआमा सूर्यास्त हुनु सम्म व्यस्त रहनु | | | ९तारीख सूर्यउदय पछि |
| मुज्दल्फाको लागि प्रस्थान गर्नु र मग्रिब र इशाको नमाज कस्रको साथ मुज्दल्फा पुगे पछि पढ्नु र आधी रात्री सम्म त्यहाँ बस्नु, र फज्र पछि सम्म बस्नु बेस छ | | | सूर्यास्त भए पछि |
| मिना तिर फर्कनु र अक्बा जम्रालाई ढुंगा हान्नु | | | १० तारीख ईदको दिन फज्र नमाज पछि सूर्यउदय हुनु भन्दा अगि |
| - | कुर्बानी गर्नु | कुर्बानी गर्नु | |
| कपाल कोर्नु वा सानो गर्नु, अनि तवाफे इफाजा गर्नु यी तीनौ मध्ये कुनै दुईवटा कार्य गर्नाले पहिलो तहल्लुल् प्राप्त भइहाल्छ र तीनौ गर्नाले दोस्रो तहल्लुल पनि प्राप्त भइहाल्छ | | | |
| - | - | हज्जको सई | |
| सूर्य ढले पछि जम्रा- हरू लाई हान्नु पहिलो सानो अनि माझिल्लो अनि ठूलो | | | ११-१२, र १३ ढीलो गर्ने हेतु |
| विदा तवाफ गर्नु र यो तवाफऋतुमती तथा सुत्केरी माथि छैन | | | घर फर्कनु समय |





# विभिन्न लाभदायक कुराहरू

**पापः** अनेकौं कुराहरूले पाप क्षाम्य हुन्छः साँचो तौबा (प्रायश्चित) गर्नु, क्षमा याचना गर्नु, भलो कार्य गर्नु, परेशानी र दुःख द्वारा परीक्षा ग्रस्त हुनु, दान गर्नु, अर्कोले दुआ गर्नु। र यदि केही पाप बाँकी बच्यो जसलाई अल्लाहले क्षमा गर्नुभएको होइन भने त्यसमाथि चिहानमा वा प्रलयको दिन वा नरकमा सजाय हुनेछ जस्ले गर्दा पाप बाट पवित्र भई स्वर्गमा प्रवेश हुनेछ यदि उसको मृत्यु तौहीदमाथि भएको थियो। र यदि कुफ्र वा शिर्क वा निफाक माथि मृत्यु भएको हुन्छ भने सधैंको लागि नरकको आगोमा रहनेछ। पाप र कुकर्महरूको मनुष्य माथि अनेकौं रूपले प्रभाव पर्छः र त्यसको प्रभाव मुटुमाथि यस प्रकारले हुन्छ कि दिलमा भय, अन्ध्यारो,अपमान बेइज्जती, रोग उत्पन्न हुन्छ र अल्लाहबाट रोक्छ। र धर्ममाथि पनि यसको प्रभाव यस प्रकारले पर्छ कि माथि वर्णन भएको प्रभाव सँगै अल्लाहको आज्ञापालन, रसूलुल्लाह सल्लल्लाहो अलैहे वसल्लमको दुआ (आशिर्वाद),फरिश्ताहरू तथा मुसलमानहरूको दुआबाट उसलाई बंचित गरिदिन्छ। रोजी र जीविका पनि पापले गर्दा प्रभावित हुन्छः रोजीबाट बंचित गरिदिन्छ र अनुकम्पालाई नाश गरी धन-मालको बृद्धि समाप्त गरिदिन्छ। यसको व्यक्तिगत प्रभाव पनि पर्छ जो कि पापीको उमेरमा बृद्धि हुँदैन,र जीविकामा कमी गरिदिन्छ तथा मामिलाहरूलाई कठोर बनाइदिन्छ। र कर्महरूमाथि यस प्रकारले प्रभाव पर्छ कि ती स्वीकार्य हुन्दैनन्। र सभ्यतामाथि प्रभाव यस रूपले हुन्छ कि सभ्यताबाट अमन व शान्ति नष्ट गरी महंगाई ल्याउँछ र अन्यायकारी हाकिमहरू र शत्रुहरूलाई उसमाथि कायम गरिदिन्छ र पापको कारणले वर्षा न भई अकाल पनि भइहाल्छ, ईत्यादि।

**चिन्ताः** हृदयको शान्ति र प्रसन्नता तथा चिन्ता मुक्त हुनु प्रत्येक व्यक्तिको चाहना र इच्छा हुन्छ, र यसैको कारण राम्रो जीवन प्राप्त हुन्छ, यसलाई प्राप्त गर्ने हेतु केही धार्मिक, प्राकृतिक र व्यवहारिक कारणहरू छन जुन मात्र मोमिनहरूमा नै एकत्रित हुन सक्छन्। ती मध्ये केहीको चर्चा यहाँ गरिन्छः १) अल्लाहमाथि ईमान ल्याउनु। २) उहाँले आदेश दिएको कुरालाई पालना गर्नु र मनाही गरेको कुराहरूबाट बंचित रहनु। ३) प्राणीहरूमाथि आफ्नो वचन, कर्म र भलो कार्यहरू सित उपकार गर्नु। ४) काम काज गर्दै गर्नु र धार्मिक तथा सांसारिक लाभदायक शिक्षाहरू प्राप्त गर्नुमा व्यस्त रहनु। ५) भविष्य र अतीतको बारेमा चिन्ता न गर्नु बरु आफ्नो दिनहुँ कार्यहरूमा व्यस्त रहनु। ६) अल्लाहको जिक्र (याद,स्तुति) अत्याधिक रूपमा गर्नु। ७) अल्लाहले दिनुभएको प्रत्यक्ष वा अप्रत्यक्ष अनुकम्पाहरूलाई चर्चा गर्नु। ८) आफु भन्दा तल इस्तरको व्यक्तिलाई हेर्नु र सांसारिक जीवनमा आफु भन्दा माथिको व्यक्तिमा ध्यान न दिनु। ९) चिन्तित गर्ने कारणहरूबाट टाढा बस्ने प्रयास गर्नु र प्रसन्नता दिने कारणहरूलाई प्राप्त गर्ने प्रयास गर्नु। १०) चिन्ता टाढ गर्ने हेतु केही दुआहरू द्वारा अल्लाहको निकट्ता र शरण चाहनु।

**फाइदाः** इब्राहीम अल् खव्वासले भन्नु भोः "हृदयका पाँचवटा औषधी छनः चिन्तन मनन् गरेर कुरआनको पाठ गर्नु, पेटलाई खाली राख्नु, रात्रीमा नमाज पढ्नु, प्रभातकालमा अल्लाह समक्ष रुनु कराउनु र भलो तथा सदाचारीहरूको साथ उठ बस गर्नु "।

**विवाहः** जस सँग काम वासना छ र व्यभिचारबाट डराउँदैन उसको लागि विवाह गर्नु सुन्नत (राम्रो) हो, र जस सँग काम वासना छैन उसको लागि विहे गर्नु जायज छ, र जुन व्यक्ति व्यभिचार र बलात्कारीबाट डराउँछ उसको लागि विहे गर्नु जरूरी र वाजिब हो, र अनिवार्य हज्ज गर्नु भन्दा पहिलो पनि विवाह गर्नु पर्छ, पर स्त्री तिर हेर्नु हराम छ यसै गरी कामवेगले बुढी महिला र दाढी न निक्लेको केटा तिर हेर्नु पनि हराम हो।

**विवाहका शर्तहरूः** १) पति पत्नी दुबैलाई नियुक्त गर्नु, अभिभावक (वली) को यो भनाई सही छैन कि म आफ्नी एउटी छोरी सँग तिम्रो विहे गर्न चाहन्छु जबिक ऊ सँग एक भन्दा बढी छोरीहरू हुन्। २) बुद्धिमान, बालिग पतिले सहमत हुनु यसै गरी बालिग, बुद्धिमती र स्वतन्त्र पत्नीले सहमत हुनु। ३) अभिभावकको उपस्थिति, महिलाले आफै गरेको विवाह सही हुँदैन। महिलाको विहे अभिभावक बाहेक अरू व्यक्ति न गरोस्, अँ यदि बराबरीमा विहे गर्नबाट अभिभावक इन्कार गर्छ त्यस बेला अरू गर्न सक्छ

। अभिभावकको तरतीब यस प्रकार छः पहिलो बुबा अनि बाजे र माथि जहाँ सम्म होस,फेरि केटा अनि नाती र त्यस तल जहाँ सम्म होस्, फेरि सहोदर दाजु र भाई फेरि सौतेलो दाजु र भाई फेरि सहोदर भतिजो ईत्यादि। **४)** साक्षीः विवाहमा दुई बालिग, बुद्धिमान र सदाचारी पुरुषको साक्षी हुनु। **५)** पति पत्नी दुबैको विवाहमा कुनै प्रकारको बाधा न पर्ने होस, जस्तो दुधको तर्फ बाट नातेदारी,वा रगतको तर्फ बाट नातेदारी वा ससुराली तर्फ बाट नातेदारी।

**जस सँग बिहे गर्नु हराम छः पहिलोः सधैंका लागि हराम**,यसका केही प्रकारहरू छनः १) रक्तको कारणले हराम हुने महिलाहरूः आमा, हजूर आमा (बाबुकी आमा,आमाकी आमा) यो पीढी माथि जहाँ जाओस्, छोरी,छोराकी छोरी यो पुस्ता तल जहाँ सम्म जओस्, सबै प्रकारकी दिदी बहिनी (सहोदर र सौतेली), भान्जी, भान्जाकी छोरी वा भान्जीकी छोरी, सबै प्रकारकी भतिजी (सहोदर र सौतेली), भतिजीकी छोरी भतिजीकी नातिनी, फुपु र सानीमा चाहे यो पुस्ता माथि जहाँ सम्म पुगोस् (र सहोदर छोराकी पत्नी अर्थात बुहारी)। २) दुधको कारणले हराम हुने महिलाहरूः जुन महिलाहरू रक्तको कारणले हराम हुन् ती नै दुधको कारणले पनि हराम हुन। ३) ससुरालीको कारणले हराम हुने महिलाहरूः पत्नीकी आमा (सासु) पत्नीकी हजूर आमा र पत्नीकी (अर्को पतिबाट जन्मेकी) छोरीहरू चाहे तल जहाँ सम्म जाओस्। **दोस्रोः केही खास समयमा हराम हुने महिलाहरूः** र यी दुई प्रकारकी छिनः १) एकत्रित हुनको कारणले हराम हुने महिलाः जस्तो दुई दिदी बहिनीलाई एकै साथ विहेमा राख्नु। पत्नी र उसकी फुपु वा सानीमालाई एकै साथ विवाहमा राख्नु। २) कुनै बाधा अथवा कारणले हराम भएकी महिला जो बाधा कहिले समाप्त पनि हुन सक्छ जस्तो अर्कोकी पत्नी।

**फायदाः** बाबु आमाको लागि यो जायज छैन कि आफ्नो छोरालाई त्यो केटी सँग बिहे गर्नुमा जबरजस्ती गरुन जसलाई छोरा चाहदैन। र छोरामाथि यस खण्डमा बुबा आमाको आज्ञा पालन गर्नु अनिवार्य छैन, र आज्ञा पालन नगरेमा त्यो अवज्ञाकारी हुँदैन।

❁ **विवाह विच्छेद (तलाक)ः** मासिक धर्म वा प्रसवको रगत आउने बेलामा वा यस्तो पवित्रतामा जसमा मैथुन गरेको हो तलाक दिनु (विवाह विच्छेद गर्नु) अवैध छ। यदि यी अवस्थामा गर्छ भने विवाह विच्छेद भइहाल्छ। र बिना आवश्यकता तलाक दिनु नराम्रो हो, र आवश्यकता भएमा तलाक दिनु जायज छ। र जुन व्यक्तिलाई विवाहले हानि पुऱ्याउँछ उसको लागि तलाक दिनु सुन्नत (अति उत्तम) हो। र यदि बुबा आमा विवाह विच्छेद गर्नको आदेश दिन्छन भने छोरामाथि आज्ञापालन गर्नु अनिवार्य छैन। र जुन व्यक्ति आफ्नी पत्नीलाई तलाक दिन चाहन्छ भने एक तलाक भन्दा बढी संख्यामा तलाक दिनु हराम हो। र यस्तो पवित्रतामा तलाक दिनु अनिवार्य हो जसमा पत्नी सँग मैथुन गरेको होइन। एक तलाक दिए पछि बिना अरू तलाक दिएर इद्दत (तलाक पछि निर्धारित अवधि) समाप्त हुन सम्म पत्नीलाई छाड्नु पर्छ। र उस महिलाको लागि पतिको घरबाट निस्कनु अवैध हो जसलाई मात्र रज्ई तलाक (एक र दुई तलाक) दिइएको छ,यसै गरी पतिको लागि पत्नीलाई इद्दत (तलाक पछि निर्धाति अवधि) समाप्त हुनु भन्दा अघि रज्ई तलाकमा घरबाट वाहिर निकाल्नु अवैध छ। र मात्र नियत तथा इरादाले तलाक लागु हुँदैन यसको लागि मुखले शब्द साथ भन्नु जरूरी छ।

❁ **कसम (शपथ)ः** कसममा कफ्फारा (प्रायश्चितको लागि जरीमाना) लागु हुनको लागि चार वटा शर्तहरू चाहियो : १) कसम लिनको लागि ठोस इरादा गर्नुः यदि बिना इरादाको मात्र मुखले शपथ लिइयो भने त्यो कसम लागु हुँदैन र त्यसलाई व्यर्थ कसम भनिन्छ,जस्तो कुरा गर्दै व्यापक रूपले कसैको भनाई (कसम, अल्लाह कसम इत्यादि)। २) भविष्यमा सम्भवतः घटित हुने कुरामाथि कसम लिनुः यदि अतीतको बारेमा कसम लिइयो चाहे अज्ञानताको कारणले लिइएको होस वा आफुलाई साँचो ठानी वा जानीजानी झूठ शपथ लिइएको हो भने यस्तो खालको कसम सम्पन्न हुँदैन। (र अतीतको बारेमा झूठो कसम लिनुलाई यमीने गमूस भनिन्छ र यो ठूल-ठूला पापहरू मध्ये हो)। वा आफुलाई सत्य मानी भ

विष्यको बारेमा शपथ लिइयो र त्यसको विरुद्ध प्रकट भयो भने त्यो कसममा संखित हुँदैन । ३) आफ्नो इच्छा र मर्जीले कसम लिएको हो कसैले कसम लिनमाथि बेबश गरेको होइन । ४) कसम लिएको कुराको विरुद्ध कार्य गर्नुः जस्तो कुनै कुरालाई त्याग्नु माथि कसम लिएको छ भने त्यसलाई गर्नु, वा गरेमाथि कसम लिएको हो भने त्यसलाई त्याग्नु । र यदि कसैले शपथ लियो तर उल्ले शपथ लिंदा इन्शाअल्लाह (यदि अल्लाहले चाहनुभो) भनेर शर्त लगायो त उसमाथि दुई शर्तको कारणले कफ्फारा (जरीमाना) लागु हुँदैन, ती दुई शर्त हुनः १) कसम लिंदा सँगैमा इन्शाअल्लाह भन्नु । २) इन्शाअल्लाह भन्नमा कसमलाई माथि राख्नु (लट्काउनु) को इच्छा हुनु, जस्तो कि भनोस् अल्लाहको कसम इन्शाअल्लाह ।

र यदि कसैले कुनै कुरालाई गर्नेछैन भनी कसम लियो र उसले त्यसको विरुद्धमा फाइदा हेर्‍यो भने यहाँ सुन्नत (राम्रो) तरीका यो हो कि आफ्नो कसमलाई तोडी त्यसको कफ्फारा (जरीमाना) देओस् र त्यो लाभदायक भलो कार्यलाई गरोस् ।

**कसमको कफ्फारा (जरीमाना)ः** दश गरीब गुरुबालाई भोजन गराउनु हो, ती मध्ये प्रत्येक गरीबलाई आधा साअ (१.२५ कि.ग्राम) आनाज दिनु पर्छ, वा सबैलाई लुगा पहिराउनु पर्छ, वा एक दासलाई स्वतन्त्र गर्नु पर्छ, र जसलाई यस कुराको सामर्थ्य न होस् त्यो लगातार ३ दिन सम्म रोजा राखोस् । र जस्ले गरीबलाई खाना खुवाउनु माथि शक्ति राखेर रोजा राख्यो भने उसबाट कफ्फारा पूरा हुँदैन । र कसमको कफ्फारा कसमलाई भंग गर्नु (अर्थात त्यसको विरुद्ध कार्य गर्नु) भन्दा अघि देओस् वा पछि दुबै तरीका सही छन् । र जसले एकै कुरामाथि एक भन्दा बढी मात्रामा कसम लियो भने एकै पटक कफ्फारा दिनाले पूर्ति भइहाल्छ । र यदि एक भन्दा बढी कुराहरू छन् त प्रत्येक कुराको तर्फबाट एक एक कफ्फार तिर्नु पर्छ ।

❁ **भाकलः** भाकल कैयों प्रकारको हुन्छः १) आम भाकल,जस्तो कसैको भनाईः यदि म रोगबाट निको भएं भने म माथि अल्लाहको लागि भाकल हो । भाकलमा केही खास कुरालाई नियुक्त न गरी चुप लाग्यो भने उसले निको भए पछि कसमको कफ्फार दिनु पर्छ । २) झगडा र रिसको अवस्थामा भाकल लिनुः भाकललाई कुनै कुरा न गर्ने वा गर्ने साथ जोड्नु,जस्तो यो भन्नु कि यदि मैले तिमी सँग कुराकानी गरें त ममाथि एक वर्षका लागि रोजा राख्नु हो । त यसको आदेश यो हो कि कुराकानी गरे पछि दुई कार्य गर्नुमा अख्तियार हुन्छ चाहे एक वर्षको रोजा राखोस् वा कसमको कफ्फारा तिरोस् । ३) जायज भाकलः जस्तो यो भन्नु कि ममाथि अल्लाहको लागि भाकल कि म लुगा पहिर्छु । यस्को आदेश छ कि चाहे ऊ लुगा पहिरोस् वा कसमको कफ्फार तिरोस् । ४) मक्रूह (नराम्रो) भाकलः जस्तो कि यो भनोस कि ममाथि अल्लाहको लागि भाकल कि म आफ्नी पत्नीलाई तलाक दिन्छु । यस्को आदेश यो हो कि उसको लागि कसमको कफ्फारा तिर्नु राम्रो हुन्छ र यदि उल्ले भाकल लिएको कुरा गर्‍यो त उसमाथि केही कफ्फारा छैन । ५) अवज्ञा र पापको भाकलः जस्तो यो भन्नु कि अल्लाहको लागि ममाथि भाकल कि म चोरी गरुँ । यस्को आदेश हो कि त्यो कार्यलाई पूरा गर्नु अवैध हो र कसमको कफ्फारा दिनु पर्छ,र यदि उसले त्यो कार्य गर्‍यो भने उसलाई पाप लाग्छ र केही कफ्फारा छैन । ६) पूण्यको भाकलः जस्तो यो भन्नु कि म अल्लाहको लागि यत्रो मात्रामा नमाज पढ्नको भाकल लिन्छु । र यो भाकल मात्र अल्लाहको निकट्ता प्राप्त गर्ने हेतु गरेको हो । यसको आदेश यो हो कि यदि कुनै रोगीले रोगबाट निको हुन सँगै भाकललाई जोड्यो त निको भए पछि त्यसलाई पूर्ति गर्नु अनिवार्य हुन्छ, र यदि कुनै कुरा सँग न जोडी भाकललाई आम राख्यो भने त्यसलाई आम रूपमा पूरा गर्नु अनिवार्य छ ।

❁ **रिजाअतः (दुध चुसाउने समस्याहरू)ः** रक्तको कारणले जुन महिला वा पुरुष हराम हुन्छ दुधको कारणले पनि त्यही हराम हुन्छ, र यसका लागि तीन वटा शर्तहरू छनः १) बच्चा जन्म लिनको कारणले स्तनमा दुध आएको हो न कि अरू कुनै कारणले । २) शिशुले जन्म पश्चात दुई वर्षको भित्र स्तनपान गरेको होस । ३) विश्वासनिय रूपमा पाँच पटक वा त्यस भन्दा बढी मात्रामा पाँच बेग्ला बेग्लै समयमा

दुध चुसेको होस । रिजाअतको अर्थ हो कि बच्चा स्तनलाई मुखमा राखी आफैं दुध चुसोस र पेट भरे पछि आफैं स्तनलाई छाडोस् । र स्तन-पान गराउनको कारणले सामल-तुमल र दायमा भाग सिद्ध हुँदैन ।

❁ **वसीयत (उत्तरदान) :** व्यक्तिमाथि कुनै यस्तो हक-अधिकार होस जस्को केही प्रमाण छैन भने मृत्यु पश्चात त्यसको चुक्ता गर्नको लागि वसीयत गर्नु अनिवार्य हो । र हकदार सम्म हक पुगोस त्यसतो खालको वसीयत गर्नु पर्छ । र यदि कसै सँग अधिक धन-माल होस भने कुनै आफ्नो नजिकको गरीब आफन्तको लागि त्यसको पाँचवाँ भाग वसीयत गर्नु मुस्तहब (अति राम्रो) हो, यसो न भएमा आम गरीब र धर्मगुरू र कुनै सदाचारी जुन कि उत्तराधिकारी न होस वसीयत गर्नु राम्रो छ । र फकीरले उत्तराधिकारी हुनको बावजुद अर्को लागि वसीयत गर्नु नराम्रो कार्य हो, अँ यदि धनी होस त जायज छ । र कुनै अपरिचित व्यक्तिको लागि धनका एक तिहाई भन्दा बढीको लागि वसीयत गर्नु हराम छ । यसै गरी कुनै उत्तराधिकारीको लागि अलिकति धनको पनि वसीयत गर्नु हराम छ, अँ यदि उत्तराधिकारीहरूले अनुमति दिए भने केही अपत्ति छैन तर त्यो मृत्यु पश्चात लागु हुने छ । र यदि वसीयत कर्ताले यस्तो भन्यो कि मैले आफ्नो वसीयतबाट फिर्ता भएं वा त्यसलाई व्यर्थ गरें वा त्यसमा परिवर्तन गरें त वसीयत भंग भइहाल्छ । र वसीयतनामाको आरम्भमा यो लेख्नु राम्रो होः बिस्मिल्ला हिर्रहमानिर्रहीम, हाजा मा औसा बेही फोलानुन् अन्नहू यश्हदो अल्लाइलाह इल्लल्लाहो वह्दहू लाशरीक लहू, वअन्न मोहम्मदन् अब्दोहू व रसूलोहू, व अन्नल् जन्नत हक्कुन् व अन्नन् नार हक्कुन्, व अन्नस्साअत आतियतुन् लारैब फीहा, व अन्नल्लाह यब्असो मन् फील् कोबूर, व औसा मन् तरक्तो मिन् अह्ली अैयत्तकुल्लाह व युस्लेहू जात बैनेहिम्, व योतीउल्लाह व रसूलहू इन् कानू मुअमेनीन्, व ऊसीहिम बिमा औसा बिही इब्राहीम बनीहे व याकुब : ﴿يَٰبَنِيَّ إِنَّ ٱللَّهَ ٱصۡطَفَىٰ لَكُمُ ٱلدِّينَ فَلَا تَمُوتُنَّ إِلَّا وَأَنتُم مُّسۡلِمُونَ﴾ ।

❁ नबी सल्लल्लाहो अलैहेवसल्लम माथि दरूद (शान्ति) पठाउँदा शान्ति र सलाम दुबै पठाउनु मुस्तहब (उत्तम) छ र मात्र एकलाई पठाउनु न चाहिने कार्य हो । दूत नबी बाहेक अरूमाथि दरूद पठाउनु आरम्भमा राम्रो छैन,त यस्तो न भन्नु अबु बक्र सल्लल्लाहो अलैहेवसल्लम वा अलैहिस्सलाम र यो कार्य मक्रूह (नराम्रो) हो । र नबीको चर्चा आउँदा सित्तैमा यसो गर्नु जायज छ जस्तो अल्लाहुम्म सल्ले अला मोहम्मद व अला आले मोहम्मद व अस्हाबेही व अज्वाजेही व जुर्रियातेही । र सहाबा (नबीका साथीहरू),ताबेईन (सहाबाका साथीहरू) र उनी पछिका ओलमा (धर्मगुरूहरू) र तपस्वीहरू तथा सदाचारी व्यक्तिहरूको नाम चर्चा गरे पछि यो भन्नु राम्रो हो रजियल्लाहो अन्हो (अल्लाह उनी सित प्रसन्न हुन) र रहेमहुल्लाह (अल्लाह उनीमाथि दया गरुन्) जस्तो यो भन्नु अबु हनीफा,मालिक, शाफई र अहमद रजियल्लाहो अन्हुम वा रहेमहोमुल्लाह ।

❁ **हलाल गर्नुः** जनावरको मासु खाने निमित्त हलाल गर्नु अनिवार्य छ । तर जनावरमा अनिवार्य रूपले पाइने केही शर्तहरू छनः १) जस्को मासु खानु जायज होस् । २) जो मनुष्यको अधीनमा होस । ३) थलमा रहने जनावर होस् । **हलाल गर्ने निम्ति चार वटा शर्तहरू छन्ः** १) हलाल गर्नेवाला बुद्धिमान होस् । २) नङ र दाँत बाहेक हलाल गर्ने शस्त्र होस किनभने यी दुबैबाट हलाल गर्नु जायज छैन । ३) हलाल गर्दा घोक्रो, र दुबै नसालाई काट्नु वा दुबै मध्ये एकलाई काट्नु पर्छ । ४) हलाल गर्नको लागि घोक्रो माथि हात चलाउँदा बिस्मिल्लाह भन्नु, र यदि बिस्मिल्लाह भन्नु बिर्सियो भने केही आपत्ति छैन । र यदि अरबी भाषाको आलावा अरू कुनै भाषामा भन्यो त पर्याप्त भइहाल्छ । र बिस्मिल्लाह सँग अल्लाहु अक्बर भन्नु सुन्नत (उत्तम) हो ।

❁ **शिकारः** जस जनावरलाई शिकारको निम्ति लक्ष्य बनाइएको हो त्यसमा केही शर्तहरू पाउनु जरूरी छः १) जस्को मासु खानु वैध होस । २) प्राकृतिक रूपले जंगली होस् । ३) मनुष्यको वशमा न होस् । **शिकारको हुकुमः** भोजनको लागि शिकार गर्नु जायज हो, मनोरंजन र खेल कुदको लागि शिकार गर्नु मक्रूह (नराम्रो) हो, शिकारलाई खोज्नुमा यदि मनुष्यलाई कष्ट हुन्छ भने शिकार गर्नु जायज छैन । चार

वटा शर्तहरू पाए पछि नै शिकार गर्नु जायज हुन्छ : १) शिकारीमा हलाल गर्ने क्षमता होस् । २) शिकार गर्ने शस्त्र यस्तो हुनु पर्छ जसले हलाल भइहालोस् अर्थात त्यो धारिलो होस जस्तो भाला, बर्छी र तीर आदि । र यदि शिकारी जनावर जस्तो चील बाज वा कुकुर सित शिकार गर्दछ भने शिकारी जनावरलाई शिक्षित हुनु जरूरी छ । ३) शिकारको नियत गर्नु अर्थात शिकारको इरादाले शस्त्र आदिलाई फ्याँकिएको हो । र यदि बिना इरादाको जनावर शिकार भइसकेको हो भने त्यसलाई खानु जायज छैन । ४) शस्त्र फ्याँक्दा बिस्मिल्लाह भन्नु एकदम जरूरी छ, र यदि बिस्मिल्लाहलाई बिर्सियो भने खानु जायज हुँदैन ।

❁ **भोजनः** प्रत्येक खाइने र पीइने कुरालाई भोजन भनिन्छ । खाइने कुराहरूमा असल र आधारित कुरा जायज नै हो । तीन वटा शर्तहरू पाए पछि नै कुनै वस्तु खानु जायज हुन्छः १) त्यो खाइने कुरा पवित्र होस् । २) त्यसमा केही हानि न होस् । ३) त्यो गन्दगी र फोहोर न होस् ।

र प्रत्येक अपवित्र वस्तु खानु अवैध छ जस्तो रगत र मृतक । र जसमा हानि होस जस्तो विष । र जो गन्दगी र फोहोर होस् जस्तो दिसा,पिशाब,जम्रो र उडुस ईत्यादि ।

थल जनावरहरू मध्ये हराम छनः घरपालुवा गधा,र जुन जनावर दाँतले च्यातेर आफ्नो शिकारलाई खान्छ जस्तो बिज्जुको अलावा बाघ,चितुवा,भेडिया,तेंदुवा,कुकुर,सुँगुर,बाँदर, बिरालो,लौमडी र मुसा भन्दा अलि ठूलो जनावर जस्को पुच्छरमा धेरै कपाल हुन्छ । **र चरा मध्ये जुन आफ्नो पन्जाले शिकार गर्छन हराम छनः** जस्तो गरुड़,बाज,चील,शाहीन (एक प्रकारको बाज) र लाटोकोसेरो । र जुन पक्षी मृतक खान्छ जस्तो गिद्ध र गिद्ध जस्तो एउटा पक्षी, र सारस । र प्रत्येक त्यो चरा जसलाई अरब वासी नराम्रो ठान्छन् जस्तोः चमेरो,मुसा,बिर्नी,माहुरी,झींगा,पतिंगो,हुदहुद (वृक्ष खोधने चरो), साही र सर्प । र भुईमा हिंडने प्रत्येक प्रकारको कीरो, एक खास प्रकारको मुसा, छेपारा र माउसुली । र प्रत्येक यस्तो जीव जन्तु जसलाई इस्लाम धर्मले मार्ने आदेश दिएको हो जस्तो बिच्छी । वा जसलाई इस्लामले मार्नुबाट मनाही गरेको हो जस्तोः कमिलो, र जुन जीव जन्तु खाइने र नखाइने जनावरको मिलापबाट जन्म लिएको हो जस्तो सिम्अ त यो बिज्जु र भेडियाको मिलापबाट जन्मेको हुन्छ त यो पनि हराम हो । र जुन जनावर दुई खाइने जनावरको सहवासले जन्मेको छ त्यो अवैध छैन जसलाई खच्चर भनिन्छ जो जंगली गधा र घोडाको सहवासले जन्म लिन्छ । यी जनावरहरू बाहेक सबै जनावरलाई खानु वैध छः जस्तो गाई,गोरु,ऊँट,बाखा,भेडो,घोडा ईत्यादि। र जंगली जनावरहरू मध्येः जराफा, खरायो, वबर (बिरालो भन्दा सानो एक जातको जनावर जसको पुच्छर र कान सानो सानो हुन्छ) र यर्बुअ (मुसा जस्तो एउटा जनावर जसका अगिल्ला खुट्टा सानो र पछिल्ला ठूलो तथा पुच्छर लामो हुन्छ), सांडा र मृग (हरिण) । **र चरो मध्ये वैध छनः** शुतर मुर्ग (ऊँट जस्तो लामो गर्दन रहने एक पक्षी,ऊँटे घाँटी) कुखुरा,मयुर,सुगा,परेवा,गौरैया (सानो चरो), हाँस, जलीय कुखुरो । र पानीका सम्पूर्ण प्रकारका चराहरू खानु वैध छ । यसै गरी भ्यागुतो,साँप र गोही बाहेक जलीय सम्पूर्ण प्रकारका जनावरहरू वैध छन । र जस खेतीमा अपवित्र पानी वा मल हालेर फल र आनाज उब्जनी भएको छ त्यसलाई खानु जायज छ तर यदि त्यसमा गन्दगीको मज्जा वा गन्घ आउँछ भने त्यसलाई खानु हराम छ । र कोइला,माटो र हिलो खानु मक्रूह (नराम्रो) हो । र प्याज तथा लसुन बिना पकाए खानु मक्रूह हो । र यदि भोक लाग्यो र भोक अन्तिम सीमा सम्म पुग्यो भने ज्यान बाचाउने हेतु कुनै पनि कुरा खानु जायज छ ।

❁ काफिरहरूको तिहारमा शुभकामना व्यक्त गर्नु वा त्यसमा शामेल हुनु वा तिनीहरूलाई सलाम गर्नुमा आरम्भ गर्नु अवैध छ । र यदि तिनीहरू हामीलाई सलाम गर्छन् भने त्यसको उत्तरमा वअलैकुम भन्नु अनिवार्य छ । यसै गरी काफिर र बिदअती (धर्ममा नया कार्य आविष्कार गर्ने व्यक्ति) लाई आदर गर्दा उभ्नु जायज छैन । यसै गरी उनीहरू सँग हात मिलाउनु नराम्रो कार्य हो । यसै गरी बिना इस्लामी रहस्यको उनीहरूलाई रोगको अवस्थाम सुसार गर्नु र मरे पछि शोक प्रकट गर्नु वा श्रद्धात्र्जलि अर्पित गर्नु हराम छ ।

# इस्लामी झार-फुक (जन्तर-मन्तर)

अल्लाहका कार्यहरू र प्राणीहरूमा चिन्तन मनन गर्ने व्यक्ति यो कुरा पाउँछ कि परीक्षा, रोग र परेशानी अल्लाहले नियुक्त गर्नुभएको भाग्य तथा संसार चलाउने विधि नियम मध्ये हो, जस्तो अल्लाह भन्नु हुन्छः ﴿ وَلَنَبۡلُوَنَّكُم بِشَيۡءٖ مِّنَ ٱلۡخَوۡفِ وَٱلۡجُوعِ وَنَقۡصٖ مِّنَ ٱلۡأَمۡوَٰلِ وَٱلۡأَنفُسِ وَٱلثَّمَرَٰتِۗ وَبَشِّرِ ٱلصَّٰبِرِينَ ﴾ " *निश्चय नै त्रास, भोक, धनमाल, ज्यान र फलफुलको हानि-नोक्सानी द्वारा हामी तिमीहरूको जाँच लिनेछौं, अनि धैर्यवानहरूलाई शुभ-सन्देश सुनाईदेऊ* "। र जुन व्यक्ति यो भन्छ कि सदाचारीहरूलाई जाँच र परीक्षा हुँदैन त यो भ्रम हो र उसको कथन बिल्कुलै मिथ्या छ। बरु अल्लाहको तर्फबाट जाँच र परीक्षा ईमानको प्रमाण हो। निःसन्देह नबी सल्लल्लाहो अलैहेवसल्लम सित कसैले सोध्योः कि मानिसहरूमा सब भन्दा अधिक जाँच कसलाई हुन्छ ? उहाँले उत्तर दिनु भोः " *नबीहरू, अनि सदाचारीहरू, अनि मानिस मध्ये भलो र नेक मान्छे अनि भलो मान्छे। र व्यक्तिलाई उसको धर्म अनुसार जाँच र परीक्षा हुन्छ, त जुन मान्छे आफ्नो दीन-धर्ममा ठोस र बलियो हुन्छ उसमाथि जाँच र परीक्षा पनि अधिक हुन्छ, र जुन मान्छे आफ्नो धर्ममा निर्बल र कमजोर हुन्छ उसको जाँच र परीक्षा पनि कम हुन्छ* " (इब्ने माजः)।

**र यो अल्लाहले दास सित प्रेम गर्नेका चिन्हहरू मध्ये छ,** नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " *अल्लाह तआला जब कुनै समुदाय सँग प्रेम गर्न चाहनु हुन्छ भने उसलाई जाँच्नु हुन्छ* " (अहमद) | **र दास सँग अल्लाहले गरेको राम्रो इरादाको चिन्ह हो,** जस्तो कि नबी सल्लल्लाहो अलैहेवसल्लमको भनाई छ : " *अल्लाह तआला जस व्यक्ति सित भलाई चाहनु हुन्छ त उसलाई यसै संसारमा नै सजाय दिनु हुन्छ, र जस मान्छे सँग बुराईको इरादा गर्न चाहनु हुन्छ उसको सजाय रोकेर प्रलय हुने दिन पूरा पूरा सजाय दिनेछन* " (तिर्मिजी) | र यो **जाँच र रोग** आदि यद्यपि अलिकति किन न होस पापहरूलाई समाप्त गर्ने कफ्फारा (साधन) हो। एउटा हदीसमा अल्लाहका रसूल मोहम्मद सल्लल्लाहो अलैहेवसल्लम भन्नुहुन्छः " *कुनै मुस्लिमलाई केही कष्ट पुग्छ काँटाले घोच्छ वा त्यस भन्दा ठूलो कष्ट हुन्छ तर अल्लाह तआला त्यसको सट्टामा पापहरूलाई समाप्त गरिदिन्छन जस्तो रूखले आफ्नो पातलाई झार-झुर गर्छ* " (बुखारी र मुस्लिम) | र जस मुस्लिममाथि जाँच र परीक्षा आउँछ यदि ऊ भलो र सदाचारी हुन्छ भने उसको लागि अतीतका पापहरूको क्षाम्यको साधन बन्छ, वा दर्जामा बृद्धि हुन्छ, र यदि उ पापी हुन्छ त उसको पापलाई समाप्त गरिदिन्छ, र ती पापहरूको जटिलताको बारेमा ज्ञान दिइन्छ। अल्लाह तआला भन्नुहुन्छः ﴿ ظَهَرَ ٱلۡفَسَادُ فِي ٱلۡبَرِّ وَٱلۡبَحۡرِ بِمَا كَسَبَتۡ أَيۡدِي ٱلنَّاسِ لِيُذِيقَهُم بَعۡضَ ٱلَّذِي عَمِلُواْ لَعَلَّهُمۡ يَرۡجِعُونَ ﴾ " *मानिसको आफ्नै हातको दुष्कर्मले गर्दा थल तथा जलमा विध्वंस उत्पन्न भएको छ, ताकि अल्लाहले तिनीहरूलाई तिनीहरूले गर्ने गरेका केही कर्महरूको स्वाद चखाऊन्, शायद तिनीहरू त्यसबाट फर्कनेछन्* "।

**जाँच र परीक्षाको प्रकारः भलाई द्वारा परीक्षाः** जस्तो धनमालमा बृद्धि। **बुराई द्वारा परीक्षाः** जस्तो त्रास, भोक, धनमालमा कमी। अल्लाह अज्जवजल् (महान र बुजरुक) भन्नुहुन्छः ﴿ وَنَبۡلُوكُم بِٱلشَّرِّ وَٱلۡخَيۡرِ فِتۡنَةٗ ﴾ " *र हामी तिमीहरूलाई राम्रा र नराम्रा परिस्थितिहरूमा राखेर जाँच्नेछौं* "। र यसै मध्ये रोग र मृत्यु सित जाँच हो जस्को सब भन्दा ठूलो कारण ईर्ष्याबाट उत्पन्न हुने आँखी र जादू हो। नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " *मेरा अनुयायी मध्ये अधिकांश मानिस अल्लाहले नियुक्त गरेको भाग्य पछि आँखीले नै मर्ने गर्छन्* "।

**आँखी र बोक्सेरोबाट जोगाउने उपायः** रक्षा र बचाउ उपचार भन्दा राम्रो छ। त हामी माथि बचाउको उपाय र साधनलाई उपयोगमा ल्याउनु जरूरी छ। ती उपाय र साधनहरू मध्ये महत्वपूर्ण छनः ❁ आफुलाई तौहीदबाट बलियो गर्नु। र यो ईमान राख्नु कि संसारमा वास्तविक रूपले प्रभाव पार्नेवाला अल्लाह तआला नै हुन्। र भलो तथा पूण्यका कार्यहरूलाई अत्याधिक रूपमा गर्नु। ❁ अल्लाह सित राम्रो धारणा राख्नु, र उनैमाथि भरोसा गर्नु, र रोग तथा आँखीलाई कुनै खास कारण तिर न गर्नु किनकि यो भ्रम हो र भ्रम आफैं एउटा रोग हो[1]। ❁ यदि कुनै व्यक्तिको बारेमा प्रसिद्ध हो कि ऊ कुदृष्टिवाला वा बोक्सो हो त ऊ सित त्रास न गरी उसबाट साधनलाई प्रयोगमा ल्याई जोगाइनेछ। ❁ जुन कुरा राम्रो लगोस त्यसलाई हेरे बित्तिकै अल्लाहको स्तुति गर्नु र त्यस कुरामा बृद्धिको लागि दुआ गर्नु। नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " *तिमीहरू मध्ये कुनै व्यक्ति जब आफ्नो जीव वा धनमाल वा आफ्नो भाई बन्धुलाई हेरेर राम्रो लगोस त त्यसमा अभिबृद्धि तथा उन्नति हुनको लागि दुआ गरोस*

---

[1] चिकित्सक र विशेषज्ञहरूको भनाई अनुसार शारीरिक तीन तेहाई रोग भ्रमको कारणले उत्पन्न हुन्छ जो वास्तविकमा पाउँदैन।

*किनकि आँखा लाग्नु बिल्कुलै सत्य हो* " (हाकिम) । (र अभिबृद्धिको दुआ यस्तो गरोसः बारकल्लाहो लक, नकि तबारकल्लाहो भनोस्) । ❁ नबी सल्लल्लाहो अलैहेवसल्लमको शहर मदीनाको सातवटा खोजूर प्रत्येक बिहान खाओस् । ❁ अल्लाह तआला तिर फर्कनु, मात्र उनीमाथि भरोसा गर्नु, उनी सित राम्रो विचार राख्नु, र आँखी तथा बोक्सेरोबाट उनको शरण चाहनु, प्रत्येक दिन बिहान र बेलुकामा अल्लाहको स्तुति गर्नु र शरण चाहनु [1] (अर्थात अज्कारु स्सबाह र मसा पढ्नु) । र यस स्तुतिमा धेरै गुणहरू छन जसमा अल्लाहको अनुमतिले कमी र ज्यादती हुन्छ र यो दुई कारणले हुन्छः १) यो ईमान राख्नु कि यस स्तुतिमा जे-जति शब्द र कुराहरू आएका छन सबै सत्य छन् र अल्लाहको हुकुमले लाभ दायक हुन । २) ती स्तुति जिभ्रोबाट भनोस, कानबाट राम्ररी सुनोस् र मुटुलाई राम्रो सँग उपस्थित राखोस् । किनभने यी स्तुतिहरू (अज्कार) दुआ हुन् र दुआ लापर्वाह र अल्लाहको गुण-गानबाट टाढा रहने व्यक्तिबाट स्वीकार्य हुँदैन, र यो कुरा नबी सल्लल्लाहो अलैहेवसल्लम बाट प्रमाणित छ ।

**स्तुति र गुण-गानको समयः** बिहानको स्तुति र गुणगान (अज्कार) फज्रको नमाज पछि पढिन्छ, तर बेलुकाको स्तुति अथवा अज्कार अस्रको नमाज पछि पढ्ने गरिन्छ,र यदि बिर्सियो भने स्मरण भए पछि यसलाई भनोस् ।

**आँखी इत्यादि लाग्नेका चिन्हहरूः** चिकित्सा उपचार र इस्लामी झार-फुकमा केही भिन्नता पाउँदैन । कुरआनमा शारीरिक र आत्मिक दुबै रोगबाट स्वास्थ्य हो । र यदि मनुष्य शारीरिक रोगहरूबाट सुरक्षित हुन्छ भने अधिकांश अवस्थामा रोगको चिन्ह निम्न लिखित बमोजिम हुनेछ : टाउकोमा हिंड्ने दर्द, अनुहार पहँलो हुनु, अधिक मात्रामा पसीना र पिशाब आउनु, इच्छा कम हुनु, औंलाहरूको थुप्पामा कमिलो जस्तो काट्नु र तातो तथा चिसो महसूस गर्नु, मुटु ढुकढुक गर्नु, पिठ्युँ तल र काँधमा हिंड्ने पीडा हुनु, छातीमा चिन्ता र परेशानी (तंगी) हुनु, रात्रीमा निद्रा न आउनु, सामान्य बानी स्वभाव बाहेक रिस र त्रासले गर्दा कठोर प्रकारको क्रिया-कलाप प्रकट हुनु, अधिक रूपमा डकार र सास लिनु । एक्लै रहनुलाई र आलस्य एवं अल्छीपनलाई चाहना गर्नु, निद्राउनुलाई चाहना गर्नु । यी बाहेक अरू स्वास्थ्य सम्बन्धि कष्टहरू छन जसको चिकित्सा संसारमा केही कारण पाउँदैन । र कहिले काँही रोगले बलियो हुने वा निर्बल हुनेको हिसाबले पनि यी सबै चिन्हहरू वा केही पाउँछन् ।

**मुस्लिम बलियो ईमान र मुटुवाला हुनु अनिवार्य छ,** यसो भएमा शैतानी भ्रम मुटुमा आउँदैन, यी चिन्हहरू मध्ये कुनै एउटा चिन्ह हेरे पछि यो भ्रम न गरोस् कि ऊ त्यस रोगबाट प्रभावित भएको छ । किनकि भ्रम र शंकाको उपचार एक्दमै कठिन छ । र कतिपय मानिस कहाँ यी चिन्हहरू मध्ये केही चिन्ह पाउँदैछ तर ऊ स्वस्थ हुन्छ । र कहिले काँही यी चिन्हहरू पाइन्छ र यसको कारण कुनै शारीरिक रोग पनि हुन्छ । र कहिले काँही यस्को कारण ईमानमा निर्बल्ता, छातीमा कठोरता, चिन्ता आलस्य हुन्छ । त यस्तो मान्छे माथि अनिवार्य छ कि ऊ अल्लाह सित आफ्नो सम्बन्ध बलियो गरोस् ।

**यदि रोग आँखीको [2] कारणले लागेको छ भने त्यसको उपचार अल्लाहको कृपाले दुई प्रकार मध्ये एक बाट हुन सक्छ :** १) कुदृष्टिवालालाई चिन्छ, त यस्तो अवस्थामा उसलाई स्नान गर्ने आदेश दिइन्छ र त्यो पानी लिएर वा उसले (अरू कार्यमा)[3] प्रयोग गरेको पानीलाई लिएर त्यसबाट स्नान गरोस वा त्यसलाई खाओस् । २) कुदृष्टिवालालाई चिन्दैन, त यसको उपचार झार-फुक, दुआ र सिंघी लगाउनुले हुन्छ ।

**र यदि रोग बोक्सेरोको[4] कारणले हो भने त्यसको उपचार अल्लाहको दयाले तल बमोजिम वर्णन भएका कुराहरू मध्ये एक बाट हुन सक्छः १)** जादूको ठाउँको ज्ञान होस्: त त्यसलाई पाए पछि मोअव्वजतैन

---

[1] हेर्नुहोस किताब अज्कारुस्सबाह वल्मसाअ,पे.न.१२० ।

[2] आँखी वा आँखा लाग्नु,यो जिन्न शैतानको तर्फबाट एउटा कष्ट हो जो अल्लाहको अनुमतिले मनुष्यलाई कुदृष्टिबालाको तर्फबाट कुनै कुरालाई राम्रो हेरेर लाग्छ जहाँ शैतानहरू पनि उपस्थित हुन्छन र त्यसमा बाधा हाल्ने कुरा पनि न होस (अर्थात अल्लाहको स्तुति र नमाज आदि) किनकि हदीसमा आएको छ : " *आँखा लाग्नु सत्य हो* " (बुखारी) । र एउटा अरू हदीसमा छः " *त्यहाँ शैतान र ईर्ष्या एकत्रित हुँदैछ* " (अहमद) । र मात्र आँखालाई भनिएको किनकि आँखा नै विशेषता वर्णन गर्नेको अवयव हो,यस कारणले होइन कि आँखा स्वयं हानिकारक हुन्छ,यसको प्रमाण यो पनि छ कि अन्धो बाट पनि आँखा लाग्छ हालाँकि ऊ देख्दैन ।

[3] (३) अर्थात आँखी गर्नेवालाले प्रयोग गरेको कुरा जस्तो उसले खाएर बाँकी बचेको पानी वा खाना वा उसले स्पर्श गरेको वस्तु,त त्यस मध्ये केही लिएर त्यसमा अरू पानी मिसाएर रोगीमाथि बगाइयोस र खुवाओस,वा गम्झा लुगा आदिलाई छुवायोस् ।

[4] जादूः केही गाँठो,टुना-मुना,कुराकानी जसलाई भनिन्छ वा केही कार्य गर्छ जो रोगीको शरीर वा मुटु वा बुद्धिलाई प्रभावित गर्छ,र यसको

(सूरतुल् फलक र सूरतुन्नास) पढेर गाँठलाई खोलोस अनि त्यसलाई आगोमा पोलिदिओस् । **२)** इस्लामी झार-फुकः कुरआनका आयतहरू द्वारा, र खास गरी मोअव्वजतैन र सूरह बक्रा, यसै गरी दुआहरू द्वारा, र यसको चर्चा पछि आउनेछ । **३)** नुश्रहः र यो दुई प्रकारको हुन्छः क) अवैधः र त्यो हो जादूलाई जादू द्वारा नष्ट गर्नु र बोक्सोहरू समक्ष त्यसबाट सुरक्षित रहने हेतु जानु । ख) वैधः यसको विधि हो सात वटा बयरको पात लिएर त्यसलाई कुटोस अनि त्यसमाथि तीन तीन पटक सूरह अल्-काफेरून,अल्-एख्लास,अल्-फलक र अन्नास पढ्नु पर्छ अनि त्यसलाई पानीमा हाली खाओस र त्यसबाट स्नान गरोस, र पटक पटक यो उपचार गरोस यहाँ सम्म अल्लाहको दयाले निको भइहालोस् । (यसलाई अब्दुर्रज्जाकले आफ्नो मोसन्नफमा वर्णन गर्नुभएको हो) । **४)** जादूलाई निकाल्नुः यदि त्यो पेटमा होस भने जुलाब आदि प्रयोग गराएर त्यसलाई निकालियोस, र यदि पेट बाहेक अरू ठाँउमा होस भने सिंघी[1] द्वारा निकालियोस ।

**झार-फुकः** यस्का केही शर्तहरू छनः **१)** झार-फुक कुरआनका आयतहरू र प्रमाणित दुआहरू द्वारा हुनु पर्छ । **२)** त्यो अरबी भाषामा हुनु पर्छ, तर अर्को भाषामा दुआ गर्नु जायज छ । **३)** यो दृढ आस्था राख्नु कि यो झार-फुक आफैंले केही प्रभाव राख्दैन बरु स्वास्थ्य अल्लाहको तर्फबाट हुन्छ ।

र अधिक प्रभावको लागि स्वास्थ्य र जिन्न तथा मनुष्यको हिदायत (सुबाटोमा लाग्नु) को नीयतले[2] कुरआनको पाठ गर्नु चाहियो, किनभने कुरआन स्वास्थ्य र हिदायतको लागि नै अवतरण भएको छ,र जिन्न शैतानलाई हत्या गर्ने नीयतले कुरआनको पाठ न गरियोस्, अँ, यदि जिन्न र शैतानलाई निकाल्ने अति आवश्यकता पऱ्यो भने यस्तो गर्नु जायज छ ।

**झार-फुक गर्ने व्यक्तिमा पाइने शर्तहरूः १)** मुस्लिम हुनु पऱ्यो, र त्यो मुस्लिम सदाचारी र अल्लाह सित त्रास गर्नेवाला होस । र अल्लाह सित जति डराउनेवाला हुन्छ शैतान माथि प्रभाव त्यती नै बलियो हुन्छ । **२)** झार-फुक गर्दा सत्य मुटुले अल्लाह तिर ध्यान दिनु पर्छ ताकि मुटु र जिब्रो एकत्रित भइसकोस् । सब भन्दा राम्रो तरीका हो कि मान्छे आफुमाथि आफैंले झार-फुक गरोस किनभने अर्को मान्छेको मुटु अधिकांश समयमा व्यस्त रहन्छ, र ऊ आफ्नो दुःख पीडालाई आफैं महसूस गर्छ अर्को व्यक्ति त्यसतो गर्दैन,र दुःख पीडामा रहेको व्यक्तिको दुआ स्वीकार्य हुन्छ भन्ने अल्लाहले वाचा गर्नुभएको हो ।

**जसको लागि झार-फुक गरिन्छ त्यसमा पाइने शर्तहरूः** १) मुस्तहब (उत्तम) छ कि त्यो मुस्लिम होस्, उसको ईमान जति बलियो हुन्छ त्यती नै असर राम्रो हुन्छ । अल्लाह तआला भन्नुहुन्छः ﴿ وَنُنَزِّلُ مِنَ ٱلْقُرْءَانِ مَا هُوَ شِفَآءٌ وَرَحْمَةٌ لِّلْمُؤْمِنِينَ وَلَا يَزِيدُ ٱلظَّٰلِمِينَ إِلَّا خَسَارًا ﴾ " *र, यो कुरआन जुन हामी अवतरण गरिरहेका छौं आस्थावानहरूका लागि आरोग्य तथा दयाको रूपमा रहेको छ तर यसले यी अत्याचारीहरूको घाटामा मात्र अभिबृद्धि गर्छ* " । २) आरोग्यका लागि अल्लाह तिर सत्य आत्माले ध्यान लगाउनु । ३) आरोग्यका लागि हतार न गर्नु किनकि झार-फुक दुआ छ र दुआको स्वीकृतिको लागि हतार गर्नु राम्रो छैन र कहिले यसो गर्नाले स्वीकार्य पनि हुँदैन । नबी सल्लल्लाहो अलैहेवसल्लमले भन्नुभोः " *तिमी मध्ये कसैको दुआ उस समय स्वीकार्य हुन्छ जब सम्म कि ऊ हतार न गरोस,र यो न भनोस मैले दुआ गरैं तर स्वीकार्य भएन* " (बुखारी र मुस्लिम) ।

**झार-फुक गर्नेका केही तरीकाहरू छनः** १) झार-फुकमा पढिने आयतहरू र दुआहरू पढ्नु र अलि थुक मिसाएर फुक्नु । २) बिना थुक मिसाई फुकेर पढ्नु । ३) औंलामाथि थुक लगाएर माटोमा मिसाउनु अनि पीडा हुने ठाउँमा स्पर्श गर्नु । ४) दुःख र पीडामा हात फेरेर आयत र दुआहरू पढ्नु ।

**केही आयत र हदीसहरू जसलाई झार-फुकमा रोगीमाथि पढिन्छः** सूरह फातिहाः

सूरह अल्-कफेरूनः सूरह अल-एख्लासः सूरह अल-फलकः सूरह अन्नासः

---

वास्तविक्ता छ, र केही जादू (बोक्सेरो) ले हत्या पनि गर्छ र केहीले रोगमा हाल्छ,र केहीले पतिलाई पत्नी सँग सम्भोग गर्नुमा पनि बाधा हाल्छ, र केहीले दुबै दम्पति बीच मतभेद पनि उत्पन्न गरिदिन्छ, र केही जादू शिर्क एवं कुफ्र हो र केही ठूलो पाप हो ।

[1] नबी सल्लल्लाहो अलैहे वसल्लमले भन्नुभोः " *तिम्रो लागि सब भन्दा राम्रो उपचार सिंघी हो* "।

[2] जसलाई कुरआन सुनाउँछ (जिन्न) त्यसलाई अल्लाहको दीन,भलो कार्य गर्ने र बुराईबाट बच्ने तर्फ निम्तो दिनु,र जिन्न माथि यसको राम्रो प्रभाव पर्छ र चाँडै रोगीलाई कष्ट दिन छाडि दिन्छ । र यदि जिन्नलाई हत्या गर्ने इरादा होस् भने जिन्न घमण्ड गरी रोगी र चिकित्सक (झार-फुक गर्ने) दुबैलाई हानि पुऱ्याउन सक्छ । हदीसमा छः " अल्लाह सहनशील हुनुहुन्छ र सहनशीलता र नम्रतालाई रोजाउनु हुन्छ । र जुन कार्य नम्रताले हुन सक्छ सख्ती र कठोरताले हुँदैन । "

﴿ ٱللَّهُ لَآ إِلَٰهَ إِلَّا هُوَ ٱلْحَىُّ ٱلْقَيُّومُ ۚ لَا تَأْخُذُهُۥ سِنَةٌ وَلَا نَوْمٌ ۚ لَّهُۥ مَا فِى ٱلسَّمَٰوَٰتِ وَمَا فِى ٱلْأَرْضِ ۗ مَن ذَا ٱلَّذِى يَشْفَعُ عِندَهُۥٓ إِلَّا بِإِذْنِهِۦ ۚ يَعْلَمُ مَا بَيْنَ أَيْدِيهِمْ وَمَا خَلْفَهُمْ ۖ وَلَا يُحِيطُونَ بِشَىْءٍ مِّنْ عِلْمِهِۦٓ إِلَّا بِمَا شَآءَ ۚ وَسِعَ كُرْسِيُّهُ ٱلسَّمَٰوَٰتِ وَٱلْأَرْضَ ۖ وَلَا يَـُٔودُهُۥ حِفْظُهُمَا ۚ وَهُوَ ٱلْعَلِىُّ ٱلْعَظِيمُ ﴾[1]

﴿ ءَامَنَ ٱلرَّسُولُ بِمَآ أُنزِلَ إِلَيْهِ مِن رَّبِّهِۦ وَٱلْمُؤْمِنُونَ ۚ كُلٌّ ءَامَنَ بِٱللَّهِ وَمَلَٰٓئِكَتِهِۦ وَكُتُبِهِۦ وَرُسُلِهِۦ لَا نُفَرِّقُ بَيْنَ أَحَدٍ مِّن رُّسُلِهِۦ ۚ وَقَالُوا۟ سَمِعْنَا وَأَطَعْنَا ۖ غُفْرَانَكَ رَبَّنَا وَإِلَيْكَ ٱلْمَصِيرُ ﴿٢٨٥﴾ لَا يُكَلِّفُ ٱللَّهُ نَفْسًا إِلَّا وُسْعَهَا ۚ لَهَا مَا كَسَبَتْ وَعَلَيْهَا مَا ٱكْتَسَبَتْ ۗ رَبَّنَا لَا تُؤَاخِذْنَآ إِن نَّسِينَآ أَوْ أَخْطَأْنَا ۚ رَبَّنَا وَلَا تَحْمِلْ عَلَيْنَآ إِصْرًا كَمَا حَمَلْتَهُۥ عَلَى ٱلَّذِينَ مِن قَبْلِنَا ۚ رَبَّنَا وَلَا تُحَمِّلْنَا مَا لَا طَاقَةَ لَنَا بِهِۦ ۖ وَٱعْفُ عَنَّا وَٱغْفِرْ لَنَا وَٱرْحَمْنَآ ۚ أَنتَ مَوْلَىٰنَا فَٱنصُرْنَا عَلَى ٱلْقَوْمِ ٱلْكَٰفِرِينَ ﴾[2]

[3]﴿ فَسَيَكْفِيكَهُمُ ٱللَّهُ ۚ وَهُوَ ٱلسَّمِيعُ ٱلْعَلِيمُ ﴾

[4]﴿ يَٰقَوْمَنَآ أَجِيبُوا۟ دَاعِىَ ٱللَّهِ وَءَامِنُوا۟ بِهِۦ يَغْفِرْ لَكُم مِّن ذُنُوبِكُمْ وَيُجِرْكُم مِّنْ عَذَابٍ أَلِيمٍ ﴾

[5]﴿ وَنُنَزِّلُ مِنَ ٱلْقُرْءَانِ مَا هُوَ شِفَآءٌ وَرَحْمَةٌ لِّلْمُؤْمِنِينَ ۙ وَلَا يَزِيدُ ٱلظَّٰلِمِينَ إِلَّا خَسَارًا ﴾

[7]﴿ وَإِذَا مَرِضْتُ فَهُوَ يَشْفِينِ ﴾ [6]﴿ أَمْ يَحْسُدُونَ ٱلنَّاسَ عَلَىٰ مَآ ءَاتَىٰهُمُ ٱللَّهُ مِن فَضْلِهِۦ ﴾

[9]﴿ قُلْ هُوَ لِلَّذِينَ ءَامَنُوا۟ هُدًى وَشِفَآءٌ ۖ ﴾ [8]﴿ وَيَشْفِ صُدُورَ قَوْمٍ مُّؤْمِنِينَ ﴾

[11]﴿ فَٱرْجِعِ ٱلْبَصَرَ هَلْ تَرَىٰ مِن فُطُورٍ ﴾ [10]﴿ لَوْ أَنزَلْنَا هَٰذَا ٱلْقُرْءَانَ عَلَىٰ جَبَلٍ لَّرَأَيْتَهُۥ خَٰشِعًا مُّتَصَدِّعًا مِّنْ خَشْيَةِ ٱللَّهِ ﴾

[12]﴿ وَإِن يَكَادُ ٱلَّذِينَ كَفَرُوا۟ لَيُزْلِقُونَكَ بِأَبْصَٰرِهِمْ لَمَّا سَمِعُوا۟ ٱلذِّكْرَ وَيَقُولُونَ إِنَّهُۥ لَمَجْنُونٌ ﴾

﴿ وَأَوْحَيْنَآ إِلَىٰ مُوسَىٰٓ أَنْ أَلْقِ عَصَاكَ ۖ فَإِذَا هِىَ تَلْقَفُ مَا يَأْفِكُونَ ﴿١١٧﴾ فَوَقَعَ ٱلْحَقُّ وَبَطَلَ مَا كَانُوا۟ يَعْمَلُونَ ﴿١١٨﴾ فَغُلِبُوا۟ هُنَالِكَ وَٱنقَلَبُوا۟ صَٰغِرِينَ ﴾[13]

﴿ قَالُوا۟ يَٰمُوسَىٰٓ إِمَّآ أَن تُلْقِىَ وَإِمَّآ أَن نَّكُونَ أَوَّلَ مَنْ أَلْقَىٰ ﴿٦٥﴾ قَالَ بَلْ أَلْقُوا۟ ۖ فَإِذَا حِبَالُهُمْ وَعِصِيُّهُمْ يُخَيَّلُ إِلَيْهِ مِن سِحْرِهِمْ أَنَّهَا تَسْعَىٰ ﴿٦٦﴾ فَأَوْجَسَ فِى نَفْسِهِۦ خِيفَةً مُّوسَىٰ ﴿٦٧﴾ قُلْنَا لَا تَخَفْ إِنَّكَ أَنتَ ٱلْأَعْلَىٰ ﴿٦٨﴾ وَأَلْقِ مَا فِى يَمِينِكَ تَلْقَفْ مَا صَنَعُوٓا۟ ۖ إِنَّمَا صَنَعُوا۟ كَيْدُ سَٰحِرٍ ۖ وَلَا يُفْلِحُ ٱلسَّاحِرُ حَيْثُ أَتَىٰ ﴾[14]

[1]﴿ ثُمَّ أَنزَلَ ٱللَّهُ سَكِينَتَهُۥ عَلَىٰ رَسُولِهِۦ وَعَلَى ٱلْمُؤْمِنِينَ ﴾

---

[1] आयतुल् कुर्सीः " अल्लाहु लाइलाह इल्ला हुवल् हैय्युल् कैय्युम्, लाताअखोजुहु सेनतुव्वँ वला नौम्, लहु माफिस्समावाते व माफिल्अर्जे, मन् जल्लजी यश्फओ इन्दहु इल्ला बेइज्नेही, याअलमो माबैन् ऐदीहिम् वमा खल्फहुम्, वला योहीतु बेशैइम् मिन्इल्मेही, इल्ला बिमा शाअ, वसेअ कुर्सीयोहुस् समावाते वल्अर्ज, वला यऊदोहु हिफ्जोहुमा, वहुवल् अलीयुल् अजीम् "।

[2] सूरह बक्राका अन्तिम दुई आयतहरूः " आमनर्रसूलो बिमा उनजेल एलैहे मिर्रब्बेही वल् मुमेनून कुल्लुन् आमन बिल्लाहे व मलाएकतेही व कोतोबेही व रोसोलेही ला नोफर्रेको बैन अहदिम् मिर्रोसोलेही व कालू समेअ्ना व अतअ्ना गुफ्रानक रब्बना व एलैकल् मसीर। ला योकल्लेफुल्लाहो नफ्सन् इल्लो वुस्अहा लहा माकसबत् व अलैहा मक्तसबत्, रब्बना लातोआखिज्ना इन्नसीना अव् अख्ताना, र ब्बना वलो तहमिल् अलैना इस्रन् कमो हमल्तहू अलल्लजीन मिन् कब्लेना, रब्बना वला तोहम्मिल्ना माला ताकत लना बेही, वअ्फो अन्ना वग्फिर लना वर्हम्ना अन्त मौलाना फन्सुर्ना अलल् कौमिल्काफेरीन "।

[3] " फसयक्फीकहोमुल्लाहो व हुवस्समीउल् अलीम "।

[4] "याकोमना अजीबु दाइयल्लाहे व अमेनू बेही यग्फिर्लकुम् मिन् जोनुबेकुम् व योजिर्कुम् मिन् अजाबिन् अलीम "

[5] " व नोनज्जेलो मिनल्कुरआने मा हुव शेफाउँव्व रहमतुल् लिल्मोमेनीन वेला यजीदुज्जोलेमीन इल्लाहे खासारा"

[6] " अम् यहसोदुनन्नास अला माआताहोमुल्लाहो मिन् फज्जलेही "।

[7] " व इजा मरिज्तो फहुव यश्फीन् "।

[8] " व यश्फे सुदुर कौमिम्मोमेनीन् "।

[9] " कुल् हुव लिल्लजीन आमनू होदँव्व शिफाअ् "।

[10] " लौ अन्जल्ना हाजल्कुरआन अला जबलिन् लरअैतहू खाशेअम् मोतसद्देअम् मिन् खश्यतिल्लाह "।

[11] " फर्जेइल् बसर हलतरो मिन् फोतूर "।

[12] " व इँय्यकादुलल्लजीन कफरू लयुज्लेकुनक बेअब्सारेहिम् लम्मा समेऊज्जिक्र व यकुलुन इन्नहू लमज्नून "।

[13] " व अव्हैना इला मूसा अन् अल्के असाक फेइजा हिय तल्कफो मायाफेकुन्। फवकअल् हक्को व बतल माकानू याअ्मलून। फगोलेबू हुनालेके वन् कलबू सागेरीन् "।

[14] " कालू यामूसा इम्मा अन् तुल्कैय व इम्मा अन्नकुन अव्वल मनअलका। काल बल् अल्कू फइजा हिबालोहुम् व एसीय्योहुम् योखय्यलो एलैहिम् अन्नहा तस्आ। फअव्जस फी नफ्सेही खीफतन् मूसो। कुल्ना लातखफ इन्नेक अन्तल्आलो। व अल्के माफी यमीनेक तलकफ् मासनऊ इन्नमा सनऊ कैदो साहेरिन् वलो युफ्लेहुस्साहेरो हैसो अेता "।




﴿ فَأَنزَلَ ٱللَّهُ سَكِينَتَهُۥ عَلَيۡهِ وَأَيَّدَهُۥ بِجُنُودٖ لَّمۡ تَرَوۡهَا ﴾[2]
﴿ فَأَنزَلَ ٱللَّهُ سَكِينَتَهُۥ عَلَىٰ رَسُولِهِۦ وَعَلَى ٱلۡمُؤۡمِنِينَ وَأَلۡزَمَهُمۡ كَلِمَةَ ٱلتَّقۡوَىٰ ﴾[3]
﴿ لَّقَدۡ رَضِيَ ٱللَّهُ عَنِ ٱلۡمُؤۡمِنِينَ إِذۡ يُبَايِعُونَكَ تَحۡتَ ٱلشَّجَرَةِ فَعَلِمَ مَا فِي قُلُوبِهِمۡ فَأَنزَلَ ٱلسَّكِينَةَ عَلَيۡهِمۡ وَأَثَٰبَهُمۡ فَتۡحٗا قَرِيبٗا ﴾[4]
﴿ هُوَ ٱلَّذِيٓ أَنزَلَ ٱلسَّكِينَةَ فِي قُلُوبِ ٱلۡمُؤۡمِنِينَ لِيَزۡدَادُوٓاْ إِيمَٰنٗا مَّعَ إِيمَٰنِهِمۡ ﴾

**हदीसमा आएका दुआहरू :**

أَسْأَلُ اللهَ العَظِيْمَ رَبَّ العَرْشِ العَظِيْمِ أَنْ يَشْفِيَكَ ***अस्अलुल्लाहल् अजीम रब्बल् अर्शिल् अजीम अँय्युश्फीक*** " ७ चोटि ।

أُعِيْذُكَ بِكَلِمَاتِ اللهِ التَّامَةِ مِنْ كُلِّ شَيْطَانٍ وَهَامَّةٍ وَمِنْ كُلِّ عَيْنٍ لامَّةٍ " ***ओईजोक बेकलेमातिल्लाहित्ताम्मह्, मिन् कुल्ले शैतानिन् व हाम्मह्, व मिन् कुल्ले ऐनिन् लाम्मह्*** " ३ पटक ।

اللَّهُمَّ رَبَّ النَّاسِ أَذْهِبِ البَأسِ وَاشْفِ أَنْتَ الشَّافِيْ لا شِفَاءَ إِلا شِفَاؤُكَ شِفَاءً لايُغَادِرُ سَقَمًا " ***अल्लाहुम्म रब्बन्नास, अज्जहबिल् बाअस, इश्फे अन्तश्शाफी, लाशेफाअ इल्ला शेफाउक् शेफाअन् लायोगादेरो सकमा*** " ३ चोटि ।

اللَّهُمَّ أَذْهِبْ عَنْهُ حَرَّهَا وَبَرْدَهَا وَوَصَبَهَا " ***अल्लाहुम्म अज्हिब् अन्हो हर्रहा व बर्दहा व सब्बहा*** " एकै चोटि ।

حَسْبِيَ اللهُ لا إِلَهَ إِلا هُوَ عَلَيْهِ تَوَكَّلْتُ وَهُوَ رَبُّ العَرْشِ العَظِيْمِ " ***हस्बियल्लाहो लाइलाह इल्लाहु, अलैहे तवक्कल्तो व हुव रब्बुल् अर्शिल् अजीम*** " ७ पटक ।

بِسْمِ اللهِ أَرْقِيْكَ مِنْ كُلِّ دَاءٍ يُؤْذِيْكَ وَمِنْ شَرِّ كُلِّ نَفْسٍ أَوْ عَيْنِ حَاسِدٍ، اللهُ يَشْفِيْكَ بِسْمِ اللهِ أَرْقِيْكَ " ***बिस्मिल्लाहे अर्कीक मिन् कुल्ले दाइन् युअजीक, व मिन् शर्रे कुल्ले नफ्सिन् अव् ऐने हासेदिन्, बिस्मिल्लाहे अर्कीक*** " ३ पटक ।

आफ्नो पीडा हुने ठाउँमाथि राखी ३ पटक بِسْمِ اللهِ ***बिस्मिल्लाह*** भनोस् अनि ७ चोटि यो दुआ पढोस् أَعُوْذُ بِعِزَّةِ اللهِ وَقُدْرَتِهِ مِنْ شَرِّ مَا أَجِدُ وَأُحَاذِرُ " ***अऊजो बे इज्जतिल्लाहे व कुद्‌रतेही मिन् शर्रे मा अजिदो व ओहाजिरो*** " ।

**नोटः** ❶ कुदृष्टि राख्ने व्यक्तिको सम्बन्धमा जुन मिथ्या कुराहरू प्रसिद्ध छन तिनलाई सत्य न मान्नु जस्तो उसको पिशाब खानु, र यो भन्नु कि उसले जाने पछि उसको चिन्हबाट उपचार गर्नुमा केही फाइदा छैन ।

❷ कुनै व्यक्तिलाई कुदृष्टिबाट जोगाउने हेतु छालाको यन्त्र कोष्ठ,कनकन र डोरो आदि लाउनु जायज छैन । नबी सल्लल्लाहो अलैहे वसल्लमले भन्नुभोः " ***जसले कुनै वस्तु झुन्ड्यायो त उसलाई उसै तिर फर्काइदिन्छ*** " (तिर्मिजी) । र यदि यो यन्त्र कोष्ठ कुरआनबाट होस भने यसलाई झुन्डयाउनुमा ओलमाहरू (धर्मगुरूहरू) माझ मत भेद छ, तर यसलाई पनि छाड्नु राम्रो हो ।

❸ कुदृष्टिबाट बच्ने हेतु माशाअल्लाह तबारकल्लाह लेख्नु, वा तरवार वा चक्कु वा आँखाको चित्र बनाउनु वा गाडीमा कुरआन राख्नु वा घरमा कुरआनका केही आयतहरू लट्काउनुमा केही लाभ छैन, र यसबाट कुदृष्टि बाट जोगाउनु सम्भव पनि छैन, बरु यी सबै कार्यहरू कदाचित हराम यन्त्र कोष्ठ मध्ये पनि हुन सक्छन ।

❹ रोगीले यो विश्वास गर्नु जरूरी छ कि इस्लामी झार-फुकलाई स्वीकार्य हुन्छ । र स्वास्थ्यको लागि हतार नगरोस् । र यदि कसैले उ सँग भनोस कि औषधी उपचार निरोग रहनको लागि जीवन भरी गराउनु पर्छ त यसमा उसलाई केही अलमलाइ हुँदैन र यदि झार-फुकबाट निरोग हुनमा अलिकति पनि ढीलो हुन्छ भने अल्याड़-मल्याड़मा परिहाल्छ । हालाँकि उसले पाठ गरेको प्रत्येक अक्षरमा एउटा पूण्य प्राप्त हुन्छ र एक पूण्यमा दशगुणा बरोढतरी हुन्छ । यसैले गर्दा ऊ अल्लाह सित दुआ गरोस र आफ्नो

---

[1] " सुम्म अनजलल्लाहो सकीनतहू अला रसूलेही व अलल्मोमेनीन् " ।
[2] " फअन् जलेल्लाहो सकीनतहू अला रसूलेही वअलल्मोमेनीन वअलजमहुम् कलेमतत्तक्वा " ।
[3] " रजीयल्लाहो अनिल् मोमेनीन इज् योबायेऊनक तेहतश्जरते फअलेम माफी कोलूवेहिम् फअन्जलस्सकीनत अलैहिम् व असाबहुम् फतहन् करीबा "
[4] " हुवल्लजी अन्जलस्सकीनत फी कोलुबिल् मोमेनीन लेयज्दादू ईमानम् मअ् ईमानेहिम् " ।

पापको क्षमा याचना गरोस र अधिक मात्रामा दान गरोस, यसो गर्नाले स्वास्थ्य प्राप्त हुन्छ ।

5 सामूहिक रूपले पाठ गर्नु सुन्नत (नबीको तरीका) को विरुद्ध हो, र यसको प्रभाव निर्बल हुन्छ । यसै गरी क्यासेट द्वारा कुरआन सुन्नुमा पनि प्रभाव कम पर्छ । किनकि यसमा नीयत पाउँदैन र झार-फुक गर्ने व्यक्तिमा नियत पाउनु जरूरी छ । हालाँकि क्यासेटबाट पनि सुन्नाले लाभदायक छ । झार-फुकमा प्रयोग हुने आयत र दुआहरूलाई पटक-पटक पढनु निरोग हुन सम्म राम्रो हो, अँ, यदि अलमल भइहालोस त कम मात्रामा सुनोस । कुनै आयत र दुआलाई कुनै खास मात्रा र संख्यामा पढ्नु जायज छैन किनकि यसको लागि प्रमाणको आवश्यकरता छ ।

6 केही यस्ता खालका चिन्हहरू छन जसबाट  यो पत्ता लाग्छ कि झार-फुक गर्नेवाला जादूबाट गर्छ कुरआन बाट गर्दैन । त उसमाथि प्रकट हुने सदआचरण र दीनदारीलाई हेरेर धोकामा न पर किनभने त्यो झार-फुकलाई कुरआनबाट आरम्भ त गर्छ तर चाँडै परिवर्तन गरिलिन्छ । यस्तो खालको मान्छे मानिसहरूलाई धोकामा हाल्नको लागि मस्जिदमा पनि जान्छ र तिम्रो अगाडि अधिक मात्रा अल्लाहको स्तुति पनि गर्छ त यी सबैलाई हेरेर धोकामा न पर र यसलाई सधैंकोलागि स्मरण राख ।

**जादूगर र धोकाबाजहरूका चिन्हहरूः** ❁ रोगी सित उसको र उसकी आमाको नाम सोध्नु, किनकि नामको जानकारीले वा अज्ञानताले उपचारमा केही परिवर्तन पार्दैन । ❁ रोगीले पहिरेको लुगा गन्जी आदि माग्नु । ❁ र कहिले रोगी सित विषेश गुण हुने जनावर माग गर्छ ताकि त्यसलाई जिन्न (शैतान) को लागि काटोस्, र कहिले काटेको जनावरको रगत रोगीको शरीरमाथि लगाउँछ । ❁ यस्तो जन्तर-मन्तर र टुना-मुना लेख्नु वा पाठ गर्नु जसलाई सम्झना गर्नु असम्भव होस र त्यसको केही अर्थ न होस् । ❁ रेखाले चौकुने बनाएर त्यस भित्र अक्षरहरू र संख्याहरू बनाएर रोगीलाई दिनु । त्यसलाई हिजाब (परदा) भनिन्छ । ❁ मानिसहरू बाट टाढा रही केही समयको लागि अन्ध्यारो कोठामा  बस्नु भनी रोगीलाई आदेश दिनु, र त्यसलाई हज्बा भनिन्छ । ❁ रोगीलाई केही अवधि सम्म पानी न छुओस भनी आदेश दिनु । ❁ रोगीलाई धरतीमा गाडनको लागि केही वस्तु दिनु वा पोल्नको लागि पन्ना दिनु वा आगो बालेर त्यसको धुवाँ लिनुको आदेश दिनु । ❁ कुराकानी गर्नु भन्दा अघि नै रोगीलाई उसका केही विषेश कुराको बारेमा ज्ञान दिनु वा उसको नाम र मुलुक र रोगको सम्बन्धमा बताउनु । ❁ रोगीमाथि प्रवेश गर्ने बित्तिकै रोगीको अवस्थालाई बुझ्नु वा मात्र फोन वा चिट्ठीले बुझ्नु ।

7 अह्ले सुन्नत वल्जमात (सहाबा,ताबईन,तब्अताबेईनलाई मान्नेहरू) को मजहब (धारणा) यो हो कि जिन्न (शैतान,भुत प्रेत) मनुष्यमा प्रवेश गर्छ । यस माथि कुरआनको यो प्रमाण सिद्ध हुन्छ :

﴿ ٱلَّذِينَ يَأۡكُلُونَ ٱلرِّبَوٰاْ لَا يَقُومُونَ إِلَّا كَمَا يَقُومُ ٱلَّذِي يَتَخَبَّطُهُ ٱلشَّيۡطَٰنُ مِنَ ٱلۡمَسِّ ﴾ " *ती मान्छेहरू जसले ब्याज खान्छन् (चिहानबाट) यसरी उठ्नेछन् जस्तो कि शैतानले छोएर उसलाई बौलाहा बनाएको होस* "। कुरआनका सम्पूर्ण व्याख्याकर्ताहरूले यस कुरामाथि एक मत छन कि यहाँ मस्स (छुनु) बाट शैतानले बनाएको बौलाहा अभिप्राय हो जो मनुष्यमा शैतानले प्रवेश गरेको कारणले हुन्छ ।

**जादूको बारेमा केही खासकुराहरूः** जादू पाइन्छ, र यसको प्रभाव पनि पर्छ जो कुरआन र हदीसबाट प्रमाणित छ ।  र जादू हराम छ र अत्यन्त ठूलो पाप हो ।  यसको प्रमाण नबी सल्लल्लाहो  अलैहे वसल्लमको  यस भनाईमा छ : " *सात सर्वनाश गर्ने कुराहरूबाट आफुलाई जोगउने गर, मानिसले सोधे कि ती के छन् हे अल्लाहका दूत! भन्नुभोः अल्लाह सित अरूलाई साझी बानउनु र जादू...* "(बुखारी र मुस्लिम) । र अललाह तआलाको यो वाणी : ﴿ وَلَقَدۡ عَلِمُواْ لَمَنِ ٱشۡتَرَىٰهُ مَا لَهُۥ فِي ٱلۡأٓخِرَةِ مِنۡ خَلَٰقٖ ﴾ " *तिनीहरूलाई राम्ररी थाहा थियो कि जो त्यस (जादू) को ग्राहक बन्यो परलोकमा त्यसकालागि कुनै हिस्सा हुनेछैन* "। र जादू दुई प्रकारको हुन्छ : १) गाँठो र टुना-मुना जसको साधनले जादूगर शैतान र भुतप्रेतलाई अधीनमा लिई जसलाई चाहन्छ हानि पुऱ्याउँछ । २) यस्तो जरी-बूटी र औषधी जो जसलाई जादू गर्न चाहन्छ त्यसको शरीर, बुद्धि, इच्छा र चाहनालाई अधीनमा गर्छ । यसलाई फेर्नै र प्रेम गराउने भनिन्छ । यस कारणले जादू गरीएको मान्छेको अगाडि यस्तो लाग्छ कि यस वस्तुमा परिवर्तन भएको छ र फलानो वस्तु हिंड्छ र यसै गरी अरू प्रकारको लाग्छ । त जादूको पहिलो प्रकारलाई प्रयोगमा ल्याउनु शिर्क हो किनकि शैतनहरू जादूगरको अधीनमा बिना अल्लाह सित कुफ्र गरेर आउँदैनन् । र दोस्रो  प्रकार त यो  सर्वनाश गर्नेवाला ठूल- ठूला पापहरू मध्ये छ । र यी सबै अल्लाहले नियुक्त गरेको भाग्य बाट नै हुनेछन् ।

# दुआ

सम्पूर्ण प्राणीहरू अल्लाहको दया र कृपा एवम अनुकम्पाहरूका भिक्षुक हुन्,तर अल्लाह तआलालाई कसैको र कुनै कुराको खाँचो पर्दैन ।

र अल्लाह तआलाले आफ्ना भक्तहरूमाथि उनी सित् दुआ गर्नु अनिवार्य गर्नु भएको हो । भन्नुहुन्छः ﴿ادْعُونِي أَسْتَجِبْ لَكُمْ إِنَّ الَّذِينَ يَسْتَكْبِرُونَ عَنْ عِبَادَتِي سَيَدْخُلُونَ جَهَنَّمَ دَاخِرِينَ﴾ " *तिमीहरू मलाई पुकार, म तिमीहरूको पुकार सुन्छु, तर जुन मानिसहरू घमण्डले गर्दा मेरो उपासना गर्दैनन् (पुकारदैनन) तिनीहरू अवश्य अपमानित भई नरकमा जानेछन* "। र नबी सल्लल्लाहो अलैहे वसल्लमले भन्नुभोः " *जुन व्यक्ति अल्लाह सित माग्दैन अल्लाह उस माथि रिस गर्नु हुन्छ* "। र साथै यो पनि जानकारीमा राख्नुहोस् कि अल्लाह तआला आफ्नो दास र भक्तको पुकार बाट धेरै प्रसन्न हुनुहुन्छ । र उनी सित विनम्रता पूर्वक माग्ने व्यक्ति सित प्रेम गर्दछन र उसलाई आफ्नो निकट गरिलिन्छन । सहाबा किराम (नबीका साथीहरू) लाई यस वास्तविकताको राम्ररी ज्ञान थियो यसैले गर्दा उनीहरू सानो भन्दा सानो कुरा पनि अल्लाह सित नै माग्दथे र प्राणीहरू मध्ये कसैको अगाडि आफ्नो हात फयालाउनु राम्रो मान्दैन थिए । यो यस कारणले थियो कि उनीहरूको सम्बन्ध अल्लाह सँग ठोस थियो र उनीहरू अल्लाहको एकदमै निकट थिए र अल्लाह पनि उनीहरूको निकट हुनुहुन्थ्यो । जसरी कि अल्लाह भन्नुहुन्छः ﴿وَإِذَا سَأَلَكَ عِبَادِي عَنِّي فَإِنِّي قَرِيبٌ﴾ " (हे सन्देष्टा!) मेरा भक्तहरू मेरो विषयमा तिमीलाई सोध्छन् भने (भनिदेऊ) म नजीकै छु "। **र दुआको अल्लाह नजीक धेरै महत्व छः** दुआ अल्लाह समक्ष सर्वाधिक सम्मानित छ । र दुआ कहिले काँही भाग्यमा पनि परिवर्तन गरिदिन्छ । र अल्लाह सित दुआ गर्ने प्रत्येक व्यक्तिको दुआ अल्लाह तआला स्वीकार गर्दछन् यदि स्वीकार नर्गका कारणहरू पाइन्छन् र त्यसमा केही बाधा न पाइयोस् । र दुआ गर्ने व्यक्तिलाई केही कुराहरू मध्ये एक कुरा अल्लाहले दिनु हुन्छ जसरी कि नबी सल्लल्लाहो अलैहे वसल्लमले भन्नुभोः " *कुनै पनि मुस्लिम यस्तो दुआ गर्छ जसमा पाप र नाता भंग गर्ने कुरा न होस् भने अल्लाह उसलाई तीन कुराहरू मध्ये एक कुरा प्रदान गर्नेछन्ः १- उसले मागेको कुरालाई यसै संसारमा पूर्ति गरिन्छ । २- वा परलोकमा उसको लागि कोष बनाएर राखिदिन्छ । ३- वा उसै प्रकारको कुनै कष्ट उसबाट हटाई लिन्छ । सहाबाहरूले भने अनि हामी धेरै भन्दा धेरै दुआ गर्ने गरौं । नबीले उत्तर दिनुभोः अल्लाह त्यस भन्दा धेरै पनि दिनेवाला छन्* "।

**दुआका प्रकारहरूः** दुई प्रकार छनः १) उपासनाको दुआ, जस्तो नमाज र रोजा । २) माग्नु र गुहार्नुको दुआ ।

**कर्महरूमा एक अर्को माथि श्रेष्ठताः** के कुरआनको पाठ गर्नु श्रेष्ठ र उत्तम हो वा स्तुति वा दुआ र माग्नु ? कर्महरूमा सब भन्दा श्रेष्ठ पवित्र कुरआनको पाठ गर्नु हो, अनि अल्लाहको स्तुति र स्मरण गर्नु अनि अल्लाह सित दुआ गर्नु र माग्नु । यो आम उत्तर भयो । तर कहिले काँही कुनै स्थानको कारणले आफु भन्दा श्रेष्ठ कुरा भन्दा श्रेष्ठ र उत्तम भइहाल्छ । जस्तो अर्फाको दिन दुआ गर्नु कुरआन पाठ गर्नु भन्दा उत्तम छ । यसै गरि अनिवार्य नमाज पढे पश्चात हदीसबाट प्रमाणित जिक्र र स्तुति गर्नु कुरआन पाठ गर्नु भन्दा पनि उत्तम हो ।

**दुआ स्वीकार्य हुनका कारणहरूः** यहाँ केही प्रत्यक्ष कारणहरू छन त केही अप्रत्यक्ष ।

१) प्रत्यक्ष कारणहरूः दुआ गर्नु भन्दा अघि सदकार्यहरू गर्नु जस्तो दान दिनु, वजु गर्नु, नमाज पढ्नु,किब्ला तिर मुख गर्नु, दुबै हात उठाउनु, अल्लाह तआलाको योग्य प्रशंसा र स्तुति गर्नु, दुआमा माग्ने वस्तुको अनुकूल अल्लाहका नाम र विषेशताहरूलाई पेश गर्नु । र जब दुआ स्वर्गको प्राप्तीको लागि होस् भने अल्लाहको दया र कृपालाई साधन बनाएर माग्नु । र यदि कुनै अन्यायकारी माथि दुआ (श्राप) नर्गु होस भने अल्लाहको नाम रहमान र रहीम (दयालू तथा कृपालु) लाई प्रयोग न गर्नु, बरु अल-जब्बार र अल-कहहार (शक्तिशाली र प्रभुत्वशाली) नामलाई प्रयोग गर्नु । र प्रत्यक्ष कारणहरू मध्ये नबीमाथि दुआको आरम्भमा र माझमा र अन्तमा दुरूद सलाम शान्ति पठाउनु । यसै गरी आफ्नो पापलाई स्वीकार गर्नु र अल्लाहले दिनु भएको अनुकम्पामाथि आभार व्यक्त गर्नु । यस्ता राम्रा समयमा दुआ गर्नु जसमा दुआ स्वीकार्य हुनु हदीसहरू बाट प्रमाणित छ । र ती समयहरू धेरै छन जुन मध्ये केहीको चर्चा यहाँ गरिरहेको छः ۞ रात र दिनमाः रात्रीको तिहाई भाग जसमा अल्लाह सांसारिक आकाशमा अवतरण हुनुहुन्छ । आजान र इकामत (नमाज आरम्भ हुनु) को बीचमा । वजु पश्चात । सज्दाको अवस्थामा । नमाजमा सलाम फेर्नु भन्दा अघि । र

नमाजहरू पढे पछि । कुरआनलाई समाप्त गरे पछि । कुखुराले आवाज गर्दा खेरि । यात्रामा । जसमाथि अन्याय भएको छ उसको दुआ । कष्ट र परेशानीमा परे मान्छेको दुआ । आमा बुबाको दुआ सन्तान प्रति । एक मुस्लिमले अर्को मुस्लिम भाईको लागि उसको अउस्थितिमा दुआ गर्नु । धार्मिक युद्ध गर्दा शत्रु सँग भिडन्तको समयमा । ✿ हप्तामाः जुमाको दिन । र खास गरी जुमाको दिनको अन्तिम समयमा । ✿ महीनामाः रमजान महीनामा रोजा खोल्दा र सेहरी खाँदा । सम्मानित रात्रीहरूमा (लैलतुल् कद्र) । अर्फाको दिन । ✿ महान र पवित्र ठाउँहरूमाः जस्तो आम मस्जिदहरूमा, पवित्र काबाको नजीक, र खास गरी मुल्तजम (ढोका र हज्रे अस्वदको बीचको भाग) । मकामे इब्राहीमको नजीक । सफा मर्वा माथि । हजको दिनमा अर्फा, मुज्दल्फा र मिनाको मैदानमा । जमजम पानी खाँदा ईत्यादि ।

२) अप्रत्यक्ष कारणहरूः **दुआ भन्दा अगिः** साँचो तौबा (प्रायश्चित) गर्नु । नराम्रो तरीकाले हत्याएको अर्काको सर-समानलाई फिर्ता गर्नु । खाइने, पीइने, पहिरिने वस्तु र बस्ने कोठा हलाल (वैध) कमाईबाट हुनु । पूण्यका कार्यहरू अत्याधिक रूपमा गर्नु । बर्जित वस्तुहरूबाट टाढा बस्नु । भ्रम र कामवेगमा हाल्ने कुराहरू बाट आफुलाई जोगाउनु । **दुआ गर्दा खेरिः** मुटुलाई उपस्थित राख्नु, अल्लाह माथि विश्वास राख्नु, उनैमाथि आशा गर्नु, उनैको शरण चाहनु, उनै सित विनम्रता पूर्वक माग्नु, उनैको अगाडि आफ्नो माग राख्नु, अरूबाट आफ्नो ध्यान समाप्त गरी आफ्ना सम्पूर्ण कार्यहरू उनै तिर सुम्पनु र दुआ स्वीकार्य हुनको विश्वास र यकीन गर्नु ।

**दुआ स्वीकार्य हुनमा बाधाहरूः** कहिले मनुष्य दुआ गर्छ र स्वीकार्य हुँदैन वा स्वीकार्य हुनमा ढीलो हुन्छ यस्का धेरै कारणहरू छन, ती मध्ये केहीको चर्चा यहाँ गरिरहेको छः ✿ अल्लाह सँगै अरू सित दुआ गर्नु । ✿ विस्तार पूर्वक दुआ गर्नु,जस्तो : नरकको तातोपन,त्यसको तंगी, र त्यसको अन्ध्यारोबाट शरण माग्नु, बरु मात्र नरकबाट शरण माग्नु नै पर्याप्त भइहाल्छ । ✿ बिना खास कारणको मुस्लिमले आफ्नो जीवमाथि वा अर्कोमाथि श्राप दिनु । ✿ पाप गर्न र नातालाई भंग गर्नको लागि दुआ गर्नु । ✿ अल्लाहको चाहना सित दुआलाई लट्काछनु,जस्तो यो भन्नुः हे अल्लाह यदि तपाईं चाहनु हुन्छ भने मालाई क्षमा गरिदिनु होस्,आदि । ✿ स्वीकार्य हुनका लागि हतार गर्नु,जस्तो यो भन्नु कि मैले दुआ गरें तर स्वीकार्य भएन । ✿ थकेर वा अलमल भएर दुआ गर्नुलाई छाड्नु । ✿ मुटुलाई उपस्थित नगरी लापरवाही सित दुआ गर्नु । ✿ अल्लाहको अगाडि बेअदबी (कुव्यवहार) गर्नु । र नबी सल्लल्लाहो अलैहे वसल्लमले एक जना मान्छेलाई उहाँ माथि सलाम दरूद न पठाई दुआ गर्दै सुन्नुभो त भन्नुभोः " ***यसले हतार गऱ्यो*** "। फेरि उस व्यक्तिलाई डाकेर सिकाउनुभोः " ***जब तिमी मध्ये कुनै मान्छे नमाज पढोस त पहिलो अल्लाहको स्तुति र प्रशंसा गरोस् अनि नबीमाथि सलाम दरूद पठाओस् अनि त्यस पछि इच्छा अनुसार दुआ गरोस्*** " **(तिर्मिजी)** । ✿ यस्तो कुराको दुआ गर्नु जस्को निधो भइसकेको होस,जस्तो संसारमा सधैं रहनका लागि दुआ गर्नु । ✿ यसै गरी कष्ट गरेर तुक र अन्त्यानुप्रास मिलाए र दुआ गर्नु ।अल्लाह भन्नु हुन्छः ﴿ٱدۡعُواْ رَبَّكُمۡ تَضَرُّعٗا وَخُفۡيَةًۚ إِنَّهُۥ لَا يُحِبُّ ٱلۡمُعۡتَدِينَ﴾ " तिमीहरू आफ्ना पालनकर्तालाई बिलौना गर्दै र गोप्य रूपमा पुकार्ने गर, निःसन्देह उनी सीमा उल्लङ्घनकारीहरूलाई मन पराउँदैनन् "। र अब्दुल्लाह बिन अब्बास रजियल्लाहो अन्होमाको भनाई छ : " ***दुआमा तुक र अन्त्यानुप्रासबाट बच किनकि मैले नबी सल्लल्लाहो अलैहे वसल्लम र उहाँका साथीहरूलाई यस्तो गर्दै हेरेन*** "(बुखारी) । ✿ एकदम ठूलो स्वरमा दुआ गर्नु, अल्लाह भन्नुहुन्छ :
﴿وَلَا تَجۡهَرۡ بِصَلَاتِكَ وَلَا تُخَافِتۡ بِهَا وَٱبۡتَغِ بَيۡنَ ذَٰلِكَ سَبِيلٗا﴾ " ***र आफ्नो नमाज न अति उच्च स्वरमा पढ न अति निम्न स्वरमा नै अपितु यी दुवैका बीचको मार्ग अपनाऊ " / आमा अइशा रजियल्लाहो अन्हाको भनाई छः " यो कुरआनको आयत दुआको विषयमा नै अवतरण भएको छ*** "।

**राम्रो छ कि दुआ गर्ने व्यक्ति आफ्नो दुआलाई तल बमोजिम आएको तर्तीब सँग गरोस्ः** पहिलोः अल्लाहको प्रशंसा र स्तुति । दोस्रोः नबी माथि सलाम र दरूद । तेस्रोः तौबा र आफ्नो पापलाई स्वीकार गर्नु । चौथोः अल्लाहको अनुकम्पामाथि आभार व्यक्त गर्नु । पाँचौः दुआ गर्नु आरम्भ गर्नु,र ध्यान दिएर नबी सल्लल्लाहो अलैहे वसल्लमबाट सलफ सालेहीनबाट प्रमाणित दुआहरू गरोस् । छटौंः दुआलाई नबी माथि दरूद सलाम पठाएर समाप्त गरोस् ।

# केही महत्वपूर्ण दुआहरू जसलाई कण्ठस्य गर्नु र ती सित दुआ गर्नु राम्रो छः

| दुआको समय | नबी सल्लल्लाहो अलैहे वसल्लमका दुआहरूः |
|---|---|
| सुत्नु अगि र पछिको दुआ | **सुत्नुको दुआः** « بِاسْمِكَ اللَّهُمَّ أَمُوتُ وَأَحْيَا » " बिस्मिकल्लाहुम्म अमूतो व अह्या "[1]<br>**बिउँझनु पछिको दुआः** « الْحَمْدُ لِلَّهِ الَّذِي أَحْيَانَا بَعْدَمَا أَمَاتَنَا وَإِلَيْهِ النُّشُورُ » " *अल्हम्दो लिल्लाहिल्लजी अह्याना बाअ्दमा अमातना व एलैहिन्नोशूर* "[2] |
| जो निद्रामा डराउँछ | « أَعُوذُ بِكَلِمَاتِ اللَّهِ التَّامَّاتِ مِنْ غَضَبِهِ وَعِقَابِهِ، وَمِنْ شَرِّ عِبَادِهِ، وَمِنْ هَمَزَاتِ الشَّيَاطِينِ، وَأَنْ يَحْضُرُونِ » " *अऊजो बेकलेमातिल्लाहित्ताम्माते मिन् गजबेही व एकाबेही, वमिन् शेर्रे एबादेही, वमिन् हमजातिश्शयातीन, व अँय्यहजरून्* "[3] |
| स्वप्न देखा परेमा | जब तिमी मध्ये कुनै मान्छे मन पराउने राम्रो स्वप्न हेर्छ भने त्यो अल्लाहको तर्फबाट छ र त्यसमाथि अल्लाहको आभार व्यक्त गरोस् र त्यसलाई अरू समक्ष चर्चा गरोस् । र यदि नचाहिने स्वप्न हेरोस त त्यो शैतानको तर्फबाट छ र त्यसको बुराईबाट अल्लाहको शरण चाहोस् र त्यसलाई कसै समक्ष चर्चा नगरोस किनकि त्यो हानि पुऱ्याउन सक्छ । |
| घरबाट निस्कनु बेला | ✸ « اللَّهُمَّ إِنِّي أَعُوذُ بِكَ أَنْ أَضِلَّ أَوْ أُضَلَّ، أَوْ أَزِلَّ أَوْ أُزَلَّ، أَوْ أَظْلِمَ أَوْ أُظْلَمَ، أَوْ أَجْهَلَ أَوْ يُجْهَلَ عَلَيَّ » " *अल्लाहुम्म इन्नी अऊजो बिक अन् अजिल्ल अव् ओजल्ल, अव् अज़िलम अव् उज्लम्, अव् अज्हल् अव् युज्हल् अलैय्य* "[4] ।<br>✸ « بِسْمِ اللهِ تَوَكَّلْتُ عَلَى اللهِ لا حَوْلَ وَلا قُوَّةَ إِلا بِاللهِ » " *बिस्मिल्लाहे तवक्कल्तो अलल्लाहे ला हौल वलाकुव्वत इल्लाह बिल्लाहे* "[5] |
| मस्जिदमा प्रवेश हुँदा | **मस्जिदमा प्रवेश गर्दा खेरि दाँया खुट्टा पहिलो राखोस् अनि यो दुआ पढोस्:**<br>بِسْمِ اللَّهِ وَالسَّلَامُ عَلَى رَسُولِ اللَّهِ اللَّهُمَّ اغْفِرْ لِي ذُنُوبِي وَافْتَحْ لِي أَبْوَابَ رَحْمَتِكَ " *बिस्मिल्लाहे वस्सलामो अला रसूलिल्लाहे अल्लाहुम्मग्फिर्ली जोनूबी वफ्तहली अब्वाब रहमतेक* "[6] |
| मस्जिदबाट निस्कदा खेरि | **मस्जिदबाट निस्कदा पहिला देब्रे खुट्टा बाहिर निकालोस अनि भनोस्:**<br>بِسْمِ اللَّهِ وَالسَّلَامُ عَلَى رَسُولِ اللَّهِ اللَّهُمَّ اغْفِرْ لِي ذُنُوبِي وَافْتَحْ لِي أَبْوَابَ فَضْلِكَ " *बिस्मिल्लाहे वस्सलामो अला रसूलिल्लाहे अल्लाहुम्मग्फिर्ली जोनूबी वफ्तहली अब्वाब फज्लेक* "[7] |
| दुलहोको लागि | « بَارَكَ اللَّهُ لَكَ، وَبَارَكَ عَلَيْكَ، وَجَمَعَ بَيْنَكُمَا فِي خَيْرٍ » " *बारकल्लाहो लक, व बारक अलैक, व जमअ बैनकोमा फी खैर्* "[8] |
| कुखुरी-काँ र गधाको स्वर सुन्दा | " जब तिमी गधाको स्वर सोनोस त त्यसको बुराईबाट अल्लाहको शरण चाह किनकि उसले शैतानलाई हेरेको छ, र तिमी कुखारी-काँ सुनोस त अल्लाह सित उनको दया र अनुकम्पालाई माग्ने गर किनकि उसले फरिश्तालाई हेरेको छ" । " जब तिमी रात्रीमा कुकुर भुक्ने र गधा बोल्ने स्वर सुनोस त अल्लाहको शरण माग्ने गर " । |
| जब कोही भनोस् म तिमी सँग अल्लाहको लागि प्रेम गर्दछु | आदरणीय अनस रजियल्लाहो अन्होको वृत्तान्त अनुसार एक जना मान्छे नबी सल्लल्लाहो अलैहे वसल्लम कहाँ थियो, त्यहाँ एक अरू जना व्यक्ति आएर भन्यो हे अल्लाहका रसूल! म यस सँग प्रेम गर्दछु,नबीले सोध्नुभयोः " के तिमीले उसलाई यस कुराको जानकारी दिएका छौ ?" उसले भन्यो हैन । उहाँले फेरि भन्नुभोः " उसलाई जानकारी दिइहाल " त उस व्यक्तिलाई जानकारी दिँदै भन्यो " इन्नी ओहिब्बोक फिल्लाह" कि म तिमी सँग अल्लाहको लागि प्रेम गर्दछु । उसले उत्तरमा भन्योः " अहब्बकल्लही अहबब्तनी लहू " जसको लागि तिमीले म सँग प्रेम गरेकाछौ उसले पनि (अर्थात अल्लाह) तिमी सँग प्रेम गरुन । |
| जब कुनै मुस्लिमले आच्छु गरोस | " जब तिमी मध्ये कसैले आच्छु गरोस त " अल्हम्दोलिल्लाह " (सम्पूर्ण प्रकारका प्रशंसा मात्र अल्लाहकै लागि छन) भनोस् । र त्यसलाई सुन्ने भाई वा साथी भनोस: " यर्हमोकल्लाह" (अल्लाह तिमीमाथि दया गरुन) र यसको उत्तरमा आच्छु गर्नेवाला व्यक्ति भनोस्: " यह्दीकोमुल्लाहो व युस्लेहो बालकुम् " (अल्लाह तिमीलाई सुबाटो दिखाउन र तिम्रो अवस्था राम्रो गरिदिउन) " । र जब काफिर आच्छु गरोस र अल्हम्दोलिल्लाह भनोस त त्यसको उत्तरमा यर्हमुकल्लाह न भनी यह्दीकोमुल्लाह भन्न चाहियो । |

---

[1] (हे अल्लाह म तपाईंको नाम सँग मर्छु र जीउँदो हुन्छु)

[2] (सम्पूर्ण प्राकराका प्रशंसाहरू मात्र अल्लाहकै लागि हुन जसले हामीलाई मृत्यु पश्चात जीउँदो गर्नुभो र फेरि उनै तिर फर्केर जानु पर्छ) ।

[3] (अल्लाहका परिपूर्ण कुराहरूको माध्यमले उनको क्रोध र सजायबाट शरण चाहन्छु,उनका दासहरूको बुराईबाट, र शैतानहरूको भ्रम र लुप्तकुराबाट र यस बाट कि तिनीहरू म समक्ष उपस्थित हुन) ।

[4] (हे अल्लाह! म तपाईंको शरण चाहन्छु यस बाट कि म पथभ्रष्ट होऊँ वा मलाई पथभ्रष्ट गरियोस्, र म बहकूँ वा मलाई बहकाइयोस्, र म कसैमाथि अत्याचार गरुँ वा ममाथि अत्याचार होस्, र म अज्ञानतामा रहुँ वा ममाथि अज्ञानता गरियोस्)

[5] (म अल्लाहको नाम सित बाहिर निस्कन्छु,मैले उनैमाथि भरोसा गरें, उनले साहस दिए बिना कुनै कार्य गर्ने र कुनै कुरा बाट बच्ने शक्ति र सामर्थ्य कसैमा छैन) ।

[6] (अल्लाहको नाम सँग म प्रवेश गर्दछु र शान्ति होस अल्लाहका रसूलमाथि, हे अल्लाह! मेरा पापहरू क्षमा गरिदिनुहोस् र मेरो लागि आफ्नो दयाको ढोका खोलिदिनुहोस्)

[7] (अल्लाहको नाम सँग म निस्कन्छु र शान्ति होस अल्लाहका रसूलमाथि, हे अल्लाह! मेरा पापहरू क्षमा गरिदिनुहोस् र मेरो लागि आफ्नो अनुकम्पाको ढोका खोलिदिनुहोस्) ।

[8] (अल्लाह तिम्रो लागि बर्कत (बृद्धि) दिऊन र तिमीमाथि बर्कत दिऊन र तिमी दुबैलाई भलाईको साथ एकत्रित राखुन) ।

| | |
|---|---|
| कष्ट आए बेलाको दुआ | ✸ « لا إله إلا الله العظيم الحليم لا إله إلا الله رب العرش العظيم لا إله إلا الله رب السموات ورب الأرض ورب العرش الكريم » " *लाइलाह इल्लल्लाहुल्अजीमुल् हलीम, लाइलाह इल्लल्लाहो रब्बुल् अर्शिल् अजीम, लाइलाह इल्लल्लाहो रब्बुस्समावाते व रब्बुल्अर्जे व रब्बुल् अर्शिल् अजीम* "[1] ✸ « اللَّهُ اللَّهُ رَبِّى، لا أُشْرِكُ به شَيْئًا » " *अल्लाहो अल्लाहो रब्बी, लाउश्रेको बिही शैआ* "[2] ✸ « يَاحَيُّ يا قَيُّومُ برحمتك أَسْتَغيثُ » " *या हय्यो या कय्युम बेरहमतेक अस्तगीस्* "[3] ✸ « سبحَانَ الله العَظيم » " *सुब्हानल्लाहिल् अजीम* " [4] |
| शत्रुहरूमाथि शाप | « اللّهُمَّ مُنْزِلَ الْكِتَابِ ومُجْرِيَ السَّحَابِ سَرِيعَ الْحِسَابِ اهْزِمْ الأَحْزَابَ، اللّهُمَّ اهْزِمْهُمْ وَزَلْزِلْهُمْ » " *अल्लाहुम्म मुन्जेलल्किबात् व मुज्रेयस्सेहाब् सरीअल् हिसाब् अह्जेमिल् अह्जाब्, अल्लाहुम्म अह्जिमुहुम् व जल्जिलहुम्* " [5] |
| रात्रीमा निद्रा बाट अपर्झट बिउँझ्मा | " जसले अकस्मात रात्रीमा जाग्यो र भन्यो : لا إله إلا الله وحده لا شريك له، له الملك وله الحمد وهو على كل شيء قدير، الحمد لله وسبحان الله ولا إله إلا الله والله أكبر ولا حول ولا قوة إلا بالله " *लाइलाह इल्लल्लाहो वह्दहू ला शरीकलहू, लहुल् मुल्को वलहुल् हम्दो व हुव्व अला कुल्ले शैइन्कदीर, अल्हम्दोलिल्लाहे व सुब्हानल्लाहे वलाइलाह इल्लल्लाहो वल्लाहो अक्बर वलाहौल वलाकुव्वत इल्लाह बिल्लाहे*" (एक अल्लाहको अलावा केही सत्य पूज्य छैन, उनको राजपाट तथा पूजा उपासनमा केही भागेदार छैन, उनैका लागि सम्पूर्ण प्रशंसाहरू र राजपाट छन,ऊ चाहिं प्रत्येक कार्यमाथि सामर्थ्य छन्,र सबै प्रकारका प्रशंसा उनैका लागि छन,र उनी चोखो हुनुहुन्छ,र उनी बाहेक कोही सत्य पूज्य छैन,र अल्लाह महान हुनुहुन्छ,अल्लाहको अलावा कसैमा परिवर्तन गर्ने र कुनै प्रकारको शक्ति पाउँदैन) फेरि यो भन्यो " अल्लाहुग्फिर्ली " (हे अल्लाह मलाई क्षमा गरिदिनुहोस्) । र यदि दुआ गऱ्यो त दुआ स्वीकार्य हुन्छ, र यदि वजु गरेर नमाज पढ्यो भने उसको नमाज स्वीकार्य हुन्छ "। |
| जब कुबै मामला कठिन भइहालोस् | « اللهمَّ لا سَهْلَ إلا ما جَعَلْتَهُ سَهْلًا وأَنتَ تَجْعَلُ الحزن إذا شِئْتَ سَهْلًا » " *अल्लाहुम्म ला सहल इल्लाह मा जअल्तहू सहला व अन्त तज्अलुल्हज्न इजा शिअ्त सहला* " [6] |
| ऋण चुक्ती को लागि | « اللّهُمَّ إنِّي أعُوذُ بكَ منَ الْهَمِّ والْحَزَنِ والْعَجْزِ والْكَسَلِ والْجُبْنِ والْبُخْلِ وضَلَعِ الدَّيْنِ وغَلَبَةِ الرِّجَالِ » " *अल्लाहुम्म इन्नी अऊजोबिक मिनल् हम्मे वल् हजने, वल् अजजे, वल्कसले, वल्जुब्ने, वल्बुख्ले, वजल्इद्दैन, व गलबतिर्रेजाले* " [7] |
| शौचालय जानु बेला | जब शौचालयमा जानको इच्छा गरोस् त भनोस् : « اللّهُمَّ إنِّي أَعُوذُ بِكَ مِنَ الْخُبُثِ وَالْخَبَائِثِ » " *अल्लाहुम्म इन्नी अऊजोबिक मिनल् खोबोसे वल् खबाइस* "[8] र निस्के पछि यो पढोस: غُفْرَانَكَ " *गुफ्रानक* [9] |
| नमाजमा यता-उतीको ख्याल आयोस | " ऊ एउटा शैतान हो जसलाई खन्जब भनिन्छ,जब तिमी उसलाई महसूस गर त उसबाट अल्लाहको शरण मागेर तीन पटक आफ्नो काँध तिर थुकथुकाऊ "। |
| सज्दामा | ✸ « اللّهُمَّ اغْفِرْ لِي ذَنْبِي كُلَّهُ دِقَّهُ وجِلَّهُ وأَوَّلَهُ وآخِرَهُ وعَلانِيَتَهُ وسِرَّهُ » " *अल्लाहुग्फिर्ली जम्बी कुल्लहू दिक्कहू व जिल्लहू व अव्वलहू व आखेरहू व अलानीय्यतहू व सिर्रहू* "[10] ✸ « سُبْحَانَكَ رَبِّي وبِحَمْدِكَ اللَّهُمَّ اغْفِرْ لِي » " *सुब्हानक रब्बी व बिहम्देकल्लाहुम्मग्फिर्ली* "[11] ✸ « اللَّهُمَّ إنِّي أَعُوذُ بِرِضَاكَ مِنْ سَخَطِكَ وبِمُعَافَاتِكَ مِنْ عُقُوبَتِكَ وأَعُوذُ بِكَ مِنْكَ لا أُحْصِي ثَنَاءً عَلَيْكَ أَنْتَ كَمَا أَثْنَيْتَ عَلَى نَفْسِكَ » " *अल्लाहुम्म इन्नी अऊजोबिरिजाक मिन् सखतेक, व बेमोआफातेक मिन् ओकुबतेक, व अऊजो बिक मिन्क लाओहसी सनाअन् अलैक अन्त कमा अस्नैत अला नफ्सेक* "[12] |

[1] (अल्लाह बाहेक अरू कोही सत्य पूजनीय छैन जुन महना र सहनशील हुनुहुन्छ । अल्लाह बाहेक अरू कोही सत्य पूजनीय छैन जुन महान सिंहासनको स्वामी हुनुहुन्छ । अल्लाह बाहेक अरू कोही सत्य पूजनीय छैन जुन आकाशहरू, धरती र ठूलो सिंहासनको स्वामी हुनुहुन्छ) ।

[2] (अल्लाह अल्लाह! ऊ मेरा पालनकर्ता हुन्,ऊ सँग म कुनै वस्तुलाई साझी ठान्दिन) ।

[3] (हे जीउँदो र अरूलाई कायम राख्नेवाला म तपाईंको दयालाई माध्यम बनाएर तपाईलाई गुहाछौ) ।

[4] (महान अल्लाह जुन प्रत्येक दुर्गुण बाट चोखो हुनुहुन्छ)।

[5] (हे अल्लाह! किताबलाई अवतरण गर्नेवाला,बादललाई चलानेवाला,चाँडै हिसाब लिनेवाला समूहहरूलाई पराजित गरिदिनुहोस् । हे अल्लाह! उनीहरूलाई पराजित गरिदिनुहोस् र उनलाई हल्लाइ दिनुहोस्) ।

[6] (हे अल्लाह! जस कुरालाई तपाईं सजिलो पार्नुहुन्छ त्यो नै सजिलो हुन्छ,र यदि तपाईं चाहनु हुन्छ त कठिनलाई सजिलो पारिदिनु हुन्छ)

[7] (हे अल्लाह! म तपाईंको शरण चाहन्छु चिन्ता र सोचबाट, निर्बलता र आलसबाट, कायरता र कन्जूसीबाट, र ऋणको ठूलो हुनबाट र मानिसको अधीनमा आउनुबाट) ।

[8] ( हे अल्लाह! म बदमाश शैतान र शैतानीहरूबाट तपाईंको शरण चाहन्छु)

[9] (हे अल्लाह! मलाई क्षमा गरिदिनुहोस्)।

[10] (हे अल्लाह! मेरा सानो र ठूलो,अगिल्लो पछिल्लो,प्रत्यक्ष र अप्रत्यक्ष सबै पापहरूलाई क्षमा गरिदिनुहोस्) ।

[11] (हे मेरा पवित्र पालनकर्ता तपाईंको लागि प्रशंसा छ,हे अल्लाह मलाई माफ गरिदिनुहोस्) ।

[12] ( हे अल्लाह! म तपाईंको प्रसन्नतालाई माध्यम बनाई तपाईंको क्रोधबाट शरण चाहन्छु, र तपाईंको क्षमा तथा माफीलाई माध्यम बनाई तपाईंको सजायबाट शरण चाहन्छ, र तपाईंबाट तपाईंको नै शरण चाहन्छु, र तपाईंको प्रशंसा गर्न सामर्थ्य राख्दैन, तपाईंले आफ्नो प्रशंसा जसरी गर्नुभो त्यसरी नै तपाईं हुनुहुन्छ) ।

| | | |
|---|---|---|
| ६४ | **सदाचरण** | ✷ "मोमिन आफ्नो सदाचरण र सदव्यवहारले गर्दा दिनमा रोजा राख्नेवाला र रातमा नमाज पढनेवालाको दर्जा सम्म पुगीहाल्छ "। ✷ "सदाचरण र सदव्यवहार गर्ने व्यक्तिको लागि स्वर्गको उच्चतम ठाउँमा एउटा घरको जिम्मेवारी म लिन्छु "। |
| ६५ | **सृष्टिमाथि दया र नम्रता गर्नु** | ✷ "अल्लाह आफ्ना दासहरू मध्ये दया गर्नेवालामाथि नै दया गर्नुहुन्छ "।<br>✷ "धरतीमा बस्ने प्राणीहरूमाथि दया गर उपरवाला तिमी माथि दया गर्नेछन् "। |
| ६६ | **मुसलमानहरूका लागि भलाई चाहनु** | "उस समय सम्म तिमी मध्ये कोही मोमिन हुन सक्दैन जब सम्म आफ्नो लागि रोजाएको कुरा आफ्नो मुस्लिम भाई-बन्घुको लागि न रोजाओस् "। |
| ६७ | **लाज शरम** | ✷ "लाज शरम गर्नाले भलाई नै आउँछ "। ✷ "लाज गर्नु ईमानको भाग हो "। ✷ "चार वटा कुराहरू प्रत्येक दूत र रसूलहरूमा थिएः लाज गर्नु, सुगन्ध लाउनु, दतिवन गर्नु र विहे गर्नु "। |
| ६८ | **सलाममा आरम्भ गर्नु** | "एक जना मान्छे नबी सल्लल्लाहो अलैहे वसल्लम कहाँ आएर भन्योः अस्सलामोअलैकुम, नबीले भन्नुभोः १० । फेरि अर्को जना मान्छेले आएर भन्यो : अस्सलामो अलैकुम् वरहमतुल्लाहे, नबीले भन्नुभोः २० । फेरि तेस्रो जना आएर भन्योः अस्सलामो अलैकुम वरहमतुल्लाहे वबर्कातोहू, नबीले भन्नुभोः ३० "। अर्थात यत्रो मात्रामा पूण्य प्राप्त हुनेछ । |
| ६९ | **भेट गर्दा खेरि हात मिलाउनु** | "दुई मुसलमान जब परसपर भेट गरेर हात मिलाउँ छन् (मुसाफहा गर्छन) त एक अर्काबाट अलग्ग हुनु भन्दा अगि नै दुबैको पाप माफ भइहाल्छ "। |
| ७० | **मुसलमानको इज्जतलाई रक्षा गर्नु** | "जसले आफ्नो भाई-बन्घुको इज्जतको रक्षा गऱ्यो अल्लाह उसको अनुहारलाई प्रलय हुने दिन नरकको आगोबाट रक्षा गर्नेछन् "। |
| ७१ | **सुकर्मीहरू सित प्रेम गर्नु र उनीहरू सँग बस्नु** | "जस सँग तिमी प्रेम गर्दछौ स्वर्गमा पनि तिमी ऊ सँगै हुनेछौ "सहाबी अनसको भनाई छ कि यस हदीसलाई सुनेर सहाबाहरूलाई धेरै खुशी लाग्यो किनकि उनीहरू नबी सँग प्रेम गर्दथे । |
| ७२ | **अल्लाहको महानताको लागि प्रेम गर्नेहरू** | "अल्लाह भन्नुहुन्छः मेरो प्रधानताको लागि परसपर प्रेम गर्नेहरूलाई प्रकाशको मंच हुनेछ जसको लागि नबी र शहीदहरू पनि लोभ गर्नेछन् "। |
| ७३ | **मुसलमानहरूका लागि दुआ गर्नु** | "एक मुसलमानले अर्को मुसलमानका लागि उसको अउपस्थितमा गरेरको दुआ स्वीकार्य हुन्छ, र एउटा फरिश्ता उसको सिह्रानी नजीक हुन्छ जहिले आफ्नो भाई-बन्घुको लागि दुआ गर्छ भने फरिश्ता भन्छ आमीन र तिम्रो लागि पनि यस्तो होस् "। |
| ७४ | **मोमिन पुरुष र महिलाका लागि क्षमा याचना गर्नु** | "जसले मोमिन पुरुष र मोमिन महिलाका लागि क्षमा याचना गर्दछ उसको लागि अल्लाह प्रत्येक मोमिन पुरुष र महिलाको बदलामा एक पूण्य लेख्नेछन् "। |
| ७५ | **बाटोबाट कष्ट दिने वस्तुलाई हटाउनु** | "मैले एक जना मान्छेलाई स्वर्गमा त्यसको अनुकम्पाबाट लाभान्वित हुँदा हेरें जसले मानिसलाई कष्ट दिने बाटोमा भएको रूखलाई काटेको थियो "। |
| ७६ | **झगडा र झूठलाई छोड्नु** | "जसले सत्यमाथि भएर झगडा छोड्यो उसको लागि म स्वर्गको किनारामा एउटा घरको जिम्मेवारी लिन्छु । र जसले हाँसो गर्दा पनि झूठ बक्नुबाट बच्यो उसको लागि स्वर्गको बीचमा एउटा घरको जिम्मेवारी लिन्छु "। |
| ७७ | **क्रोधलाई खानु** | "क्रोधलाई प्रयोग गर्ने सामर्थ्य राखेमा पनि जसले आफ्नो क्रोधलाई बर्दाश्त गऱ्यो उसलाई अल्लाह प्रलय हुने दिन सम्पूर्ण प्राणीहरूसमक्ष बोलाउनुहुन्छ र मनपराउने अप्सराहरू दिनेछन्" |
| ७८ | **भलाई वा बुराई सँग चर्चा गर्नु** | "जसको भलाईसँग प्रशंसा तिमीहरू गर्नेछौ उसको लागि स्वर्ग अनिवार्य भइहाल्छ, र जसको लागि बुराईसँग चर्चा तिमीहरू गर्नेछौ उसको लागि नरक अनिवार्य भैहाल्छ । तिमीहरू धरतीमा साक्षी छौ "। |
| ७९ | **मुस्लिमको कुनै कष्टलाई दूर गर्नु उसमाथि सजिलो गरी उसको दोषलाई लुकाउनु** | "जसले कुनै मुसलमान बाट सांसारिक दुःख टाढा गऱ्यो अल्लाह उसबाट पारलोकिक दुःख टाढा गर्नेछन् । र जसले कुनै निर्धन माथि सजिलोपन गऱ्यो (ऋण आदि लिनुमा) अल्लाहले उसको लागि लोक परलोक दुबैमा सरलता गर्नेछन् । र जसले कुनै मुसलमानको दोषलाई लुकायो अल्लाह उसको दोषलाई लोक परलोक दुबैमा लुकाउनेछन् "। |
| ८० | **आखिरत (परलोक) लाई अगाडि राख्नु** | "जसले आफ्नो पूर्ण इच्छा र इरादा परलोकको लागि गरिलियो अल्लाह उसको दिलमा संतुष्टि प्रदान गर्नेछन् र उसको लागि उसको लुगालाई एकत्रित गर्नेछन र संसारको धन न चाहेमा पनि आउनेछ "। |
| ८१ | **हाकिमको न्याय, तरुणको सुधार, मस्जिद सँग सम्बन्ध जोडनु र अल्लाहकै लागि प्रेम गर्नु** | "सात जना मान्छेहरू यस्ता छन् जसमाथि प्रलय हुने दिन छाया हुनेछ जब्कि त्यहाँ छायाको नाम पनि हुँदैनः न्यान गर्ने हाकिम, यस्तो तरुण जसले आफ्नो पालनकर्ताको पूजामा हुर्केको हो, यस्तो मान्छे जसको दिल सधैं नमाज पढनका लागि मस्जिद सँग समबन्धित होस्, दुई जना अल्लाहकै लागि प्रेम गरे त्यही माथि एकत्रित भए र त्यहीको लागि अलग्ग भए, र एक जना जसलाई सुन्दर र उच्च गोत्रकी महिला बुराईका लागि निमन्त्रण दिन्छे तर उसले भन्छ कि म अल्लाह सित डराउँछु, र एक जना जुन आफ्नो दायाँ हातले लुकाएर यसरी दान दिन्छ कि देब्रे हातलाई पनि थाहा हुँदैन, र एक जना जसले अल्लाहलाई एक्लैमा याद गऱ्यो र आँखाबाट आँसु झर्न लाग्यो " । |
| ८२ | **क्षमा याचना गर्नु** | "जसले अल्लाह सित क्षमा याचनालाई आफ्नो माथि अनिवार्य गरिलियो अल्लाह उसको लागि प्रत्येक कष्टबाट निस्कने बाटो बनाइ दिनेछन् र प्रत्येक चिन्ताबाट मुक्ति गराइनेछन् र उसलाई यस्तो रूपले रोजी दिनेछन् कि उसलाई अनुमान पनि हुँदैन "। |

# मनाही कार्यहरू

| क्र. | मनाही कार्यहरू | नबी सल्लल्लाहो अलैहे वसल्लमले भन्नुभयोः |
|---|---|---|
| १ | मानिसलाई देखाउनका लागि कार्य गर्नु | "अल्लाह भन्नुहुन्छः मलाई शिर्क गर्नेहरूको शिर्क सँग केही वासता छैन,जसले कुनै कार्य गऱ्यो र त्यसमा अरूलाई साझेदार बनायो त म उसलाई र उसको शिर्कलाई छाडिदिन्छु " |
| २ | प्रत्यक्ष राम्रो र अप्रत्यक्ष नराम्रो | "प्रलय हुने दिन केही समूदायहरू तेहामाका सेतो पहाड जस्तो पुण्य र सुकर्म लिएर आउनेछन् जसलाई अल्लाह उड्दै खरानी जस्तो बनाइदिनेछन् । सौबान साथीले सोधे हे अल्लाहका रसूल! हामीलाई उनका चिन्ह र पहिचान बताइदिनुहोस् ताकि हामीहरू अज्ञानतामा उनीहरू मध्ये न भइहालौं । भन्नुभोः उनीहरू तिम्रा भाई-बन्धु र तिमी मध्ये नै हुनेछन्, जसरी तिमीहरू रात्रीमा कार्य गर्दछौ त्यसरी नै उनीहरू पनि गर्दैछन तर जब उनी एक्लै हुन्छन त अल्लाहले हराम गरेका कार्यहरू गरिहाल्छन् "। |
| ३ | घमण्ड | "जसको दिलमा कण बराबर पनि घमण्ड हुन्छ स्वर्गमा प्रवेश हुनेछैन "। घमण्ड भनेको सत्यलाई नकार्नु र मानिसहरूलाई अनादर गर्नु । |
| ४ | लुगालाई गोली गाँठो मुनि पुहिर्नु | "गोली गाँठो मुनि लुगा लटकाउनुको आदेश लुंगी सुरुवाल, कुर्ता र पगरी फेटामा पनि हुन्छ, जसले घमण्डले गर्दा कुनै वस्तु गोली गाँठो मुनि तानेर पहिर्यो उस तिर प्रलय हुने दिन अल्लाह तआला हेर्नु हुनेछैनन् "। |
| ५ | ईर्ष्या | "ईर्ष्याबाट आफुलाई जोगाऊ, किनकि ईर्ष्या सुकर्महरूलाई यस्तो भस्म गरिदिन्छ जसरी आगो दाउरालाई भस्म गर्छ " । |
| ६ | ब्याज र सूद | ✷"रसूलुल्लाह सल्लल्लाहो अलेहे वसल्लमले धिक्कार गर्नुभो ब्याज लिनेलाई र दिनेलाई "।<br>✷"जानीबुझीकन सूद ब्याजको एक दिर्हम (रुपियाँ) खानु ३६ महिला सँग बलात्कार गर्नु भन्दा ठूलो छ "। |
| ७ | मदिरा पान गर्नेवाला | ✷"सधैं मदिरा पान गर्नेवाला,जादूमाथि ईमान राख्नेवाला, र नाता-गोतालाई भंग गर्नेवाला स्वर्गमा प्रवेश हुनेछैन "। ✷"जसले मदिरा पान गऱ्यो उसको ४० दिनको नमाज स्वीकार्य हुँदैन "। |
| ८ | झूट | "सर्वनाश हो उस व्यक्तिको लागि जो मानिसलाई हसाँउने हेतु झूटो कुरा गर्दछ,सर्वनाश हो सर्वनाश हो "। |
| ९ | जासूसी (सुरागी) गर्नु | "कुनै व्यक्ति कसैको कुरा लुकेर सुन्छ जब्कि त्यो मानिस यसलाई नराम्रो मान्दैछ त प्रलय हुने दिन उसको कानमा पग्लाइएको सीसालाई हालिदिइनेछ "। |
| १० | तस्वीर (फोटो) | ✷"प्रलयको दिन सब भन्दा ठूलो यातना तस्वीर लिने (फोटोग्राफर) हरूको लागि हुनेछ "।<br>✷"सज घरमा कुकुर र फोटो हुन्छ त्यसमा फरिश्ताहरू प्रवेश गर्दैनन् "। |
| ११ | चुक्ली (छुस्केरो) | "छुल्याहा (चुक्ली खोर) स्वर्गमा प्रवेश हुने छैन "। नमीमा भनिन्छः मानिस बीच फसाद र झगडा फयलाउने हेतु नराम्रा कुरालाई एक अर्का सम्म लाउनु । |
| १२ | पिशुनता (गीबत) | "के तिमीहरूलाई थाहा छ कि पिशुनता (गीबत) भनेको के हो ? मानिसले भनेः अल्लाह र उन्का रसूल नै अधिक जानकारी राख्दै हुनुहुन्छ । भन्नुभोः तिमीले आफ्नो भाई-बन्धुले न रोजाएको कुरालाई चर्चा गर्नु । फेरि सोधेः यो त बताउनुहोस् कि जो कुरा म गर्छु त्यो उस भाईमा पाउँदैछ, भन्नुभोः तिमीले भनेको कुरा यदि उसमा पाउँदैछ त्यो नै गीबत हो र यदि पाउँदैन भने त्यो त दोष लगाउनु भयो "। |
| १३ | धिक्कार (लानत) | ✷"मोमिनलाई धिक्कार्नु उसको हत्या गर्नु जस्तो हो "।<br>✷"हावालाई धिक्कार (गाली) न गर, किनकि त्यसलाई आदेश दिइएको छ । र जसले कुनै वस्तुलाई धिक्कार गऱ्यो र त्यसको योग्य त्यो छैन भने त्यो धिक्कार धिक्कार गर्ने तिर फर्किहाल्छ "। |
| १४ | रहस्यलाई फैलाउनु | "प्रलय हुने दिन अल्लाह समक्ष सब भन्दा तुच्छ त्यो मान्छे हुनेछ जो आफ्नी पत्नी कहाँ गएर र पत्नीले पति कहाँ गएर व्यवहार गर्छ फेरि त्यो रहस्यलाई फैलाउँछ "। |
| १५ | गाली गर्नु र खराब कुराकानी गर्नु | ✷" प्रलय हुने दिन अल्लाह समक्ष सब भन्दा तुच्छ त्यो व्यक्ति हुनेछ जसको गाली र खराब कुराकानीको कारणले मानिसले त्यसलाई छाडेका हुन् "।<br>✷"मनुष्यको अधिकांश गल्ती र चूक जिभ्रोमा नै छन "। |
| १६ | मुसलमानलाई काफिर भन्नु | "कुनै मान्छेले आफ्नो भाईलाई हे काफिर भन्यो,त यो कुरा यी दुबै मध्ये एक तिर फर्कनेछ, यदि उसले भने जस्तो नै उसको भाई छ त थीक नत्र त्यो कुरा उसैमाथि लागु भइहाल्छ "। |
| १७ | आफ्नो बुबालाई छाडी अर्को सँग सम्बन्ध जोडनु | ✷"जसले जानीजानी आफ्नो बुबालाई छाडी अरू सँग सम्बन्ध स्थापित गऱ्यो उसमाथि स्वर्ग हराम भइहाल्छ "। ✷"आफ्ना बुबालाई न छाड र जुन व्यक्ति आफ्ना बुवालाई छाडछ उसले काफिर भइहाल्छ" |
| १८ | मुसलमानलाई डराउनु | ✷"कुनै मुसलमनाको लागि यो जायज छैन कि ऊ आफ्नो मुसलमान भाईलाई डराओस "। ✷"जसले आफ्नो भाई तिर हत्यार बाट संकेत गर्छ त त्यसलाई न राखे सम्म फरिश्ताहरू उसलाई श्राप दिन्छन् "। |
| १९ | सन्धि भएको मानिसलाई इस्लामी देशमा हत्या गर्नु | ✷ "जसले सन्धि भएको ज्यानलाई बिना कुनै कारण हत्या गऱ्यो त्यो स्वर्गको सुघन्ध पनि पाउँदैन, जब्कि स्वर्गको सुघन्ध एक सय वर्ष सम्म हिडने दूरी सम्म पाउँदैछ " |
| २० | अल्लाहका वली (सुकर्मी) सँग शत्रुता गर्नु | "अल्लाह भन्नुहुन्छः जसले मेरो वली (मित्र सुकर्मी) सँग शत्रुता गऱ्यो ऊ सँग म युद्ध गर्न चाहन्छु "। |
| २१ | मोनाफिक र फासिक (छलकपट र बुरो मानिस) लाई सरदार भन्नु | "मोनाफिकलाई सय्यिद (सरदार,आका, मालिक) न भन, यदि त्यो सरदार हुन्छ त तिमीले आफ्नो पालनकर्तालाई क्रोधित गर्छौ "। |

| | | |
|---|---|---|
| २२ | प्रजालाई धोका दिनु | "जस दासलाई अल्लाहले प्रजाको हाकिम बनाउछन र उसले आफ्नो प्रजालाई धोका दिएर मर्यो त उसमाथि अल्लाह स्वर्ग हराम गरिदिनुहुन्छ "। |
| २३ | बिना ज्ञानको धार्मिक समास्यालाई बताउनु | "जसले बिना ज्ञानको फत्वा (धार्मिक जानकारी) दियो त त्यो पापी छ "। |
| २४ | जुमा वा अस्रको नमाज छाडनु | ✷ "जसले जुमाको नमाज आलस्य गरेर तीन पटक छाडयो अल्लाह उसको दिलमाथि छाप लगाइदिनु हुन्छ "। ✷ "जसले अस्रको नमाज छाड्यो उसको कर्म व्यर्थ भइहाल्छ "। |
| २५ | नमाज पढनुमा आलस्य गर्नु र नमाजलाई छाड्नु | ✷ "हाम्रो र काफिरहरूको बीच जो सन्धि र वाचा भएको छ त्यो नमाज नै हो त जसले नमाजलाई छाड्यो उसले कुफ्र गर्‍यो "।<br>✷ "मान्छे र कुफ्र र शिर्कको बीच एकै कुरा हो त्यो हो नमाजलाई छाड्नु "। |
| २६ | नमाज पढने व्यक्तिको आगाडि बाट हिंड्नु | "नमाज पढने व्यक्तिको अगाडिबाट हिंड्नेलाई यदि थाहा हुन्थ्यो कि यसको कति पाप छ त ४० (वर्ष) सम्म त्यहाँ बस्नु हिंडनु भन्दा राम्रो हुन्थ्यो "। |
| २७ | नमाज पढनेहरूलाई कष्ट दिनु | "जसले प्याज,लसुन र मुला खायो हाम्रो मुस्जिदबाट टाढा बसोस् किनकि जुन कुराले गर्दा मनुष्यलाई कष्ट हुन्छ त्यस कुराले फरिश्ताहरूलाई पनि कष्ट हुन्छ "। |
| २८ | कसैको जग्ग जमीनलाई अपभोग (हड्प्नु) गर्नु | "जसले कसैको एक बित्ता पनि भुई अन्याय गर्दै हड्प्यो प्रलय हुने दिन अल्लाह उसको घाँटीमा सातौं धरतीको माला पहिराउनेछन् "। |
| २९ | अल्लाहलाई क्रोधित गर्ने कुराकानी गर्नु | "दासले अल्लाहलाई क्रोधित गर्ने यसतो शब्द भन्छ जसलाई महसूस पनि गर्दैन र उसैको कारण नरकमा ७० हजार वर्ष सम्म खस्दै जान्छ "। |
| ३० | अल्लाहको स्तुतिको अलावा अरू अत्याधिक कुरा गर्नु | "अल्लाको जिक्र स्तुतिको सिवाय धेरै कुराकानी न गर, किनभने अल्लाहको जिक्रको अलावा धेरै कुराकानी गर्नु मुटुलाई कठोर बनाइ दिन्छ "। |
| ३१ | मुख बनाएर कुरलाई गोल मोल गरेर कुराकानी गर्नु | "म समक्ष तिमी मध्ये सब भन्दा घृणित र प्रलयको दिन सब भन्दा टाढा बस्ने व्यक्ति त्यो हो जो मुख बनाएर,गोल मोल गरेर अत्याधिक मात्रामा कुराकानी गर्छ "। |
| ३२ | अल्लाहको जिक्रबाट लापरवाही गर्नु | "कुनै समूदाय कुनै सभामा बसेर अल्लाहको स्तुति गरेनन् र न त आफ्ना नबीमाथि सलाम र शान्ति पठाएका छन त उनीहरूको लागि कमी हुनेछ, यदि सजाय दिन चाहनुहुन्छ सजाय दिनुहुन्छ र यदि अल्लाह चाहनुहुन्छ त माफ गर्नुहुन्छ "। |
| ३३ | मुस्लिमको दुःख हेरेर प्रसन्नता प्रकट गर्नु | ✷ "आफ्नो भाईको संकटमा प्रसन्नता प्रकट न गर यो पनि हुन सक्छ कि अल्लाह उसमाथि दया गर्नुहुन्छ र तिमीलाई त्यस संकटमा लीन गर्नुहुन्छ "।<br>✷ "कसैले आफ्नो भाईलाई कुनै पापको कारण बुराभला भन्यो त मर्नु भन्दा अगि उसले त्यो कार्य (पाप) गर्नेछ "। |
| ३४ | मुसलमानहरू परसपर कुरकानी छाड्नु | "कुनै मुस्लिमको लागि आफ्नो मुस्लिम भाई सित कुरकानी छाड्नु तीन दिन भन्दा बढी जायज छैन, र जसले तीन दिन भन्दा कुरकानी छाड्छ त्यो नरकमा प्रवेश हुनेछ "। |
| ३५ | पापलाई खुल्लम-खुल्ला गर्नु | "मेरा अनुयायी मध्ये सबैलाई माफी हुनसक्छ तर खुल्लम-खुल्ला पाप गर्नेलाई छैन "। |
| ३६ | कुव्यवहार | "कुव्यवहार सुकर्मलाई त्यसरी नै बर्बाद गरिदिन्छ जसरी सिर्का महलाई बर्बाद गदिन्छ "। |
| ३७ | आफ्नो दान र उपहारलाई फिर्ता गर्नु | "आफ्नो दान र उपहारलाई फिर्ता लिनेवाला उस कुकुर जस्तो हो जो बान्ता गरेर त्यसलाई खान्छ"। |
| ३८ | छिमेकमाथि अन्याय गर्नु | "छिमेककी पत्नी सँग बलात्कार गर्नु अर्का दश महिला सँग बलात्कार गर्नु भन्दा पापमा ठूलो छ, यसै गरी छिमेकको घरमा चोरी गर्नु अर्का दश घरमा चोरी गर्नु भन्दा पापमा बढी छ "। |
| ३९ | हराम कुराहरू तिर हेर्नु | "मनुष्यमाथि व्यभिचारको एउटा भाग लिखिएको हो जसलाई अनिवार्य रूपले गर्नु पर्नेछ, दुबै आँखाको व्यभिचार हेर्नु हो। र दुबै कानको व्यभिचार सुन्नु हो। र जिभ्रोको व्यभिचार कुराकानी गर्नु हो। र हातको व्यभिचार समात्नु हो। र खुट्टाको व्यभिचार हिंडनु हो। र मुटु इच्छा र कामान गर्दैछ र त्यसलाई गुप्ताँग साचो वा झूटो पार्छ "। |
| ४० | परस्त्रीलाई स्पर्श गर्नु | ✷ "व्यक्तिको टाउकोमा फलामोको हत्यारले हान्नु राम्रो छ यस कुराबाट कि त्यो कुनै परस्त्रीलाई स्पर्श गरोस् "। ✷ "म पर स्त्री सँग हात मिलाउँदैन "। |
| ४१ | शिगार (गोलठ) विवाह गर्नु | "रसूलुल्लाह सल्लल्लाहो अलैहे वसल्लमले शिगार बिहे गर्नु बाट मनाही गर्नुभो। एउट मान्छे आफ्नो छोरीको विवाह अर्को सित यस शर्त सँग गर्छ कि ऊ पनि आफ्नो छोरीको विवाह म सँग गरोस र दुबैको बीच महर ( विवाहको अवसरमा पत्नीलाई दिने नियुक्त धनमालको मात्रा) न होस "। |
| ४२ | मृतकमाथि ठूलो स्वरमा रुनु-कराउनु मनाउनु | ✷ "जस मृतकमाथि रुने कराउने गर्छन उसलाई प्रलय हुने दिन त्यसको कारणले यातना हुनेछ "। ✷ "मृतकलाई उसमाथि रुनु कराउनुको कराणले चिहानमा यातना हुनेछ "। |
| ४३ | अल्लाह बाहेक अरूको शपथ लिनु | ✷ "जसले अल्लाह बाहेक अरूको शपथ लियो उसले कुफ्र वा शिर्क गर्‍यो "।<br>✷ "जुन व्यक्ति कसम लिन चाहन्छ त्य अल्लाहको कसम लियोस वा चुप लागोस "।<br>✷ "जसले नासोको कसम लियो ऊ हामी माध्ये(मुसलमान)छैन"। |
| ४४ | झूटो शपथ लिनु | "जसले कुनै मुस्लिमको माल झूटो कसम लिएर हत्यायो त ऊ अल्लाहसँग यस अवस्थमा भ ट गर्नेछ कि अल्लाह उसमाथि क्रोधित हुनेछन् "। |
| ४५ | सर-सामानको बिक्री गर्दै | ✷ "सर-सामान बिक्री गर्दा अधिक शपथ लिनुबाट टाढा बस किनकि शपथले सर-सामान |

| | | |
|---|---|---|
| | शपथ लिनु | त धेरै बिक्री हुन्छ तर त्यसमा बर्कत (बृद्धि) हुँदैन "। ✷ " कसमले त माल सामान धेरै बिक्री हुन्छ तर त्यसमा बर्कत हुँदैन "। |
| ४६ | काफिरहरूको देखासिकी र सरूपता गर्नु | ✷ " जसले कुनै समूदायको सरूपता गऱ्यो ऊ उसै मध्ये मशभइहाल्छ "। ✷ " जसले अरूको सरूपता अपनायो ऊ हामी मध्ये छैन" |
| ४७ | चिहानमाथि मजार (घर) बनउनु | " नबी सल्लल्लाहो अलैहे वसल्लमले चिहानलाई पक्की बनाउनु, त्यसमाथि बस्नु र त्यसमाथि मजार आदि बनाउनुबाट मनाही गर्नुभएको हो "। |
| ४८ | धोका दिनु र नासोमा हेरफेर गर्नु | " जब अल्लाह सम्पूर्ण मानिसहरूलाई प्रलयको दिन एकत्रित गर्नेछन त हरेक धोकाबाजको लागि एउटा झन्डा हुनेछ र भनिनेछ यो फलानोको छोरो फलानोको धोकाको झन्डा हो " |
| ४९ | चिहानमाथि बस्नु | " तिमी मध्ये कुनै व्यक्ति आगो माथि बस्छ अनि उसको लुगा पोलिहाल्छ अनि आगो उसको छाला सम्म गइहाल्छ उसको लागि चिहानमाथि बस्नु भन्दा राम्रो छ "। |
| ५० | जुन व्यक्ति यो चाहना गर्छ कि मलाई मानिस उठोस् | " जसले यो चाहना गर्छ कि मानिसहरू उसको लागि उभोस त उसलाई चाहियो कि आफ्नो ठेगाना नरकमा बनाओस "। |
| ५१ | बिना आवश्यकताको माग्नु | ✷ " कुनै दासले माग्ने हेतु एउटा ढोका खोल्छ उसको लागि गरीबीको एउटा ढोका अल्लाह खोलिदिनुहुन्छ "। ✷ " जसले मानिसहरू सित अत्यधिक रूपमा माग्ने गर्छ उसले आगो माग्छ त अब उसले चाहे कम गरोस वा अधिक गरोस् "। |
| ५२ | बिक्रीमा एक अर्को बाट बढेर मोल लगाउनु | " कुनै शहरी गाउँलेको हातमा बिक्री न गरोस्, र मोल बढाएर सौदा न गर, र न त आफ्नो भाईले गरेको सौदामाथि सौदा गरोस् " । |
| ५३ | गुमिएको वस्तुलाई मस्जिदमा खोज गर्नु | " जब कोही व्यक्ति कसैलाई मस्जिदमा गुमिएको वस्तुलाई खोज गर्दै सुनोस् त भनोस् अल्लाह तिमीलाई त्यो वस्तु फिर्ता न गरुन्। किनभने मस्जिदहरू यसै कार्यका लागि निर्माण गरिएको होइनन् "। |
| ५४ | शैतानलाई गाली गर्नु | ✷ " शैतानलाई गाली न गर बरु त्यसबाट अल्लाहको शरण माग्ने गर "। ✷ " एउटा सहाबी (नबीको साथी) भन्नुहुन्छ कि म सवारी माथि नबी सल्लल्लाहो अलैहे वसल्लमको पछाडि बसेको थिएं कि उहाँको जनावर यता-उता भयो, मैले भनें शैतानको लागि बर्बादी होस्। भन्नुभयोः यसो न भन किनकि यो सुनेर शैतान ठूलो भई घर जस्तो भइहाल्छ र भन्छ मेरो शक्तिको कसम! तर यस्तो भन्ने गरः बिस्मिल्लाह, किनभने तिमीले यो भने पछि शैतान सानो भई झींगो जस्तो भइहाल्छ "। |
| ५५ | ज्वरलाई गाली गर्नु | " ज्वरलाई गाली न गर किनकि यो मनुष्यको पापलाई समाप्त गिरिदिन्छ जस्तो कि खलाँती फलामोको मैलालाई सफा परिदिन्छ "। |
| ५६ | हराम कार्यहरूलाई फिँजाउनु र ती तिर अरूलाई निमन्त्रण दिनु | " जसले कुनै पथभ्रष्टता (पाप) तिर बोलायो त जुन व्यक्तिहरू यसको अनूसरण गर्छन सबैको पाप उसैमाथि जान्छ, गर्ने र निमन्त्रण दिने दुबै पापमा बराबर छन् कसैमा केही कमी आउँदैन "। |
| ५७ | पीउनुमा मनाही कुराहरू | ✷ " नबी सल्लल्लाहो अलैहे वसल्लमले पानी राख्ने भाँडो (जस्तो गाग्रो आदि) को मुखबाट पानी खाउनुबाट मनाही गर्नु भएको हो " । ✷ " नबीले उभेर पानी खाउनुबाट रोक्नु भएको छ "। ✷ " पिउने कुरामा फुक्नुबाट मनाही गर्नुभएको छ "। |
| ५८ | सुन र चाँदीको भाँडोमा पिउनु | " सुन र चाँदीको भाँडोमा न पिऊ, र रेशम र रेशमको लुगा न लाऊ, किनकि यी सबै वस्तु काफिरका लागि यसै संसारमा छन र तिम्रा लागि परलोकमा छन "। |
| ५९ | देब्रे हातले पिउनु | " देब्रे हातले खान-पिन न गर, किनकि शैतान देब्रे हातले खान-पिन गर्छ "। |
| ६० | नाता-गोतालाई भंग गर्नेवाला | " स्वर्गमा नाता-गोतालाई भंग गर्नेवाला प्रवेश गर्ने छैन "। |
| ६१ | नबीमाथि दरूद र सलाम न पठाउनु | ✷ " उसको लागि सर्वनाश छ जसको समक्ष मेरो चर्चा होस र ममाथि दरूद न पठाओस् "। ✷ " जस समक्ष मेरो चर्चा होस र उसले ममाथि दरूद न पठाओस त ऊ कन्जूस मान्छे हो"। |
| ६२ | कुकुर पाल्नु | " जसले शिकार र जनावरको सुरक्षा गर्नु बाहेक अरू कार्यको लागि कुकुरा पाल्यो प्रत्येक दिन उसको पुण्यबाट दुई किरात छट्ने गर्छ "। |
| ६३ | जनावरलाई सजाय दिनु | ✷ "एक महिलालाई एउटा बिरालोको कारणले यातना भएको थियो उसले एउटा बिरालोलाई समातेर मर्ने सम्म राखी, यसै बिरालोको कारण ऊ महिला नरकमा प्रवेश भई "। ✷ " कुनै प्राणीलाई निशाना सिद्ध गर्ने हेतु निश्चित न गर "। |
| ६४ | जनावरमाथि घण्ट लाउनु | ✷ " जहाँ कुकुर र घण्टी हुन्छ त्यहाँ फरिश्ता जाँदैनन् "। ✷ " घण्टी शैतानको सारंगी हो "। |
| ६५ | पापीलाई जब धन र अनुकम्पा मिल्छ | " जब तिमी देख्छौ कि अल्लाह कुनै पापी दासलाई धन-माल र उसले चाहेको कुरा दिनु हुन्छ त विश्वास गर कि त्यो जाँच र परीक्षा हो। फेरि यो आयत पढनु भोः " *अनि जब तिनीहरूले स्मरण गराइएका कुरा बिर्से तब हामीले तिनीहरूको लागि सबै सम्पन्नताका ढोका खोलिदियौं, अनि जब तिनीहरू प्रदान गरिएका चिजहरूमा मग्न भए तब हामीले अकस्मात तिनीहरूलाई समात्यौं अनि तिनीहरू निराश हुन पुगे* "। |
| ६६ | संसारलाई अगाडि राख्नु | " जसको चिन्ता मात्र संसार पाउनका लागि भइहाल्यो भने उसको दुबै आँखा बीच अल्लाह गरीबी लेखिदिनुहुन्छ, र उसको एकत्रित कुरालाई भिन्न गरिदिनुहुन्छ र संसारबाट जो भाग्यमा लेखिन्छ सोही नै पाउनेछ " |





# सदासर्वदा रहने तिर सवारी

## तिम्रो बाटो चाहे स्वर्ग सम्म चाहे नरक सम्म

" *हे आस्थावानहरू हो! अल्लाहको भय राख र प्रत्येक व्यक्तिले भोलिको निम्ति के अगाडि पठाएको छ भन्ने कुरामा विचार गर* "।

●●● **चिहानः** अखिरत (परलोक) को पहिलो श्रेणि छ । काफिर र मोनाफिकका लागि यो चिहान आगोको खाल्टो हो र मोमिनका लागि फुलको बगैंचा । चिहान भित्र हुने यातनाको कारण केही पापहरू छनः पिसाबको छिटटपबाट न बच्नु,चुक्ली गर्नु,युद्धमा प्राप्त भएको माल सम्पत्तिमा चोरी गरेर केही लिनु,झूठ कुरा गर्नु, नमाजलाई छाडी सुत्नु,कुरआनलाई पाठ न गर्नु,व्यभिचार गर्नु,गुद मैथुन गर्नु,ब्याज सूद खानु, ऋणलाई फिर्ता न गर्नु ईत्यादि । र चिहानको यातनाबाट मुक्ति दिन्छः सुकर्म जो शुद्ध एक अल्लाहकै लागि गरिएको हो, र चिहानको यातनाबाट अल्लाहको शरण चाहनु, सूरह अलमुल्कको पाठ गर्नु आदि । र चिहानको यातनाबाट सुरक्षित रहनेछनः शहीद, इस्लामी सरहदलाई सुरक्षा गर्दै मर्नेवाला, जुमाको दिन मर्नेवाला र पेटको रोगमा मर्नेवाला आदि ।

●●● **सूर (महा नरसिंहा) मा फूक हान्नुः** यो ठूलो सीड़ हो जसलाई इस्राफील नामक फरिश्ता मुखमा लिई पर्खिराखेरहेछन कि कहिले त्यसमा फूकनुको आदेश मिल्छ । र फूक दुई प्रकारको हुन्छः नफखतुल् फजअ (डराउनका लागि फूकनु), अल्लाह भन्नुहुन्छः ﴿وَيَوْمَ يُنفَخُ فِي الصُّورِ فَفَزِعَ مَن فِي السَّمَاوَاتِ وَمَن فِي الْأَرْضِ إِلَّا مَن شَاءَ اللَّهُ﴾ " र जुन दिन सूर (कर्कशध्वनी निस्कने औजार) फूकिनेछ त्यस दिन आकाशहरू तथा पृथ्वीमा जेजति छन् ती सबै भयभित हुनेछन्,सिवाय तिनीहरू जसलाई अल्लाह (सुरक्षित राख्न) चाहन्छन् "। यस फूकले संसारका सबै वस्तुहरू खराब भइहाल्नेछन् । र ४० दिन पछि नफ्खतुल् बाअ्स (पुनः जीवित भएर उभ्नु) हुनेछ, अल्लाह भन्नुहुन्छः﴿ثُمَّ نُفِخَ فِيهِ أُخْرَىٰ فَإِذَا هُمْ قِيَامٌ يَنظُرُونَ﴾ " *फेरि अर्को सूर फूकिनेछ अनि सबै स्वस्फूर्त रूपमा हेर्दै खडा हुनेछन्* "।

●●● **मृत्यु पश्चात पूनर्जन्मः** फेरि अल्लाह एक प्रकारको वर्षा पठाउनेछन जसले गर्दा शरीरहरू पुनः जीवित हुनेछन (जुन पिठ्युँको हाड्को अन्तिम भागबाट हुन्छ) । र यो एउटा नयाँ जीवन हुनेछ जसमा मृत्यु हुँदैन, सबै नाँगो शरीर र नाँगो खुट्टा हुनेछन् । फरिश्ताहरू र जिन्नहरूलाई हेर्नेछन् । र आ-आफ्ना कार्यहरू सँग दोबारा जीवित हुनेछन् ।

●●● **प्रलयको चौरमा एकत्रित हुनुः** अल्लाह सम्पूर्ण प्राणीहरूलाई हिसाब किताबका लागि एउटा महान दिनमा जो ५० हजार वर्षको बराबर हुनेछ एकत्रित गर्नेछन् र तिनीहरू डर र भयले अचेत जस्ता हुनेछन् । उनलाई यस्तो लाग्छ कि उनी संसारमा एकै छिनको लागि बसेका हुन्छन् । सूर्य मात्र एक मीलको बराबर हुनेछ र मानिसहरू आफ्नो कर्मको हिसाबले पसीनामा डुबेका हुन्छन् । तल र कम्जोर श्रेणिका मानिस घमण्डी मानिस सँग झगडा गर्नेछन् र काफिर आफ्नो साथी,शैतान र सदस्यहरूलाई एकत्रित गरेर एक अर्कालाई गाली धिक्कार गर्नेछ । अत्याचारी चिन्ता र दुःखको कारणले आफ्नो हातमाथि दाँत काट्नेछ । नरकलाई ७० हजार करेलीमा तानिनेछ र प्रत्येक करेलीलाई ७० हजार फरिश्ता तानी रहनेछन् । जब काफिर नरकलाई हेर्नेछ भने जरीमाना दिएर मुक्ति चाहन्छ वा माटो बन्न खोजन्छ । र पापीहरूः जस्तो जकात (दान) न दिनेहरू को धनमाललाई आगोमा पोलि दागिनेछ । र घमण्डीहरू कमिलो जस्ता भइहाल्छन् । र धोकाबार, नासोमा हेरफेर गर्नेवाला र हडप्नेवालालाई बेइज्जती गरिनेछ । चोर चोरी गरेको माल लिएर आउँछ । रहस्यहरू प्रष्ट हुनेछन् । र सुकर्मीहरू माथि केही अत्याहट हुनेछैन, र जोहरको नमाज जस्तो समय बीती हाल्छ ।

●●● **शेफाअत (सिफारिश)ः** ठूलो सिफारिशः यो हाम्रा नबी सल्लल्लाहो अलैहे वसल्लमका लागि खास हुन्छ जो प्रलयको चौरको यातना र संकटबाट मुक्तिको लागि र चाडैं हिसाब किताबको लागि सम्पूर्ण प्राणीका निमित्त हुन्छ । आम (व्यापक) सिफारिशः यो नबी र नबी बाहेक अरूको लागि पनि हुनेछ,मोमिनलाई नरक बाट निस्कासितका निम्ति र उनको दर्जा उच्च हुने हेतु गरिनेछ ।

●●● **हिसाब (लेखाजोखा)ः** मानिसहरू पंक्ति-बद्ध भई आफ्ना प्रभुको अगाडि प्रस्तुत हुनेछन त महान प्रभु उनलाई उनका क्रिया-कलाप देखाउनेछन अनि त्यस बारेमा प्रश्न गर्नेछन् । उमेर,तारुण्य,धनमाल,शिक्षा र वाचा,अनुकम्पा,कान,नाक र मुटु सम्बन्धमा प्रश्न गर्नेछन् । काफिर र मोनाफिकको हिसाब तथा लेखाजोखा उनलाई बेइज्जती र उनीमाथि प्रमाण सिद्ध गर्नका लागि सम्पूर्ण प्राणीहरूको समक्ष हुनेछ

जसमाथि मानिस, धरती, दिन र रात्री तथा माल, फरिश्ताहरू र अंगहरू गवाही दिनेछन यहाँ सम्म कि उनका अपराध सिद्ध भइहाल्छन र उनी आफ्नो अपराधलाई एकरार गरिलिउन् । र मोमिन सँग अल्लाह एकाँतमा सोध पुछ गर्नेछन् र पाप तथा अपराधहरूलाई स्वीकार गराउनेछन,र जब मोमिन हेर्छ कि उसको लागि बर्बादी छ तब अल्लाह भन्नुहुन्छः "संसारमा मैले तिम्रो पापमाथि पर्दा गरेको थिएं,जाऊ मैले आज पनि तिमीलाई क्षमा गरिदिएं "। प्राणीहरूमा सब भन्दा पहिला मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमका अनुयायीको हिसाब-किताब र लेखाजोखा हुनेछ । र कर्महरूमा सब भन्दा पहिलो नमाजको बारेमा सोध-पुछ हुनेछ,र फैसला तथा निधोमा रक्तको सम्बन्धमा सोध-पुछ हुनेछ ।

●●● **कर्मपत्रहरू उडनेछनः** फेरि कर्मपत्रहरू उड्नेछन र मानिसहरू आ-आफ्नो कर्मपत्र लिनेछन जसले सा-साना र ठूल-ठूला सबै कार्य लेखेर राखेको छ ﴿لا يُغَادِرُ صَغِيرَةً وَلا كَبِيرَةً إِلا أَحْصَاهَا﴾ मोमिन आफ्नो दायाँ हातले कर्मपत्र समात्नेछ र काफिर तथा मोनाफिक पिठ्युँ तिर देखि आफ्नो देब्रे हातले समात्नेछन् ।

●●● **तराजूः** फेरि प्राणीहरूलाई बदला दिनका लागि उनका कर्महरूलाई वास्तविक तुलले वजन हुनेछ जस तुलका दुईटा पलरा हुनेछन् । जुन कर्म इस्लामी नियम बमोजिम र मात्र एक अल्लाहका लागि शुद्ध हुनेछन ती तराजूमा भारी हुनेछन । तराजूलाई भारी बनाउने कर्महरूः लाइलाह इल्लल्लाह,राम्रो व्यवहार र आचरण, अल्लाहको जिक्र जस्तो अल्हम्दोलिल्लाह,सुब्हानल्लाहे व बेहम्देही सब्हानल्लाहिल्अजीम । र मानिसको बुराई तथा भलाईलाई निर्णय गरिनेछ ।

● **हौज (जलाशय)ः** फेरि मोमिनहरू हौज नजीक आउनेछन,र जसले यस जलाशय बाट एक पटक पानी खानेछ उसलाई त्यस पछि कहिले पनि तिर्खा लाग्दैन । प्रत्येक नबीको लागि एउटा हौज हुनेछ तर हाम्रा नबी मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको हौज सब भन्दा ठूलो हुनेछ, त्यसको पानी दुध भन्दा सेतो र मह भन्दा मीठो र कस्तुरी भन्दा सुगन्धित हुनेछ । तारागनको संख्या बराबर त्यसबाट पिउने सुन र चादीको भाँडो हुन्छ। त्यस जलाशयको लम्बाई उर्दुन स्थित एउटा ठाउँ एला देखि अदन सम्म हुनेछ । यसमा पानी स्वर्गमा रहेको कौसर भन्ने नहर बाट आउनेछ ।

●● **मोमिनहरूको परीक्षाः** हश्र (प्रलयको चौरमा हिसाब किताब) को अन्तिम दिनमा काफिरहरू पूज्दै आएका आफ्ना भग्वानहरूको पछाडि लगेर जान्छन, तिनीहरूलाई जनावर जस्तो समूह समूह गरी खुट्टा माथि हिंड्दै वा अनुहारमाथि हिंड्दै नरक सम्म पुगाउनेछन् । मोमिनहरू र मोनाफिकहरू बचेका हुन्छन् त्यहाँ महान अल्लाह आउनु हुन्छ र भन्नुहुन्छः "किन पर्खि रहेकाछौ ? "तिनीहरू भन्नेछन्: "हामी आफ्ना प्रभुको प्रतीक्षा गर्दै रहेका छौं "। जब अल्लाह आफ्नो पिडौंला खोल्नेछन भने उनलाई चिनेर मोनाफिकहरू बाहेक सबै सज्दामा खसी हाल्नेछन्, यस खण्डमा अल्लाह भन्नुहुन्छः
﴿يَوْمَ يُكْشَفُ عَنْ سَاقٍ وَيُدْعَوْنَ إِلَى السُّجُودِ فَلا يَسْتَطِيعُونَ﴾ " *जुन दिन पिडौंला खोलिनेछ र मानिसहरूलाई सज्दा गर्न बोलाइनेछ त्यस दिन तिनीहरू सज्दा गर्न सक्ने छैनन्* "। फेरि तिनीहरू अल्लाहको पछाडि लाग्नेछन् । र पुल सिरात कायम गरिन्छ र मोमिनलाई नूर (प्रकाश) दिइनेछ र मोनाफिहरू (कुफ्रलाई लुकाएर ईमानलाई प्रकट गर्नेहरू) को प्रकाश निभिहाल्छ ।

● **सिरात (पुल)ः** यो पुल नरकमाथि बनाइएको हुन्छ जसलाई पार गरेर मोमिनहरू स्वर्ग तिर जानेछन् । नबी सल्लल्लाहो अलैहे वसल्लमले यसको गुणको बारेमा भन्नुभोः "यो टेढो र फिसलन जस्तो हुन्छ, जस माथि काँढो र कीलो साअ्दानको कीलो जस्तो हुन्छन्, जो कपाल भन्दा पातलो र तरवार भन्दा तिखो हुन्छ "(मुस्लिम) । यसै ठाउँमा मोमिनहरूलाई उनका कर्म अनुसार नूर दिइनेछ, सब भन्दा ठूलो पहाड जस्तो हुन्छ र सब भन्दा सानो र कम खुट्टाको बुढी औंलाको किनारमा हुन्छ । त्यही नूरमा तिनीहरू आ-आफ्ना कर्म अनुसार पार हुनेछन,मोमिनहरू मध्ये कोही आँखा झपक्क जस्तो त कोही बिजुली जस्तो,कोही हावा जस्तो त कोही चरो जस्तो र कोही घोडा र सवारी जस्तो त्यस पुललाई पार गर्नेछ । त मुस्लिम सुरक्षित पार भइहाल्नेछ र ती मध्ये कोहीलाई केही चोट पटक लागेर पार हुनेछ र कोही नरकमा खस्नेछ । (बुखारी र मुस्लिम) तर मोनाफिकहरूका लागि केही नूर हुँदैन, तिनीहरू फर्केर आउनेछन अनि तिन र मोमिनहरूको बीच पर्खाल बनाएर पर्दा गरिदिइनेछ फेरि तिनीहरू पुललाई पार गर्नेछन र नरकमा खस्नेछन् ।

●● **नरकः** नरकमा काफिरहरू अनि मोमिनहरू मध्ये केही पापीहरू अनि मोनाफिकहरू जानेछन् । प्रत्येक १००० मा ९९९ नरकमा प्रवेश हुनेछन् । नरकका ७ वटा ढोकाहरू हुन्छन् । त्यसको आगोको तातोपन सांसारिक आगोको ७० गुणा बढी हुनेछ । त्यस भित्र यातनाको लागि काफिरको शरीर ठूलो भइहाल्छ दुबै काँध बीच तीन दिन हिंडने जस्तो दूरी भइहाल्छ । उसको दाँत उहुद पहाड जस्तो ठूलो र छाला एकदमै बाक्लो भइहाल्छ र त्यसमा परिवर्तन पनि हुन्छ र यी सबै कुरा यस कारणले हुन्छ ताकि काफिर यातनाको मज्जा चखोस् । उनको लागि खाने पानी एकदमै तातो हुन्छ जसले आन्द्रालाई काटिदिन्छ । उनीहरू खाने कुरो जक्कुम (काढो भएको रूख), पीप र रक्त हुनेछ । त्यस भित्र सब भन्दा सानो सजाय पाइने व्यक्ति त्यो हुन्छ जसको दुबै खुट्टा मुनि आगोको अँगार राखिनेछ जसले गर्दा उसको मस्तिष्क तातो पानी जस्तो भत्भत् गर्नेछ । नरकमा छाला पोल्नेछ,गल्नेछ,अनुहार पोल्नेछ र घिच्च्याइनेछ । र त्यसमा खुट्टामा साङ्लो र घाँटीमा लगाम हुनेछ । त्यो धेरै गहिरो छ यदि त्यसमा एउटा शिशुलाई हालिन्छ भने अन्त सम्म पुग्दा पुग्दै ७० वर्षको भइहाल्छ । त्यसको इन्धन काफिर र ढुंगो हुनेछन् । हावा विषालु र तातो हुनेछ र छाया कालो धुँवाको हुनेछ र पोशाक आगोको हुनेछ । त्यसको आगो प्रत्येक वस्तुलाई खाइहाल्नेछ र कसैलाई छाड्ने छैन। क्रोधले चल्लाउनेछ र छालालाई पोलेर हाड तथा मुटु सम्म पुगिहाल्नेछ ।

● **कन्तरा (एउटा अरू पुल)ः** नबी सल्लल्लाहो अलेहे वसल्लमले भन्नुभोः " मोमिनहरू नरकबाट मुक्ति पाएर स्वर्ग तिर लाग्नेछन् तर उनीहरूलाई स्वर्ग र नरक बीच बनाइएको पुल (कन्तरा) मा रोकीलिनेछ, र संसारमा परसपर गरिएको अत्याचारको बारेमा निधो हुनेछ यहाँ सम्म कि जब उनी सम्पूर्ण पापहरू बाट पवित्र भइहाल्छन भने स्वर्गमा प्रवेश गर्नको अनुमति दिइन्छ, त अल्लाहको कसम जसको हातमा मेरो ज्यान हो उनी मध्ये एक जना संसारमा रहेको आफ्नो घरको बाटो भन्दा राम्ररी स्वर्गमा हुने घरको बाटो जान्नेछ" (बुखारी)।

● **जन्नत (स्वर्ग)ः** यो मोमिनहरूको वास्तविक ठेगाना हो । स्वर्गको ईंट सुन र चाँदीबाट बनाइएको हुन्छ,र उसको गारो (मसाला) कस्तुरीको हुन्छ । यसको ढुंगो मोतीको र बलुवा याकुत (एक प्रकारको बहुमूल्य रत्न, लाल) को र माटो जाअ्फरानको हुन्छ । यसमा ८ वटा ढोका हुन्छन् । प्रत्येक ढोकाको दूरी तीन दिन सम्म हिंडने बराबर हुनेछ ता पनि जामको कारण सानो भइहाल्छ । स्वर्गमा १०० श्रेणिहरू छन् र दुई श्रेणि बीच धरती र आकाश जस्तो दूरी हुन्छ । स्वर्गमा सब भन्दा उच्च श्रेणिलाई फिर्दौस भनिन्छ त्यहींबाट स्वर्गमा नहरहरू बग्नेछन् । स्वर्गको छाना अल्लाहको अर्श (सिंहासन) हो । त्यसमा मह,दुध,(नशा न लागने) मदिरा र पानीका नहरहरू हुनेछन् जो खोदाई बिना नै बग्नेछन् । मोमिन जस तिर लिएर जान चाहन्छ लिएर जान सक्नेछ । उसका फल सधैंका लागि रहनेछन र नजीक तथा लटकिएका हुन्छन् । त्यसमा मोतीको शिविर हुनेछ जसको चौडाई ६० मीलको हुनेछ त्यसको प्रत्येक कुनामा बस्ने मान्छेहरू हुनेछन् जुन सुन्दर,शरीर र अनुहारमाथि कपाल न रहेका आँखामा सुर्मा लगाइएका हुनेछन्, जुनको तारुण्य कहिल्यै सामप्त हुनेछैन र न त उनका लुगा पुराना हुनेछन् । त्यहाँ दिसा,पिशाब र थुक खकारको आवश्यकता पर्दैन । उनको काइँयो सुनको हुन्छ र पसीनाको गन्ध कस्तुरी जस्तो हुनेछ । स्वर्गमा हुने महिलाहरू (अप्सार) सुन्दर, कुमारी, मनमोहिनी र समवयस्क हुनेछिन् । स्वर्गमा सब भन्दा पहिला मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमले प्रवेश गर्नेछन अनि सम्पूर्ण नबी र दूतहरू । स्वर्गमा सब भन्दा मुनि श्रेणीमा रहनेलाई उसले चाहना गरेका वस्तुहरू भन्दा दश गुणा अधिक दिइनेछन् । स्वर्गमा काम गर्ने नौकर फिँजाइएको मोती र रत्न जस्ता बालकहरू हुनेछन जो सधैं बालक नै रहनेछन् । स्वर्गमा सब भन्दा ठूलो अनुकम्पा अल्लाह तआलालाई हेर्नु हो र उनको प्रसन्नतालाई प्राप्त गर्नु र सधैंका लागि स्वर्गमा रहनु हो ।

**नोटः** यी महा घटनाहरू जुन ● मोमिन ● मोनाफिक र ● काफिरहरूमाथि आ-आफ्नो अन्तिम ठेगानामा पुग्ने सम्म लगातार हुनेछन् ।

# वजूको विधि



बिना वजू गरेर नमाज पढनु जायज छैन। र वजू पवित्र पानीले गर्नु अनिवार्य छ। र पवित्र पानी त्यो हो जो आफ्नो प्राकृति रूपमा पाइन्छ। जस्तो समुद्र,इनार,स्रोत र नहरहरूको पानी।
**नोटः** थोरै पानी फोहोर खस्नाले अपवित्र भइहाल्छ, तर धेरै पानी जसको मात्रा (२१०) लीटर भन्दा अधिक हो भएम फोहोरले अपवित्र गर्दैन यहाँ सम्म कि उसको रंग,मज्जा र गन्धमा परिवर्तन न भ इहालोस्।



**1**. बिस्मिल्लाह भनेर वजू गर्नु चाहियो, र दुबै हत्केलालाई प्रत्येक वजूमा धुनु राम्रो छ, र दुबै हत्केलालाई तीन पटक धुनु अति उत्तम छ उस व्यक्तिका लागि जो रात्रीको निद्रा बाट उठोस्।
**नोटः** वजूमा अंगहरूलाई तीन पटक भन्दा बढी मात्रामा धुनु न राम्रो कार्य हो।



**2**. फेरि एक पठक अनिवार्य रूपमा कुल्ला गरोस् र तीन पटक गर्नु अति उत्तम हो।
**नोटः** १-कुल्ला गर्दै मात्र मुख भित्र पानी गर्नु र बाहिर गर्नु पर्याप्त हुँदैन बरु पानीलाई मुख भित्र हल्लाउनु अनिवार्य छ। २- कुल्ला गर्दै दतिवन गर्नु अति उत्तम हो।



**3**. फेरि नाकमा पानी हालेर एक पटक अनिवार्य रूपमा सफा गर्नु, र तीन पटक गर्नु अति उत्तम हो।
**नोटः** मात्र नाकमा पानी हाल्नु पर्याप्त हुँदैन, बरु साँसले पानीलाई नाक भित्र तान्नु र साँस द्वारा नै बाहिर गर्नु अनिवार्य छ। एक पटक यस्तो गर्नु अनिवार्य छ र तीन पटक गर्नु अति उत्तम छ।



**4**. फेरि अनिवार्य रूपले एक पटक अनुहारलाई धोओस् र तीन पटक अति उत्तम हो। र वाजिब रूपमा अनुहार धुने हद-बन्दीः एक कान देखि अर्को कान सम्म चौडाइमा र चिउँड़ो देखि कपालको आरम्भ सम्म लम्वाइमा।
**नोटः** जब दाढी घनो छ भने त्यसमा खिलाल (औंलालाई भिजाएर दाढी भित्रा हल्लाउनु) गर्नु उत्तम छ, र यदि घनो छैन बरु कम छ भने त्यस भित्र खिलाल गर्नु अनिवार्य छ।

**5**. फेरि एक पटक अनिवार्य रूपले दुबै हातलाई औंलाहरूको टुप्पो देखि कुहिना लगायत धुनु, र तीन पटक पखाल्नु अति उत्तम छ।
**नोटः** दायाँ हात देब्रे हात भन्दा पहिला धुनु अति उत्तम हो।



**6**. फेरि पूरै टाउकोलाई मसह गरोस् (औंलाहरूलाई भिजाएर टाउकोमाथि घस्नु)। अनि दुबै चोर औंलालाई कानको प्वालमा हाल्नु र बुढी औंलाले कानको प्रत्यक्ष भागमाथि घस्नु। र यी सबै कार्यहरू मात्र एक पटक हुनु पर्छ।
**नोटः** १- टाउकोको जुन भागलाई घस्नु जरूरी छ त्यो हो : निधारमा कपाल निस्कने ठाउँ देखि टाउकोको पछिल्लो भागको तल सम्म। २- लटकेको कपालमाथि मसह गर्नु जरूरी छैन। ३- कपाल न भएमा छालामाथि मसह गर्नु पर्छ। ४- दुबै कानको पछाडि रहेको सेतो भागलाई मसह गर्नु जरूरी छ।



**7**. फेरि गोलीगाँठो समेत दुबै खुट्टालाई एक पटक अनिवार्य रूपमा पखाल्नु। र तीन पटक पखाल्नु अति उत्तम हो।

**ध्यान दिनु पर्ने कुराहरूः १- वजूमा पखाल्ने चारवटा अंगहरू छन,त्यसको विवरण तल आएको बमोजिम छः**
**क)** कुल्ला गर्नु, नाकमा पानी हालेर सफा गर्नु र अनुहारलाई धुनु। **ख)** दुबै हातलाई धुनु। **ग)** टाउको र दुबै कानको मसह गर्नु। **घ)** गोलीगाँठो समेत दुबै खुट्टालाई धुनु। र यी सबै अंगहरूलाई सिलसिलेवार (क्रम-बद्ध) धुनु जरूरी छ। र एकलाई अर्को भन्दा पहिला धुनाले वजू व्यर्थ भइहाल्छ।
**२- अंगहरूलाई धुनुमा लगातार गर्नु अनिवार्य छ, र एक अंगले सुखे पछि अर्को अंगलाई धुनाले वजू भंग भइहाल्छ।**
**३- वजू पछि यो दुआ पढ्नु उत्तम होः अश्हदो अल्लाइलाह इल्लल्लाहो वह्दहू लाशरीकलहू व अश्हदो अन्न मुहम्मन् अब्दोहू व रसूलोहू।** (म गवाही दिन्छु कि अल्लाहको अलावा वास्तविक पूज्य कोही छैन, र उनको पूजा अर्चनामा कोही भागेदार छैन। अनि मोहम्मद उहाँको दास र दूत हुन्)।

# नामज पढ्ने विधि



1. जब तिमी नमाज पढन चाहौ त राम्ररी उभेर (अल्लाहुअक्बर) भन । इमामले ठूलो स्वरमा पछाडि पढनेलाई सुनाउने गरी यो तक्बीर (अल्लाहुअक्बर) र यस पछिका सबै तक्बीर भनोस् । र इमाम बाहेक अरू नमाज पढनेले यसलाई मसिनो स्वरमा भन्नेछ । र तक्बीर भन्दै काँध सम्म दुबै हातलाई औंलाहरूलाई परसपर मिलाएर उठाओस्, इमामले तक्बीर भने पछि मुक्तदी (इमाम पछाडि नमाज पढने व्यक्तिहरू) तक्बीर भन्नेछन् ।

**नोटः** नमाजी (नमाज पढ्ने व्यक्ति) आफ्नो जीउलाई सुनाउने गरी आधार र अनिवार्य रूपले पढिने कुरालाई पढनु अनिवार्य छ यहाँ सम्म कि मसिनो स्वरमा पढिने नमाजमा पनि । र ठूलो स्वरको अन्तिम हद-बन्दी अरूलाई सुनाउने गरी पढनु र मसिनो स्वरमा पढनको अन्तिम हद आफ्नो जीउलाई सुनाएर पढनु ।



2. आफ्नो दायाँ हातले आफ्नो देब्रे हातको हत्केला वा नारीलाई समातेर दुबैलाई छाती मुनि बाँधनु, र सज्दा गरे ठाउँमा आफ्नो आँखा राख्नु, अनि नमाजको आरम्भमा आएका दुआहरू मध्ये कुनै दुआ पढनु, जस्तो यो दुआः ***सुब्हानकल्लाहुम्म व बेहम्देक व तबारकस्मोक,व तआला जद्दोक,व लाइलाह गैरोक*** (हे अल्लाह! म तपाईंको प्रशंसा र पवित्रताको वर्णन गर्दछु,तपाईंको नाम अति उन्नतिवाला, तपाईंको महिमा अपरस्पार, र तपाईं बाहेक कोही सत्य पूज्य छैन)। फेरि ***अऊजो बिल्लाहे मिनश्शैता निर्रजीम,*** (म अल्लाहको शरण चाहन्छु तिरस्कृत शैतान बाट) । अनि बिस्मिल्लाहिर्रहमानिर्रहीम पढोस, र यी सबैलाई मसिनो स्वरमा पढोस् । अनि सूरह फातिहा पढोस् । र मुक्तदीमाथि ठूलो स्वरमा पढिने नमाजहरूमा सूरह फातिहा पढनु वाजिब छैन, बरु इमामले सूरह फातिहा पढदा चुप लागेको ठाउँ-ठाउँमा सूरह फातिहा पढनु अतिउत्तम हो । यसै गरी मसिनो स्वरमा पढिने नमाज वा रक्आतहरूमा सूरह फातिहा पढनु अतिउत्तम (मुस्तहब) छ । फेरि कुरआन बाट जुन सूरह कण्ठस्य छ भने त्यसलाई पढोस् । र बिहानको नमाजमा तथा मग्रिब र इशाको पहिलाका दुई रक्आतमा ठूलो स्वरमा कुरआनलाई पाठ गर्नु पर्छ । र यी बाहेक अरू नमाज र रक्आतहरूमा मसिनो स्वरमा पढनु पर्छ ।

**नोटः** कुरआनमा रहेका सूरहहरूको सिलसिला जस्तै कुरआन पाठ गर्नु मुस्तहब हो र यसको विपरित गर्नु नराम्रो हो । र शब्दहरूमा हेरफेर गर्नु र एकै सूरहमा आयतहरूलाई यता-उता गर्नु हराम छ ।



3. फेरि अल्लाहुअक्बर भन्दै र दुबै हातलाई उठाउँदै रुकु गर्नु पर्छ, र दुबै हातलाई घुँडामाथि समातने गरी राख्नु पर्छ र औंलाहरूलाई खुल्ला राखोस् । र पिठ्युँलाई सोझो राखी टाउको बराबर राख्नु पर्छ । अनि तीन पटक यो दुआ पढोस्ः ***" सुब्हान रब्बेयल्अजीम "*** (पवित्र छन् मेरा पालन्कर्ता जुन कि महान हुन्) । र यस आधार (रुकु) पाएमा रक्आत मिल्छ ।

**नोटः** तक्बीर भन्ने समय र **(समेअल्लाहो लेमन् हमेदः)** भन्नु समय एक ठाउँबाट अर्को ठाउँ सम्म जानु बेलामा हो न त कार्य गर्नु भन्दा अगि र न त पछि । र यही तरीका नमाजका सम्पूर्ण तक्बीरहरूमा लागु हुनेछ । र यदि जानीजानी तक्बीरलाई पछि गर्‍यो त नमाज भंग भइहाल्छ ।

4. फेरि दुबै हात उठाउँदै र समेअल्लाहोलेमन् हमेदः भन्दै टाउको उठाओस् र जब राम्ररी उभिहालोस त भनोसः ***रब्बना व लकल्हम्दो हम्दन् कसीरन् तय्येबम् मोबारकन् फीह मिल्उस्समावाते व मिल्उल्अर्जे व मिल्ओमाशेअ्त मिन् शैइन् बाअ्द*** (हे हाम्रो प्रभु!प्रत्येक प्रकारका अति भन्दा अति उत्तम आकश र धरती भरी र त्यस पछि तपाईंले चाहेका अरू वस्तुहरू भरी प्रशंसाहरू र अभिवृद्धिपूर्ण पवित्रता मात्र तपाईंकै लागि छन) ।

**नोटः** रब्बना वलकल हम्द रुकुबाट राम्ररी उभेर भन्नुको समय हो न कि रुकुबाट उभ्दै भन्नु हो ।



5. फेरि अल्लाहुअक्बर भन्दै सज्दा गरोस् र आफ्ना दुबै हातलाई पेटबाट र पेटलाई तिघ्राबाट टाढा राखोस् र दुबै हातलाई काँध बराबर राखोस् । र पाइलाका औंलाहरूमाथि सज्दा गरोस् र त्यसबेला पाइला र हातका औंलाहरू किब्ला (पश्चिम) तिर हुनु पर्छ । फेरि यो दुआ तीन पटक पढोसः ***सुब्हान रब्बेयल्आला"*** (पवित्र छन मेरा पालक जुन सर्वोच्च हुन) ।

**नोटः** सज्दा सातवटा अंगहरूमाथि गर्नु अनिवार्य छः दुबै पाइलाका औंलाहरू, दुबै घुँडा, दुबै हत्केला, निधार र नाक । जानाजान यी अंगहरू मध्ये एउटालाई पनि छाडेर सज्दा गर्नाले सज्दा भंग भइहाल्छ, र यदि कुनै कारणले गर्‍यो त केही आपत्ति छैन ।



6. फेरि अल्लाहुअक्बर भन्दै आफ्नो टाउको उठाओस् अनि बसोस्, र दुबै सज्दा बीच बस्नका लागि दुई सही तरीका छनः १- देब्रे खुट्टालाई पसारेर त्यस माथि बस्नु र दायाँ खुट्टालाई खडा गरी त्यसका औंलाहरू किब्ला तिर गर्नु । २- दुबै पाइलालाई खडा गरी त्यसका औंलाहरूलाई किब्ला तिर गर्नु र दुबैको कुर्कुच्चोमाथि बस्नु । र दुबै सज्दा बीच बस्दा यो दुआ तीन पटक पढोसः **रब्बिग्फिर्ली** र यो सँग यसलाई पनि बढाएर पढनु राम्रो हुन्छः **वर्हम्नी वज्बुर्नी वर्फअ्नी वर्जुक्नी वन्सुर्नी वह्देनी वआफेनी वअ्फोअन्नी** । फेरि पहिलो जस्दा जस्तै अर्को सज्दा पनि गरोस् फेरि अल्लाहुअक्बर भन्दै आफ्नो टाउको उठाओस् र दुबै पाइलाका औंलाहरूमाथि भर दिएर उठोस् र पहिलो रक्आत जस्तो दोस्रो रक्आत पढोस् ।

**नोटः** सूरह फातिहा कियाम (उभे) को अवस्थामा पढिन्छ, यदि पूर्ण रूपले उभ्नु भन्दा अगि नै सूरह फातिहा पढनु आरम्भ गऱ्यो त त्यसलाई पुनः पढनु पर्छ नत्र नमाज भंग भइहाल्छ ।



7. जब दुई रक्आत पूरा भइहालोस् त देब्रे खुट्टालाई फिँजाएर बस्नु पर्छ अनि देब्रे हातलाई देब्रे तिघ्रामाथि र दायाँ हातलाई दायाँ तिघ्रामाथि राख्नु पर्छ । र दायाँ हातको कान्छी औंलो र काँइलो औंलोलाई मुट्ठी बनाई बुढी औंलो सँग माझी औंलोलाई परिधीको रूप बनाई चोर औंलोले संकेत गर्नु पर्छ । र यो दुआ पढनु पर्छः *अत्तहियातो लिल्लाहे वस्सलवातो वत्तय्येबातो अस्सलामो अलैक अय्योहन्नबीय्यो वरहमतुल्लाहे व बरकातोहु, अस्सलामो अलैना वअला एबादिल्लाहिस्सालेहीन, अश्हदो अल्लाइलाह इल्लल्लाहो व अश्हदो अन्न मोहम्मदन् अब्दोहु व रसुलुहू* (मन वचन र धनका सम्पूर्ण पूजाहरू अल्लाहकै लागि हुन्, हे नबी तिमी माथि सलाम र अल्लाहको कृपा र निगाह रहोस्, सलाम होस् हामी र अल्लाहका असल सेवकहरू माथि, म गवाही दिन्छु कि निस्सन्देह अल्लाह बाहेक कोही पूजनीय छैन, र गवाही दिन्छु कि मोहम्मद अल्लाहका सेवक र रसुल हुन्) । फेरि तीन र चार रक्आतवाला नमाज छ भने अल्लाहुक्बर भन्दै र दुबै हात उठाउँदै उभोस् र पहिला जस्तो नै पढोस तर ठूलो स्वरमा पढन मिल्दैन र मात्र सूरह फातिहा पढोस् ।




8. फेरि अन्तिम तशह्हुदका लागि बसोस् यदि तीन वा चार रक्आतको नमाज होस्, भने त्यसमा बस्ने निम्न तरीकाहरू छनः १- दायाँ खुट्टालाई खडा राखी देब्रे खुट्टालाई त्यसको पिडौंला तलबाट पसारेर बाहिर निकाली भूईंमाथि बस्नु । २- दायाँ खुट्टालाई सुताएर देब्रे खुट्टालाई त्यसको पिडौंला मुनिबाट पसारेर बाहिर निकाली भूईंमाथि बस्नु । ३- देब्रे खुट्टालाई फिँजाएर त्यसलाई दायाँ खुट्टाको पिडौंला र तिघ्रा बीच हुँदै बाहिर निकाल्नु र भूईंमाथि बस्नु । र यसतो खालको बसाई जस नमाजमा दुई तशह्हुद हुन्छ त्यसको मात्र अन्तिम बैठकमा हुन्छ । र यसमा अत्तहियात पछि यो दुआ पढनु पर्छः *अल्लाहुम्म सल्ले अला मोहम्मद् वअला आले मोहम्मद्, कमासल्लैत अला इब्राहीम वअला आले इब्राहीम् इन्नक हमीदुम्मजीद्, अल्लाहुम्म बारिक् अला मोहम्मद् वअला आले मोहम्मद्, कमा बारक्त अला इब्राहीम् वअला आले इब्राहीम् इन्नक हमीदुम्मजीद्* । (हे मेरा अल्लाह! तपाईं मोहम्मद र उनका परिवारहरू माथि दाया र निगाह गर्नुस, यसरी कि जुन रूपले तपाईंले इब्राहीम र उनका परिवारहरू माथि दया र निगाह गर्नुभएको थियो, र मोहम्मद तथा उनका परिवारहरू माथि उस्तै बरकत (बृद्धि) गर्नुस जसरी तपाईंले इब्राहीम र उनका परिवारहरू माथि गर्नुभएको थियो । निस्सन्देह तपाईं प्रशंसा गर्न योग्य महान हुनुहुन्छ) । फेरि यो दुआ पढनु उत्तम हुन्छः *अल्लाहुम्म इन्नी अऊजोबिक मिन् अजाबे जहन्नम्, व अऊजोबेक मिन् अजाबिल्कब्रे, व अऊजोबिक मिन् फित्नतिल मसीहिद्दज्जाल्, व अऊजोबिक मिन् फित्नतिल् मह्या वल्ममात्, अल्लाहुम्म इन्नी अऊजोबिक मिनल्मासमे वल्मग्रम्* । (हे अल्लाह ! म तपाईंको शरण चाहन्छु नरकको यातना बाट, र कब्र (चिहान) को परीक्षा तथा कष्ट बाट, र दज्जालको उपद्रव बाट, र जीवन मरणको उपद्रव बाट, र पाप तथा कर्जाको उपद्रव बाट तपाईंको शरण चाहन्छु ।



9. फेरि दायाँ तिर अनि देब्रे तिर अस्सलामोअलैकुम वरहमतुल्लाह भन्दै दुबै तिर सलाम गर्नुस् । र सलाम पश्चात प्रमाणित दुआहरूलाई नमाज पढने ठाउँमा बसेर पढोस् ।

# ज्ञान अनुसार कर्मको अनिवार्यता

ज्ञान अनुसार कर्म न गर्नु अल्लाह, उन्का रसूल र मोमिनहरू समक्ष निन्दित छ। अल्लाह भन्नुहुन्छः "*हे आस्थावानहरू हो! तिमीहरू त्यो कुरा किन भन्छौ जुन तिमीहरू गर्दैनौ। जुन कार्य तिमीहरू गर्दैनौ त्यो कुरा भन्नु अल्लाहको दृष्टिमा अत्यन्त अप्रिय हो*"। अबुहुरैरह रजियल्लाहो अन्होले भन्नुभोः "त्यो ज्ञान जस अनुसार कार्य न गरियोस् त्यो खजाना जस्तो हो जसबाट अल्लाहको बाटोमा खर्च न गरियोस्"। र फुजैल रहेमहुल्लाहले भन्नुभोः "ज्ञान प्राप्त गरे पछि पनि ज्ञानी (आलिम) जाहिल (मुर्ख) नै रहनेछ यहाँ सम्म कि त्यस ज्ञान अनुकूल कर्तव्य न गरोस्"। र मालिक बिन दीनारले भन्नुभोः "तिमी यस्तो व्यक्ति सँग भेट गर्नेछौ जो एउटा अक्षरमा पनि चूक गर्दैन तर उसको सम्पूर्ण कार्यहरू गल्ती र चूकबाट परिपूर्ण हुन्छन"।

**मुस्लिम दाजु-भाई र दिदी बहिनीहरूः**

तपाईंको लागि अल्लाहले यस किताबलाई पढन सजिलो बनाइदिनुभयो तर यस पढाईको परिणाम अहिले सम्म बाँकी छ र त्यो यस बमोजिम कार्य र व्यवहार गर्नु हो।

۞ तपाईंले कुरआन र त्यसको तफसीर मध्ये केही पढनुभो, र यी आयतहरूको अर्थ र विश्लेषण जुन तपाईंले जानकारी प्राप्त गर्नुभएको हो त्यही अनुकूल व्यवहार गर्नको प्रयास गर्नुस। किनकि नबीका साथीहरू कुरआनका दश आयतहरू नबी सित सिकेर ज्ञान प्राप्त गरेर तीलाई व्यवहारमा ल्याउने गर्थे फेरि अर्को दश आयतहरू सिकदथे, र भन्दैथे कि हामी ज्ञान पनि प्राप्त गर्दैछौं र व्यवहार पनि। जसरी कि इस्लामी शरियतले यसमाथि प्रेरित गरेको छ। आदरणीय अब्दुल्लाह बिन अब्बासले अल्लाहको यस वाणीको विश्लेषणमा भन्नुभो : ﴿يَتْلُونَهُ حَقَّ تِلَاوَتِهِ﴾ (यस ग्रन्थको यथोचित अध्ययन गर्छन्) : "यसको अनुसरण गर्ने जस्तो नै अनुसरण गर्छन्"। र फोजैलले भन्नुभोः "कुरआन कर्म र व्यवहार गर्नको लागि अवरतण गरिएको छ तर मानिसले यसको पाठ गर्नुलाई नै कर्म बनाएको छ"।

۞ तपाईंले नबी सल्लल्लाहो अलैहे वसल्लमको हदीस र सुन्नतको सम्बन्धमा पनि केही पढनु भयो त्यसलाई अपनाउनु र त्यस बमोजिम कर्म गर्नुमा हतपत गर्नुहोस्, किनभने यस अनुयायीका सुकर्मीहरू कुनै कुरा सिके पछि चाडैं त्यसलाई व्यवहारमा ल्याउनको प्रयास गर्दथे र अर्कालाई त्यस तिर निम्तो दिंदथे किनकि उनीहरूको सामुन्ने नबी सल्लल्लाहो अलैहे वसल्लमको यो वाणी थियो : "*जस कुराको आदेश म तिमीहरूलाई दिउँ त्यसलाई सके जति व्यवहारमा ल्याउनको प्रयास गर, र जस कुराबाट मनाही गरुँ त्यस बाट एकदमै रुकी हाल*" (बुखारी र मुस्लिम)।

**र अल्लाह तआलाको सजायबाट डराउँदै जसरी कि अल्लाह भन्नुहुन्छः**

﴿فَلْيَحْذَرِ الَّذِينَ يُخَالِفُونَ عَنْ أَمْرِهِ أَن تُصِيبَهُمْ فِتْنَةٌ أَوْ يُصِيبَهُمْ عَذَابٌ أَلِيمٌ﴾ "*अतः उनको आदेश उल्लङ्घन गर्नेहरूले सावधान रहनु पर्छ कि तिनीहरूलाई कुनै संकटले नघेरोस् वा कुनै दुखदायी प्रकोपले नसमातोस्*"। **यसका केही उदाहरणहरू प्रस्तुत छनः**

► **मोमिनहरूका आमा उम्मे हबीबा रजियल्लाहो अन्हाले एउटा हदीस वृत्तान्त गर्नुहुन्छः** "*जसले दिन र रात्रीमा १२ रक्आत नमाज पर्छ उसका लागि स्वर्गमा त्यस कारण एउटा घर बनाइनेछ*"। उम्मे हबीबाले भन्नुभोः "यी १२ रक्आतलाई मैले जब देखि नबी सल्लल्लाहो अलैहे वसल्लमबाट सुनिराखेकीछु कहिले पनि छाडेकि छैन"।

► **अब्दुल्लाह बिन उमर रजियल्लाहो अन्हो वृत्तान्त गर्नुहुन्छः** "*कुनै मुसलमानमाथि कसैको अधिकार होस भने ऊ दुई राती कहीं बिताउन चाहन्छ भने त्यस अधिकारको बारेमा वसीयत लेखेर आफ्नो सँगै राखोस्*"। फेरि अब्दुल्लाह बिन उमर भन्नुहुन्छः "जहिले देखि मैले यो हदीस नबी सल्लल्लाहो अलैहे वसल्लमबाट सुनीराखेकोछु आफ्नो वसीयत लेखेर म आफ्नै सँग राख्ने गर्छु"।

► **इमाम अहमद रहेमहुल्लाह भन्नुहुन्छः** "मैले जुन पनि हदीस लेखेको छु त्यस अनुसार मैले व्यवहार गरेको छु यहाँ सम्म कि मैले हदीसमा पढें कि नबीले सिंघी लगाए पछि अबु तैय्यब नामक मान्छेलाई एक दीनार (सुनको पैसा) दिनुभो त मैले पनि यस्तो नै गरें"।

▶ इमाम बुखारीले भन्नुभोः "जहिले देखि मैले यो जानकारी प्राप्त गरें कि कसैको पिशुनता र चुक्ली गर्नु हराम छ मैले कसैको पिशुनता र चुक्ली आज सम्म गरेन, र म यो आशा लिएर मर्नेछु कि अल्लाह म सित कसैको चुक्लीको बारेमा हिसाब किताब लिनु हुनेछैनन्" ।

▶ नबी सल्लल्लाहो अलैहे बसल्लमले भन्नुभोः "*जुन व्यक्ति प्रत्येक नमाज पश्चात आयतुल्कुर्सी पढ्ने गर्छ त मरे पछि ऊ स्वगरमा प्रवेश हुनेछ" । इममा इब्नुलकैय्यिम भन्नुहुन्छः "शैखुल् इस्लाम इमाम इब्ने तैमियाले भन्नुभोः प्रत्येक नमाज पश्चात मैले आयतुल्कुर्सी पढ्नु छाडेन, अँ यदि बिर्सेर वा कुनै कारणले*" ।

✪ ज्ञान र व्यवहार पश्चात, यस तिर अरूलाई निम्तो दिनु अनिवार्य छ र आफुलाई यसको पूण्यबाट बंचित न राख, र अरूलाई यस भलाईबाट टाढा न राख । नबी सल्लल्लाहो अलैहे बसल्लमले भन्नुभोः "*जसले कसैलाई कुनै भलो कार्यमा लगायो त उसलाई त्यो कार्य गर्ने जस्तो पूण्य मिल्नेछ*" । फेरि भन्नुभोः "***तिमीहरू मध्ये सब भन्दा राम्रो मान्छे त्यो हो जो कुरआन सिक्छ र अरूलाई सिकाउँछ***" । र एउटा अर्को हदीसमा भन्नुहुन्छः "*म तर्फबाट एउटा आयत पनि सुनेर अरू सम्म त्यसलाई पुगाउने गर*" (बुखारी र मुस्लिम)। र भलाई जत्रो तिमी फिँजाउँदैछौ तिम्रो लागि पूण्य त्यती नै बढी र ठूलो हुन्छ र तिम्रो पूण्य यस जीवनमा र मर्नु पश्चात पनि बाकी रहनेछ । नबी सल्लल्लाहो अलैहे बसल्लमले भन्नुहुन्छः "*मनुष्यको मृत्यु पश्चात उसका सबै कार्यहरू समाप्त भइहाल्छन्,अँ तीन वटा यस्ता कार्यहरू छन जसको पूण्य उसलाई मिल्ने गर्छः उसले जारी रहने दान गर्‍यो, वा यसतो ज्ञान छाडयो जसबाट लाभ प्राप्त भइरहेछ वा सदाचारी पुत्रलाई छाड्यो जो आमा बुबाका लागि दुआ गर्छ*" (मुस्लिम) ।

**प्रकाशः** हामी प्रत्येक दिनमा १७ पटक भन्दा बढी मात्रामा सूरह फातिहा पढ्दछौं र यसमा हामी यस्तो समूदायबाट शरण चाहन्छौं जुनमाथि अल्लाहले क्रोध र धिक्कार गर्नुभएको हो र जुन समूदाय पथभ्रष्ट भएकाछन् फेरि हामी उनीहरूको कार्यमा समानता गर्दैछौः ज्ञान प्राप्त गर्छौं तर त्यस बमोजिम कार्य गर्दैनौं । त यसमा हामी याहुदको समानता गर्छौं जसमाथि अल्लाहको धिक्कार भएको थियो । यसै गरी ज्ञान प्राप्त गर्दैनौ र अज्ञानतामा परेर व्यवहार गर्दैछौं र यसमा पथभ्रष्ट क्रिश्चियनको समानता हामी गर्दैछौं !!

हामी अल्लाह सित दुआ गर्दछौं कि अल्लाह हामी र तिमीलाई लाभदायक ज्ञान र सदकर्म प्रदान गरुन् । र सबै प्रकारको ज्ञान मात्र अल्लाहमा नै निहित छ, र अल्लाहका दरूद,शान्ति,सलाम हाम्रा सरदार र मुख्या र मायालु दूत मुहम्मदमाथि होस् र उनका परिवार र सम्पूर्ण साथीहरूमाथि ।

